राजानो वश्यतां यान्ति रिपवो यान्ति दासताम् ।
मन्त्राः सिध्यन्ति सर्वेऽपि सुलभास्तस्य सिद्धयः ।।२०३।।

मूलमन्त्रादपि स्तोत्रमिदं प्रियतरं मम ।
नभस्ये मासि शुक्लायां चतुर्थ्यां मम जन्मनि ।।२०४।।

दूर्वाभिर्नामभिः पूजां तर्पणं विधिवच्चरेत् ।
अष्टद्रव्यैर्विशेषेण जुहुयाद् भक्तिसंयुतः ।।२०५।।

तस्येप्सितानि सर्वाणि सिद्ध्यन्त्यत्र न संशयः ।
इदं प्रजप्तं पठितं पाठितं श्रावितं श्रुतम् ।।२०६।।

व्याकृतं चर्चितं ध्यातं विमृष्टमभिनन्दितम् ।
इहामुत्र च सर्वेषां सर्वैश्वर्यप्रदायकम् ।।२०७।।

स्वच्छन्दचारिणाऽप्येष येनायं धार्यते स्तवः ।
स रक्ष्यते शिवोद्भूतैर्गणैरप्यष्टकोटिभिः ।।२०८।।

पुस्तके लिखितं यत्र गृहे स्तोत्रं प्रपूजयेत् ।
तत्र सर्वोत्तमा लक्ष्मीः सन्निधत्ते निरन्तरम् ।।२०९।।

दानैरशेषैरखिलैर्व्रतैश्च
तीर्थैरशेषैः सकलैर्मखैश्च ।
न तत् फलं विन्दति यद् गणेश-
सहस्रनाम्नां स्मरणेन सद्यः ।।२१०।।

एतन्नाम्नां सहस्रं पठति दिनमणौ प्रत्यहं प्रोज्जिहाने
सायं मध्यन्दिने वा त्रिषवणमथवा सन्ततं वा जनो यः।
स स्यादैश्वर्यधुर्यः प्रभवति वचसां कीर्तिमुच्चैस्तनोति
प्रत्यूहं हन्ति विश्वं वशयति सुचिरं वर्धते पुत्रपौत्रैः ।।२११।।

रहन्छन् र शत्रुहरू पनि तिनका दास बन्दछन् । यस्ता साधकले जपेका मन्त्र सिद्ध हुन्छन् र तिनका लागि सबै प्रकारका सिद्धिहरू सुलभ बन्दछन् ।।२०२-२०३।। मलाई मेरो मूलमन्त्रभन्दा पनि यो सहस्रनाम अत्यन्त प्रिय छ । भाद्र महिनाको शुक्लचतुर्थी मेरो जन्म तिथि हो । त्यस दिन साधकले उक्त सहस्रनाम पढेर मलाई दूबो चढाउनुपर्दछ र विधिपूर्वक तर्पण पनि गर्नुपर्दछ । आठ प्रकारका द्रव्यहरू अर्पण गरी भक्तिपूर्वक विशेष हवन गर्नुपर्दछ ।।२०४-२०५।। जसले यसरी हवन गर्दछ त्यसका सबै कामनाहरू परिपूर्ण हुन्छन् । यसमा कुनै सन्देह छैन । जसले यो स्तोत्र जप्दछ, पढ्दछ, पढाउँछ, सुन्दछ, सुनाउँछ, व्याख्या गर्दछ, चर्चा गर्दछ, ध्यान गर्दछ, विश्लेषण गर्दछ र श्रद्धापूर्वक अभिनन्दन गर्दछ ती सबै भक्तहरूलाई यस लोक र परलोकमा पनि विश्वब्रह्माण्डका सबै ऐश्वर्यहरू प्राप्त हुन्छन् ।।२०६-२०७।। गृहस्थजीवन नबिताएर स्वच्छन्दरूपमा विचरण गर्ने महात्माले पनि यस श्रीगणेश-स्तोत्रलाई कण्ठस्थ गर्दछन् भने तिनलाई शिवजीका कोटिकोटि गणहरूले सुरक्षा प्रदान गर्दछन् ।।२०८।। पुस्तकमा लेखिएको यस स्तोत्रलाई मन्त्र मानेर भक्तहरूले नित्य पूजा गर्नुपर्दछ। यस श्रीगणेशसहस्रनामका प्रत्येक नाममन्त्रहरूमा सर्वोत्तम महालक्ष्मीले वास गर्नुहुन्छ ।।२०९।। साधकहरूले अनेक थरि दानहरूबाट, अनेक किसिमका व्रतहरूबाट, ठाउँ ठाउँमा रहेका पुण्यतीर्थहरूको भ्रमणबाट र उत्तम यज्ञ-महायज्ञको आयोजनाबाट जुन फल पाउँदैनन् त्यो फल श्रीगणेशभगवान्को सहस्रनामको पाठ र स्मरण गर्नाले तत्काल पाउन सक्दछन् ।।२१०।। जसले यो श्रीगणेश सहस्रनाम प्रतिदिन सूर्यनारायणको उदय हुनुभन्दा पहिले प्रातःसन्ध्यामा अथवा सायँसन्ध्यामा अथवा मध्याह्नसन्ध्यामा अथवा तीनवटै सन्ध्याहरूमा निरन्तर जप पाठ गर्दछ, त्यो मानिस सर्वोत्तम ऐश्वर्यले सम्पन्न हुन्छ । त्यसले प्राप्त गरेको विद्याको कीर्ति संसारमा फैलिन्छ, विघ्ननाश हुन्छ, विश्व वशीभूत बन्दछ र त्यो साधक पुत्र एवं पौत्रहरूका साथ रमाउँदै वंशवृद्धिको उत्तम कारण बन्दछ ।।२११। (जसले आफू अकिञ्चन भएर पनि एकचित्त,

अकिञ्चनोऽप्येकचित्तो नियतो नियताशनः ।
जपेत्तु चतुरो मासान् गणेशार्च्चनतत्परः ।।२१२।।

दरिद्रतां समुन्मूल्य सप्तजन्मानुगामपि ।
लभते महतीं लक्ष्मीमित्याज्ञा पारमेश्वरी ।।२१३।।

आयुष्यं वीतरोगं कुलमतिविमलं सम्पदश्चार्त्तदानाः
कीर्तिर्नित्यावदाता भणतिरभिनवा कान्तिरव्याजभव्या।
पुत्राः सन्तः कलत्रं गुणवदभिमतं यद्यदेतच्च सत्यं
नित्यं यः स्तोत्रमेतत् पठति गणपतेस्तस्य हस्ते समस्तम्।।२१४।।

ॐ गणञ्जयो गणपतिर्हेरम्बो धरणीधरः ।
महागणपतिर्लक्षप्रदः क्षिप्रप्रसादनः ।।२१५।।

अमोघसिद्धिरमितो मन्त्रश्चिन्तामणिर्निधिः ।
सुमङ्गलो बीजमाशापूरको वरदः शिवः ।।२१६।।

काश्यपो नन्दनो वाचा सिद्धो ढुण्ढिर्विनायकः ।
मोदकैरेभिरत्रैकविंशत्या नामभिः पुमान् ।।२१७।।

उपायनं ददेद् भक्त्या मत्प्रसादं चिकीर्षति ।
वत्सरं विघ्नराजस्य तथ्यमिष्टार्थसिद्धये ।।२१८।।

यः स्तौति मद्गतमना ममाराधनतत्परः ।
स्तुतो नाम्नां सहस्रेण तेनाहं नात्र संशयः ।।२१९।।

नमो नमः सुरवरपूजिताङ्घ्रये
नमो नमो निरुपममङ्गलात्मने ।
नमो नमो विपुलपदैकसिद्धये
नमो नमः करिकलभाननाय ते ।।२२०।।

सावधान, संयत र परिमिताशी भई भगवान् श्रीगणेशको आराधना गर्दै चार महिनासम्म श्रीगणेशसहस्रनाम पाठ गर्दछ त्यसले सात जन्मसम्मको दरिद्रताको निर्मूलन गरी अपरिमित लक्ष्मी प्राप्त गर्दछ । यो भगवान् श्रीगणेशको आज्ञा हो ।।२१२-२१३।। जसले दिनदिनै यो श्रीगणेशस्तोत्र पाठ गर्दछ त्यसले रोगहीन दीर्घायुष्य प्राप्त गर्दछ । त्यसका सम्पत्तिको प्रयोग आर्तहरूका उद्धारका लागि हुन्छ । त्यसले निष्कलङ्क र उज्ज्वल कीर्ति फैलाउँछ। त्यसको वाणी नित्य नयाँ र सारपूर्ण बन्दछ। अकृत्रिम र भव्य व्यक्तित्वको कान्ति फैलिन्छ । पुत्रहरू सज्जन हुन्छन्, पत्नी अनुकूल र गुणवती हुन्छिन् । यो कुरा साँचो हो। वास्तवमा श्रीगणेशसहस्रनामको नित्य पाठ गर्ने साधकले सम्पूर्ण उपलब्धि प्राप्त गर्दछ ।।२१४।। भगवान् श्रीगणेशका एक हजार नाममध्ये एक्काइस विशिष्ट नाम यस प्रकार छन्- गणञ्जय-१, गणपति-२, हेरम्ब-३, धरणीधर-४, महागणपति-५, लक्ष्यप्रद-६, क्षिप्रप्रसादन-७, अमोघसिद्धि- ८, अमित-९, मन्त्र- १०, चिन्तामणि- ११, निधि-१२, सुमङ्गल-१३, बीजम्-१४, आशापूरक-१५, वरद-१६, शिव-१७, काश्यपनन्दन-१८, वाचासिद्ध-१९, ढुण्ढिराज-२०, विनायक-२१ यी नामहरूको उच्चारण गर्दै श्रीगणेशलाई एक वर्षसम्म नित्य लड्डू चढाउनु पर्दछ ।।२१५-२१७।। जुन भक्तले मलाई प्रसन्न तुल्याउन चाहन्छ, त्यसले वर्ष दिनसम्म श्रीगणेश-सहस्रनाम पाठ गर्दै भक्तिपूर्वक मलाई भेटी चढाउनुपर्दछ । यो अर्पण निश्चय नै भक्तको कार्यसिद्धिकारक हुन्छ यसमा कुनै सन्देह छैन । यस साधनाबाट आफ्ना अभीष्टहरू सम्पूर्ण परिपूर्ण बन्दछन्।।२१८।। जसले ममा मन लगाएर मेरो आराधनामा तत्पर हुँदै मेरो स्तुति गर्दछ, त्यसले सहस्रनामको जप गरेसमान फल प्राप्त गर्दछ। यसमा सन्देह छैन ।।२१९।। देवताहरूद्वारा चरणकमलमा आराधना गरिनुभएका श्रीगणेशलाई नमस्कार गर्दछु । मङ्गल-मूर्ति श्रीगणेशलाई बारबार नमस्कार गर्दछु। स्वानन्दभुवन नामक उत्तम धाममा प्राप्त हुने सम्पूर्ण सिद्धि प्रदान गर्नुहुने सिद्धिपति श्रीगणेशलाई नमस्कार गर्दछु। हात्तीको बच्चाको जस्तो सुन्दर मुखमण्डलले सुहाउनुभएका श्रीगणेशलाई म बारबार नमस्कार गर्दछु ।।२२०।। हे गणप!,

गणपाजेश हेरम्ब द्वैमातुर गजानन ।
भालेन्दो धूमकृद् भानो लम्बोदर विनायक ।।२२१।।
ब्रह्मैकदन्त विघ्नेश विष्णो कपिल निर्गुण ।
कालाद्य सिद्धिदानन्त त्राहि मां भवसागरात् ।।२२२।।

किङ्किणीगणरचितस्तवचरणः
प्रकटितगुरुमितिचारित्रगणः ।
मदजललहरीकलितकपोलः
शमयतु दुरितं गणपतिर्नृपनाम्ना ।।२२३।।

हे अजय !, हे ईश !, हे हेरम्ब !, हे द्वैमातुर !, हे गजानन !, हे भालेन्दु !, हे धूम्रकेतु !, हे भानु !, हे लम्बोदर !, हे विनायक !, हे कालाद्य !, हे सिद्धिद !, हे अनन्त !, हे यति !, हे ब्रह्म !, हे एकदन्त !, हे विघ्नेश !, हे विष्णु !, हे कपिल !, हे निर्गुण ! यी नामहरूबाट प्रसिद्ध हे श्रीगणेश भगवान्! हजुरले मलाई संसारसागरबाट मुक्त गर्नुहोस्।।२२१-२२२।। मानो पाउजेबका क्षुद्रघण्टिका शब्दले चरणको स्तुति-रचना गरे जस्ता, अति गौरवमय चरित्र प्रकट गर्ने, मदजलको धारा प्रवाहित गर्ने, गण्डस्थलद्वारा शोभायमान भगवान् गणपतिले मेरा सम्पूर्ण पापहरूको नाश गरून् ।।२२३।।

ॐ

इति श्रीमदादिश्रीमन्महागाणेश्वरे महापुराणे उपासनाखण्डे ईश्वरमहागणपतिसंवादे श्रीमद्गणेशदिव्यसहस्रनामामृतस्तोत्रकथनं नाम षट्चत्वारिंशोऽध्यायः

सतीशिरोमणि माताश्री दिव्यलक्ष्मी र सज्जनमुकुटमणि पिताश्री चूडामणि ढकालका सुपुत्र पाल्पा पोरकनी निवासी प्रा.डा. वेणीमाधव ढकालद्वारा परमकरुणामयी भगवती त्रिशक्तिको ऊर्जस्वल अभिप्रेरणा र अमोघ आशीर्वादबाट नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सदाशिव गणपतिसंवाद प्रसङ्गमा श्रीगणेशद्वारा सदाशिवजीलाई श्रीगणेशसहस्रनामामृतको निरूपण' शीर्षकान्वित छयालीसौं अध्याय पूर्ण भयो ।।४६।।

ॐ

## सप्तचत्वारिंशोऽध्याय:　　{ ४७ अध्याय }

व्यास उवाच

नाम्नां सहस्रे सम्प्राप्ते प्रसन्ने च गजानने ।
ततः किमकरोद् ब्रह्मन् ! हरस्तत् कथयस्व मे ।।१।।

ब्रह्मोवाच

गणेशवरदानेन नाम्नां चैवोपदेशतः ।
प्रहृष्टः शङ्करोऽनृत्यद् जगर्ज च महास्वनः ।।२।।

आहूय स्वगणान् देवान् युद्धावसरमादिशत् ।
ते च हर्षेण महता ययुर्देवाः शिवान्तिकम् ।।३।।

ब्रह्मा कुबेरोऽथ पुरन्दरोऽग्निर्वायुश्च सोमो वरुणोऽर्यमा च।
गन्धर्वयक्षा ग्रहकिन्नराश्च सर्वे नमस्कृत्य शिवं स्तुवन्तः।।४।।

देवा ऊचुः

महादेव जगन्नाथ जगदानन्ददायक !
त्वया हतं महादैत्यं कदा द्रक्ष्यामहे वयम् ।।५।।

स्थानभ्रष्टा वयं तेन कृता विश्वविघातिना ।

ब्रह्मोवाच

एवं देववचः श्रुत्वा पिनाकी निर्ययौ मुदा ।।६।।

गणेशं मनसा ध्यायन् युद्धाय कृतनिश्चयः ।
वेगेन भवनं प्राप्य देवगन्धर्वसंयुतः ।।७।।

तावच्च दैत्यं चारैस्तु वृत्तान्तः सन्निरूपितः ।
आगतः सुरसैन्येन युद्धाय गिरिजापतिः ।।८।।

तस्य सैन्यान्यनह्यन्त शस्त्रैरस्त्रैश्च कञ्चुकैः ।
स च दैत्यो महानादो युद्धभूषणभूषितः ।।९।।

वीरानानन्दयामास वासःस्रग्भूषणैर्धनैः ।
अनेकयानसंस्थेषु योद्धृषु त्रिपुरं स्वयम् ।।१०।।

**व्यासले भन्नुभयो -** गजानन भगवान्ले प्रसन्न हुनुभएर श्रीगणेश सहस्रनामको उपदेश गर्नुभएपछि भगवान् शङ्करले के गर्नुभयो ? त्यो मलाई बताउनुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** श्रीगणेशको वरदान र श्रीगणेश सहस्रनामको प्राप्तिपछि भगवान् शङ्कर अत्यन्त प्रसन्न हुनुभयो र नाच्दै ठूलो स्वरले गर्जन गर्नुभयो ।।२।। त्यसपछि आफ्ना गण र देवताहरूलाई बोलाई भावी युद्धको अवसरलाई उपयोग गर्ने विषयमा आदेश गर्नुभयो । शिवजीको आदेश पाएर अत्यन्त हर्षित हुँदै ब्रह्मा, कुबेर, इन्द्र, अग्नि, वायु, चन्द्रमा, वरुण, अर्यमा, गन्धर्व, यक्ष र किन्नर शिवजीका सामु आएर नमस्कार गरी स्तुति गर्दै भन्न लागे ।।३-४।।

**देवताहरूले भने -** हे महादेव ! हे जगन्नाथ ! जगत्लाई आनन्द प्रदान गर्नुहुने हे कल्याणमय स्वरूपका सदाशिव! महादैत्य त्रिपुर हजुरद्वारा मारिएको हामीले कहिले देख्न पाउँछौं? ।।५।। हे प्रभो! विश्वलाई नै तहस-नहस बनाउने त्यस दैत्यले आज हामीहरूलाई स्थानभ्रष्ट बनाएको छ ।

**ब्रह्माजीले भन्नुभयो -** यसरी देवताहरूको प्रार्थना सुनेर मनबाट श्रीगणेश भगवान्को ध्यान गर्दै युद्ध गर्ने अठोटका साथ पिनाकधारी भगवान् शङ्कर प्रसन्नतापूर्वक आफ्नो आसनबाट उठी बाहिर आउनुभयो । त्यसपछि वेगपूर्वक देवता र गन्धर्वहरूका साथ मन्त्रणाभवनमा जानुभयो ।।६-७।। त्यस बेला दूतहरूले आएर त्रिपुरासुर दैत्यको गतिविधि भगवान्लाई निवेदन गरे । त्यसपछि भगवान् सदाशिव सेनाका साथ युद्धका लागि मैदानतर्फ लाग्नुभयो।।८।। शिवसेनामा रहेका वीरहरू शस्त्र-अस्त्र र कवचद्वारा सजिएर युद्धका लागि तम्तयार भएका थिए। उता त्रिपुरासुर दैत्य पनि युद्धका लागि आवश्यक शस्त्र-अस्त्र एवं कवच भिरेर ठूलो गर्जन गरी आफ्ना वीरहरूलाई आनन्दित र उत्साहित तुल्याइरहेको थियो । त्यसका सैन्यवीरहरू माला-अलङ्कार र धन प्राप्त गरी आनन्दपूर्वक युद्धका लागि तम्सिएका थिए । आफ्ना योद्धाहरू युद्धमा जान अनेक यानहरूमा सवार भएपछि त्यो त्रिपुरासुर आफ्नो गर्जनबाट

आरुरोह महादैत्यो नादयन् विदिशो दिश: ।
ततो युद्धं समभवत् सेनयोरुभयोर्महत् ।।११।।

शस्त्रैर्नानाविधैर्बाणैर्मर्मभेदिभिरायसैः ।
असृङ्नदीप्रवाहोऽभून् मार्गरोधनकारक: ।।१२।।

शस्त्राहता बभुर्योधा: पुष्पिता: किंशुका इव ।
केचिच्च दृढवैरेण जीवग्राहममारयन् ।।१३।।

केचित् कचेषु धृत्वैव शिरांसि चिच्छिदुर्बलात् ।
धावतां रथिवीराणामश्वानां करिणामपि ।।१४।।

अङ्घ्रिपातभवो रेणुर्व्यानशे रोदसी क्षणात् ।
अन्धकारे घोरतरे न प्राज्ञायत किञ्चन ।।१५।।

चक्रुरेवं तदा युद्धं वीरा नानाविधा भृशम् ।
जीविताशां परित्यज्य मर्तव्ये कृतनिश्चया: ।।१६।।

अदृश्यन्त मृता देवा गते रजसि वायुना ।
विद्रुते सुरसैन्ये च दैत्यसैन्ये च हर्षिते ।।१७।।

आययौ समरश्लाघी वज्रहस्त: पुरन्दर: ।
शतकोटिं निरीक्ष्यैव दुद्रुवुर्दैत्यदानवा: ।।१८।।

स वज्रपातैरसुराँश्चूर्णयामास वज्रभृत् ।
तत्यजुर्जीवितं ते तु चण्डवज्रप्रहारत: ।।१९।।

केचिच्च भग्नचरणा: केचिद् भग्नशिरोधरा: ।
केचिद् विदीर्णजठराश्छिन्नस्कन्धभुजा: परे ।।२०।।

छिन्नाश्वानाञ्च वीराणां वाजिनां रथिनां तथा ।
केषाञ्चिदुरवो भिन्ना जङ्घासु च हता: परे ।।२१।।

छिन्नगुल्फा: परे पेतुर्मिषात् पेतुरथापरे ।
निहतानामसृक्पातैर्जज्ञिरे निम्नगा बहु ।।२२।।

उत्साहवर्धनास्तेषां वीराणां जयकाङ्क्षिणाम् ।
तत: शनैर्गर्जमानो ददर्श त्रिपुरासुर: ।।२३।।

चारैदिशा थर्काउँदै त्रिपुरमा सवार भयो । त्यसपछि शिवसेना र दैत्यसेनाका बीचमा भयङ्कर युद्ध आरम्भ भयो ।।९-११।। अनेक थरि शस्त्र र फलामबाट तयार गरिएका मर्मभेदी बाणद्वारा प्रहार गरिंदा सम्पूर्ण बाटाघाटामा अवरोध ल्याउने गरी रगतको भल बग्न थाल्यो ।।१२।। शस्त्रहरूद्वारा घाइते बनाइएका योद्धाहरू रगताम्य हुनाले फुलेका पलाँश झैं देखिएका थिए । कसैले आफ्नो पुरानो दृढ बैरका कारण शत्रुसैनिकहरूमाथि प्राण लिने किसिमले प्रहार गरिरहेका थिए ।।१३।। कसैले कपालको रौंमा समातेर टाउको काटिरहेका थिए । युद्धको मैदानमा जोशले यता र उति दौडिरहेका रथमा सवार वीरहरू, घुडसवार वीरहरू, हात्तीमा सवार वीरहरू र पैदल सेनामा रहेका वीरहरूको खुट्टाबाट उठेको धूलोले पृथिवी र अन्तरिक्ष ढाकिएको थियो । त्यस कारण त्यहाँ घोर अन्धकार छायो र कसैले केही पनि देख्ने परिस्थिति रहेन ।।१४-१५।। त्यस बेला वीरहरूले जिउने आशा छाडेर एक दिन मर्नै पर्नेछ भन्ने निश्चय गरी निरन्तर अनेक थरि युद्ध गरिरहेका थिए । हावाले चारैतिरको धूलो आकाशमा उडाएपछि अनेक देववीरहरूका लाश देखिए । देवताका बाँकी सेनाहरू पलायन गरिसकेकाले दैत्यको सेना हर्षमा चुर्लुम्म डुबेको थियो ।।१६-१७।। त्यस बेला युद्धको प्रशंसा गर्दै वज्रधारी देवराज इन्द्र त्यहाँ आइपुगे। तिनलाई देख्नासाथ अनेक दैत्य र दानव भाग्न थाले।।१८।। इन्द्रले वज्रप्रहार गरेर अनेक दैत्यहरूलाई चूर्ण-चूर्ण बनाए । अनेक दैत्यहरूले इन्द्रको प्रहारबाट जीवन परित्याग गरे । केही दानवहरूका खुट्टा भाँचिएका थिए । कसैका घाँटी टुक्रिएका थिए । कसैका पेट चिरिएका थिए र केही दानवहरूका काँध र भुजा छिन्न-भिन्न भएका थिए ।।१९-२०।। रथमा जोतिएका घोडाहरू मरेका थिए र घुडसवार एवं रथी वीरहरूका जाँघहरू चोइटिएका थिए । केही वीरहरूका गोलीगाँठा टुक्रिएका थिए। लडाईंबाट डराएका केही दैत्यवीरहरू घाउ नलागे तापनि लागेझैं गरी भुइँमा लडेका थिए। त्यस युद्धमा मारिएका वीरहरूका शरीरबाट रगतको धारा बगेर अनेक रगतका नदीहरू तयार भए।।२१-२२।। विजयको आकाङ्क्षा गर्ने ती वीरहरूका लागि रगतका नदी उत्साहवर्द्धक बनेका थिए। त्यस बेला आफ्ना धेरै सैनिकहरूलाई मृत अवस्थामा र घायल अवस्थामा

निहतं बहुधा सैन्यं शक्रं योद्धुमथाययौ ।
बभाण शक्रं दृष्ट्वैव किमर्थं मर्तुमिच्छसि ।।२४।।

अपैहि युद्धाज्जीवंस्त्वं न पृष्ठं हन्मि वासव ।
का ते शक्तिर्मया युद्धं कर्तुं तव शचीपते ।।२५।।

अज: सिंहेन किं युद्धं करिष्यति वदस्व मे ।
एहि युद्धस्व शक्तिश्चेन्नो चेद् गच्छ यथासुखम् ।।२६।।

एवमुक्ते स्थिते शक्रे ववर्ष सायकान् बहून् ।
सज्यं कृत्वा धनुर्दैत्यो देवसेनामताडयत् ।।२७।।

एकस्मान्मन्त्रिताद् बाणादसङ्ख्याता ययु: शरा: ।
मृद्नन्तो देवगन्धर्वान् रोदसी समपूरयन् ।।२८।।

अन्धकारं पुनरभूद् बाणजालैर्निरन्तरम् ।
तद्बाणैरपि ते देवा व्यङ्गा: पेतुर्धरातले ।।२९।।

बलहा न्यपतद् भूमौ प्रहारवरपीडित: ।
सर्वेषु देववर्येषु मूर्च्छितेषु महेश्वर: ।।३०।।

श्लाघन्तं बहुगर्जन्तं युद्ध्यन्तं नाऽभ्यरोचयत् ।
मनसाऽपूजयच्छम्भुस्तस्य दैत्यस्य पौरुषम् ।।३१।।

एतस्मिन्नन्तरे तत्र नारदो द्रष्टुमाययौ ।
पूजित: प्रावदच्छम्भुं शृणुष्व नीललोहित ।।३२।।

नारद उवाच

त्वया चिन्ता न कर्तव्या त्रिपुरस्य वधं प्रति ।
वक्ष्ये तस्य वधोपायं तं कुरुष्व महेश्वर ।।३३।।

तेन पूर्वं तपोऽकारि दुष्करं ब्रह्मणोऽपि हि ।
आराधितो गणपति: स तस्मै सर्ववाञ्छितम् ।।३४।।

यद्यत्तेन वृतं देवो दत्तवानविचारितम् ।
पुरत्रयं भेत्स्यते ते तस्मान् मृत्युमवाप्स्यसि ।।३५।।

मरुद्गतिविहीनं तदभेद्यं सर्वनिर्जरै: ।
स एवमुक्तवान् गुह्यं शरेणैकेन यस्तव ।।३६।।

देखेर गर्जन गर्दै त्रिपुरासुर इन्द्रसँग युद्ध गर्न आइपुग्यो। त्यसले इन्द्रलाई देख्नासाथ गर्जेर भन्यो – ए इन्द्र ! किन तिमी मर्न चाहन्छौ ? जिउँदै युद्धबाट भाग । युद्ध गर्न चाहन्छौ भने आऊ तिमी र म सामुन्नेमा लडौं । म पछाडिबाट युद्ध गर्न चाहने योद्धासँग युद्ध गर्न चाहन्नँ । तिम्रो मसँग युद्ध गर्ने कति शक्ति छ ? लौ भन त बोकेले बाघसँग के युद्ध गर्न सक्छ ? खुबी छ भने आऊ मसँग लड, अन्यथा यहाँबाट भाग ।।२३-२६।। यसरी ललकारेपछि त्रिपुरासुरले आफ्नै सामु उभिएका इन्द्रका शरीरमा धनुष टङ्कार गर्दै बाणप्रहार गर्‍यो र देवसेनालाई जथाभावी चाइते बनाउन थाल्यो । त्रिपुरासुरले एउटा बाण अभिमन्त्रित गरेर प्रहार गर्दा त्यस बाणबाट लाखौं अरू बाण निस्कन्थे र ती बाणहरूले देवता एवं गन्धर्वलाई धूलो चटाउँदै आकाश र धर्ती ढाकिदिन्थे ।।२७-२८।। त्रिपुरासुरले प्रहार गरेका बाणहरूको बाक्लो जालो फैलिएका कारण युद्धमैदान अन्धकारले ढाकियो । ती बाणहरूबाट देवताहरूका अङ्ग-प्रत्यङ्ग टुक्रिन थाले । अपाङ्ग देवताहरू धर्तीमा पछारिन थाले ।।२९।। त्रिपुरासुरको कठिन बाणप्रहारबाट अपार वेदना प्राप्त गर्ने इन्द्र महाराज पनि धर्तीमा लडे । यसरी ठूला-ठूला देवताहरू युद्धको मैदानमा मूर्च्छित भएपछि भगवान् शङ्करले आत्मप्रशंसा गर्दै ठूलो गर्जन गर्ने र निर्भयतापूर्वक देवताहरूसँग युद्ध गर्ने त्रिपुरासुरलाई मन पराउनुभएन तर त्यसको पुरुषार्थको भने प्रशंसा गर्नुभयो ।।३०-३१।। यसैबीचमा देवता र दानवहरूको युद्ध हेर्न देवर्षि नारदजी आइपुग्नुभयो । देवताहरूद्वारा सम्मानित नारदजीले भगवान् शङ्करलाई सम्बोधन गर्दै भन्नुभयो- हे नीललोहित! सुन्नुहोस् ।।३२।।

नारदजीले भन्नुभयो – हे शङ्कर ! तपाईंले त्रिपुरासुरको कसरी वध गर्ने भन्ने विषयमा कत्ति पनि चिन्ता नलिनुहोस् । म तपाईंलाई त्यसको उपाय बताउने छु । त्यो उपाय तपाईंले गर्नुपर्नेछ ।।३३।। पहिले त्रिपुरासुर दैत्यले ब्रह्माजीले भन्दा पनि कष्टकर तपस्या गर्ने क्रममा भगवान् श्रीगणेशको आराधना गर्‍यो । श्रीगणेशले पनि प्रसन्न भएर त्यसलाई विचार नै नगरीकन चाहेअनुसारका वरदान दिंदै भन्नुभएको थियो- हे त्रिपुरासुर ! जसले त्रिपुरलाई एकैचोटि एउटै बाणले भेदन गर्न सक्नेछ, त्यस व्यक्तिबाट नै तिम्रो मृत्यु हुनेछ । यति कुरा सुनाएर

पुरत्रयं भेत्स्यते ते तस्मान् मृत्युमवाप्स्यसि ।
एवमुक्त्वा गते तस्मिन्नारदे मुनिसत्तमे ।।३७।।

मूर्च्छितान् विबुधान् शर्वः सावधानमथाकरोत् ।
संस्मारेभमुखं वाक्यं स्मारितो नारदेन तु ।।३८।।

महाप्रयत्नमारेभे दैत्यराजवधाय सः ।
तेजसा सर्वनाशाय शक्तो देवो निजेच्छया ।।३९।।

रथं कुरूपं शशिसूर्यचक्रं
यन्तारमिन्दीवरजं चकार ।
धनुर्गिरीन्द्रं शरमच्युतं स
धुर्यांश्विनेयावयुजद् गिरीशः ।।४०।।

आचम्य देवं मनसा विचिन्त्य,
तेनोपदिष्टं च जजाप नाम्नाम् ।
सहस्रमेकाक्षरमन्त्रयुक्त-
ममन्त्रयत् तेन पिनाकमुग्रम् ।।४१।।

अमन्त्रयन् महाबाणं विष्णुरूपं यदा शिवः ।
चकम्पे धरणी शेषो वनानि गिरयोऽपि च ।।४२।।

बभ्रमुः खगणाः सर्वे चुकूजुश्च महारवान् ।
शब्देनाजगवस्यापि विभ्रान्ताः सुरमानुषाः ।।४३।।

अमुञ्चत्तं यदा बाणं तदा दग्धं नभस्तलम् ।
भूमण्डलं सपातालं ज्वालामालाभिरञ्जसा ।।४४।।

दृष्ट्वा पपाल दैत्येन्द्रः ससैन्यः पुरसंश्रयः ।
जवेनागाच्छरः सोऽप्यदहद्दैत्यं पुरत्रयम् ।।४५।।

दैत्यदेहगतं तेजो भर्गदेहे लयं ययौ ।
पश्यतां सर्वसैन्यानां दैत्यदानवरक्षसाम् ।।४६।।

ततोऽन्तरिक्षे वागासीन् मुक्तो दैत्यः शिवाहतः ।
ततस्ते तुष्टुवुर्देवा मुनयोऽपि त्रिलोचनम् ।।४७।।

जगुर्गन्धर्वनिचयाश्चारणाः श्रुतितत्पराः ।
ननृतुश्चाप्सरःसङ्घाः किन्नरा वाद्यवादकाः ।।४८।।

नारद मुनिले प्रस्थान गर्नुभएपछि भगवान् शङ्करले युद्धको मैदानमा मूर्च्छित भएका देवताहरूलाई जगाएर सावधान बनाउनुभयो । ती देवताहरूलाई नारदजीले भनेका कुराहरू बताउँदै श्रीगणेशले त्रिपुरलाई दिएका वरदानको पनि संस्मरण गराउनुभयो ।।३४-३८।। सदाशिवजीले दैत्यराज त्रिपुरको वधका लागि अब महान् प्रयत्न आरम्भ गर्नुभयो । आफ्नै इच्छाले आफ्ना तेजबाट सर्वनाश गर्न सक्ने संहारका देवताको यो प्रयत्न सान्दर्भिक थियो ।।३९।। शिवजीले पृथिवीलाई रथका रूपमा, सूर्य र चन्द्रमालाई पाङ्ग्राका रूपमा, ब्रह्माजीलाई रथका सञ्चालक सारथिका रूपमा, हिमालय पर्वतलाई धनुका रूपमा, भगवान् नारायणलाई बाणका रूपमा र अश्विनी कुमारहरू घोडाका रूपमा नियुक्त गरी विचित्र रथ तयार गर्नुभयो। त्यसपछि भगवान् शङ्करले आचमन गरी मनबाट श्रीगणेशको संस्मरण गर्दै उहाँले उपदेश गर्नुभएको श्रीगणेशसहस्रनाम पाठ गर्नुभयो। त्यसका साथै श्रीगणेशको एकाक्षरी मन्त्र जपेर त्यसबाट आफ्नो पिनाक नामक अस्त्रलाई पनि अभिमन्त्रित गर्नुभयो ।।४०-४१।। जुन बेला शिवजीले विष्णुरूप आफ्ना महाबाणलाई अभिमन्त्रित गर्नुभयो त्यस बेला पृथिवी, शेषनाग, वन, पर्वत आदि चराचर सबै कम्पायमान भए। शिवजीका गणहरू ठूलो स्वर गरेर चिच्याउन थाले । अजगव नामक धनुषको शब्दले देवता र मानिसहरू पनि भ्रान्त भए।।४२-४३।। जुन बेला शिवजीले त्यो बाण प्रहार गर्नुभयो त्यस बेला आकाश डढ्न थाल्यो । भूमण्डल र पाताल पनि आगाका ज्वालाहरूबाट डढ्न थाले ।।४४।। भगवान्का बाणलाई देखेर त्रिपुरमा रहेको त्रिपुरासुर दैत्य भाग्न खोज्यो । त्यस बेला शिवजीले प्रहार गरेको बाण वेगपूर्वक त्रिपुरमा लाग्न पुग्यो र त्यसले त्रिपुरासुर दैत्य र त्रिपुरलाई पनि खरानी बनायो ।।४५।। त्रिपुरासुरको शरीरमा रहेको तेज सबै सेना, दैत्य, दानव र राक्षसहरूले हेदाहेर्दै शिवजीमा लीन भयो ।।४६।। त्यस बेला आकाशवाणी भयो- 'शिवजीद्वारा मारिएको त्रिपुरासुर दैत्य मुक्त भयो ।' त्यसपछि देवता र मुनिहरूले भगवान् शङ्करको स्तुति गरे ।।४७।। गन्धर्वहरू गाउन थाले, चारणहरू आनन्दले गीत सुन्न थाले, अप्सराहरू नाच्न लागे, किन्नरहरू बाजा बजाउन थाले र नारद आदि

मुमुचुः पुष्पवर्षाणि नारदाद्याः सुरर्षयः ।
ययुः शिवाज्ञया देवाः स्वं स्वं स्थानं निराधयः ।।४९।।

नमस्कृत्य महेशानं त्रिपुरासुरघातिनम् ।
मुनयोऽपि निरुद्वेगाः स्वस्वानुष्ठानतत्पराः ।।५०।।

आसँस्तस्मिन् हते दैत्ये वेदवेदाङ्गशालिनः ।
अग्निहोत्राणि यज्ञाँश्च दानानि च व्रतानि च ।।५१।।

चक्रुः सर्वजना भूमौ पुनरुत्साहसंयुताः ।
शैलादिगणपस्कन्दैः सर्वैः पारिषदैरपि ।।५२।।

कृतावनामस्त्र्यक्ष्योऽपि विभज्य तं महारथम् ।
जयशब्दैस्तूर्यशब्दैर्देवदुन्दुभिनिस्वनैः ।।५३।।

अलङ्कृतं शैलराजं कैलासं मुदितो ययौ ।
त्रिपुराररिति स्पष्टं ततो नामास्य पप्रथे ।।५४।।

एवं महागणपतेर्मन्त्रसामर्थ्यमीरितम् ।
सहस्रनाम्नामपि च प्रभावोऽयं निरूपितः ।।५५।।

ब्रह्मोवाच

न विज्ञातो मदन्येन कस्यापि न निवेदितः ।
पठनाच्छ्रवणादस्य सर्वकामफलं लभेत् ।।५६।।

देवर्षिहरूले पुष्पवृष्टि गर्न लागे । त्यसपछि शिवजीको आज्ञा पाएर चिन्तामुक्त भएका देवताहरू त्रिपुरारि शिवजीलाई प्रणाम गरी आ-आफ्ना धामतर्फ लागे ।।४८-४९।। मुनिहरू पनि दैत्यराज त्रिपुरको वध भएपछि वेद र वेदाङ्गको अध्ययन-अनुशीलन गर्दै निश्चिन्ततापूर्वक आ-आफ्ना अनुष्ठानमा तत्पर भए ।।५०।। पृथिवीवासी सबै मानिसहरूले फेरि उत्साहपूर्वक अग्निहोत्र यज्ञ, दान र व्रतहरू गर्न थाले । सुमेरुपर्वत, श्रीगणेश, स्कन्द र आफ्ना गणहरूद्वारा प्रणाम गरिनुभएका भगवान् शङ्कर पनि आफूले बनाएको रथलाई भताभुङ्ग बनाई नमःशब्द, भेरीघोष र देवदुन्दुभिका मङ्गलध्वनि श्रवण गर्दै कैलासतर्फ जानुभयो । त्रिपुरासुरको वधपछि शिवजीको नाम संसारमा त्रिपुरारि भनेर प्रसिद्ध भयो ।।५१-५४।। यस प्रकार यस अध्यायमा महागणपतिको मन्त्रको शक्ति र श्रीगणेशसहस्रनामको प्रभाव पनि वर्णन गरियो ।

**ब्रह्माजीले भन्नुभयो** - यस श्रीगणेशसहस्रनामको महिमा मबाहेक अरूले जान्दैनन् । आजभन्दा पहिले मैले कसैलाई पनि यसको उपदेश गरेको छैन । हे व्यास ! आज तिमीले यो सौभाग्य प्राप्त गर्‍यौ। श्रीगणेशसहस्रनामको पाठ र श्रवण गर्ने भक्तहरूले आफूले चिताएका सम्पूर्ण कामनाहरूका फल प्राप्त गर्दछन् ।।५५-५६।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे त्रिपुरासुरमोक्षणं नाम सप्तचत्वारिंशत्तमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रीशङ्करको विजय, त्रिपुरासुरको वध र त्रिपुरदाह' शीर्षकान्वित सत्चालीसौं अध्याय पूर्ण भयो ।।४७।।

ॐ

## अष्टचत्वारिंशोऽध्यायः { ४८ अध्याय }

व्यास उवाच

श्रुतं मया महाख्यानं त्रिपुरस्य वधाश्रयम् ।
तथापि श्रोतुमिच्छामि क्व स्थिता जगदम्बिका ।।१।।

कथमाविर्बभूवैषा तिथौ दग्धः क्व दैत्यराट् ।
एतत्सर्वं सविस्तारं कथयस्व पितामह ।।२।।

ब्रह्मोवाच

बाहुले पौर्णमास्यां स सायं दग्धो महासुरः ।
दिवायुद्धं महाघोरं प्रागेव वर्णितं हि तत् ।।३।।

यतोऽर्चितः सुरैः सर्वैर्जयशाली सुरारिहा ।
अतस्तस्यां दीपदानं कुर्वन्ति भुवि मानवाः ।।४।।

तस्यां स्नानञ्च दानञ्च जपहोमादिकञ्च यत् ।
बहुलं जायते यस्मात् तस्मात् सा बाहुली स्मृता ।।५।।

तस्यां ये तु न कुर्वन्ति त्रिपुरारिमहोत्सवम् ।
न लभन्ते जयं क्वापि दग्धपुण्या भवन्ति ते ।।६।।

अतस्तस्यां पौर्णमास्यां प्रातरर्चन्ति ये शिवम् ।
निशि यत् तैः कृतं पापं विलयं प्रतिपद्यते ।।७।।

आजन्मनः कृतं पापं मध्याह्नार्चनतस्तथा ।
सप्तजन्मार्जितं पापं प्रदोषार्चनतो मुने ।।८।।

आविर्भावं शिवायास्त्वं कथ्यमानं मया शृणु ।
तस्य मृत्युं शिवाज्ज्ञात्वा भयादन्तर्हिता शिवा ।।९।।

आविरासीज्जगन्माता हिमाचलगुहामुखात् ।
ददर्श पर्वतं घोरं सिंहव्याघ्रमृगाकुलम् ।।१०।।

**व्यासले भन्नुभयो-** हे भगवन् ! मैले हजुरका मुखबाट त्रिपुरासुरको वधसँग सम्बद्ध महत्त्वपूर्ण कथा सुनें । अब म जगदम्बिका भगवती कहाँ बस्नुहुन्छ ? कसरी उहाँले अवतार लिनुभएको थियो ? कुन तिथिमा दैत्यराज त्रिपुरासुर मऱ्यो ? यी सबै प्रश्नहरूको उत्तर मलाई बताउनुहोस् ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो -** हे व्यासजी ! त्रिपुरासुर कार्तिक महिनाको पूर्णिमा तिथिका दिन सायँकालमा शिवजीको बाणबाट भस्म भएको थियो । पूर्णिमा तिथिमा दिउँसो घनघोर युद्ध भयो, जसको वर्णन अघिल्लो अध्यायमा गरिसकिएको छ ।।३।। त्रिपुरासुरको वध पछि कार्तिक पूर्णिमाको रातमा सबै देवताहरूले विजयी भगवान् शङ्करको अर्चना गरेका थिए । त्यस कारण अहिले पनि पृथिवीका मानिसहरूले कार्तिक पूर्णिमाको रातमा दीपदान गर्दछन् ।।४।। कार्तिक पूर्णिमा तिथिमा गरिने स्नान, दान, जप, होम आदि सत्कर्मको फल बहुल अर्थात् दुगुना हुन्छ । त्यस कारण कार्तिक पूर्णिमा तिथिलाई बाहुली पूर्णिमा पनि भन्ने गरिएको छ ।।५।। जुन मानिसले कार्तिक महिनाको पूर्णिमा तिथिमा त्रिपुरारि भगवान् शङ्करको उत्सव गर्दैनन्, तिनीहरूले कहीं पनि विजय पाउँदैनन् र तिनका पुण्य पनि डढेर जान्छन् ।।६।। त्यस कारण कार्तिक पूर्णिमा तिथिमा बिहान जसले शिवजीको पूजा गर्दछन्, तिनले त्यस अघिल्लो रातमा गरेको पाप समाप्त हुन्छ ।।७।। पूर्णिमाको दिन मध्याह्नमा शिवजीको अर्चना गर्ने साधकका जन्मैदेखि गरेका पापहरू नष्ट हुन्छन् । कार्तिक पूर्णिमा तिथिको रातमा शिवजीको पूजा गर्ने साधकका सात जन्ममा गरेका पापहरू नष्ट हुन्छन् ।।८।। हे व्यास ! तपाईंले जगदम्बा भगवतीको उत्पत्तिको विषयमा सोध्नुभएको थियो त्यसबारे म भन्दछु, सुन्नुहोस् । शिवजीका हातबाट त्रिपुरासुरको मृत्यु भएको थाहा पाएपछि त्रिपुरासुरका डरले हिमालयको गुफामा लुक्नु भएकी जगन्माता पार्वती त्यस गुफाबाट प्रकट हुनुभयो। बाहिर आएपछि उहाँले सिंह, बाघ र मृगहरूले भरिएको डरलाग्दो पर्वत देख्नुभयो ।।९-१०।। त्यहाँ कतै पनि आफ्ना

अपश्यन्ती शिवं सा तु विरहाकुलमानसा ।
विललाप भृशं भीता हा तात हा शिवेति च ।।११।।

कथं मां न विजानीषे सर्वज्ञः सन् सदाशिव ।
वन एकाकिनीं घोरे क्रन्दन्तीं कुररीमिव ।।१२।।

कदा मे दर्शनं ते स्यात् किं मां विस्मृतवानसि ।
शक्ता न जीवितं धर्तुं सोढुं वा विरहं हर ।।१३।।

तात ! त्वमपि कुत्रासि न मे शोकं शृणोषि किम् ।
त्वां विना शरणं कं वा यामि किं वा करोम्यहम् ।।१४।।

योजयस्व पुनर्मां त्वं शिवेन च शिवेन च ।
इदानीं पुनरुत्पन्नां जानीहि जठरात् तव ।।१५।।

वरं तमेव शीघ्रं मे गवेषय सदाशिवम् ।
नो चेद् देहपरित्यागं भृगोरस्मात् करोम्यहम् ।।१६।।

क उवाच

एवं रुदन्त्यास्तस्यास्तु श्रुत्वा तां गिरमुत्तमाम् ।
न्यवेदयद्धिमवते कश्चिदागत्य धीवरः ।।१७।।

धीवर उवाच

काचिन्नितम्बिनी बाला सर्वाभरणभूषिता ।
ताटके बिभ्रती श्रुत्योर्मण्डले इव भास्वतः ।।१८।।

नानारत्नलसद्दीप्ति मुकुटं मस्तके भृशम् ।
ललाटे तु चतुष्कोणं मुक्ताषोडशशोभितम् ।।१९।।

पुष्पं काञ्चनरत्नाढ्यं मुक्तादाम विलम्बितम् ।
सीमन्तान्तर्गतं चारु नासिके स्वर्णमौक्तिकम् ।।२०।।

अङ्गदे चारुणी बाह्वोर्हस्तयोर्वलयानि च ।
लसत्काञ्चनरत्नाढ्यं प्रत्येकमङ्गुलीयकम् ।।२१।।

प्राणनाथ शिवजीलाई नदेखेर विरहले व्याकुल पार्वती अत्यन्त भयभीत भई हे पिता हिमालय ! हे प्राणनाथ शिवजी ! भन्दै विलाप गर्न लाग्नुभयो।।११।। हे शिवजी ! हजुर त सर्वज्ञ हुनुहुन्छ, म डरलाग्दो पर्वतको माझमा छु । के हजुरले थाहा पाउनुभएको छैन ? म घोर वनमा एक्लै न्याउली चरी झैं रोइरहेकी छु । के हजुरलाई यो कुरा विदित छैन ?।।१२।। हे भगवन् ! मैले हजुरको दर्शन कहिले पाउने छु ? के हजुरले मलाई बिर्सनुभयो? हे शिवजी ! म हजुरविना बाँच्न सक्दिनँ र विरहको दुःख पनि झेल्न सक्दिनँ । हे पिता हिमालय! हजुरलाई छाडी म कसका शरणमा जाऔँ ? के हजुरले मेरो वचन सुन्नुभएको छैन ? हे पिता ! मलाई हजुरले शिवजीसँग भेट गराउनुहोस् र मङ्गलमय जीवनका लागि सहयोग गर्नुहोस् । अहिले मलाई मेरै पेटबाट पुनर्जन्म पाएकी छोरी हो भन्ने ठान्नुहोस् ।।१३-१५।। हजुरले जुन वरसँग मेरो विवाह गरिदिनुभएको थियो ती मेरा वर सदाशिवजीको खोजी गर्नुहोस् । तपाईँले त्यसो गर्नुहुन्न भने मैले पनि यसै भीरबाट हाम्फालेर देहत्याग गर्नेछु।।१६।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी रोइरहेकी पार्वतीको उत्तम विलापवचन सुनेर कुनै निषादले आई हिमालय पर्वतलाई निवेदन गर्‍यो ।।१७।।

**निषादले भन्यो** - हे पर्वतराज हिमालय! अत्यन्त सुन्दर अङ्गप्रत्यङ्ग र आकर्षक नितम्ब भएकी कुनै युवती छन्, तिनले थरिथरिका उत्तम अलङ्कार धारण गरेकी छन्, तिनका कानमा सुन्दर सूर्यमण्डलझैं चम्किला स्वर्णकुण्डल शोभायमान छन्, तिनले आफ्नो मस्तकमा अनेक रत्नहरू जडित् चम्किलो मुकुट धारण गरेकी छन्, तिनले निधारमा सोह्रवटा मोतीका दानाले बनेको चौकुने अलङ्कार धारण गरेकी छन्, सुवर्ण- रत्न र सुन्दर फूलहरूले सजिएको मोतीको हार तिनको गलामा रहेको छ, तिनको सिउँदोमा रातो सिन्दूर छ, नाकमा सुन र मोतीका गहना छन्, तिनका दुबै हातमा सुन्दर केयूर रहेका छन्, तिनका मणिबन्धमा सुनका बाला चम्किएका छन्, तिनका हातका औंलाहरूमा सुन र रत्नले जडित औंठीहरू छन्, तिनको छातीमा चोलीबाहिर मोतीको माला गजबले सुहाएको छ, तिनको रेशमी वस्त्रले ढाकिएको कम्मरमा सुन र रत्नले बनेको कन्धनी शोभायमान छ, तिनको

मुक्ताफलमयीं मालां लसत्कञ्चुकसंश्रिताम् ।
हेमरत्नमयीं काञ्चीं कटौ क्षौमावृते शुभाम् ।।२२।।

गुल्फयोः शृङ्खले हैमे शिञ्जच्चारुसुनूपुरे ।
पादाङ्गुलीष्वपि पृथक् तत्तद्भूषणमुत्तमम् ।।२३।।

एवं सर्वानवद्याङ्गी रुदती विह्वला भृशम् ।
दृष्टा पृष्टा न मां वक्ति गृह्णाति सा तवाभिधाम् ।।२४।।

ब्रह्मोवाच

इत्थं निशम्य हिमवाँस्त्वरितस्तां सुतां ययौ ।
सान्त्वयन् हेतुगर्भाभिर्वाग्भिस्तामवदत् सुधीः ।।२५।।

हिमवानुवाच

किमर्थं शोचसे सुभ्रु ! सृष्टिस्थित्यन्तहेतुके ।
सर्वलक्षणसम्पूर्णे सर्वशक्तियुतेऽनघे ।।२६।।

अकर्तुमन्यथाकर्तुं कर्तुमीशे ! महेश्वरि !
अवाप्तसर्वकामे च सर्वप्राण्यन्तरं गते ।।२७।।

न वियुक्ता शिवेन त्वं सर्वान्तर्यामिणि ! शुभे !
अथापि योजयिष्ये त्वां शिवेन शिवकारिणा ।।२८।।

उत्तिष्ठेति गृहीत्वा तामाययौ निजमन्दिरम् ।
ननन्द पार्वती तत्र दृष्ट्वा मेनां सुतान्विताम् ।।२९।।

निश्वासपरमाऽप्यासीच्छिवं द्रष्टुं समुत्सुका ।
उवाच पितरं नत्वा साधूपायं वदस्व मे ।।३०।।

व्रतं दानं तपो वापि दुष्करं शिवलब्धये ।
करिष्ये तमहं तात ! पूर्ववत्तप उत्तमम् ।।३१।।

गोलीगाँठामा पनि सुनले बनेका अलङ्कार कसिएका छन्, तिनका पाउमा सुनका नूपुर शब्दायमान छन्, तिनका पाउका औंलाहरूमा छुट्टा-छुट्टै अनेक प्रकारका रत्नहरूले बनेका औंठीहरू शोभायमान छन् । त्यस्तो सम्पूर्ण अङ्ग-प्रत्यङ्गमा सौन्दर्य भरिएकी ती अज्ञातसुन्दरी व्याकुल भएर रोइरहेकी छन्। तिनलाई देखेर मैले सबै कुरा सोधें, तर उनी मसँग केही पनि बोलिनन् । केवल हे पिता हिमालय ! भन्दै हजुरकै नाम लिइरहेकी थिइन् ।।१८-२४।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी निषादका मुखबाट एउटी सुन्दरीको कुरा सुनेपछि हिमालय पर्वत तुरुन्तै आफ्नी छोरी पार्वतीका सामु गए। अत्यन्त युक्तियुक्त वचनहरूद्वारा सान्त्वना प्रदान गर्दै बुद्धिमान् हिमालयले पार्वतीलाई भने।।२५।।

**हिमालयले भने**- हे सुन्दरस्वरूप भएकी पुत्री! सृष्टि, स्थिति र संहारकी एकमात्र कारण हे सर्वशक्तिमती देवी! तिमी स्वयं सर्वलक्षणसम्पन्न छ्यौ, निष्पाप छ्यौ र सबै प्रकारका शक्तिले सम्पन्न पनि छ्यौ । तसर्थ किन चिन्ता गर्दछ्यौ ? हे महेश्वरी ! तिमी कुनै पनि कार्य गर्न, नगर्न र अन्यथा गर्न पनि समर्थ छ्यौ। हे सम्पूर्ण कामनाहरूकी स्वामिनी ! सबै प्राणीहरूका हृदयमा निवास गर्ने तिमी कहिले पनि शिवजीबाट अलग हुँदिनौ। हे कल्याणी ! तिमी सबैका हृदयमा वास गर्ने अन्तर्यामिनी हौ । यसो हो ता पनि म मङ्गलविधायक शिवजीसँग तिम्रो भेट अवश्य गराउने छु ।।२६-२८।। हिमालयले यसरी संझाएर उठ छोरी ! भनेर पार्वतीलाई साथ लिई आफ्नो घरमा आए। त्यहाँ आएपछि पार्वती पनि छोरासँग रमाएर बसेकी आफ्नी आमा मेनकालाई देखेर आनन्दित हुनुभयो ।।२९।। उहाँ आनन्दित हुनुभए पनि आफ्ना प्राणनाथ शिवजीको दर्शन गर्न परम उत्कण्ठित हुनुहुन्थ्यो। त्यस बेला उहाँले पिता हिमालयलाई प्रणाम गरेर भन्नुभयो - हे पिता! शिवदर्शनको उत्तम उपाय मलाई बताउनुहोस्।।३०।। म उहाँलाई पाउनका लागि व्रत, दान र दुष्कर तपस्या पनि गर्न सक्छु । मैले बाल्यावस्थामा हजुरको काखमा हुर्किरहेको बेला उहाँलाई आफ्नो स्वामी तुल्याउन जसरी तपस्या गरेकी थिएँ, त्यस्तो तपस्या फेरि पनि गर्न सक्छु ।।३१।।

**ब्रह्मोवाच**

**अवदज्जनकस्तां तु विचार्य मनसा सकृत् ।**
**कार्यसिद्धिकरं शीघ्रमुपायं शृणु तं मुने ।।३२।।**

**हिमवानुवाच**

**शृणु पार्वति ! वक्ष्यामि साधूपायं शिवाप्तये ।**
**उपास्तिं विघ्नराजस्य धर्मार्थकाममोक्षदाम् ।।३३।।**

**अनुष्ठितां महेन्द्राद्यैर्देवैश्च नारदादिभिः ।**
**प्राप्ताश्च सिद्धयस्तास्ताः शक्रादिपदलक्षणाः ।।३४।।**

**ब्रह्मणः सृष्टिसामर्थ्यं दत्तं तेन महात्मना ।**
**विष्णोश्चावनसामर्थ्यं दत्तं सर्वेश्वरेण ह ।।३५।।**

**शिवस्यापि च तेनैव सामर्थ्यं संहृतौ दृढम् ।**
**शेषस्यापि च तेनैव सर्वं विघ्नहरेण च ।।३६।।**

**धराधरणसामर्थ्यं दत्तं सर्वेश्वरेण ह ।**
**यस्य स्वरूपं न विदुर्ब्रह्माद्या मुनयोऽपि च ।।३७।।**

**वाचामगोचरो योऽसौ मनसोऽथाप्यगोचरः ।**
**गजाननस्वरूपेण परिदृश्योऽयमीश्वरः ।।३८।।**

**अतस्तेनैव रूपेण सर्वारम्भेषु पूज्यते ।**
**तमुपासस्व सर्वेशं मया प्रोक्तेन वर्त्मना ।।३९।।**

**ब्रह्माजीले भन्नुभयो -** हे व्यासजी ! पार्वतीका कुरा सुनेर हिमालय पर्वतले एक पटक राम्ररी मनमा विचार गरी कार्यसिद्धि गर्ने उपाय बताए। त्यस उपायको विषयमा तिमीले सुन्नुहोस् ।।३२।।

**हिमालयले भने -** हे पार्वती ! शिवजीको प्राप्तिका लागि म तिमीलाई राम्रो उपाय बताउँछु । सावधान भएर सुन। विघ्नराज श्रीगणेशको उपासनाबाट धर्म, अर्थ, काम र मोक्ष प्राप्त हुन्छन् ।।३३।। त्यो उपासना इन्द्रादि देवता र नारद आदि देवर्षिले पनि गरिसकेका छन् । त्यस उपासनाबाट इन्द्रादि देवताहरूले इन्द्रपदलगायतका अनेक थरि सिद्धि पनि प्राप्त गरेका छन् ।।३४।। महात्मा श्रीगणेशले ब्रह्माजीलाई सृष्टि गर्ने शक्ति, विष्णुलाई विश्वको पालन गर्ने शक्ति र शिवजीलाई संहार गर्ने अत्यन्त ठूलो शक्ति प्रदान गर्नुभएको छ । विघ्नहर्ता श्रीगणेशले शेषनागलाई पृथिवी धारण गर्न सक्ने शक्ति प्रदान गर्नुभएको छ। श्रीगणेश वाणी र मनबाट पनि अगोचर हुनुहुन्छ, तापनि गजाननका रूपमा भक्तहरूका सामु आई दर्शन दिनुहुन्छ ।।३५-३८ ।। त्यस कारण श्रीगणेश गजाननका रूपमा सबै कार्यहरूको आरम्भमा पुजिनु हुन्छ । हे पार्वती ! तिमीले पनि मैले बताएको विधिबाट सर्वेश्वर श्रीगणेश भगवान्को आराधना गर ।।३९।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे अम्बाविर्भावो नामाष्टचत्वारिंशत्तमोऽध्यायः**

**प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'पार्वतीको आविर्भाव र हिमालयद्वारा पार्वतीलाई पार्थिवपूजाविधिअनुसार श्रीगणेशको आराधना गर्न उपदेश' शीर्षकान्वित अठ्चालीसौं अध्याय पूर्ण भयो ।।४८।।**

ॐ

# ऊनपञ्चाशोऽध्यायः { ४९ अध्याय }

पार्वत्युवाच

दयानिधे गिरीन्द्र त्वं पितर्मे वद सत्वरम् ।
उपासनां गणेशस्य सर्वेशस्य जगद्गुरोः ।।१।।
यया शिवं समभ्येत्य शिवं प्राप्स्यामि शाश्वतम् ।
मर्त्यलोकेऽपि लोकानामुपकारो भविष्यति ।।२।।

हिमवानुवाच

तव स्नेहवशाद् देवि ! रहस्यं परमं शुभम् ।
लोकानां चोपकाराय वक्ष्ये शृण्वेकचेतसा ।।३।।
प्रत्यूषकाल उत्थाय नैर्ऋतीं दिशमाव्रजेत् ।
आच्छाद्य धरणीं पूर्वं तृणकाष्ठदलैरपि ।।४।।
उर्वरां वर्जयेत्तिष्ठन्नुत्सर्पन्न च बुद्धिमान् ।
त्यक्त्वा मूत्रपुरीषे तु यथोक्तं शौचमाचरेत् ।।५।।
दन्तजिह्वाविशुद्धिञ्च कृत्वा स्नातुं ततो व्रजेत् ।
नदीं तडागं वापीं वा सरः कूपमथापि वा ।।६।।
कृत्वा पूर्वं मलस्नानं मन्त्रस्नानं ततश्चरेत् ।
मृदा वा चन्दनेनापि तिलकं कुङ्कुमेन वा ।।७।।
कुर्याद्धौते वाससी वा परिधाय शुभासने ।
उपविश्यैकचित्तस्तु सर्वं नित्यं समाप्य च ।।८।।
मृत्तिकां सुन्दरां स्निग्धां क्षुद्रपाषाणवर्जिताम् ।
सुविशुद्धामवल्मीकां जलसिक्तां विमर्दयेत् ।।९।।
कृत्वा चारुतरां मूर्तिं गणेशस्य शुभां स्वयम् ।
सर्वावयवसम्पूर्णां चतुर्भुजविराजिताम् ।।१०।।
परश्वादिस्वायुधानि दधतीं सुन्दरां घनाम् ।
स्थाप्य पीठे ततः पाणी प्रक्षाल्य मेलयेत् सुधीः ।।११।।
पूजाद्रव्याणि सर्वाणि जलादीनि प्रयत्नतः ।
अष्टगन्धानक्षतांश्च रक्तपुष्पाणि गुग्गुलुम् ।।१२।।
त्रिपञ्चसप्तभिः पत्रैर्युतान् दूर्वाङ्कुरान् शुभान् ।
अष्टोत्तरशतं नीलान् श्वेतानानीय सुन्दरान् ।।१३।।
घृतदीपं तैलदीपं नैवेद्यं विविधं शुभम् ।
मोदकापूपलड्डूकान् पायसं शर्करायुतम् ।।१४।।

**पार्वतीले भन्नुभयो -** हे दयालु मेरा पिता पर्वतराज हिमालय ! छिटै मलाई सकल संसारका स्वामी र गुरु भगवान् श्रीगणेशको उपासनाका विषयमा बताउनुहोस् ।।१।। हे पिता! जुन उपासनाबाट मैले भगवान् शिवजीको दर्शन पाएर शाश्वत कल्याण प्राप्त गर्नेछु, त्यो उपासना मर्त्यलोकमा पनि सबैका लागि उपकारक हुनेछ ।।२।।

**हिमालयले भने -** हे देवी ! तिमीप्रति स्नेहका कारण र लोकको उपकार गर्न म परमकल्याणमय रहस्य बताउँछु । एकचित्त भएर सुन ।।३।। प्रत्येक बुद्धिमान् साधकले प्रातःकालमा जागेर नैर्ऋत्य दिशामा जानुपर्दछ । त्यहाँ गई सर्वप्रथम तृण र काठका टुक्राहरूले उर्वरा भूमिबाहेक अरू भूमिलाई ढाकेर मलमूत्र त्याग गरी यथोक्त शौच गर्नुपर्दछ ।।४-५।। दाँत र जिब्रो शुद्ध गरी नदी, तलाउ, पोखरी, सरोवर अथवा कुवामा गई सर्वप्रथम मलस्नान गर्नुपर्दछ । त्यसपछि मन्त्रस्नान गर्नुपर्दछ। माटाको, चन्दनको अथवा कुङ्कुमको तिलक लगाएर शुद्ध वस्त्र पहिरी उत्तम आसनमा बसेर सम्पूर्ण नित्यकर्म समाप्त गर्नुपर्दछ ।।६-८।। चिल्लो, राम्रो बालुवा, कङ्कण र ढुङ्गा नभएको, धमिराले उठाएको माटो नमिसिएको अर्थात् शुद्ध माटो मुछेर आफै भगवान् श्रीगणेशको सर्वाङ्गसम्पन्न, चतुर्भुजसहित विराजमान, परशु, माला आदि आयुध धारण गर्ने, सुन्दर एवं बलियो मूर्ति तयार गरी पीठमा स्थापना गर्नुपर्दछ ।।९-१०।। त्यसपछि हात धोएर बुद्धिमान् भक्तले सबै पूजाद्रव्य, शुद्ध जल, अष्टगन्ध, अक्षता, राता फूल, गोकुल धूप, तीनपाते अथवा पाँचपाते नीला र सेता दूर्वाङ्कुर जम्मा गरी घिउबत्ती, तेलबत्ती, अनेक थरि नैवेद्य, लड्डु, मालपुवा, चिनी राखेर तयार गरेको खीर, मसिनो चामलको भात, अनेक थरि व्यञ्जन, सुपारी, खयरको

सूक्ष्मञ्च तण्डुलान्नञ्च व्यञ्जनानि बहूनि च ।
सचन्द्रपूगचूर्णाढ्यं खाद्यखादिरसंयुतम् ।।१५।।

एलालवङ्गसम्मिश्रं ताम्बूलं केसरान्वितम् ।
जम्ब्वाम्रपनसादीनि द्राक्षारम्भाफलानि च ।।१६।।

तत्तदृतुभवानीशे नारिकेलानि चानयेत् ।
बहुप्रकारमार्तिक्यं काञ्चनीं दक्षिणां तथा ।।१७।।

एवं सम्भृतसम्भार एकान्तस्थलमास्थितः ।
चैलाजिने कुशमये आसने च कृतासनः ।।१८।।

भूतशुद्धिं प्रकुर्वीत प्राणानां स्थापनं तथा ।
दिग्बन्धपूर्वं देवाँश्च गणेशादीन् नमेत् पुरा ।।१९।।

अन्तर्बहिर्मातृकाश्च न्यसेदागममार्गतः ।
सन्निधानादिका मुद्रा दर्शयेद् गुरुमार्गतः ।
मन्त्रन्यासं ततः कृत्वा षडङ्गन्यासमेव च ।।२०।।

पूजाद्रव्याणि संशोध्य ततो ध्यायेद् गजाननम् ।
एकदन्तं शूर्पकर्णं गजवक्त्रं चतुर्भुजम् ।।२१।।

पाशाङ्कुशधरं देवं मोदकान् बिभ्रतं करैः ।
रक्तपुष्पमयीं मालां कण्ठे हस्ते परां शुभाम् ।।२२।।

भक्तानां वरदं सिद्धिबुद्धिभ्यां सेवितं सदा ।
सिद्धिबुद्धिप्रदं नृणां धर्मार्थकाममोक्षदम् ।
ब्रह्मरुद्रहरीन्द्राद्यैः संस्तुतं परमर्षिभिः ।।२३।।

आगच्छ जगदाधार सुरासुरवरार्चित ।
अनाथनाथ सर्वज्ञ गीर्वाणपरिपूजित ।।२४।।

स्वर्णसिंहासनं दिव्यं नानारत्नसमन्वितम् ।
समर्पितं मया देव तत्र त्वं समुपाविश ।।२५।।

देवदेवेश सर्वेश सर्वतीर्थाहृतं जलम् ।
पाद्यं गृहाण गणप ! गन्धपुष्पाक्षतैर्युतम् ।।२६।।

धूलो, इलायची, ल्वाङ र केशरबाट तयार गरिएको पान, जामुनाको फल, आँप, कटहर, दाख, केरा आदि नाना ऋतुमा उपलब्ध हुने फलहरू एवं नरिवलसमेत जम्मा गर्नुपर्दछ। धेरै थरिका आरती र सुवर्णमय दक्षिणासमेतको व्यवस्था गर्नुपर्दछ ।।११-१७।। यसरी सम्पूर्ण सामग्री जम्मा गरेपछि एकान्तस्थलमा आश्रय लिएर मृगचर्म र कुशको आसनमा बसी भूतशुद्धि र प्राणायाम गर्नुपर्दछ। दिग्बन्धनपूर्वक श्रीगणेशादि देवताहरूलाई नमस्कार गरी आगममार्गबाट अन्तर्मातृकान्यास र बहिर्मातृकान्यास गर्नुपर्दछ। गुरुले बताएअनुसार सन्निधान आदि मुद्रा प्रदर्शन गर्दै मन्त्रन्यास र षडङ्गन्यास गर्नुपर्दछ ।।१८-२०।। पूजा-द्रव्यहरूको शुद्धि गरी भगवान् श्रीगणेशको ध्यान गर्नुपर्दछ।

**ध्यान** - "एउटा दाँत धारण गर्नुहुने भएकाले जसलाई एकदन्त भनिन्छ, नाङ्लो अथवा सुपोजस्ता कान भएकाले जसलाई शूर्पकर्ण भनिन्छ, हात्तीको जस्तो मुखमण्डल भएकाले जसलाई गजवक्त्र भनिन्छ, चार हातले सुहाउनुभएको हुँदा जसलाई चतुर्बाहु अथवा चतुर्भुज भनिन्छ त्यस्ता पाश र अंकुश धारण गर्नुहुने, हातमा लड्डू लिनुहुने, कण्ठमा परममङ्गलमय राता फूलहरूद्वारा बनेको माला धारण गर्नुहुने, भक्तहरूलाई वरदान दिनुहुने, सिद्धि र बुद्धिनामक पत्नीहरूद्वारा सेवित र सबैलाई सिद्धि एवं बुद्धि प्रदान गर्नुहुने, मानिसहरूलाई धर्म, अर्थ, काम र मोक्षनामक पुरुषार्थ प्रदान गर्नुहुने र ब्रह्मा, रुद्र, विष्णु, इन्द्र आदि देवता एवं महर्षिद्वारा स्तुति गरिनुभएका भगवान् श्रीगणेशको म ध्यान गर्दछु" भनी ध्यान गर्नुपर्दछ ।।२१-२३।।

**आवाहन** - हे जगत्का आधार ! देवता र दानवद्वारा पूजित ! हे अनाथका नाथ ! हे सर्वज्ञ ! हे देववन्दित ! भगवन्! श्रीगणेश ! हजुर यहाँ आउनुहोस् । म हजुरको आवाहन गर्दछु ।।२४।।

**आसनार्पण** - हे भगवन् ! मैले हजुरलाई अनेक थरि रत्नहरूद्वारा जडित स्वर्णसिंहासन समर्पण गरिहेको छु, हजुर यहाँ आउनुहोस् र विराजमान हुनुहोस् ।।२५।।

**पाद्यार्पण** - हे देवदेवेश! मैले सबै तीर्थहरूबाट ल्याएको जल पाद्यका रूपमा अर्पण गर्दैछु, यसमा गन्ध, पुष्प र अक्षता पनि मिसिएको छ । कृपया स्वीकार गर्नुहोस् ।।२६।।

प्रवालमुक्ताफलपूगरत्न
ताम्बूलजाम्बूनदमष्टगन्धम् ।
पुष्पाक्षतायुक्तममोघशक्ते !
दत्तं मयाऽर्घ्यं सफलीकुरुष्व ।।२७।।

गङ्गादिसर्वतीर्थेभ्यः प्रार्थितं तोयमुत्तमम् ।
कर्पूरैलालवङ्गादिवासितं स्वीकुरु प्रभो ।।२८।।

चम्पकाशोकबकुलमालतीमोगरादिभिः ।
वासितं स्निग्धताहेतु तैलं चारु प्रगृह्यताम् ।।२९।।

कामधेनुसमुद्भूतं सर्वेषां जीवनं परम्
पावनं यज्ञहेतु ते पयः स्नानार्थमर्पितम् ।।३०।।

धेनुदुग्धसमुद्भूतं शुद्धं सर्वजनप्रियम् ।
मयाऽऽनीतं दधिवरं स्नानार्थं प्रतिगृह्यताम् ।।३१।।

नवनीतसमुत्पन्नं सर्वसन्तोषकारणम् ।
यज्ञाङ्गं देवताहारो घृतं स्नातुं समर्पितम् ।।३२।।

पुष्पसारघसम्भूतं सर्वतेजोविवर्धनम् ।
सर्वपुष्टिकरं देव ! मधु स्नानार्थमर्पितम् ।।३३।।

इक्षुसारसमुद्भूतां शर्करां सुमनोहराम् ।
मलापहारिणीं स्नातुं गृहाण त्वं मयाऽर्पिताम् ।।३४।।

सर्वमाधुर्यसद्हेतुः स्वादुः सर्वप्रियङ्करः ।
पुष्टिकृत् स्नातुमानीत इक्षुसारभवो गुडः ।।३५।।

**अर्घ्यसमर्पण** - हे अनेकशक्तिसम्पन्न भगवन् ! मुँगा, मोती, सुपारी, रत्न, पान र सुवर्णका साथ आठ प्रकारका सुगन्धित पदार्थहरूद्वारा सुवासित फूल र अक्षतासहित यो अर्घ्य हजुरलाई टक्र्याउँदैछु । यसलाई स्वीकार गर्नुहोस् ।।२७।।

**आचमनीयार्पण**- हे प्रभु ! गङ्गा आदि सबै तीर्थहरूबाट ल्याइएको यो उत्तम जल रहेको छ । यसमा कपूर, अलैंची, ल्वाङ आदि पदार्थ मिसिएको छ । यो उत्तम जल म हजुरलाई आचमनीयका रूपमा टक्र्याउँदैछु, स्वीकार गर्नुहोस् ।।२८।।

**तैलार्पण** - हे प्रभु ! चम्पक, अशोक, बकुल, मालती, मोगर आदिबाट तयार गरिएको, अङ्गहरूमा चिल्लोपन बढाउने यो सुगन्धित तेलद्वारा म हजुरको आराधना गर्दैछु । हजुरले यसलाई स्वीकार गर्नुहोस् ।।२९।।

**दुग्धार्पण** - हे गजानन ! कामधेनुबाट दोहन गरिएको सबैका लागि परम जीवनतत्त्वका रूपमा रहेको पवित्र र यज्ञसम्पादनका लागि अत्यन्त आवश्यक यो कामधेनुको दूध हजुरको स्नान सम्पन्न गर्न भनी अर्पण गर्दैछु । यसलाई स्वीकार गर्नुहोस् ।।३०।।

**दधिसमर्पण** - गाईका दूधबाट तयार गरिएको सबैलाई प्यारो लाग्ने उत्तम दही म हजुरलाई टक्र्याउँदैछु । हजुरले यसलाई स्वीकार गर्नुहोस् ।।३१।।

**घृतार्पण** - हे प्रभु ! मखनबाट तयार गरिएको सबैलाई सन्तोष दिने यज्ञको आवश्यक अङ्गको रूपमा सम्मानित देवताहरूको मीठो आहार यो घिउ हजुरको स्नानका लागि अर्पण गर्दछु । यसलाई स्वीकार गर्नुहोस् ।।३२।।

**मधुसमर्पण** - हे प्रभु ! फूलको रस र माहुरीको सीपबाट तयार भएको, सबै इन्द्रियहरूको तेज बढाउने र सबै प्रकारको पुष्टि प्रदान गर्ने यो मधु म हजुरलाई स्नानार्थ टक्र्याउँदैछु । स्वीकार गर्नुहोस् ।।३३।।

**शर्करार्पण** - हे प्रभु ! ऊँखुको रसबाट तयार गरिएको, हेर्दा अत्यन्त राम्रो, शरीरका मलहरूको नाश गर्ने यो चिनी म हजुरलाई स्नानार्थ टक्र्याउँदैछु । स्वीकार गर्नुहोस् ।।३४।।

**गुडार्पण** - हे ईश्वर ! सम्पूर्ण मिठासको हेतु, अत्यन्त स्वादु, सबैलाई प्रिय लाग्ने, ऊँखुका रसबाट तयार गरिएको पुष्टिदायक यो गुड हजुरलाई टक्र्याउँदैछु । स्वीकार गर्नुहोस् ।।३५।।

कांस्ये कांस्येन पिहितो दधिमध्वाज्यपूरितः ।
मधुपर्को मयाऽऽनीतः पूजार्थं प्रतिगृह्यताम् ।।३६।।

सर्वतीर्थाहृतं तोयं मया प्रार्थनया विभो !
सुवासितं गृहाणेदं सम्यक् स्नातु सुरेश्वर ।।३७।।

रक्तवस्त्रयुगं देव ! लोकलज्जानिवारणम् ।
अनर्घ्यमतिसूक्ष्मञ्च गृहाणेदं मयार्पितम् ।।३८।।

राजतं ब्रह्मसूत्रञ्च काञ्चनं रत्नसंयुक्तम् ।
भक्त्योपपादितं देव ! गृहाण परमेश्वर ।।३९।।

अनेकरत्नयुक्तानि भूषणानि बहूनि च ।
तत्तदङ्गे काञ्चनानि योजयामि तवाज्ञया ।।४०।।

अष्टगन्धसमायुक्तं रक्तचन्दनमुत्तमम् ।
द्वादशाङ्गेषु ते देव ! लेपयामि कृपां कुरु ।।४१।।

रक्तचन्दनसम्मिश्रास्तण्डुलास्तिलकोपरि ।
शोभायै सम्प्रदास्यामि गृहाण जगदीश्वर ।।४२।।

पाटलं कर्णिकारञ्च बन्धूकं रक्तपङ्कजम् ।
मोगरं मालतीपुष्पं गृह्यतां परमेश्वर ।।४३।।

नानापङ्कजपुष्पैश्च ग्रथितां पल्लवैरपि ।
बिल्वपत्रयुतां मालां गृहाण सुमनोहराम् ।।४४।।

दशाङ्गं गुग्गुलं धूपं सर्वसौगन्ध्यकारकम् ।
सर्वपापक्षयकरं त्वं गृहाण मयाऽर्पितम् ।।४५।।

**मधुपर्कार्पण** - हे गजानन ! काँसको पात्रमा काँसकै पात्रले ढाकेर तयार गरिएको दही, मह र घिउले परिपूर्ण यो मधुपर्क म हजुरलाई टक्र्याउँदैछु। यसलाई स्वीकार गर्नुहोस्।।३६।।

**स्नानीय जलार्पण** - हे विभु ! मैले प्रार्थनापूर्वक सबै तीर्थहरूबाट ल्याएको सुवासित यो जल हजुरलाई स्नानार्थ समर्पण गर्दछु । यसलाई स्वीकार गर्नुहोस् ।।३७।।

**वस्त्रयुगलार्पण** - हे देव ! संसारको लाज राखिदिने, अत्यन्त मूल्यवान् र मिही धागोबाट तयार गरिएको यो वस्त्रको जोडा म हजुरलाई टक्र्याउँदैछु। हजुरले स्वीकार गर्नुहोस् ।।३८।।

**ब्रह्मसूत्रार्पण** - हे प्रभु ! चाँदी, सुन आदि धातुहरूबाट सम्पन्न यो सुन्दर यज्ञसूत्र म भक्तिपूर्वक हजुरका निमित्त समर्पण गर्दैछु । यसलाई स्वीकार गर्नुहोस् ।।३९।।

**अलङ्कारार्पण** - अनेक रत्नहरूबाट तयार गरिएका यी अलङ्कारहरू हजुरका ती ती अङ्गहरूमा म पहिराउँछु । हजुरले तिनलाई स्वीकार गर्नुहोस् ।।४०।।

**रक्तचन्दनार्पण** - हे देव ! अष्टगन्धले सम्पन्न उत्तम यो रातो चन्दन, म हजुरका बाह्र अङ्गहरूमा लेपन गर्दछु । यसलाई स्वीकार गर्नुहोस् ।।४१।।

**तण्डुलार्पण** - हे प्रभु ! हजुरले लगाउनु भएको तिलकमाथि रक्तचन्दन मिसिएको यो अक्षता हजुरका शरीरको शोभा बढाउनका लागि म अर्पण गर्दैछु । यसलाई स्वीकार गर्नुहोस् ।।४२।।

**पुष्पार्पण**- हे परमेश्वर! पाडरी, कडेर, बाह्रमासे, रक्तकमल, मालतीपुष्प म हजुरलाई टक्र्याउँदैछु । हजुरले स्वीकार गर्नुहोस् ।।४३।।

**माल्यार्पण** - अनेक थरि कमलका फूलहरूले उनिएको सुन्दर पालुवाहरू बीचमा गाँसिएको, ठाउँ-ठाउँमा बेलपत्तीसमेत उनिएको यो मनोहर माला म टक्र्याउँदैछु । यसलाई स्वीकार गर्नुहोस् ।।४४।।

**धूपार्पण** - हे प्रभु ! दश अङ्गले सम्पन्न यो गोकुल धूप तयार गरेको छु । यसले मीठो सुगन्ध प्रवाहित गरिरहेको छ । यो सर्वपापनाशक पनि छ । यसलाई म हजुरका सामु भक्तिपूर्वक टक्र्याउँछु, स्वीकार गर्नुहोस् ।।४५।।

**सर्वज्ञ ! सर्वलोकेषु तमोनाशनमुत्तमम् ।**
**गृहाण मङ्गलं दीपं देवदेव ! नमोऽस्तु ते ।।४६।।**

**नानापक्वान्नसंयुक्तं पायसं शर्करान्वितम् ।**
**नानाव्यञ्जनशोभाढ्यं शाल्योदनमनुत्तमम् ।।४७।।**

**दधिदुग्धघृतैर्युक्तं लवङ्गैलासमन्वितम् ।**
**मरीचचूर्णसहितं क्वथिकावटकान्वितम् ।।४८।।**

**राजिकाधान्यसंयुक्तं मेथीपिष्टं सतक्रकम् ।**
**हिङ्गुजीरककूष्माण्डमरीचिमाषपिष्टकैः ।।४९।।**

**सम्पादितैः सुपक्वैश्च भर्जितैर्वटकैर्युतम् ।**
**मोदकापूपलड्डूकशष्कुलीमण्डकादिभिः ।।५०।।**

**पर्पटैरपि संयुक्तं नैवेद्यममृतान्वितम् ।**
**हरिद्राहिङ्गुलवणसहितं सूपमुत्तमम् ।।५१।।**

**ससामुद्रं गृहाणेदं भोजनं कुरु सादरम् ।**
**सुतृप्तिकारकं तोयं सुगन्धञ्च पिबेच्छया ।।५२।।**

**त्वयि तृप्ते जगत्तृप्तं नित्यतृप्ते महात्मनि ।**
**उत्तरापोशनार्थं ते दद्मि तोयं सुवासितम् ।।५३।।**

**मुखपाणिविशुद्ध्यर्थं पुनस्तोयं ददामि ते ।**
**दाडिमं मधुरं निम्बुजम्ब्वाम्रपनसादिकम् ।।५४।।**

**द्राक्षा रम्भाफलं पक्वकर्कन्धूखार्जुरं फलम् ।**
**नारिकेलं च नारङ्गमाञ्जिरं जम्बिरं तथा ।।५५।।**

**उर्वारुकञ्च देवेश ! फलान्येतानि गृह्यताम् ।**
**मुखपाणिविशुद्ध्यर्थं पुनस्तोयं ददामि ते ।।५६।।**

**दीपार्पण** - हे सर्वज्ञ ! हे सर्वलोकेश ! हे देवदेव ! अन्धकारनाशक यो मङ्गल दीप म टक्र्याउँदैछु, हजुरले यसलाई स्वीकार गर्नुहोस् ।।४६।।

**नैवेद्यार्पण** - हे प्रभु ! अनेक थरि पक्वान्नसहित चिनी राखेको यो खीर हजुरलाई नैवेद्यका रूपमा टक्र्याएको छु, यसलाई स्वीकार गर्नुहोस् ।।४७।। हजुरको परमतुष्टिका लागि मैले मीठो भोजन तयार गरेको छु, ल्वाङ र अलैंची मिसिएको, मरिचको धूलो छर्किएको, महबाट बनेका रोटी र बटुकसहित उपस्थापित, खेतमा लगाइने धानबाट बनेको मसिना चामलको भात, मेथीको धूलो छरिएको मोही, हिङ, जीरा, कुभिण्डो, मरिच र मास पिनेर तयार गरिएको यो लड्डु, राम्ररी भुटेर पकाएको बटुक, मालपुवा, लड्डु, जेरी र पापडसमेत रहेको यो अमृतमय भोजन हजुरले स्वीकार गर्नुहोस्। यसका साथ बेसार, हिङ र नूनसमेत राखिएको दाल पनि टक्र्याएको छु । यसलाई पनि नैवेद्यका रूपमा स्वीकार गर्नुहोस् ।

**जलार्पण** - हे प्रभु ! नरीवलसहित अत्यन्त तृप्ति दिने यो सुगन्धित जल हजुरका सामु टक्र्याएको छु । यसलाई इच्छानुसार पिउनुहोस् ।।४८-५२।।

**उत्तरापोशनार्पण** - हे भगवन् ! हजुर नित्यतृप्त महात्मा हुनुहुन्छ । हजुर तृप्त हुनुभएमा संसार नै तृप्त हुन्छ । हजुर तृप्त हुनुभएको ठानेर म उत्तरापोशनको रूपमा जल चढाइरहेको छु । स्वीकार गर्नुहोस् ।।५३।।

**जलार्पण** - हजुरका मुख र हातहरूको शुद्धिका लागि फेरि म हजुरलाई जलार्पण गर्दछु । यसलाई स्वीकार गर्नुहोस्।

**फलार्पण** - हे भगवन् ! गुलियो दाडिम, निम्बु, जामुनको फल, आँप, कटहर, दाख, केरा, पाकेको बयर, खजुर, नरीवल, सुन्तला, अञ्जीर, ज्यामिर, काँक्रो, खर्बुजा, तर्बुजा आदि यी फल म समर्पण गर्दैछु । हजुरले स्वीकार गर्नुहोस् ।

**जलार्पण** - हे प्रभु ! हात, मुख धुनका लागि म फेरि हजुरलाई जल टक्र्याउँदैछु, स्वीकार गर्नुहोस् ।।५४-५६।।

गृहाण चन्दनं चारु कराङ्गोद्वर्तनं शुभम् ।
नानापरिमलद्रव्यैर्निर्मितं चूर्णमुत्तमम् ।।५७।।

सुगन्धिनामकं पुण्यगन्धि चारु प्रगृह्यताम् ।
चारुशालूरसम्भूतं वंशसारसमुद्भवम् ।।५८।।

सीमन्तभूषणं चूर्णं लाक्षारञ्जितमस्तु ते ।
सचन्द्रपूगचूर्णाढ्यं खाद्यखादिरसंयुतम् ।।५९।।

एलालवङ्गसम्मिश्रं ताम्बूलं केसरान्वितम् ।
न्यूनातिरिक्तपूजायाः सम्पूर्णफलहेतवे ।।६०।।

दक्षिणां काञ्चनीं देव ! स्थापयामि तवाग्रतः ।
सितपीतैस्तथारक्तैर्जलजैः कुसुमैः शुभैः ।।६१।।

ग्रथितां सुन्दरां मालां गृहाण परमेश्वर ।
हरिताः श्वेतवर्णा वा पञ्चत्रिपत्रसंयुताः ।।६२।।

दूर्वाङ्कुरा मया दत्ता एकविंशतिसम्मिताः ।
एकविंशतिसङ्ख्याकाः कुर्वे देवप्रदक्षिणाः ।।६३।।

पदे पदे ते देवेश ! नश्यन्तु पातकानि मे ।
औदुम्बरे राजते वा कांस्ये काञ्चनसम्भवे ।।६४।।

पात्रे प्रकल्पितान् दीपान् गृहाण चक्षुरर्पकान् ।
पञ्चारातिं पञ्चदीपैर्दीपितां परमेश्वर ।।६५।।

चारुचन्द्रनिभं दीपं गृहाण वीचिवारणम् ।
यथाऽस्य नेक्ष्यते भस्म तथा पापं विनाशय ।।६६।।

स्तोत्रैर्नानाविधैः सूक्तैः सहस्रनामभिस्ततः ।
उपविश्य स्तुवीतैनं कृत्वा स्थिरतरं मनः ।।६७।।

**उद्वर्तनार्पण** - हे भगवन् ! हजुरलाई हात र अरू अङ्गहरूमा लेपन गर्न म यो उवटनको धूलो टक्र्याउँदैछु । यो धूलो अनेक सुगन्धी द्रव्यहरूबाट तयार गरिएको छ । यसलाई स्वीकार गर्नुहोस् ।

**सीमन्तभूषण** - हे प्रभु! धातुविशेष, वंशलोचन र लाहासमेत राखेर तयार गरिएको चूर्ण हजुरको सिउँदाको भूषण बनाउनका लागि अर्पण गर्दैछु । स्वीकार गर्नुहोस्।।५७-५९।।

**ताम्बूलार्पण** - हे प्रभु ! कपूर, सुपारीका टुक्रा, खयरको लेप, अलैंची, ल्वाङ, केशरसहित यो पान म हजुरलाई टक्र्याउँदैछु ।।६०।।

**दक्षिणा** - हे देव ! न्यूनातिरिक्त पूजाको सम्पूर्ण फलप्राप्तिका लागि म हजुरलाई दक्षिणाको रूपमा स्वर्णमुद्रा टक्र्याउँदैछु ।

**माल्यार्पण** - हे भगवन् ! सेता, पहेंला, राता कमल र मङ्गलमय अन्य पुष्पहरूबाट तयार गरिएको यो राम्रो माला म हजुरलाई टक्र्याउँछु । स्वीकार गर्नुहोस् ।

**दूर्वाङ्कुरार्पण**- हरिया, सेता, पाँचपाते र सातपाते एक्काइस वटा यी दूर्वाङ्कुर म हजुरलाई समर्पण गर्दैछु, स्वीकार गर्नुहोस्।

**प्रदक्षिणार्पण** - हे देव ! म एक्काइसपटक हजुरका वरिपरि घुमेर हजुरलाई एक्काइस प्रदक्षिणा टक्र्याउँदैछु, प्रदक्षिणाका प्रत्येक पाइलाबाट मेरा सबै पाप नष्ट हुनेछन् ।

**दीपार्पण** - हे प्रभु ! तामो, चाँदी, सुन अथवा काँसको दीपदानीमा मैले दीपहरू बालेर हजुरलाई दीप अर्पण गर्दैछु ! यो दीप मेरा लागि प्रकाशको कारक बनोस् ।

**पञ्चारार्तिकार्पण** - हे परमेश्वर ! यी पाँचवटा बत्तीबाट तयार गरिएको यो पञ्चारार्तिक हजुरलाई टक्र्याउँदैछु।।६१-६५।।

**पुनः दीपार्पण**- हे प्रभु ! मनको चञ्चलतालाई निवारण गर्ने यो दीप म हजुरलाई अर्पण गर्दैछु । जसरी यस दीपको भस्म हेरिँदैन, त्यसरी नै मैले पनि पाप हेर्न नपरोस् ।।६६।।

**स्तुतिसमर्पण** - हिमालय भन्दछन् - हे स्कन्द ! यसरी पूजा गरेपछि साधकले अनेक थरि स्तोत्र पाठ, सूक्तपाठ, सहस्रनाम जप गरेर आसनमा बसी भगवान् श्रीगणेशको

दीनाधीश ! दयानिधे ! सुरगणैः संसेव्यमान ! द्विज !
ब्रह्मेशानमहेन्द्रशेषगिरिजागन्धर्वसिद्धैः स्तुत !
सर्वारिष्टनिवारणैकनिपुण ! त्रैलोक्यनाथ प्रभो ।
भक्तिं मे सफलां कुरुष्व सकलां क्षान्त्वाऽपराधान् मम ।।६८।।

इति मूर्तिं समभ्यर्च्य दण्डवत् प्रणिपत्य च ।
जपेन्मन्त्रं ततो देवि ! सर्वसिद्धिप्रदायकम् ।।६९।।

निम्नानुसार स्तुति गर्नुपर्दछ – हे दीन-दुःखीका स्वामी! हे करुणावतार ! देवताहरूद्वारा वन्दित हे श्रीगणेश ! हे उत्तम ब्राह्मण ! ब्रह्मा, शिव, स्कन्द, शेषनाग, पार्वती, गन्धर्व, सिद्धहरूद्वारा वन्दित हे ईश्वर ! सबै अनिष्टहरूको निवारण गर्न एकमात्र कुशल हे प्रभु ! हे त्रिलोकीका स्वामी ! मेरा अपराधलाई क्षमा गरी मेरो भक्ति सफल तुल्याउनुहोस् । यसरी स्तुति गरेपछि श्रीगणेश मूर्तिमा पूजा गरी दण्डवत् प्रणाम गरेर साधकले सर्वसिद्धिप्रद श्रीगणेशमन्त्रको जप गर्नुपर्दछ ।।६७-६९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे श्रीगणेशपार्थिवपूजानिरूपणं नामैकोनपञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'गणेशपार्थिवपूजाविधिको प्रकाशन' शीर्षकान्वित उनान्पचासौं अध्याय पूर्ण भयो ।।४९।।

ॐ

# पञ्चाशोऽध्यायः { ५० अध्याय }

### पार्वत्युवाच

अहं मन्त्रं न जानामि गिरीन्द्र ! मे वद स्वयम् ।
अनुग्रहं गणेशस्य यामि यामि शिवं शिवम् ।।१।।

### हिमवानुवाच

मन्त्रा नानाविधा देवि नानासिद्धिप्रदायकाः ।
असङ्ख्याता गणेशस्य काँश्चित् तेषु वदामि ते ।।२।।

कृत्वा पद्मासनं सम्यङ् नियम्य खानि सर्वशः ।
कृतन्यासविधिः पश्चाज्जपं कुर्यान् निजेच्छया ।।३।।

एकाक्षरस्य मन्त्रस्य लक्ष्यं लक्ष्यार्धमेव च ।
षडक्षरस्य मन्त्रस्य नियुतं चायुतं तथा ।।४।।

तथा पञ्चाक्षरस्यापि दशाष्टाक्षरयोरपि ।
अष्टात्रिंशद्वर्णमन्त्रो जप्तव्योऽयुतसङ्ख्यया ।।५।।

एवं नानाविधान् मन्त्रान् जपन्ति स्वेष्टसिद्धये ।
त्वं तु पार्वति ! मे वाक्यं शृणुष्वैकाग्रमानसा ।।६।।

एकाक्षरं षडर्णञ्च गृहाण मन्त्रमुत्तमम् ।
नभःशुक्लचतुर्थ्यां त्वमारम्भं कुरु सुव्रते ।।७।।

अनुष्ठानं मासमात्रं कुरु कार्यं भविष्यति ।
शिवं प्राप्स्यसि सुव्यक्तमन्यद् यच्चापि वाञ्छितम् ।।८।।

पार्थिवी पूजिता मूर्तिः स्त्रिया वा पुरुषेण वा ।
एका ददाति सा काम्यं धनपुत्रपशूनपि ।।९।।

असाध्यं साधयेन्मर्त्यो मूर्तिद्वयप्रपूजनात् ।
त्रिमूर्तिपूजनाद् राज्यं रत्नानि सर्वसम्पदः ।।१०।।

चतुर्मूर्तीः पूजयेद् यो धर्मार्थकाममोक्षभाक् ।
सार्वभौमो भवेद् राजा पञ्चमूर्तिप्रपूजनात् ।।११।।

**पार्वतीले भन्नुभयो -** हे पर्वतराज हिमालय ! मैले श्रीगणेशको मन्त्र जानेकी छैन । हजुरले मलाई श्रीगणेशको मन्त्र उपदेश गर्नुहोस् । जसबाट म उहाँको मङ्गलमय कृपा र कल्याण पनि प्राप्त गर्न सकूँ ।।१।।

**हिमालयले भने -** हे पार्वती ! श्रीगणेशका अनेक थरि सिद्धि प्रदान गर्ने असङ्ख्य मन्त्र छन्, तीमध्ये केही मन्त्रहरूको विषयमा म तिमीलाई उपदेश गर्दछु ।।२।।

साधकले पद्मासन बाँधेर आफ्ना इन्द्रियहरूमाथि नियन्त्रण गरी न्यासको विधि पूरा गरेर इच्छानुसार श्रीगणेशमन्त्रको जप गर्नुपर्दछ ।।३।। एकाक्षरी मन्त्रको एक लाख अथवा पचास हजार सङ्ख्यामा जप गर्नुपर्दछ । षडक्षरी मन्त्रको एक लाख अथवा दश हजारको सङ्ख्यामा जप गर्नुपर्दछ ।।४।। त्यसैगरी पञ्चाक्षरी श्रीगणेश मन्त्र, दशाक्षरी श्रीगणेश मन्त्र, अष्टाक्षरी श्रीगणेश मन्त्र, अट्ठाइस अक्षरको श्रीगणेश मन्त्रलाई पनि दश-दश हजारको सङ्ख्यामा जप्नु पर्दछ ।।५।। साधकले आफ्नो इष्टसिद्धिका लागि अनेक थरि मन्त्रहरूको जप गर्नुपर्ने विधान रहेको छ । हे पार्वती ! तिमीले एकाग्रचित्त भएर मेरा उपदेशवाक्यहरू श्रवण गर । तिमीले एकाक्षरी मन्त्र र षडक्षरी मन्त्र गुरुबाट ग्रहण गर। हे सुव्रता छोरी ! तिमीले भाद्रशुक्ल चतुर्थी तिथिमा अनुष्ठान आरम्भ गर । एक महिनासम्म यो अनुष्ठान गरेपछि तिम्रो कार्य सिद्ध हुनेछ। प्रत्यक्षरूपमा तिमीले शिवजीको दर्शन पाउनेछ्यौ र तिमीले चिताएका अरू कामना पनि पूर्ण हुनेछन् ।।६-८।। नारी अथवा पुरुषले एउटा पार्थिव प्रतिमाको पूजन गर्दछन् भने चिताएको कामनाको पूर्ति हुन्छ र तिनले धन, पुत्र र पशुहरूसमेत प्राप्त गर्दछन् । श्रीगणेशका दुई पार्थिव मूर्तिहरूको पूजन गर्नाले असाध्य इच्छा पनि परिपूर्ण हुन्छ । श्रीगणेशका तीनवटा पार्थिव प्रतिमाको पूजनबाट राज्य, रत्न र सबै किसिमका सम्पत्ति प्राप्त हुन्छन् ।।९-१०।। जसले श्रीगणेशका चारवटा पार्थिव प्रतिमाको पूजन गर्दछ, त्यसले धर्म, अर्थ, काम र मोक्ष प्राप्त गर्दछ । श्रीगणेशका पाँचवटा पार्थिव प्रतिमाहरूको पूजनबाट साधक सार्वभौम राजा बन्दछ ।।११।।

षण्मूर्तिपूजया सृष्टिस्थितिप्रलयकृद् भवेत् ।
सप्ताष्टनवमूर्तीनां पूजया सर्वविद् भवेत् ।।१२।।

भूतं भव्यं भविष्यच्च वेत्ति देवप्रसादतः ।
त्रयस्त्रिंशत्कोटिदेवा वह्नीन्द्रशिवविष्णवः ।।१३।।

सनकाद्या मुनिगणाः सेवन्ते दशपूजनात् ।
एकादशार्चनादेव दशरुद्राधिपो भवेत् ।।१४।।

द्वादशादित्यराज्यञ्च लभेच्च द्वादशार्चनात् ।
अतिसङ्कटवेलासु कुर्याद् वृद्ध्या प्रपूजनम् ।।१५।।

अष्टोत्तरशतं यावत् तावत् तत्तदवाप्नुयात् ।
महामुक्तिमवाप्नोति लक्षपूजनतोऽन्वहम् ।।१६।।

कारागृहान्मुक्तिकामः कारयेन्मूर्तिपञ्चकम् ।
त्रिःसप्तरात्रान्मुच्येत गणेशानुग्रहान्मुने ।।१७।।

सप्त मूर्तीः प्रकुर्वीत प्रत्यहं पञ्चवत्सरम् ।
महापापात् प्रमुच्येत गणेशे भक्तिमान्नरः ।।१८।।

आजन्ममरणादेकां पूजयेत् पार्थिवीं नरः ।
गणेशः स तु विज्ञेयो दर्शनाद् विघ्ननाशनः ।।१९।।

तमेव सर्वकामेषु पूजयेन्न गणाधिपम् ।
तस्यैव पूजया प्रीतो न देवःस्यात् तथा स्वयम् ।।२०।।

सर्वरोगप्रपीडासु मूर्तीनां त्रयमुत्तमम् ।
नवाहं पूजयेद् यस्तु सर्वपीडां व्यपोहति ।।२१।।

सौवर्णी राजती ताम्री रीतिकांस्यसमुद्भवा ।
मौक्तिकी च प्रवाली च सर्वमेतत् प्रयच्छति ।।२२।।

जसले श्रीगणेशका छवटा पार्थिव मूर्तिहरूको पूजन गर्दछ, त्यो सृष्टिपालन र संहार गर्न समर्थ हुन्छ । सातवटा, आठवटा र नौवटा मूर्तिहरूको पूजन गर्नाले साधक सर्वज्ञ बन्दछ । त्यसले श्रीगणेशको कृपाबाट भूत, भविष्य र वर्तमानका सम्पूर्ण घटना जान्न सक्दछ । दशवटा मूर्तिहरूको पूजन गर्नाले तेंत्तीस कोटि देवता, अग्नि, इन्द्र, शिव, विष्णु, सनकादि मुनिगणले सेवा गर्दछन् । एघारवटा पार्थिव मूर्तिहरूको पूजन गर्ने साधक दश रुद्रको अधिपति बन्दछ ।।१२-१४।। बाह्रवटा पार्थिव मूर्तिहरूको पूजा गर्नाले साधकले द्वादश आदित्यको साम्राज्य प्राप्त गर्दछ । अत्यन्त सङ्कटका समयमा मूर्तिहरूको सङ्ख्यावृद्धि गरी पूजन गर्नुपर्दछ ।।१५।। एक सय आठ पार्थिव मूर्तिको पूजन गर्दासम्म सङ्ख्यावृद्धि गरी पूजन गर्न सकिन्छ र तत्तत् फल प्राप्त गर्न पनि सकिन्छ । एक लाख मूर्तिहरूको पूजन गर्ने साधकले महामुक्ति प्राप्त गर्दछ ।।१६।। कारागृहबाट मुक्त हुन चाहने साधकले पाँचवटा मूर्ति तयार गरी तिनको पूजा गर्दछ भने त्यो भगवान् श्रीगणेशको अनुग्रहबाट एक्काइस दिनमा कारागृहबाट मुक्त हुन्छ ।।१७।। श्रीगणेशमा भक्ति गर्ने साधकले दिनदिनै सातवटा मूर्तिहरूको पूजा गर्दै यो पूजनक्रमलाई पाँच वर्षसम्म लगातार जारी राख्दछ भने त्यो महापापबाट मुक्त हुन्छ ।।१८।। जन्मदेखि मृत्युकालसम्म जुन साधकले एउटा पार्थिव मूर्तिको निरन्तर पूजा गर्दछ,त्यो साधक साक्षात् श्रीगणेशकै स्वरूप मानिन्छ । त्यसको दर्शन गर्नाले मात्र विघ्नहरू नष्ट भएर जान्छन् ।।१९।। सम्पूर्ण कामनासिद्धिका लागि त्यस्ता श्रीगणेशरूप भक्तको पूजा गर्नुपर्दछ । त्यस्ता भक्तको दर्शन पाएसम्म त्यसकै पूजा गरे हुन्छ । श्रीगणेशको पूजा गर्नुपर्दैन । भगवान् श्रीगणेश त्यस्ता भक्तको पूजाबाट जति प्रसन्न हुनुहुन्छ त्यति आफ्नो पूजाबाट प्रसन्न हुनुहुन्न ।।२०।। जुन साधकले सबै प्रकारका रोगहरूको पीडा हुँदा नौदिनसम्म लगातार श्रीगणेशका तीनवटा पार्थिव मूर्तिहरूको पूजन गर्दछ, त्यसले आफ्ना सबै पीडानिवारण गर्दछ ।।२१।। सुवर्णबाट बनेको सौवर्णी प्रतिमा, रजत अर्थात् चाँदीबाट बनेको राजती प्रतिमा, तामाबाट बनेको ताम्री प्रतिमा, रीति अर्थात् पित्तलबाट बनेको रीतिप्रतिमा, काँसबाट बनेको काँस्यप्रतिमा, मोतीबाट बनेको मौक्तिकी प्रतिमा, प्रबाल अर्थात् मुँगाबाट बनेको प्रबाली प्रतिमा गरी यी सबै प्रकारका प्रतिमाहरूको पूजा गर्नाले माथि बताएका

एवं कृते व्रते देवि ! सर्वान् कामानवाप्स्यसि ।
यावद् भाद्रपदे मासि चतुर्थी परिलभ्यते ।।२३।।

तस्यां महोत्सवः कार्यो यथाविभवमादरात् ।
रात्रौ जागरणं कार्यं तत्कथावाद्यगायनैः ।।२४।।

प्रभाते विमले स्नात्वा पूर्ववत् पूजयेद् विभुम् ।
गणेशं वरदं देवं ततो होमं समारभेत् ।।२५।।

कुण्डे साङ्गे स्थण्डिले वा हूयाज्जपदशांशतः ।
पूर्णाहुतिं ततः कुर्याद् बलिदानपुरःसरम् ।।२६।।

आचार्यं पूजयेत् पश्चात् गोभूवासोधनादिभिः ।
ब्राह्मणाँस्तोषयेत् पश्चाद्धोमशेषं समापयेत् ।।२७।।

तर्पयेत् तद्दशांशेन तद्दशांशेन भोजयेत् ।
ब्राह्मणान् वेदविदुषः सपत्नीकाँश्च काँश्चन ।।२८।।

तेभ्यो भूषणवासांसि दद्याच्छक्त्या च दक्षिणाम् ।
दद्यात् स्त्रीणामलङ्कारान् योषिद्भ्यश्च सकञ्चुकान् ।।२९।।

तुष्टये गणनाथस्य सिद्धिबुद्धियुतस्य ह ।
वित्तशाठ्यं न कुर्वीत यथाविभवमाचरेत् ।।३०।।

ततः सुहृज्जनयुतः स्वयं भुञ्जीत सादरम् ।
अपरस्मिन् दिने मूर्तिं नृयाने स्थापयेन्मुदा ।।३१।।

छत्रध्वजपताकाभिश्चामरैरुपशोभिताम् ।
किशोरैर्दण्डयुद्धेन युध्यद्भिश्च पुरःसरम् ।।३२।।

महाजलाशयं गत्वा विसृज्य निनयेज्जले ।
वाद्यगीतध्वनियुतो निजमन्दिरमाव्रजेत् ।।३३।।

फल प्राप्त हुन्छन्।।२२।। हे पार्वती ! उक्त विधिअनुसार तिमीले पूजा गर्दछ्यौ भने तिम्रा सबै कामना परिपूर्ण हुनेछन् । भदौ महिनाको शुक्लपक्षको चतुर्थी तिथिमा आफ्नो सम्पत्तिअनुसार श्रद्धापूर्वक भक्तहरूले श्रीगणेशोत्सव मनाउनुपर्दछ । कथाश्रवण, कीर्तन,भजन, वाद्यवादन आदि क्रियाकलापका साथ त्यो रातभर जाग्राम बस्नुपर्दछ ।।२३-२४।। अर्को दिन निर्मल प्रभातको उदय भएपछि स्नान गरी श्रीगणेशको पूजा गर्नुपर्दछ। त्यसपछि हवन आरम्भ गर्नुपर्दछ ।।२५।। अङ्गसहित होमकुण्ड अथवा स्थण्डिल अर्थात् यज्ञवेदीमा जपको दशांश हवन गर्नुपर्दछ। त्यसपछि बलिदानपूर्वक पूर्णाहुति गर्नुपर्दछ ।।२६।। पूर्णाहुति गरेपछि गाई, भूमि, वस्त्र, धन आदि दान गरी आचार्यको पूजा गर्नुपर्दछ । यसैगरी अन्य ब्राह्मणहरूलाई पनि यथाशक्ति दान दिएर सन्तुष्ट तुल्याउनु पर्दछ। त्यसपछि होमशेष गर्नुपर्दछ।।२७।। हवनको दशांश तर्पण र तर्पणको दशांश ब्राह्मणभोजन गराउनु पर्दछ । केही वेदवक्ता सपत्नीक ब्राह्मणहरूलाई अलङ्कार र वस्त्रहरूका साथै दक्षिणा प्रदान गरेपछि सँगै रहेका ब्राह्मणीहरूलाई पनि धोती-चोलोसहित नारीहरूले धारण गर्ने अलङ्कार दान गर्नुपर्दछ ।।२८-२९।।

सिद्धिबुद्धिसहित भगवान् श्रीगणेशको तुष्टि र प्रसन्नताका लागि साधकले धन खर्च गर्ने कुरामा छुच्याइँ गर्न हुँदैन । आफ्नो सम्पत्तिअनुसार खर्च गर्नुपर्दछ ।।३०।। त्यसपछि मित्रहरूसहित बसी कर्ताले श्रद्धापूर्वक भोजन गर्नुपर्दछ । त्यसको अर्को दिन छाता, ध्वजा, चामर र पताकाद्वारा शोभायमान श्रीगणेशको पार्थिव मूर्तिलाई नरयानमा सजाएर राखिएको श्रीगणेशमूर्तिका अगाडि दण्डयुद्ध गरिरहेका किशोरहरूलाई लगाई ठूलो जलाशयमा गएर मूर्तिलाई जलमा विसर्जित गरी प्रवाहित गर्नुपर्दछ । त्यसपछि बाजा-गाजाका साथ श्रीगणेशसम्बन्धी भक्तिगीत गाउँदै आफ्नो घर फर्कनु पर्दछ ।।३१-३३।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे हिमवद्गिरिजासंवादे चतुर्थीव्रतकथनं नाम पञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रावणशुक्ल चतुर्थीदेखि भाद्रशुक्ल चतुर्थीसम्म गरिने चतुर्थीव्रतको महत्त्व प्रकाशन' शीर्षकान्वित पचासौं अध्याय पूर्ण भयो ।।५०।।

ॐ

## एकपञ्चाशोऽध्यायः　　{ ५१ अध्याय }

पार्वत्युवाच

तव वाक्यामृतेनाहं पितः प्रीताऽस्मि साम्प्रतम् ।
परन्तु संशयो मेऽस्ति तं नुदस्व हिमालय ।।१।।
केन केन कृतं पूर्वं व्रतमेतन्महीधर ।
आख्यातं केन वा कस्मै कः कां सिद्धिमितोऽगमत् ।।२।।
एतत् सविस्तरं ब्रूहि संशयच्छेदनाय मे ।
यश्च पृच्छति यो वक्ति गजाननकथाः शुभाः ।।३।।
शृणोत्यन्योऽपि यो मर्त्यस्त्रयस्ते पुण्यभागिनः ।
जीवितं सफलं तेषां जन्म ज्ञानञ्च कर्म च ।।४।।

ब्रह्मोवाच

एवं तया कृतप्रश्नो हिमवानभ्यभाषत ।
वरदस्य गणेशस्य नानाजनकृतं व्रतम् ।।५।।

हिमवानुवाच

शृणु पार्वति ! वक्ष्यामि संवादं ते पुरातनम् ।
सेतिहासं व्रतस्यास्य सर्वसिद्धिकरस्य ह ।।६।।
कैलासे गिरिवर्ये तु सुखासीनं जगद्गुरुम् ।
क्रीडमानं मुदा देवैर्गन्धर्वैः परमर्षिभिः ।।७।।
नत्वा स्तुत्वा महातेजाः परिपप्रच्छ षण्मुखः ।।८।।

स्कन्द उवाच

देवदेव ! जगन्नाथ ! भक्तानामभयङ्कर !
नानाख्यानानि दिव्यानि श्रुतानि त्वत्प्रसादतः ।।९।।
तृप्तिं तात ! न गच्छामि पायं पायं सुधामिव ।
अधुना ब्रूहि मे देव ! व्रतं सर्वार्थसिद्धिदम् ।।१०।।
अनुष्ठानेन यस्याथ करस्थाः सिद्धयो नृणाम् ।
जायन्ते साधकानां तु वरदस्य प्रसादतः ।।११।।

शिव उवाच

साधु पृष्टं त्वया स्कन्द ! सर्वेषां हितकारकम् ।
कथयामि तव प्रीत्या महासिद्धिप्रदं भुवि ।।१२।।

**पार्वतीले भन्नुभयो** - हे पिता हिमालय ! हजुरको वाक्यामृत पान गरी म अहिले अत्यन्त प्रसन्न छु । परन्तु मेरो मनमा अहिले एउटा सन्देह पैदा भएको छ । कृपया हजुरले त्यसको निवारण गरिदिनुहोस् ।।१।। कसले कसलाई यो श्रीगणेशपूजाविधि सर्वप्रथम उपदेश गरे र कुन साधकले कस्तो सिद्धि प्राप्त गरे? मेरा यी संशयलाई हटाउन हजुरले विस्तारपूर्वक मलाई उत्तर दिनुहोस् । जसले भगवान् श्रीगणेशका उत्तम कथाहरूको विषयमा प्रश्न गर्दछ, जसले ती विषयमा उत्तर दिन्छ, जसले भगवान् गजाननका कथा सुन्दछ, यी तीन प्रकारका मानिसहरू पुण्यवान् बन्दछन्, तिनको जीवन सफल हुन्छ र उत्तम कर्म गरी तिनले उत्तम ज्ञान पनि प्राप्त गर्दछन् ।।२-४।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी पार्वतीले प्रश्न गर्नुभएपछि हिमालयले धेरै साधकहरूद्वारा सम्पन्न गरिएको वरदायक श्रीगणेशको व्रतको विषयमा उपदेश गरे ।।५।।

**हिमालयले भने** - हे पार्वती ! सर्वसिद्धिदायक श्रीगणेश चतुर्थीको व्रतको सम्बन्धमा इतिहाससमेत खुलाउँदै पुरानो संवाद पनि म तिमीलाई बताउँछु ।।६।। कैलासपर्वतमा सुखपूर्वक विराजमान भई परमर्षि, देवता र गन्धर्वका साथ आनन्दपूर्वक क्रीडा गरिरहनुभएका जगद्गुरु सदाशिवजीको वन्दना र स्तुति गरी तेजस्वी स्कन्दले प्रश्न गर्नुभयो ।।७-८।।

**स्कन्दले भन्नुभयो** - भक्तहरूका लागि अत्यन्त आह्लादक जगत्का स्वामी हे महादेव ! मैले हजुरको कृपाबाट अनेक थरि दिव्य कथा सुनेको छु, तर ती कथा सुनेर अमृतपान गर्दा नअघाएझैं म अघाएको छैन । आज मलाई सर्वार्थसिद्धि प्रदान गर्ने व्रतको विषयमा उपदेश गर्नुहोस् । जुन व्रतको अनुष्ठानबाट भगवान् श्रीगणेश प्रसन्न हुनुहुन्छ र साधकहरूले अनेक सिद्धि प्राप्त गर्दछन् ।।९-११।।

**शिवजीले भन्नुभयो** - हे छोरा स्कन्द ! तिमीले सर्वहितकारी प्रश्न गरेका छौ, तिमीमाथि स्नेह राखेर म सबै

विनायकप्रियं तात ! व्रतानामुत्तमं व्रतम् ।
सर्वेषां पुरुषार्थानां साधकं कृत्तिकात्मज ।।१३।।
विना यज्ञैस्तथा दानैर्जपहोमादिभिर्विना ।
सर्वसिद्धिकरं स्कन्द ! पुत्रपौत्रप्रवर्धनम् ।।१४।।
राजानं राजपुत्रं वा तन्मन्त्रिणमथापि वा ।
वशमानयति क्षिप्रं व्रतमेतन्महत्तमम् ।।१५।।
महापापोपपापैश्च बहुजन्मसु सञ्चितैः ।
व्रतस्यास्य प्रभावेण तैः पुमान् मुच्यते क्षणात् ।।१६।।
भाजनं सर्वसिद्धीनां जायते मानवो भुवि ।
प्रीतिदं तु गणेशस्य नानेन सदृशं क्षितौ ।।१७।।

स्कन्द उवाच

तात ! कस्मिन् भवेन्मासि व्रतमेतन्महोत्तमम् ।
विधानं कीदृशं चास्य केन वाऽऽचरितं पुरा ।।१८।।
सर्वमेतन्ममाचक्ष्व यद्यस्ति करुणा मयि ।

शिव उवाच

नभःशुक्लचतुर्थ्यान्तु स्नात्वा गुरुगृहं व्रजेत् ।
प्रणम्य तं गुरुं पश्चात् पूजयित्वा यथाविधि ।।१९।।
पाद्याचमनवस्त्राद्यैर्भूषणैश्च महत्तरैः ।
तोषयित्वा तु तं सम्यगाज्ञया प्रारभेद् व्रतम् ।।२०।।
सर्वसिद्धिकरं तात ! तातं गाणेश्वरं गुरो !
त्वमेव श्रीगणेशोऽसि दिश कामप्रदं प्रभो ।।२१।।
उपदिष्टे व्रते तेन सार्धं गङ्गातटं व्रजेत् ।
तडागं वा देवखातं तत्र स्नायाद् यथाविधि ।।२२।।
श्वेतसर्षपयुक्तेन तिलकल्केन षण्मुख !
स्नात्वा धात्रीयुतेनेह कृत्वा नित्यं गृहं व्रजेत् ।।२३।।
उपविश्यासने शुद्धे पूजयित्वा गणाधिपम् ।
गुरूपदिष्टमार्गेण व्रतं पश्चात् समारभेत् ।।२४।।

पुरुषार्थका साधक, ठूला-ठूला सिद्धि दिने, श्रीगणेशलाई अत्यन्त प्रिय लाग्ने, पृथिवीमा सर्वोत्तम मानिएको व्रतको विषयमा बताउँछु ।।१२-१३।। यज्ञ, दान, जप, होम र सत्कर्मविना पनि यो व्रत गर्ने मानिसले सिद्धि प्राप्त गर्दछ र पुत्र-पौत्रको वृद्धि गर्दछ । यो व्रत गर्ने साधकले राजा, राजपुत्र, राजमन्त्री र रानीलाई पनि वशमा ल्याउँछ । त्यस कारण यो व्रत महान् छ ।।१४-१५।। यस व्रतका प्रभावले मानिसले अनेकौं जन्मदेखि सञ्चित महापाप, पाप र उपपापबाट तत्काल मुक्ति प्राप्त गर्दछ। यसव्रतको प्रतापले साधक पृथिवीमा सबै सिद्धिको पात्र बन्दछ। पृथिवीमा श्रीगणेशलाई प्रसन्न तुल्याउने यो समान कुनै पनि व्रत र उपाय छैन ।।१६-१७।।

**स्कन्दले भन्नुभयो-** हे पिता परमशिव ! हजुरको ममाथि करुणा छ भने यो उत्तम श्रीगणेशव्रत कुन महिनामा गर्नुपर्दछ? यसको विधान कस्तो छ ? र यसको प्रथम अनुष्ठान कसले गरेका थिए? कृपापूर्वक यी प्रश्नहरुको उत्तर मलाई बताउनुहोस्।

**शिवजीले भन्नुभयो -** साधक मानिसले श्रावण-मासको शुक्लचतुर्थी तिथिमा स्नान गरी आफ्ना श्रद्धेय गुरुका घरमा जानुपर्दछ। गुरुलाई प्रणाम गरी विधिपूर्वक पाद्य, अर्घ्य, आचमनीय, वस्त्र, अलङ्कार आदि मूल्यवान् पदार्थहरुद्वारा पूजा गरेर उहाँलाई प्रसन्न तुल्याएपछि मात्र उहाँको आज्ञाबाट श्रीगणेशव्रतको आरम्भ गर्नुपर्दछ ।।१८-२०।। साधकले गुरुसँग भन्नुपर्दछ - हे गुरुदेव! हजुर नै श्रीगणेशमूर्ति हुनुहुन्छ । हजुरले मलाई कामनापूरक, सर्वसिद्धिदायक श्रीगणेशभगवान्‌को उत्तम व्रतको उपदेश गर्नुहोस्।।२१।। यसरी साधकले गुरुको प्रार्थना गरेपछि गुरुले प्रसन्न भएर व्रतको विषयमा उपदेश गर्ने छन्। त्यसपछि गुरुका साथ गङ्गातट, तलाउ अथवा कुनै देवताको मन्दिरअगाडि रहेको पोखरीमा गई विधिपूर्वक स्नान गर्नुपर्दछ ।।२२।। हे स्कन्द ! सेतो सर्स्यूँ मिसिएको अमलासहित तिलको पिनाले नुहाएर नित्य घर फर्किनु पर्दछ ।।२३।। शुद्धासनमा बसेर श्रीगणेशको पूजा गरी गुरुले बताएअनुसार व्रतारम्भ गर्नुपर्दछ ।।२४।। श्रावण महिनाको शुक्लपक्षको

मृदा मूर्तिं गणेशस्य चतुर्थ्यां श्रावणस्य तु ।
प्रत्यहं पूजयेत् कृत्वा यावद् भाद्रचतुर्थिका ।।२५।।

ब्रह्मचर्यव्रते स्थित्वा कर्तव्यं व्रतमुत्तमम् ।
उपवासैकभक्ताभ्यां नक्तेनायाचितेन वा ।।२६।।

चतुर्थकाले भुञ्जीत हविष्यान्नं समाहितः ।
अक्षारं मधुरं भुञ्जन् भक्तिमानाचरेद् व्रतम् ।।२७।।

जपन् गाणेश्वरीं विद्यां षडानन ! षडक्षरीम् ।
द्विचतुरक्षरां वापि तथैवैकाक्षरामपि ।।२८।।

दशाक्षरामथ स्कन्द ! द्वादशार्णामथापि वा ।
नियुतं वाऽयुतं वापि प्रत्यहं जप इष्यते ।।२९।।

तदर्धं वा तदर्धं वा दशांशं होममाचरेत् ।
ध्यायन् गजाननं देवमहोरात्रमतन्द्रितः ।।३०।।

प्राप्ते प्रौष्ठपदे मासि चतुर्थ्यां तु गजाननम् ।
सौवर्णपलमानेन तदर्धार्धेन वा पुनः ।।३१।।

मयूरवाहनं कुर्यादथवाऽऽखुगतं शुभम् ।
कृत्वा मण्डपिकां तत्र धान्यराशिं प्रकल्पयेत् ।।३२।।

सौवर्णं राजतं ताम्रं कलशं स्थापयेत् ततः ।
तस्योपरि न्यसेत् पात्रं रुक्मराजतताम्रकम् ।।३३।।

वस्त्रयुग्मेन संवेष्ट्य सपात्रं कलशं ततः ।
पञ्चपल्लवसंयुक्तं पञ्चरत्नसमन्वितम् ।।३४।।

पीठपूजां पुरा कृत्वा स्थापयेत् तत्र तं विभुम् ।
मूलमन्त्रैश्च वेदोक्तैः पूर्वोक्तैरपि षण्मुख ।।३५।।

ध्यात्वा गजाननं देवमावाह्य परया मुदा ।
आसनञ्च तथा पाद्यं दद्यादाचमनीयकम् ।।३६।।

अर्घ्यं रत्नयुतं स्कन्द ! स्नानं पञ्चामृतैः शुभम् ।
सुवासिताभिरद्भिश्च स्नापयेत् परमेश्वरम् ।
रक्तवस्त्रयुगं दद्यादुपवीतं तथोत्तमम् ।।३७।।

चतुर्थी तिथिमा शुद्ध माटोले श्रीगणेशको मूर्ति तयार गरी त्यो दिनदेखि लगातार भाद्र शुक्ल चतुर्थीसम्म दिनदिनै पूजा गर्नुपर्दछ।।२५।। त्यो व्रत गर्दा ब्रह्मचर्य धारण गर्नुपर्दछ । त्यो व्रत उपवासको रूपमा हुनसक्छ । एक छाक खाएर हुनसक्छ। रातिमा मात्र खाएर अथवा अयाचित वस्तु स्वतः प्राप्त हुँदा त्यसबाट गुजारा गरेर पनि सम्पन्न गर्न सकिन्छ ।।२६।। भक्तिमान् साधकले लवणरहित मधुर हविष्यान्नको भोजन गरी व्रत गर्नुपर्दछ ।।२७।। हे स्कन्द ! यसरी श्रावण शुक्ल चतुर्थीदेखि भाद्र शुक्ल चतुर्थीसम्म व्रत गर्दा ६ अक्षरको गणपति मन्त्र, २ अक्षरको गणपति मन्त्र, ४ अक्षरको गणपति मन्त्र अथवा १ अक्षरको गणपति मन्त्र अथवा १० अक्षरको गणपति मन्त्र, अथवा १२ अक्षरको गणपति मन्त्रको १ लाख सङ्ख्यामा, नसके १० हजार सङ्ख्यामा भए पनि दिनदिनै जप गर्नुपर्दछ ।।२८-२९।। यसरी व्रत गर्नेले दिनरात निरालस्य भई भगवान् गजाननको ध्यान गर्दै जपको आधा अथवा आधाको पनि आधा होम गर्नुपर्दछ । जब भाद्रशुक्ल चतुर्थी आइपुग्छ त्यस बेला एक तोला सुनको श्रीगणेशको मूर्ति बनाउनुपर्दछ, अथवा आधा तोला सुनको मूर्ति बनाउँदा पनि हुन्छ । त्यो मूर्तिको निर्माणको क्रममा मयूरको वाहनमा सवार श्रीगणेशको मूर्ति बनाउनुपर्दछ। अथवा मूसाको वाहनमा सवार श्रीगणेशको मूर्ति बनाए पनि हुन्छ । मूर्ति प्रतिष्ठाको क्रममा एउटा मण्डप तयार गरी त्यसको माझमा धानको थुप्रो लगाउनु पर्दछ ।।३०-३२।। त्यसमाथि सुन, चाँदी अथवा तामाको कलश स्थापना गरी कलशमाथि सुन अथवा चाँदी अथवा तामाको थाली राख्नुपर्दछ ।।३३।। माथिको थालीसमेत त्यस कलशलाई दुइटा वस्त्रखण्डले राम्ररी ढाकी त्यसमा पञ्चरत्न र पञ्चपल्लवसमेत राख्नुपर्दछ ।।३४।। पीठपूजा गरेपछि त्यस पात्रमाथि पूर्वोक्त मन्त्र र वेदमन्त्रहरूको उच्चारण गर्दै भगवान् श्रीगणेशको मूर्तिस्थापना गर्नुपर्दछ । श्रीगणेशको ध्यान गरी प्रसन्नतापूर्वक आवाहन गरेर आसन, पाद्य, अर्घ्य र आचमनीय समर्पण गर्नुपर्दछ ।।३५-३६।। हे स्कन्द ! त्यसपछि रत्नसमेतको अर्घ समर्पण गरी पञ्चामृत र सुगन्धित जलले परमेश्वर श्रीगणेशलाई स्नान गराउनुपर्दछ । स्नान गराएपछि दुइटा राता कपडा चढाएर

नानाविधैराभरणैर्भूषयेत् परमेश्वरम् ।
गन्धाक्षतैर्धूपदीपैर्नैवेद्यैर्विविधैरपि ।।३८।।

वटकापूपलड्डूकशाल्यन्नपायसादिभिः ।
पञ्चामृतैर्व्यञ्जनैश्च भोजयेत् परमेश्वरम् ।।३९।।

उद्वर्तनं करे दद्यात् फलं ताम्बूलमेव च ।
काञ्चनीं दक्षिणां दद्याच्छत्रं व्यञ्जनचामरे ।।४०।।

नीराजनं मन्त्रपुष्पं दत्वा स्तोत्राण्युदीरयेत् ।
सहस्त्रनामभिः स्तुत्वा ब्राह्मणान् पूजयेत् ततः ।।४१।।

रात्रौ जागरणं कृत्वा गीतनृत्यादिमङ्गलैः ।
प्रभाते विमले स्नात्वा नित्यं कृत्वा यथाविधि ।।४२।।

पूजयेत् पूर्ववद् देवं ततो होमं समाचरेत् ।
द्रव्यैर्नानाविधैर्हुत्वा कुर्यादाचार्यपूजनम् ।।४३।।

गोभूतिलहिरण्याद्यं गुरवे तन्निवेदयेत् ।
अन्येभ्यो ब्राह्मणेभ्यश्च प्रदद्याद् भूरि दक्षिणाम् ।।४४।।

ब्राह्मणान् भोजयेत् पश्चाच्छतमष्टोत्तरं तथा ।
अधिकान् यदि शक्तिश्चेदथवाऽप्येकविंशतिम् ।।४५।।

दीनान्धकृपणेभ्यश्च दद्यादन्नं सपायसम् ।
पुनश्च दक्षिणां दद्यात् प्रगृह्याशिषमुत्तमाम् ।।४६।।

सुहृद्वन्धुयुतो मौनी स्वयं भुञ्जीत सादरम् ।।४७।।

शिव उवाच

एवं ते कथितं स्कन्द ! वरदस्य व्रतं शुभम् ।
भुक्तिमुक्तिप्रदं नृणां सर्वकामफलप्रदम् ।।४८।।

पुरातनमितिहासमस्मिन्नर्थे वदामि ते ।
महाधर्मपरो राजा पुराऽभूत् कर्दमाभिधः ।।४९।।

पालयामास वसुधां सागरान्तां स्वतेजसा ।
गुणैर्यस्य हृता देवा नित्यं यत्सदसि स्थिताः ।।५०।।

यज्ञोपवीतसमेत प्रदान गरी अनेक वस्त्र-अलङ्कारद्वारा भगवान्‌को मूर्ति सजाई चन्दन, अक्षता, धूप, दीप र उत्तम नैवेद्यसमेत समर्पण गरेर पूजा गर्नुपर्दछ ।।३७-३८।। वटुक, मालपुवा, लड्डु, मीठो भात, खीर, पञ्चामृत र व्यञ्जन टक्र्याई परमेश्वरलाई भोजन गराउनुपर्दछ । त्यसपछि भगवान्‌को हातमा उवटनको धूलो, फल, ताम्बूल, छाता, पङ्खा, चामर, दक्षिणाको निमित्त स्वर्णमुद्रा समेत टक्र्याउनु पर्दछ ।।३९-४०।। उक्त पदार्थहरू टक्र्याएपछि आरती, मन्त्रपुष्पाञ्जलिसमेत सम्पन्न गरी स्तोत्रपाठ गर्नुपर्दछ । श्रीगणेशसहस्त्रनामद्वारा स्तुति गरी ब्राह्मणहरूको सत्कार गर्नुपर्दछ।।४१।। गीत, नृत्य आदि मङ्गलकार्यद्वारा रातभर जागा रही अर्को दिन निर्मल बिहानीको उदयपछि नुहाएर विधिपूर्वक नित्यकर्म गरी फेरि श्रीगणेशको पूजा गरी होमकार्य गर्नुपर्दछ। अनेक थरि पदार्थहरूबाट हवन सम्पन्न गरेपछि आचार्यको पूजन गर्नुपर्दछ ।।४२-४३।। गुरुलाई गाई, सम्पत्ति, सुन आदि धातु निवेदन गर्नुपर्दछ र अरू ब्राह्मणहरूलाई पनि श्रद्धापूर्वक दक्षिणा दिनुपर्दछ ।।४४।। त्यसपछि शक्ति भएमा अधिकतम १०८ ब्राह्मणहरूलाई भोजन गराउनु पर्दछ । शक्ति नभएमा २१ ब्राह्मणहरूलाई भोजन गराउनु पर्दछ।।४५।। दीन, अन्धा, गरीबहरूलाई खीरसहित भोजन गराउनुपर्दछ । सबैलाई भोजन गराएपछि ब्राह्मणहरूसँग आशीर्वाद ग्रहण गरेर उनीहरूलाई दक्षिणा दिनुपर्दछ ।।४६।। दक्षिणा अर्पण गरेपछि आफ्ना बन्धु र मित्रहरूसँग बसी श्रद्धापूर्वक प्रसादको रूपमा भोजन ग्रहण गर्नुपर्दछ ।।४७।।

**शिवजीले भन्नुभयो** - हे स्कन्द ! यसरी मैले तिमीलाई वरदायक श्रीगणेशको मानिसलाई भुक्ति एवं मुक्ति प्रदान गर्ने र मानिसका सबै कामना परिपूर्ण गराउने उत्तम व्रतको वर्णन गरें।।४८।। यसै सन्दर्भमा म तिमीलाई एउटा पुरानो इतिहास बताउँछु । प्राचीन समयमा अत्यन्त धार्मिक स्वभावका कर्दम नामक राजा भए ।।४९।। तिनले आफ्नो प्रतापबाट सागरसम्म सीमा भएको विशाल भूखण्डको पालन गरेका थिए । कर्दमका गुणबाट प्रसन्न भएका देवताहरू नित्य उनको सभामा आई शोभा बढाउँथे ।।५०।। कुनै समयमा दैवयोगले भृगु मुनि

कदाचिद् दैवयोगेन भृगुस्तस्य गृहं ययौ ।
तत उत्थाय राजा स बहुमानपुरःसरम् ।।५१।।

उपविश्यासने श्रेष्ठे पूजितो गुरुवत् ततः ।
भुक्त्वा स्थितं मुनिवरं राजा वचनमब्रवीत् ।।५२।।

राजोवाच

भगवन् ! सर्वतत्त्वज्ञ ! किञ्चित् पृच्छामि तद् वद ।
पूर्वजन्मनि कश्चाहं किं मया सुकृतं कृतम् ।।५३।।

येनेदृशं मया राज्यं प्राप्तं निहतकण्टकम् ।
प्राप्तं नैव नृपैरन्यैर्न च प्राप्स्यन्ति चापरे ।।५४।।

देवानामपि पूज्योऽहं गन्धर्वोरगरक्षसाम् ।
कुबेरसम्पदा तुल्यां सम्पदं पश्य मे मुने ।।५५।।

त्रिलोक्यां रत्नभूतं यत् तदानीतं स्वतेजसा ।
यं यं पदार्थमिच्छामि तं तं पश्यामि वेश्मनि ।।५६।।

केनेत्थं कर्मणा प्राप्तं तद् वदस्व मम प्रभो ।
कामये तत्पुनः कर्तुं पुण्यं पुण्यवतां वर ।।५७।।

भृगुरुवाच

कथयामि नृपश्रेष्ठ ! प्रणिधानबलादहम् ।
त्वमासीः पूर्वजनुषि क्षत्रियो दुर्बलः शुचिः ।।५८।।

कुटुम्बभरणार्थं त्वं नाना कर्माण्यथाकरोः ।
क्रियमाणं च तत्कर्म न चासीत् फलदं तव ।।५९।।

अत्यन्तनिष्ठुरैर्वाक्यैर्दारापत्यैश्च पीडितः ।
अपृष्ट्वा पुत्रदारांस्त्वं गतवान् गहनं वनम् ।।६०।।

विभ्रमन् दिक्षु सर्वासु दृष्टवानसि सौभरिम् ।
सिद्धासने समासीनं सेवितं मुनिपुङ्गवैः ।।६१।।

कथयन्तं महाविद्यां शिष्येभ्यो दुःखनाशिनीम् ।
दृष्ट्वा तं सौभरिं दिव्यमन्यांश्चर्षिगणान्नृप ।।६२।।

कर्दमका दरबारमा आइपुगे । उनलाई आएको देखेर कर्दम राजाले उत्तम सम्मानका साथ आसनमा बसाएर गुरुको झैं पूजा गरे । भोजन गरेपछि आनन्दपूर्वक विराजमान मुनिश्रेष्ठ भृगुसमक्ष गएर राजा कर्दमले निवेदन गरे ।।५१-५२।।

राजाले भने- हे सबै तत्त्वका ज्ञाता भगवान् भृगुमहर्षि ! म हजुरसँग केही कुरा सोध्न चाहन्छु, हजुरले आज्ञा गर्नुहोस्। म पूर्वजन्ममा को थिएँ र मैले कुन पुण्य गरेको थिएँ ?।।५३।। जसबाट आज म यो निष्कण्टक राज्य प्राप्त गरी शासन गरिरहेको छु । मेरोजस्तो कण्टकहीन राज्य न कसैले पाएको थियो न त भविष्यमा कसैले प्राप्त गर्ने छ ।।५४।। म देवताहरूबाट समादृत छु । गन्धर्व, नाग र राक्षसहरूले पनि मेरो सम्मान गर्दछन् । फेरि कुबेरको श्रीसम्पत्तिसमान मेरो पनि सम्पत्ति छ । हजुर त्यो हेर्न सक्नुहुन्छ । स्वर्ग, मर्त्य, पातालका जुन मूल्यवान् र महनीय पदार्थ थिए, ती सबैलाई मैले आफ्ना प्रतापले यहाँ ल्याई सजाएर राखेको छु । मैले मनले जुन जुन पदार्थको प्राप्तिको परिकल्पना गर्दछु, ती ती पदार्थलाई तुरुन्तै आफ्नो निवासमा देख्न पाउँछु ।।५५-५६।। हे पुण्यवान् मुनिवर ! कुन कर्मबाट मैले यो सौभाग्य पाउन सकेँ ? यस विषयमा मलाई बताउनुहोस्। किनकि त्यो पुण्यदायक कर्म फेरि पनि म गर्न चाहन्छु ।।५७।।

भृगुले भन्नुभयो - हे उत्तम राजा ! म ध्यानदृष्टिद्वारा विचार गरेर तपाईंको पूर्वजन्म र तपाईंले गरेका उत्तम पुण्यको विषयमा बताउँछु । तपाईं पूर्वजन्ममा शुद्ध आचार-विचार भएका तर दुर्बल शरीरका क्षत्रिय हुनुहुन्थ्यो ।।५८।। कुटुम्ब पालनका लागि तपाईंले अनेक कष्ट सहनुभयो । तर तपाईंले गरिरहेको कर्म तपाईंका लागि फलप्रद र सन्तोषजनक थिएन ।।५९।। सम्मान र धन नभएपछि पत्नी र छोराहरूद्वारा दिक्क भई तपाईं उनीहरूसँग कुनै सोधपुछ नगरी गहन वनतर्फ लाग्नुभयो।।६०।। चारैदिशामा भ्रमण गर्दै जाँदा तपाईंले एक दिन एउटा ठाउँमा सिद्धासनमा बसेका, मुनिहरूद्वारा सेवित र शिष्यहरूलाई दुःखनाशक महाविद्याको उपदेश गरिरहेका सौभरि ऋषिको दर्शन गर्नुभयो ।।६१।। दिव्यमुनि सौभरिको र उहाँका चारैतिर बसेका अरू ऋषिहरूको समेत दर्शन गरेपछि तपाईंले भुइँमा

दण्डवत् पतितोऽसि त्वं भुवि तैश्चाभिनन्दितः ।
उपविष्टः स्वासने च मुनिना तेन दर्शिते ।।६३।।

पृष्टवानसि तं दिव्यं लब्ध्वाऽवसरमादृतः ।

क्षत्रिय उवाच

स्वामिन् ! संसारदुःखेन बहुधा क्लेशितो मुने ।।६४।।

दारापत्यसुहृद्भिश्च वाग्बाणैर्भृशताडितः ।
न वैराग्यं मनो याति निष्ठुरेषु सुहृत्सु च ।।६५।।

शीतोष्णक्षुत्पिपासाभिः पीडितोऽपि भृशं मुने ।
उपायं वद मे किञ्चिद् दुःखसागरतारकम् ।।६६।।

शिव उवाच

इति श्रुत्वा वचस्तस्य सौभरिः कृपया युतः ।
उपायं चिन्तयामास नृपदुःखविनाशनम् ।।६७।।
ततस्तं क्षत्रियं प्राह सर्वपापविमोचनम् ।

ऋषिरुवाच

व्रतं यत् कथयिष्यामि कुरु निश्चितमानसः ।।६८।।

यस्यानुष्ठानमात्रेण सर्वदुःखलयो भवेत् ।
ब्राह्मणैः क्षत्रियैर्वैश्यैस्तथा ब्रह्मर्षिभिः कृतम् ।।६९।।

मुक्तास्ते सर्वदुःखेभ्यः प्राप्ताः सिद्धिमनुत्तमाम् ।
वरदस्य गणेशस्य धर्मार्थकाममोक्षदाम् ।।७०।।

क्षत्रिय उवाच

कोऽसौ गणेशः किंशीलः किंरूपः किंस्वभाववान् ।
किंकर्मा कथमुत्पन्नस्तत्सर्वं कथयस्व मे ।
यदि मे श्रवणायालं यद्यनुग्राह्यता मयि ।।७१।।

ऋषिरुवाच

यद् ब्रह्म नित्यं विरजं विशोकं
ज्ञानस्वरूपं परमार्थभूतम् ।
अनादिमध्यान्तमनन्तपारं
गणाधिपं तं प्रवदन्ति सन्तः ।।७२।।

पसिएर उनीहरूलाई साष्टाङ्गदण्डवत् प्रणाम गर्नुभयो । तपाइँले प्रणाम गरेपछि उनीहरूले पनि तपाइँको सत्कार गरे । त्यसपछि सौभरि ऋषिले इङ्गित गर्नुभएको आसनमा बसेर तपाइँले अवसर पाएको बेला दिव्यमुनि सौभरिसँग आफ्ना प्रश्न निवेदन गर्नुभयो।

**कर्दमले भने-** हे स्वामिन् ! हे मुनिराज ! मैले अनेक पटक संसारका दुःख र क्लेश भोगेको छु र पत्नी-पुत्र एवं मित्रहरूद्वारा गरिएका कठोर वचनको प्रहारबाट मर्माहत भएको छु। जाडो, गर्मी, भोक र प्यासहरूले अत्यन्त दुःखी हुँदा पनि आफ्ना परिवारजन र मित्रजनप्रति मेरो मनमा उत्तिकै माया छ, वैराग्य आएको छैन । हजुरले मलाई दुःखको सागरबाट पार लगाउन केही उपाय बताउनुहोस् ।।६२-६६।।

**शिवजीले भन्नुभयो -** हे स्कन्द ! कर्दम क्षत्रियका यी कुरा सुनेर सौभरि ऋषिले दयालु हुँदै राजाको दुःखनाश गर्ने उपायबारे चिन्तन गरे । केहीबेर चिन्तन गरेपछि ती कर्दमलाई सबै पापनाश गर्ने उपाय बताउँदै भने ।

**सौभरिले भने -** म तपाइँलाई पापनाशक व्रतको विषयमा बताउँदैछु, मनमा दृढ निश्चय गरी त्यसको पालन गर्नुहोस्।।६७-६८।। त्यस व्रतको पालनबाट मात्र तपाइँका सबै दुःखहरूको विलय हुनेछ । यसको अनुष्ठान धेरै ब्राह्मण, क्षत्रिय,वैश्य र ब्रह्मर्षिहरूले पनि गरेका थिए । परिणामस्वरूप ती सबैले सबै प्रकारका दुःखबाट मुक्त भई वरद श्रीगणेशको कृपाबाट धर्म, अर्थ, काम र मोक्षसम्बन्धी अनेक सिद्धि प्राप्त गरे ।।६९-७०।।

**कर्दमले भने -** हे मुनिवर ! ती श्रीगणेश को हुन् ? तिनको आभ्यन्तर संस्कार र आचार कस्तो छ ? ती कस्तो रूपले सुहाएका छन्? तिनको स्वभाव कस्तो छ ? ती कस्तो कर्म गर्दछन् ? ती श्रीगणेश कसरी उत्पन्न भएका हुन् ? यी सबै कुराको उत्तर दिनुहोस्। यदि म उत्तर सुन्न योग्य र कृपायोग्य छु भने हजुरबाट मेरा प्रश्नहरूको उत्तर मैले पाउनेछु ।।७१।।

**सौभरिले भने -** सज्जनहरूले वासनामुक्त, शोकहीन, ज्ञानस्वरूप, परमार्थरूप, आदि, मध्य र अन्त्य हीन र अनन्तपार नित्य ब्रह्मतत्त्वलाई नै श्रीगणेश भन्दछन् ।।७२।। जसबाट

यस्मादोङ्कारसम्भूतिर्यतो वेदा यतो जगत् ।
येन सर्वमिदं व्याप्तं तं विद्धि गणनायकम् ।।७३।।

जगत्सर्जनकामेन ब्रह्मणा यस्य तुष्टये ।
अब्दानां तु शतं पूर्णं तपस्तप्तं सुदुष्करम् ।।७४।।

ततो हृष्टमना वेधाः प्रसन्नं तमपूजयत् ।
नानाविधोपचारैश्च दिव्यरत्नैः फलैस्तथा ।।७५।।

सिद्धिबुद्धी उभे कन्ये मनसा कल्पिते ददौ ।
तुष्टो देवो ददौ तस्मै विद्यामेकाक्षरीं विभुः ।।७६।।

ततो लब्धवरो ब्रह्मा चकार सकलं जगत् ।
षडक्षरेण मन्त्रेण विष्णुना तोषितः पुरा ।।७७।।

कृत्वा मूर्तिं गणेशस्य पूर्वोक्तविधिना व्रतम् ।
अव्यङ्गं वर्षमेकं तु नियमान् कृतवान् हरिः ।।७८।।

वरं लब्ध्वा गणेशात् तु पालयामास वै जगत् ।
एवंविधं विजानीहि गणेशं भुवि संस्तुतम् ।।७९।।

विश्वरूपमनादिञ्च सर्वकारणकारणम् ।
तमाराध्य यत्नेन सर्वदुःखाद् वियुक्ष्यसे ।।८०।।

क्षत्रिय उवाच

कस्मिन्काले प्रकर्तव्यमेतद् व्रतमनुत्तमम् ।
विधिना केन मे ब्रूहि साम्प्रतं मुनिसत्तम ।
करिष्ये वचनात् तेऽहं सर्वदुःखप्रशान्तये ।।८१।।

मुनिरुवाच

श्रावणे बहुले पक्षे चतुर्थ्यामारभेद् व्रतम् ।
कुर्वीत परया भक्त्या यावद् भाद्रचतुर्थिका ।
उपचारैः षोडशभिः पार्थिवं गणनायकम् ।
प्रत्यहं पूजयेद् भक्त्या ब्राह्मणान् भोजयेत् ततः ।।८२।।

ॐकारको उत्पत्ति हुन्छ, जसबाट वेद उत्पन्न हुन्छन् जसबाट जगत्‌को उत्पत्ति हुन्छ र जसमा यो दृश्यमान संसार व्याप्त भएर रहेको छ त्यो महान् तत्त्वलाई गणनायक भनिन्छ ।।७३।। जगत्‌को सृष्टि गर्न चाहने ब्रह्माजीले तिनको सन्तुष्टिका लागि पूरा सय वर्षसम्म कठोर तपस्या गर्नुभएको थियो ।।७४।। त्यस तपस्याबाट प्रसन्न हुनुभएका भगवान् श्रीगणेशको दर्शन पाएर खुसी भएका ब्रह्माजीले षोडशोपचार, दिव्यरत्न र फलहरू अर्पण गरी पूजा गर्नुभयो ।।७५।। त्यसै अवसरमा आफ्नै मनबाट कल्पना गरी प्रकट गरिएका दुई कन्या सिद्धि र बुद्धिलाई पनि ब्रह्माजीले श्रीगणेशलाई अर्पण गर्नुभयो । ब्रह्माजीको पूजा र उपहारबाट प्रसन्न हुनुभएका सर्वव्यापक श्रीगणेशले उहाँलाई आफ्नो एकाक्षरी मन्त्र दिनुभयो ।।७६।। त्यही एकाक्षरी विद्याको साधनाबाट सृष्टिसामर्थ्यको वरदान पाएर ब्रह्माजीले सम्पूर्ण संसारको सृष्टि गर्नुभयो । भगवान् श्रीगणेशको मूर्ति तयार गरी पूर्वोक्त विधिले व्रत पूर्ण गरेर विष्णु भगवान्‌ले षडक्षरी मन्त्रको जपबाट श्रीगणेश भगवान्‌लाई प्रसन्न तुल्याउनुभएको थियो ।।७७-७८।। वास्तवमा विष्णुले श्रीगणेशलाई प्रसन्न तुल्याउन एक वर्षसम्म निरन्तर कठोर नियमको पालन गर्नुभएको थियो । प्रसन्न हुनुभएका श्रीगणेशबाट वरदान प्राप्त गरी विष्णुले आफ्नो पालनी शक्तिद्वारा सम्पूर्ण संसारको पालन गर्नुभयो । हे कर्दम ! पृथिवीमा सबैद्वारा आराधना गरिनुभएका भगवान् श्रीगणेश अत्यन्त शक्तिशाली हुनुहुन्छ ।।७९।। तपाईंले उहाँलाई त्यसै रूपमा जान्नुपर्दछ । उहाँ विश्वरूप हुनुहुन्छ, सबै कारणहरूका पनि मूल कारण हुनुहुन्छ र अनादिरूप हुनुहुछ । तसर्थ तपाईं पनि प्रयत्नपूर्वक श्रीगणेशको आराधना गरी दुःखबाट मुक्त हुनुहोस् ।।८०।।

(कर्दमले भने - हे मुनिश्रेष्ठ ! श्रीगणेशको यो उत्तम व्रत कुन विधिबाट, कुन समयमा गर्नुपर्दछ ? यसबारे मलाई उपदेश गर्नुहोस् । म हजुरको वचनअनुसार आफ्ना सबै दुःखहरूको नाशका लागि यो व्रतको अनुष्ठान गर्नेछु ।।८१।।

सौभरिले भने - श्रावण शुक्लपक्षको चतुर्थी तिथिमा यो श्रीगणेशव्रतको आरम्भ गर्नुपर्दछ । भाद्र शुक्ल चतुर्थी तिथिपर्यन्त श्रद्धापूर्वक यस व्रतको अनुष्ठान गर्नुपर्दछ । दिनदिनै भक्तिपूर्वक षोडशोपचारले श्रीगणेश भगवान्‌को पार्थिव मूर्तिमा

त्वमेतत् कुरु भूपाल ! सर्वान् कामानवाप्स्यसि ।
इति श्रुत्वा व्रतं तस्मात् कृतवानसि सुव्रत ।।८३।।

समाप्ते तु व्रते तत्र सौभर्याश्रममण्डले ।
तावत् तस्य गृहं दिव्यं गणेशस्य प्रसादतः ।।८४।।

दिव्यनारीनरयुतं दासीदाससमन्वितम् ।
वेदघोषसमायुक्तं जातं गोधनसङ्कुलम् ।।८५।।

दिव्यवस्त्रसमायुक्ता नानालङ्कारसंयुता ।
अपत्यैस्तादृशैर्युक्ता विस्मिताऽऽसीत् प्रतीक्षती ।।८६।।

आयास्यति कदा भर्तेत्येवं चिन्तापराऽभवत् ।
तावत् त्वं मुनिमामन्त्र्य गतोऽसि निजमालयम् ।।८७।।

दिव्यं तच्छरणं हित्वा स्वगृहं परिमार्गयन् ।
तावद् भार्याप्रेषितास्त्वां निन्युस्तद्भवनं नराः ।।८८।।

ततस्त्वयाऽपि विज्ञातः प्रभावो वरदस्य सः ।
तद्व्रतस्य प्रभावेण राज्यभागिह जन्मनि ।।८९।।

शिव उवाच

इति श्रुत्वा भृगोर्वाक्यं कर्दमो हर्षनिर्भरः ।
चकार सकलं राजा भृगुणा यत्समीरितम् ।।९०।।

व्रतस्यास्य प्रभावेण ज्ञानवैराग्यवान् नृपः ।
भुक्त्वा भोगान् यथाकामं स्थाप्य पुत्रान् निजे पदे ।।९१।।

गतो गाणेश्वरं धाम यतो नावर्तते पुनः ।
सर्वार्थसाधकं स्कन्द ! व्रतानां व्रतमुत्तमम् ।।९२।।

नैतादृशं व्रतं दानं श्रुतमन्यत् कदाचन ।
सर्वार्थसाधकं स्कन्द ! व्रतं कुरु यदीच्छसि ।।९३।।

देवदानवगन्धर्वैर्ऋषिभिर्मनुजैः कृतम् ।
दमयन्त्या नलेनापि राज्ञा चन्द्राङ्गदेन च ।।९४।।

पूजा गर्नुपर्दछ। त्यसपछि ब्राह्मणभोजन गराउनुपर्दछ ।।८२।। हे राजन् ! तपाईंले यो व्रत गर्नुहोस् । सम्पूर्ण कामना सिद्ध गर्नुहुनेछ । यसरी सौभरिको उपदेशबाट तपाईंले पूर्वजन्ममा श्रीगणेश भगवान्को व्रत गर्नुभएको थियो ।।८३।। त्यस बेला सौभरिको आश्रममा तपाईंको व्रत पूरा भएपछि श्रीगणेशको कृपाबाट तपाईंको दिव्य घर तयार भयो ।।८४।। तपाईंको घर नर-नारी र दास-दासीले परिपूर्ण, अत्यन्त सुन्दर, वेदमन्त्रले मुखरित र गोधनले परिपूर्ण थियो ।।८५।। तपाईंकी पत्नी दिव्य वस्त्र र अलङ्कारद्वारा सजिएकी थिइन् । आफ्ना छोराहरू वरिपरि राखेर सुहाएकी तपाईंकी पत्नी आफ्ना घरमा आएको आकस्मिक परिवर्तनबाट चकित भई मेरा श्रीमान् कहिले घर फर्किनुहुन्छ भनेर चिन्ता गर्दै तपाईंको प्रतीक्षा गरिरहेकी थिइन् । त्यसैबेला तपाईं सौभरि मुनिसँग मन्त्रणा गरी बिदा लिएर घरमा पुग्नुभयो ।।८६-८७।। त्यहाँ दिव्य धाम तयार थियो। तपाईंलाई भ्रान्ति भयो, यो मेरो घर होइन भनी तपाईं आफ्नो पुरानो घरको खोजतलासमा लाग्नुभयो । त्यसैबेला तपाईंकी श्रीमतीले तपाईं भ्रान्तिमा परेको थाहा पाई सहयोगार्थ मानिस पठाइन्। ती मानिसहरूले तपाईंलाई आफ्नो घरमा पुऱ्याए। त्यसपछि तपाईंले पनि भगवान् वरद श्रीगणेशको प्रभाव आत्मसात् गर्नुभयो। त्यसै व्रतका कारणबाट हे राजन् ! तपाईंले अहिले निष्कण्टक राज्यको उपभोग गरिरहनुभएको छ ।।८८-८९।।

**शिवजीले भन्नुभयो** - हे स्कन्द ! भृगु मुनिको वाक्य सुनेर हर्षित भएका राजाले भृगुको उपदेशअनुसार श्रीगणेशको व्रत पूर्ण गरे ।।९०।। त्यस व्रतका प्रभावले ज्ञान र वैराग्यले सम्पन्न ती राजा यस लोकका भोगहरू यथेष्ट भोग्दै राजसिंहासनमा छोरालाई राखी भगवान् श्रीगणेशको त्यो दिव्यधाममा प्राप्त भए, जहाँ गएर फेरि फर्कन पर्दैन। हे स्कन्द! यो श्रीगणेशको व्रत सर्वार्थसाधक र सर्वोत्तम व्रत हो ।।९१-९२।। यस किसिमको व्रत र दान अरू हुँदैन । हे स्कन्द ! यदि तिमी आत्मकल्याण चाहन्छौ भने श्रीगणेशको यो व्रत आरम्भ गर।।९३।। यो व्रत देवता, दानव, गन्धर्व, ऋषि र मानिसहरूले गरेका थिए । राजा नलकी रानी दमयन्तीले र राजा चन्द्राङ्गदले पनि यो व्रत गरेका थिए ।।९४।। यस व्रतको प्रभावले सबै

सम्प्राप्ताः सर्वकामाँस्ते गता गाणेश्वरं पदम् ।

कामना पूरा गरी अन्तमा ती सबै श्रीगणेशधाममा प्राप्त भएका थिए ।

### गिरिरुवाच

इति ते कथितं सर्वं सेतिहासं व्रतं महत् ।
कुरु त्वं मनसा ध्यात्वा वरदं गणनायकम् ।।९५।।

व्रतमेतन्महाभागे ! शङ्करं प्राप्स्यसे ततः ।
स्नेहेन कथितं तेऽद्य प्रकाशं कुरु मा व्रतम् ।।९६।।

**हिमालयले भने** - हे पार्वती ! यसरी मैले तिमीलाई महान् श्रीगणेशव्रतको महिमा इतिहाससहित बताएँ । तिमीले पनि मनद्वारा वरद श्रीगणेशको ध्यान गरी श्रीगणेशव्रत पूरा गर ।।९५।। हे भाग्यवती छोरी ! श्रीगणेशका व्रतको प्रभावले तिमीले तुरुन्तै भगवान् शङ्करको दर्शन पाउनेछ्यौ । मैले तिमीलाई मेरी छोरी हौ भनी स्नेहले यो गोप्य रहस्य बताएको छु। यस व्रतको रहस्य तिमीले पनि गोप्य नै राख्नुपर्दछ ।।९६।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे हिमवत्पार्वतीसंवादो नामैकपञ्चाशत्तमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'हिमालयद्वारा पार्वती र शिवजीद्वारा स्कन्दलाई पार्थिवपूजनको उपदेश' शीर्षकान्वित एकाउन्नौं अध्याय पूर्ण भयो ।।५१।।

ॐ

## द्विपञ्चाशोऽध्यायः { ५२ अध्याय }

पार्वत्युवाच

नलेनेदं कृतं कस्मात् को नलो वद मे पितः ।
मनो विश्रान्तिमायाति शृण्वन्त्या मे कथानकम् ।।१।।

हिमवानुवाच

निषधेषु महाराजो नलो नामाऽभवत् पुरा ।
ब्रह्मण्यो वेदविच्छूरो दानी मानी धनी मुनिः ।।२।।

रथी खड्गी शरी चापी निषङ्गी कवची बली ।
कृतास्त्रो देवपूज्यश्च त्रिलोकीगमनः शुचिः ।।३।।

शेषोऽपि मूकतां याति वर्णितुं यद्गुणानपि ।
न संख्या विद्यतेऽश्वानां गजानां रथिनां तथा ।।४।।

धानुष्काणां शस्त्रभृतामग्निशस्त्रभृतामपि ।
चकम्पुर्यद्भयाद् देवा इन्द्राद्याः सदिगीश्वराः ।।५।।

दमयन्तीति भार्याऽऽसीद् यस्य सौन्दर्यमन्दिरम् ।
दमयित्वाऽखिलान् ब्रह्मा सारं सारं प्रगृह्य च ।।६।।

दमयन्तीति विख्याता यतस्तेनेति निर्मिता ।
दमयन्त्यै त्रिलोकस्थनारीणां चारुतामदात् ।।७।।

नानालङ्कारसंयुक्ता नानामणिविभूषिता ।
मुक्ताहारलसत्कण्ठा सद्गुणाढ्या सुशोभना ।।८।।

यस्यामात्यो महानासीत् पद्महस्तः पराक्रमी ।
बुद्ध्या बृहस्पतिसमो नयेनाङ्गिरसा समः ।।९।।

**पार्वतीले भन्नुभयो-** हे पिताजी! ती नल राजा को हुन् र तिनले कसको सहयोग लिएर श्रीगणेशको व्रत सम्पन्न गरे ? यी प्रश्नको उत्तर मलाई बताउनुहोस् । तपाईंका मुखबाट श्रीगणेशको कथा सुन्दा मेरो मनले परम शान्ति प्राप्त गर्दछ।।१।।

**हिमालयले भने-** निषध देशमा पहिले नल नामक महाराजा भए । ती ब्रह्मनिष्ठ, वेदका ज्ञाता, शूर, दानी, मानी, धनी र ईश्वरका चिन्तक थिए ।।२।। नल राजा रथमा आरोहण गरी भ्रमण गर्ने, तरबार, धनु, बाण र ठोक्रो धारण गर्ने र कवच लगाएर सुरक्षित बलवान् राजा थिए । शस्त्र-अस्त्रले सुहाएका, देवताहरूद्वारा पनि प्रशंसित र स्वर्ग, मर्त्य एवं पातालमा निर्बाध रूपमा विचरण गर्ने राजा नल आचार-विचारबाट ज्यादै पवित्र थिए ।।३।। राजा नलका गुणहरूको वर्णन गर्न हजार जिब्रा भएका शेषनाग पनि असमर्थ हुन्छन् । उनीसँग घोडा, हात्ती र रथहरू कति थिए भन्ने कुराको कुनै सीमा थिएन ।।४।। त्यसैगरी उनीसँग कति धनुर्धारी वीर, कति शस्त्रअस्त्र सञ्चालन गर्न सिपालु सिपाही र कति आग्नेय अस्त्र धारण गर्ने वीर थिए भन्ने कुरा पनि बताउन सकिन्नथ्यो। राजा नलको वीरताबाट इन्द्र आदि दिक्पालहरू पनि थर्कमान हुन्थे।।५।। राजा नलकी महारानी दमयन्ती सौन्दर्यकी खानी थिइन् । ब्रह्माजीले सम्पूर्ण सृष्टि गरिएका पदार्थहरूका सारतत्त्वलाई ग्रहण गरेर संसारमा देखिने सुन्दर एवं सुन्दरीहरूको सौन्दर्यगर्वलाई दमन गर्ने हेतुले निर्माण गरिएकी हुनाले ती महारानी संसारमा दमयन्ती नामबाट विख्यात भइन्।।६।। यिनले त्रिलोकमा रहने सुन्दरीहरूको सौन्दर्यलाई दमन गरेकी हुनाले ब्रह्माजीले पनि दमयन्तीलाई नाना प्रकारका अलङ्कारले सम्पन्न रत्नहरूको समृद्धि प्रदान गरेका थिए । मोतीको हारले सुहाएकी दमयन्ती सदाचार र सद्गुणले देदीप्यमान विश्वकी विलक्षण सुन्दरीका रूपमा प्रख्यात भइन् ।।७-८।। राजा नलका अमात्यको नाम पद्महस्त थियो । ती महान् पराक्रमी थिए । ती बुद्धिमा बृहस्पतिसमान, न्यायविद्यामा आङ्गिरससमान, उँचाइमा मेरुपर्वतसमान र गहिराइमा महासागरतुल्य थिए । कुनै दिन

तुङ्गत्वे मेरुसदृशो गाम्भीर्ये चोदधेः समः ।
कदाचिदुपविष्टोऽसौ नलो राजा महामनाः ।।१०।।

निषसाद सभागेहे नृपमण्डलमध्यगः ।
नृत्यन्त्यप्सरसस्तस्य पुरतश्चारुदर्शनाः ।।११।।

स्तुवन्ति वन्दिनस्तञ्च ब्रह्मर्षिगणसंयुतम् ।
एतस्मिन्नेव काले तु गौतमो नृपतिं ययौ ।।१२।।

उत्थाय सादरं राज्ञा स्वासने विनिवेशितः ।
पूजितः परया भक्त्या ततः पप्रच्छ तं नलः ।।१३।।

नल उवाच

स्वामिन्ननुगृहीतस्ते दर्शनेन महामुने ।
जन्म राज्यं पिता माता कुलं जीवितमद्य मे ।।१४।।

सफलं स्वागमे हेतुं वद तूर्णं महामुने ।

गौतम उवाच

ममासीन्महती वाञ्छा द्रष्टुं ते वैभवं नृप ।।१५।।

स्तुवन्ति देवाः स्वर्गस्था ब्रह्मेन्द्रहरिशूलिनः ।
धन्योऽसि मर्त्यलोकस्थो मर्त्यैर्देवैश्च शस्यसे ।।१६।।

नित्यतृप्तोऽप्यहं तृप्तः पूजां दृष्ट्वा च वैभवम् ।
इदानीमनुजानीहि गमिष्ये स्वाश्रमं प्रति ।।१७।।

नल उवाच

वेदवेदाङ्गविद् ब्रह्मन् ! सर्वशास्त्रप्रवर्तक !
दयानिधे ! क्षणं स्थित्वा छिन्धि मे संशयं मुने ।।१८।।

मुनिरुवाच

साधु पृष्टं महाराज स्थितोऽहं स्नेहभावतः ।
नागा नृपाश्च देवाश्च यत्ते नाज्ञाविलङ्घिनः ।।१९।।

उदार मन भएका राजा नल आफ्नो दर्शनका निमित्त आएका राजाहरूको बीचमा सभामण्डपमा विराजमान भए ।।९-१०।। ती राजा सभामण्डपमा विराजमान भएपछि तिनका सामु आएर अत्यन्त सुन्दर अनुहार भएका अप्सराहरू नाच्न थाले। स्तुतिपाठकहरू स्तुति गर्न थाले। त्यसै बेला ब्रह्मर्षि राजर्षिहरूका बीचमा सुहाएका राजा नललाई भेट्न गौतम ऋषि पनि आए ।।११-१२।। राजा नलले उठेर आदरपूर्वक गौतम ऋषिलाई आफ्नै अर्द्धासनमा बसाए र परम भक्तिपूर्वक पूजा गरेपछि कुशल कुशल प्रश्न गरे ।।१३।।

**नलले भने –** हे स्वामिन् गौतम महर्षि ! तपाईँ महान् मुनि हुनुहुन्छ । तपाईँको दर्शन पाएर म आज अनुगृहीत भएको छु । आज मेरो जन्म सफल भएको छ । राज्य सफल भएको छ। मलाई जन्माउने माता सफल भएकी छन् । मेरो कुल धन्य भएको छ र मेरो जीवन पनि धन्य भएको छ ।।१४।। हे महामुनि! तपाईँ के कारणले यहाँ पाल्नुभयो ? त्यो मलाई बताउनुहोस् ।

**गौतमले भन्नुभयो–** हे राजन् ! मेरो मनमा तपाईँको वैभव दर्शन गर्ने ठूलो इच्छा थियो, त्यसैले म यहाँ आएको छु।।१५।। ब्रह्मा, इन्द्र, नारायण र शङ्करसमेतका साथमा रहेका स्वर्गवासी देवताहरूले तपाईँको स्तुति गर्छन् । हे राजा नल ! तपाईँ धर्तीमा रहेर पनि धन्य हुनुहुन्छ किनकि मानिसले मात्र होइन देवताहरूले पनि तपाईँको प्रशंसा गर्छन् ।।१६।। म परमात्माको गुणगानमा नित्यतृप्त छु, मलाई कुनै कुराको आवश्यकता छैन तापनि तपाईँले गरेको पूजा र तपाईँको वैभव देखेर म अझै तृप्त भएको छु । यतिबेला म तपाईँसँग बिदा लिएर आश्रमतर्फ जान चाहन्छु । मलाई आज्ञा दिनुहोस् ।।१७।।

**नलले भने –** हे वेद र वेदाङ्गका ज्ञाता ब्रह्मर्षि ! हे सबै शास्त्रका प्रवर्त्तक महामुनि ! हे दयानिधि गौतम ऋषि ! केहीबेर यहाँ रहेर मेरा मनमा लागेका सन्देहहरूलाई निवारण गरिदिनुहोस् ।।१८।।

**गौतमले भन्नुभयो –** हे महाराजा नल ! तपाईँले राम्रो कुरा सोध्नुभयो । तपाईँप्रति प्रेम राखेर म केही बेर बस्छु । अहिलेको संसारमा तपाईँ ठूला र प्रभावशाली राजा हुनुहुन्छ। ठूला-ठूला नागराजहरू, राजाहरू र देवताहरूले पनि तपाईँको आज्ञाको उल्लङ्घन गर्दैनन् ।।१९।।

### नृप उवाच

ममैव विस्मयो ब्रह्मन् ! निरीक्ष्य वैभवं स्वकम् ।
इत्थं ममाभवत् केन पुण्येन तपसाऽपि वा ।।२०।।

वद तत्त्वेन कश्चाहमभवं पूर्वजन्मनि ।

### मुनिरुवाच

गौडदेशात् परे देशे पुरे पिप्पलसंज्ञके ।।२१।।

त्वमासीः क्षत्रियः पूर्वं दरिद्रो ज्ञानवान् शुचिः ।
जायाऽपत्यैः सुहृद्भिश्च वाक्शरैस्ताडितो भृशम् ।।२२।।

रात्रावपृष्ट्वा सर्वांस्त्वं निर्वेदाद् गहनं वनम् ।
गतवान् वृक्षवल्लीभिः सिंहव्याघ्रगजैर्मृगैः ।।२३।।

सेवितं शीतलजलैः सरोभिर्जलजादिभिः ।
आश्रमोऽथ त्वयाऽदर्शि भ्रमता भ्रमता वने ।।२४।।

तपोनिधेः कौशिकस्य वेदघोषनिनादितः ।
तत्र गत्वा मुनिं तं त्वं प्रणतो भक्तिभावतः ।।२५।।

उत्थापितः कौशिकेन दीनानाथदयावता ।
दुःखितं त्वां विदित्वा स आशीर्वादमवीवदत् ।।२६।।

गजाननो मे देवेशो भविता ते शुभङ्करः ।
श्रुत्वा तदाशिषं सौम्यां प्राप्तोऽसि परमां मुदम् ।।२७।।

पृष्टवानसि तं विप्रमुपायं सर्वकामदम् ।
दारिद्र्यनाशकं राजन् ! भुक्तिमुक्तिप्रदं शिवम् ।।२८।।

गणेशाराधनं तुभ्यं कथयामास कौशिकः ।

**राजाले भने -** हे महामुनि ! आज मेरो वैभवलाई देखेर म आफैं छक्क परेको छु । यो वैभव मैले कसरी प्राप्त गरें ? कुन पुण्य अथवा कुन तपस्याले प्राप्त गरें ? मलाई जानकारी गराउनुहोस् । वस्तुतः मलाई पूर्वजन्ममा म को थिएँ भन्ने कुराको जिज्ञासाले पनि सताएको छ ।

**मुनिले भने -** हे राजन् ! गौड देशदेखि पल्लापट्टि पिप्पलपुरमा तपाइँ क्षत्रिय कुलमा जन्मिएका मानिस हुनुहुन्थ्यो। तपाइँसँग धनसम्पत्ति थिएन तर तपाइँ ज्ञानी र पवित्र आचार-विचारका मानिस हुनुहुन्थ्यो । तपाइँसँग धन नभएका कारण तपाइँका पत्नी, छोरा र मित्रहरूले कटु वाणी बोलेर तपाइँको मन दुखाएका थिए ।।२०-२२।। एक दिनको कुरा हो, तपाइँलाई ठूलो वैराग्य भएछ । यी आफ्ना भनाउँदाहरू पनि स्वार्थी नै हुने रहेछन् । यहाँ बसेर मेरो के काम छ र ? भन्ने भावना लिएर कसैसँग नसोधीकन रातको समयमा तपाइँ वनतर्फ लाग्नुभयो । रूख, लहरा, सिंह, बाघ, हात्ती, मृगहरूले घेरिएको, शीतल जल भएका सरोवरहरूले सुहाएको र सरोवरहरूमा कमल आदि फूलहरूको उपस्थितिका कारण अत्यन्त आनन्द-दायक लाग्ने वनमा घुम्दाघुम्दै तपाइँले एउटा सुन्दर आश्रम देख्नुभयो ।।२३-२४।। तपस्याका खानी कौशिक ऋषिको त्यो आश्रम वेदका मन्त्रहरूले गुञ्जायमान थियो । त्यहाँ पुगेर तपाइँले भक्तिपूर्वक कौशिक मुनिलाई प्रणाम गर्नुभयो।।२५।। हे राजन् ! तपाइँलाई आफ्नो चरणमा झुकेको देखेर कौशिक ऋषिले दयापूर्वक उठाई तपाइँलाई दुःखी देखेर आशीर्वाद दिए। मैले गजानन श्रीगणेशको आराधना गर्ने गरेको छु, तपाइँ पनि श्रीगणेशको आराधना गर्नुहोस् । उहाँले तपाइँको कल्याण गर्नुहुनेछ भन्दै कौशिक ऋषिले तपाइँलाई आशीर्वाद दिए । त्यसपछि तपाइँ अत्यन्त हर्षमा प्राप्त हुनुभयो ।।२६-२७।। तपाइँले त्यस बेला कौशिक ऋषिसँग दरिद्रताको नाश गर्ने, सबै प्रकारका कामनाहरू पूरा गराउने र भुक्ति एवं मुक्ति प्रदान गर्ने मङ्गलमय श्रीगणेश-आराधनाको उपायको बारेमा सोध्नुभयो ।।२८।। यसरी तपाइँले सोध्नुभएपछि कौशिक ऋषिले पनि तपाइँलाई श्रीगणेशको आराधनाको विषयमा सबै कुरा बताएका थिए ।

### कौशिक उवाच

**व्रतं कुरु गणेशस्य मासमात्रं नराधिप ।।२९।।**

**कुरु मूर्तिं गणेशस्य मृन्मयीं चारुदर्शनाम् ।**
**पूर्वोक्तविधिना पूजां कुरु शृणु कथानकम् ।।३०।।**

**दिने दिने मासमात्रं ततः सिद्धिमवाप्स्यसि ।**

### मुनिरुवाच

**इति श्रुत्वा कौशिकं तं पप्रच्छ भूमिपः पुनः ।।३१।।**

### नल उवाच

**गजाननं न जानामि तत्स्वरूपं वदस्व मे ।**
**ज्ञात्वा तं देवदेवेशं करिष्ये व्रतमुत्तमम् ।।३२।।**

**इति तेन कृते प्रश्ने जगाद मुनिसत्तमः ।**
**अनिर्वाच्यस्वरूपस्य परब्रह्मस्वरूपिणः ।।३३।।**

**वैकारिकस्वरूपाणि गजाननकृतानि तम् ।।३४।।**

### कौशिक उवाच

**यः कर्ता सर्वलोकानां पिता माता जगद्गुरुः ।**
**ब्रह्मेन्द्रशिवविष्णूनां ध्येयो यः स गजाननः ।।३५।।**

### मुनिरुवाच

**इति श्रुत्वा तु तद्वाक्यं प्रणिपत्य मुनीश्वरम् ।**
**अनुज्ञातस्ततस्तेन गतोऽसि निजमन्दिरम् ।।३६।।**

**आरभ्य श्रावणे शुद्धे चतुर्थ्यां व्रतमुत्तमम् ।**
**कृतवान् मृन्मयीं मूर्तिं गणेशस्य यथोदिताम् ।।३७।।**

**स्थाने च वचने मौने गमने शयने भुजि ।**
**ध्यायन् गजाननं देवं प्रायाः सिद्धिमनुत्तमाम् ।।३८।।**

**कौशिकले भने -** हे राजन् ! तपाईँले एक महिनासम्म श्रीगणेशको व्रत गर्नुहोस् ।।२९।। तपाईँले श्रीगणेशको माटाको अत्यन्त राम्रो मूर्ति बनाउनुहोस् । एक महिनासम्म शास्त्रोक्त विधिबाट दिनदिनै श्रीगणेशको आराधना गर्नुहोस् र श्रीगणेशसम्बन्धी कथाहरू सुन्नुहोस् । त्यसपछि तपाईँले सिद्धि प्राप्त गर्नुहुनेछ ।

**मुनिले भने -** कौशिक ऋषिको मुखबाट यी कुराहरू सुनेर राजा नलले फेरि सोधे ।।३०-३१।।

**राजाले भने -** गजानन श्रीगणेशलाई म राम्ररी जान्दिनँ। कृपा गरेर तपाईँले मलाई श्रीगणेशको स्वरूपको विषयमा आज्ञा गर्नुहोस् । उहाँको स्वरूपलाई राम्ररी जानेर उहाँ देवताका पनि परमदेवता हुनुहुन्छ भन्ने कुरा चित्तले पत्याएपछि म त्यो उत्तम व्रत सम्पन्न गर्नेछु ।

**मुनिले भने -** यसरी राजा नलले कौशिक ऋषिसँग प्रश्न गरेपछि कौशिक ऋषिले अनिर्वाच्यस्वरूप र परब्रह्मस्वरूप श्रीगणेशका वैकारिक स्वरूपहरूको विषयमा अर्थात् उहाँले लिएका अनेक अवतारहरूको विषयमा बताउनुभएको थियो ।।३२-३४।।

**कौशिकले भने -** जुन देवताले सम्पूर्ण लोक-लोकान्तरको सृष्टि गर्दछन्, जुन देवता सबैका पिता-माता र जगद्गुरु हुन्, जुन देवता ब्रह्मा-इन्द्र-शिव र विष्णुद्वारा पनि ध्यान गरिन्छन् ती देवतालाई नै गजानन श्रीगणेश भनिन्छ।।३५।।

**मुनिले भने -** हे राजन् ! यसरी कौशिक ऋषिको कुरा सुनेपछि मुनिहरूका पनि ईश्वर ती कौशिक ऋषिलाई प्रणाम गरेर उहाँसँग बिदाबारी भई तपाईँ आफ्नो घरमा फर्किनुभएको थियो ।।३६।। श्रावण मासको शुक्लपक्षको चतुर्थीका दिनदेखि श्रीगणेशको उत्तम व्रत आरम्भ गरेर तपाईँले श्रीगणेशको अत्यन्त राम्रो माटाको प्रतिमा बनाउनुभएको थियो। बस्दा, कुराकानी गर्दा, मौन रहँदा, हिंड्डुल गर्दा, बिस्तरामा आराम गर्दा र भोजन गर्दा पनि तपाईँले भगवान् श्रीगणेशकै ध्यान गर्नुभयो । त्यसै व्रतको प्रभावले तपाईँले यो सिद्धि प्राप्त गर्नुभएको हो । आज त्यस श्रीगणेशको आराधनाको प्रतापले तपाईँ अनेक थरिका हात्ती, घोडा, रथ, गाई, चल-

नानागजरथाश्वाद्यैर्गोधनैर्धनसञ्चितैः ।
दासीदासयुतः श्रीमाञ्जातो व्रतप्रभावतः ।।३९।।

दत्तवानसि दानानि सर्वाणि देवतुष्टये ।
गणेशस्य महामौल्यं प्रासादं कृतवान्मुदा ।।४०।।

भुक्त्वा भोगान् यथाकामं कालेन निधनं गतः ।
जातोऽसि निषधे देशे नृपस्त्वं नलनामकः ।।४१।।

अतस्त्वय्यचला लक्ष्मीस्त्रिलोकीजनवन्दिते ।
इदानीमनुजानीहि यत्पृष्टं तन्निरूपितम् ।।४२।।

हिमवानुवाच

एवं गते गौतमे तु व्रतं चक्रे नलो नृपः ।
तद्वाक्याज्जातविश्वासो मूर्तिं कृत्वा सुशोभनाम् ।।४३।।

श्रुत्वा कथां गणेशस्य प्रत्यहं पूज्य भक्तितः ।
अलभत् सर्वकामान् स व्रतस्यास्य प्रभावतः ।।४४।।

इति ते कथितं कन्ये ! नलेनेत्थं कृतं व्रतम् ।
उपदिष्टं गौतमेन पूर्वजन्मकृतं व्रतम् ।।४५।।

यस्य प्रभावः सम्पूर्णो वक्तुं केनापि नेष्यते ।।४६।।

अचल सम्पत्ति र दासदासीले सम्पन्न हुनुहुन्छ । तपाईँ लक्ष्मीका स्रोत हुनुहुन्छ र निरन्तर देवताहरूको सन्तोषका लागि अनेक थरिका दानकर्म गर्दै हुनुहुन्छ। तपाईँले अघिल्लो जन्ममा श्रीगणेशलाई सर्वोपरि देवता मानेर अत्यन्त मूल्यवान् दरबार बनाउनु भएको थियो र त्यस जन्मको अन्तमा अनेकौं भोग भोगेर तपाईँको मृत्यु भएको थियो । आज श्रीगणेशको व्रतको प्रभावबाट तपाईँ निषध देशमा राजा नलका नामबाट पैदा हुनुभएको छ । श्रीगणेशको आराधनाका कारण नै तपाईँसँग अचल राजलक्ष्मी छन् र तपाईँ स्वर्ग, मर्त्य एवं पातालमा पूजनीय व्यक्तिका रूपमा प्रशंसनीय हुनुहुन्छ । अब म जान्छु, तपाईँले सोधेका कुरा मैले बताएँ ।।३७-४२।।

**हिमालयले भने -** यसरी गौतम ऋषि गएपछि राजा नलले श्रीगणेशको व्रत गरेका थिए । गौतम ऋषिको वाक्यमा विश्वास गरेर उनले श्रीगणेशको अत्यन्त राम्रो मूर्ति बनाएर स्थापना गरे । दिनदिनै श्रीगणेशसम्बन्धी कथाहरू सुने र श्रीगणेशका व्रतका प्रभावले संसारमा एउटा मानिसले प्रयास गरेमा प्राप्त गर्न सकिने सम्पूर्ण कामनाहरूको सिद्धि प्राप्त गरे ।।४३-४४।। हे छोरी पार्वती ! मैले तिमीलाई नलले कसरी व्रत गरे भन्ने कुरा बताएँ । गौतमले कसरी पूर्वजन्मका कुरा उपदेश गरे भन्ने समेत पनि मैले बताएँ । श्रीगणेशको व्रतको महिमा पूर्णतया बताउन कसैले पनि सक्दैन ।।४५-४६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे नलव्रतनिरूपणं नाम द्विपञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'महर्षि गौतमद्वारा राजा नलका प्रति पार्थिवपूजनको उपदेश' शीर्षकान्वित बाउन्नौं अध्याय पूर्ण भयो ।।५२।।

ॐ

## त्रिपञ्चाशत्तमोऽध्यायः　　{ ५३ अध्याय }

हिमवानुवाच

इदानीं कथयिष्यामि राज्ञा चन्द्राङ्गदेन च ।
तत्पत्न्या च कृतं ह्येतदिन्दुमत्या शुभानने ।।१।।

मालवे विषये ख्यातं नगरं कर्णनामकम् ।
तत्र चन्द्राङ्गदो राजा बभूवातिपराक्रमी ।।२।।

अणिमादिगुणोपेतः सर्वशास्त्रार्थतत्त्ववित् ।
यज्वा दानी महाज्ञानी वेदवेदाङ्गपारगः ।।३।।

अतिक्रान्ता सभा यस्य सुधर्मामतिमानुषीम् ।
मुष्णाति चक्षुषस्तेजो रविकान्तमरीचिभिः ।।४।।

अतिस्वच्छानि वासांसि रत्नस्तम्भाश्रयात् सुते ।
नीललोहितपीतत्वाच्चित्रतां यान्ति कानिचित् ।।५।।

अतिसाध्वी महाभागा पतिशुश्रूषणे रता ।
धर्मशीला व्रतपरा श्वश्रूश्वशुरसेविनी ।।६।।

गृहकृत्येषु चाव्यग्रा देवतातिथिपूजिका ।
नाम्ना चेन्दुमती ख्याता सर्वावयवसुन्दरा ।।
धर्मशीलोऽपि नृपतिरमात्यैः प्रार्थितो भृशम् ।
जीवहिंसां महाघोरां पापर्द्धिं परिवर्जय ।।७।।

कदाचिद् दैवयोगेन मृगयां क्रीडितुं ययौ ।
तरक्षुरुरुवाराहमृगपक्षियुतं वनम् ।।८।।

नीलकञ्चुकसंवीतो नीलोष्णीषोत्तरच्छदः ।
बद्धगोधाङ्गुलित्राणः शस्त्रिकाखड्गखेटवान् ।।९।।

जवेनाश्वसमारूढो शरचापकरो बली ।
तादृशैर्वीरनिकरैरमात्यैः सेवकैर्वृतः ।।१०।।

निघ्नन् मृगान् वराहाँश्च प्रेषयन्नगरं प्रति ।
भ्रममाणो वने राजा दृष्टो राक्षसपुङ्गवैः ।।११।।

चकम्पे राक्षसान् दृष्ट्वा शीतज्वरयुतो यथा ।
दरीमुखान् गर्तनेत्रान् व्यादितास्यान् नभस्पृशः ।।१२।।

**हिमालयले भने** – हे सुमुखी पार्वती ! अब म तिमीलाई राजा चन्द्राङ्गद र उनको धर्मपत्नी रानी इन्दुमतीले श्रीगणेशको व्रत कसरी गरे भन्ने विषयमा बताउँछु ।।१।। मालवदेशमा कर्णनगर छ । त्यहाँ अत्यन्त पराक्रमी चन्द्राङ्गद नामक राजा भए ।।२।। उनी अणिमा, महिमा आदि सिद्धिसम्पन्न, सर्वज्ञ, सबै शास्त्रका ज्ञाता, यज्ञशील, दानी, वेदवेदाङ्गमा पारङ्गत र ठूला ज्ञानी पुरुष थिए ।।३।। उनको राजसभाले सुधर्मा नामक देवताहरूको सभालाई सौन्दर्य र व्यवस्थापनका दृष्टिबाट उछिनेको थियो। उनको राजसभाभवनमा जडिएका सूर्यकान्त मणिका किरणले दर्शक मानिसका आँखालाई हतप्रभ तुल्याउँथे।।४।। उनको राजभवनमा रहेका रत्नमय स्तम्भहरूको सम्पर्कबाट सेता र निर्मल मूल्यवान् वस्त्रहरू नीला, राता, पहेँला र चित्र-विचित्र रङ्गका देखिन्थे ।।५।। उनको धर्मपत्नी इन्दुमती अत्यन्त पतिव्रता, भाग्यवती, पतिसेवामा तत्पर, धर्मपरायण, व्रतानुष्ठानमा अनवरत संलग्न, सासू-ससुराको नित्य सेवा गर्ने, घरका कार्यहरू गर्दा कहिले पनि नथाकने, देवता र पाहुनाहरूको सेवा गर्ने, अत्यन्त सुन्दर नारी थिइन्। राजा चन्द्राङ्गद धर्मात्मा प्रकृतिका थिए, तापनि उनी शिकार खेल्ने काम गर्दथे। एक दिन अमात्यहरूले बिन्ती गरे – हजुरले डरलाग्दो र पाप बढाउने प्राणीहरूको हिंसा गर्नु हुँदैन ।।६-७।। कुनै दिन दैवसंयोगले राजा चन्द्राङ्गद शिकार खेल्नका लागि चितुवा, रुरुमृग, बँदेल, मृग र चराचुरुङ्गीले भरिभराउ वनमा गए ।।८।। नीलो रङ्गको भोटो र नीलै रङ्गको पगरी धारण गरी गोहोरोको छालाबाट तयार गरिएको हातको पञ्जा धारण गरेका, ढाल र तरबार हातमा लिने राजा चन्द्राङ्गद धनुर्बाण धारण गरी वेगपूर्वक घोडामा सवार भए । आफूजस्तै अनेक वीरहरूले घेरिएका ती राजा मृग र बँदेल मारी घरतर्फ पठाउँदै वनमा घुमिरहेका थिए। ती राजालाई एक दिन वनवासी भयङ्कर राक्षसको जमातले देख्यो ।।९-११।। राक्षसहरूलाई देखेर राजा चन्द्राङ्गद शीतज्वर आएझैं काँप्न थाले । गुफासमान मुख भएका, खाडलसमान ठूला आँखा भएका, मुख बाएर

दृष्ट्वा तान् विद्रुताः सर्वे वीराः सेविजना अपि ।
केचिद् यमक्षयं याता मूर्च्छिताः केऽपि भूगताः ।।१३।।

तत्रैका राक्षसी क्रूरा दृष्ट्वा कामातिसुन्दरम् ।
तं नृपं परिरभ्यैव चुचुम्बे काममोहिता ।।१४।।

तस्यामात्यान् भगे कृत्वा भक्षयामास सेवकान् ।
एतस्मिन्नन्तरे राजा पलायनपरो ययौ ।।१५।।

कासारमध्ये मग्नोऽभून्नाद्राक्षीद् राक्षसी च तम् ।
स धृतो नागकन्याभिर्नीतः पातालमन्दिरम् ।।१६।।

भूषितो नागकन्याभिर्वस्त्रालङ्कारभूषणैः ।
पप्रच्छुर्नागकन्यास्तं कुत आगमनं तव ।।१७।।

कोसि कस्यासि किं नाम वद सत्यं नरोत्तम ।
इति तद्वचनं श्रुत्वा ता जगाद नराधिपः ।।१८।।

अहं चन्द्राङ्गदो नाम हेमाङ्गदसुतो बली ।
मालवे विषये कर्णनगरे वसतिर्मम ।।१९।।

राक्षसीभयवित्रस्तः प्रविष्टः सलिलं महत् ।
भवतीभिरिहानीतो यत्पृष्टं तन्निवेदितम् ।।२०।।

भक्षिताः सर्वलोका मे मृगयाभिरतस्य ह ।
सरोजलप्रसादेन जीवँस्तिष्ठामि साम्प्रतम् ।।२१।।

इति ता वचनं श्रुत्वा पुनरूचुर्नृपं तदा ।।२२।।

ता ऊचुः

भवास्माकं पतिरिह सर्वं सेत्स्यति ते प्रियम् ।
अस्माकं नागकन्यानां भोगश्चातीव दुर्लभः ।।२३।।

तासामिति वचः श्रुत्वा प्रोवाच नृपसत्तमः ।
एकपत्नीव्रतं मेऽस्ति मातरस्तत्कथं त्यजे ।।२४।।

सोमवंशप्रसूतानां राज्ञां धर्मान् ब्रवीमि वः ।
परद्रव्यं परद्रोहं परदारांस्तथैव च ।।२५।।

रहेका, उँचाइमा आकाशलाई पनि छुने ती राक्षसहरूलाई देखेर चन्द्राङ्गदका साथमा आएका योद्धा र सेवकहरू डराएर भाग्न थाले । केही त डरले गर्दा मरि नै हाले भने केही मूर्च्छित भएर भुईंमा पछारिए ।।१२-१३।। ती राक्षसहरूमध्ये एउटी क्रूर राक्षसी थिई । त्यो कामदेवभन्दा पनि सुन्दर राजा चन्द्राङ्गदको स्वरूप देखेर काममोहित भई। आवेशमा त्यसले चन्द्राङ्गदलाई अँगालो मारेर लगातार चुम्बन गर्न थाली ।।१४।। राजाका अमात्यहरूलाई आफ्ना यौनाङ्गमा च्यापेर राखिरहेकी त्यस राक्षसीले राजसेवकहरूलाई निर्दयतापूर्वक मार्दै खान थाली। यसैबीचमा राजा भागे र एउटा पोखरीमा गएर डुबे, राक्षसीले कति खोज्दा पनि उनलाई देख्न सकिन। त्यस बेला राजालाई नागकन्याहरूले लुकाएर पाताल पुऱ्याए ।।१५-१६।। पातालमा पुगेका चन्द्राङ्गदलाई नागकन्याहरूले वस्त्र र अलङ्कार पहिऱ्याई अत्यन्त सुन्दर र कान्तिमय तुल्याए । नागकन्याले उनलाई सोधे - हे उत्तम पुरुष! तपाइँ को हो ? कसका छोरा हुनुहुन्छ? कहाँबाट आउनुभएको छ ? तपाईंको शुभ नाम के हो? हाम्रा यी प्रश्नहरूको साँचो उत्तर बताउनुहोस्। नागकन्याका ती प्रश्न सुनेर राजाले भने - मेरो नाम चन्द्राङ्गद हो । म हेमाङ्गदको पुत्र हुँ । मालवदेशको कर्णनगरमा मेरो बसाइ छ।।१७-१९।। एउटी राक्षसीले ममाथि आक्रमण गर्दा त्योसँग डराएर म पोखरीको पानीमा डुबेर रहेको थिएँ । त्यसैबेला तपाइँहरूले मलाई यहाँ ल्याउनुभयो। तपाइँहरूले जे सोध्नुभएको थियो त्यो मैले बताएँ ।।२०।। शिकार खेल्न मसँग आएका सेवक र सैनिकहरूलाई राक्षसहरूले खाए। पोखरीको पानीमा डुब्न पाएकाले म बाँच्न पाएँ र अहिले तपाइँहरूका सामु छु । राजाले भनेका यी कुरा सुनेर ती नागकन्याहरूले राजाप्रति जिज्ञासा गरे ।।२१-२२।।

नागकन्याहरूले भने - तपाईं हाम्रा पति भएर यहाँ रहनुहोस् । तपाईंका लागि सबै कुरा राम्रो र अनुकूल हुनेछ । हामी नागकन्याका साथ हुने भोग अत्यन्त दुर्लभ, आनन्ददायक र आह्लादक हुने गर्दछ ।।२३।। नागकन्याका यी कुरा सुनेर राजाले भने - हे माता हो ! मैले त एकपत्नीव्रत लिएको छु । त्यो व्रत छोड्न हुँदैन ।।२४।। चन्द्रवंशमा जन्मेका राजपुरुषहरूका आफ्नै धर्म र कर्तव्य छन् । तीबारे म तपाइँहरूलाई बताउने

परनिन्दाश्च नेच्छन्ति नृपाः सौम्याश्च साधवः ।
अधीतिर्यजनं दानं शरणागतपालनम् ।।२६।।

निषिद्धाचरणं नैव विध्यर्थप्रतिपालनम् ।
एते धर्मास्त्रिवर्णानां याजनादि त्रयं द्विजे ।।२७।।

अधिकं सर्ववर्णानामातिथ्यं परमं मतम् ।
इति श्रुत्वा नृपवचोऽखिला नागकुमारिकाः ।।२८।।

प्रशेपुस्तं वियुक्तस्त्वं बहुधा स्वस्त्रिया भव ।
बबन्धुर्निगडैस्तं ता दुःखिताः कामविह्वलाः ।।२९।।

राक्षसी तु जलं प्राश्य तदर्थे तत्सरोगतम् ।
भक्षयित्वा जलचरान् नातृप्यत् परमं तदा ।।३०।।

इमं वृत्तान्तमशृणोद् राज्ञी राजीवलोचना ।
पर्यङ्कस्था स्वदूतात् सा राक्षसीतोऽवशेषितात् ।।३१।।

मग्नं निशम्य नृपतिं दुःखिता पतिता भुवि ।
मूर्च्छामवाप महतीं सखीभिः परिवीजिता ।।३२।।

सिक्ता शीतलतोयेन रुदन्तीभिर्मुहुर्मुहुः ।
उपविष्टा प्ररुदती घ्नन्ती वक्षः शिरो मुखम् ।।३३।।

शुशोच परमालापैर्भर्तः कान्तेति जल्पती ।
क्व गतः प्राणनाथो मे हित्वा मां प्रियवादिनीम् ।।३४।।

सर्वावयवसम्पूर्णां प्रणतां प्रियकारिणीम् ।
भर्तृकार्यरतां नित्यं नित्यं चातिथिपूजिकाम् ।।३५।।

कुत्र भोक्ष्यति मे नाथो निद्रां वा कुत्र यास्यति ।
काञ्चनं शयनं हित्वा पराघ्यांस्तरणैर्वृतम् ।।३६।।

कथं स्नास्यति कान्तो मे हित्वा तैलं सुगन्धिकम् ।
लोकानां पालनं कोऽद्य विना तेन करिष्यति ।।३७।।

प्रजानां सर्वलोकानां बालानां रञ्जनं च कः ।
अस्तं यातो गुणनिधिः प्रतापनिधिरद्य किम् ।।३८।।

छ। चन्द्रवंशका उत्तम राजाहरूले परद्रव्यहरण, परद्रोह, परस्त्रीसेवन र परनिन्दा गर्न रुचाउँदैनन्। अध्ययन, यज्ञ, दान, शरणागतरक्षा, निषिद्ध कर्मको वर्जना, शास्त्रानुमोदित विधिको प्रतिपालन, यी सबै वर्णका सामान्य धर्म हुन् । अध्ययन, यज्ञ र दान ब्राह्मणका अधिक धर्म हुन् सबै वर्णहरूका लागि आतिथ्य गर्नु परमधर्म हो। राजाका यी वचन सुनेर नागकन्याहरूले राजालाई तिमी दीर्घकालसम्म आफ्नी पत्नीबाट वियुक्त हुनेछौ भनी सराप दिए । त्यसपछि कामपीडाले व्याकुल भएका ती नागकन्याहरूले राजालाई बन्धनले बाँधे ।।२५-२९।। उता राजाको खोजीमा ज्यान सुम्पेर लागेकी राक्षसी भने भाग्ने क्रममा राजा जुन पोखरीमा लुकेका थिए, त्यो पोखरीको पानी सर्लक्कै पिएर त्यहाँ रहेका जलचरहरूलाई खाँदा पनि अघाउन सकिन ।।३०।। अर्कोतर्फ राजदरबारमा आफ्नो पलङ्गमा बसिरहेकी महारानीले राक्षसीको आक्रमणबाट बची भागेर आएका दूतहरूको मुखबाट राजा पानीमा डुबेको समाचार सुनिन् ।।३१।। त्यो समाचार सुनेर भुईंमा लडेकी ती रानी केहीबेर मूर्च्छामा परिन् । उनका सखीहरूले पङ्खा डुलाएर सेवा गरे । साह्रै गहिरो मूर्च्छामा परेकी रानीलाई देखेर चिन्तित अवस्थामा रोइरहेका सङ्गिनीहरूले रानीलाई चिसो जल छर्केर ब्युँताए । त्यसपछि ती रानी उठेर बसिन् । छाती, मुख र टाउकामा हातले प्रहार गर्दै - हे कान्त! हे स्वामी ! भन्दै मर्मस्पर्शी विलाप गर्न थालिन् - मजस्ती मिष्टभाषिणी, सर्वाङ्गमा कान्ति र सौन्दर्य खुलेका कारण प्राणनाथकी पियारी, विनम्र, पतिको आज्ञापालन गर्ने, दिनदिनै पतिलाई प्यारो लाग्ने कामहरूमात्र गर्न रुचाउने र अभ्यागतहरूको सेवा गर्ने पत्नीलाई छाडेर हे मेरा प्यारा पतिदेव ! हजुर कहाँ जानुभयो ? मेरा प्राणनाथले अब कहाँ गएर खानु हुनेछ ? बहुमूल्य बिछ्यौनाले सजिएको स्वर्णमय शय्या छोडेर आज कस्तो बिस्तरामा शयन गर्नुहुनेछ ? सुगन्ध-तेल भएको स्नान गर्ने जल छाडेर आज कुन पानीले नुहाउनु हुनेछ? आज मेरा स्वामी नहुँदा राज्यका जनताको भलो कसले गर्ला ? ।।३२-३७।। प्रजा, मित्रवर्ग र बाण आदि शस्त्रहरूको मनोरञ्जन अब कसले गर्नेछ ? गुणका खजाना र प्रतापका खानी मेरा स्वामी के अस्ताचलमा जानुभएकै हो त ? ।।३८।।

दिशः शून्याः प्रपश्यामि विना तेन महात्मना ।
क्वाहं सुखं प्रपश्यामि क्व सुखं सोऽपि यास्यति।।३९।।

इह लोके परे वापि न सुखं कुलयोषिताम् ।
हीनानां स्वामिना देव ! यदेतत् स्वामिना सह ।।४०।।

शरणागतगुप्तिञ्च दीनानां कः करिष्यति ।
एवं बहुविधं दीना रुदती भृशविह्वला ।।४१।।

तत्याज त्रोटयित्वा सा भूषणानि च दूरतः ।
कङ्कणानि च सर्वाणि बभञ्ज च मुमूर्च्छ च ।।४२।।

महात्मा र परोपकारी मेरा स्वामी नहुँदा आज मैले चारै दिशा शून्यमय देखिरहेकी छु । मैले अब कहाँ गएर सुख पाउनेछु र उहाँले कहाँ गएर सुख पाउनुहुनेछ ? ।।३९।। पतिविहीन कुलाङ्गना नारीहरूका लागि यो लोक र परलोकमा पनि सुख प्राप्त हुँदैन । आफ्ना प्यारा राजाबाट वियुक्त भएका दीन-दुःखीहरूको रक्षा अब कसले गर्ला ? यसरी अनेक थरि विलाप गरिरहेकी, रोइरहेकी र तड्पिरहेकी रानी इन्दुमतीले आफ्ना शरीरका गहना चुँडालेर फ्याँकिन्, हातका बाला र चुरालाई पनि टुक्र्याएर फ्याँकिन् अनि फेरि मूर्च्छित भइन् ।।४०-४२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चन्द्राङ्गदोपाख्यानं नाम त्रिपञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'राजा चन्द्राङ्गदको उपाख्यान' शीर्षकान्वित त्रिपन्नौं अध्याय पूर्ण भयो ।।५३।।

ॐ

## चतु:पञ्चाशत्तमोऽध्याय:	{ ५४ अध्याय }

पार्वत्युवाच

तस्यां तु मूर्च्छितायां तु किमकुर्वन् जनास्तदा ।
तन्मे विस्तरतो ब्रूहि हृदयानन्दनं पित: ।।१।।

हिमवानुवाच

तदा सर्वे नागरिका नानावाक्यविशारदा: ।
प्रमृज्य स्वानि चाश्रूणि समादध्युर्नृपस्त्रियम् ।।२।।

जना ऊचु:

मातरुत्तिष्ठ मा शोकं कुरु पुत्रे मन: कृथा: ।
प्रेतं दहति शोकाश्रु तस्माद् भर्तृहितं कुरु ।।३।।

मर्त्येषु न हि दृष्टोऽस्ति चिरञ्जीवी शुभानने ।
यथा जीर्णं परित्यज्य वासोऽन्यद् गृह्यते जनै: ।।४।।

वर्ष्मापि देहिना तद्वत् त्यक्त्वाऽन्यद् गृह्यते शुभम् ।
अत्याश्चर्यमिदं भद्रे स्वयं मृत्युमुखे स्थित: ।।५।।

शोचते मृतमपरं स्वयं मरणधर्मवान् ।
स्वदेहेन वियोगं च न वेत्ति भाविनं जन: ।।६।।

मदीयं मन्यते सर्वं दैवकालवशं स्थितम् ।
ब्रह्मादिस्थावरान्तं यद् विश्वं साब्धिचराचरम् ।।७।।

ज्ञात्वा तं नश्वरं शोकं त्यक्त्वोत्तिष्ठ सुपुत्रिणि ! ।
धर्मवान् पुण्यशीलस्ते भर्ता मुक्तिं गतो भवेत् ।।८।।

जीवन् यदि भवेत् स्वर्गे तदा यास्यति कर्हिचित् ।
अतिपुण्यान्मानवोऽपि याति स्वर्गं गत: पुन: ।
अथवा परिपृच्छामो मुनिं कञ्चिदिहागतम् ।।९।।

**पार्वतीले भन्नुभयो -** इन्दुमती मूर्च्छामा परेपछि अरू मानिसहरूले के गरे ? हे पिता ! त्यो कुरा मेरो हृदयलाई प्रसन्न तुल्याउँदै हजुरले बताउनुहोस् ।।१।।

**हिमालयले भने -** रानी इन्दुमती मूर्च्छामा परेपछि त्यहाँ जम्मा भएका र सान्त्वना दिन सिपालु सबै नरनारीहरूले आफ्ना आँसु पुछेर रानी इन्दुमतीलाई संझाए ।।२।।

**नागरिकहरूले भने -** हे राजमाता ! तपाईं उठ्नुहोस्। शोक नगर्नुहोस्, आफ्ना पतिसमानका उहाँकै उत्तराधिकारी छोरालाई हेरेर चित्त बुझाउनुहोस् । शोकको आँसुले मरेका मानिसलाई पोल्दछ । त्यस कारण नरुनुहोस् । अहिले तपाईंले आफ्ना पतिको हित हुने काम गर्नुपर्दछ ।।३।। हे सुन्दर अनुहार भएकी महारानी ! मानिसहरूमा चिरञ्जीवी कोही पनि देखिएको छैन । जसरी मानिसहरूले पुरानो फाटेको कपडा छाडेर नयाँ कपडा धारण गर्दछन् त्यसैगरी प्राणीहरूले पुराना शरीर छाडेर नयाँ शरीर धारण गर्दछन्। हे महारानी ! संसारमा ठूलो आश्चर्य देखिन्छ, आफै कालको मुखमा परेको मानिसले मेरो निश्चय नै मृत्यु हुन्छ भन्ने कुरा जान्दाजान्दै पनि अरूको मृत्युमा शोक गर्दछ । भोलि म मेरो शरीरसँग अलग भएर अन्तै जानेछु भन्ने कुरा पटक्कै विचार गर्दैन ।।४-६।। दैव र मृत्युका वशमा रहेका कुरालाई मानिसले अहङ्कारको वशमा परी आफ्नै वशमा रहेको ठान्दछ । हे पुत्रवती रानी ! ब्रह्माजीदेखि लिएर स्थावरसम्म जुन समुद्रसहित चर र अचर भएको विशाल संसार छ, त्यसलाई विनाशशील छ भन्ने जानेर चिन्ता त्यागी तपाईं उठ्नुहोस् । तपाईंले आफ्ना मृत पतिको चिन्ता नगर्नुहोस्। किनकि सधैं धर्म गर्ने र सधैं पुण्य हुने काम गर्ने तपाईंका पति निश्चय नै मुक्तिमा प्राप्त हुनुभएको छ ।।७-८।। यदि कतै ज्यूँदै हुनुहुन्छ भने तपाईंका सामु अवश्य आउनुहुनेछ अथवा स्वर्गमा जानुभएको रहेछ भने पनि आफ्ना पुण्यका कारण उत्तम भोग भोगी, भोग सकिएपछि धर्तीमा उत्तम परिवारमा जन्म लिनु हुनेछ । धेरै पुण्य गरेपछि मानिस स्वर्गभोग गरेर फेरि जन्म लिन्छ । तपाईंलाई राजाको विषयमा चिन्ता

अतीतानागतविदं कथयिष्यति सोऽखिलम् ।
अनन्तरं हि यत् कार्यं तत् सर्वं विदधामहे ।।१०।।

हिमवानुवाच

एवं प्रबोधिता लोकैः क्षणमिन्दुमती तदा ।
आश्वस्ता सर्ववाक्येन प्रमृज्याश्रूणि वाससा ।।११।।

विसर्जयामास तदा लोकान् सर्वान् समागतान् ।
त्यक्त्वा सौभाग्यचिह्नानि प्रपेदे कृशतां भृशम् ।।१२।।

रुदती शोचती तस्थौ श्वसती मूर्च्छिता मुहुः ।
ततो द्वादशवर्षान्ते नारदो दिव्यदर्शनः ।।१३।।

आजगाम गृहं तस्या यदृच्छाविचरन् मुनिः ।
दृष्ट्वा तं विललापाशु वदन्ती भर्तृचेष्टितम् ।।१४।।

दुःखं चाकथयत् तस्मै जातं द्वादशवार्षिकम् ।
निशम्य रुदितं तस्या हर्षयन् मुनिरब्रवीत् ।।१५।।

नारद उवाच

क्वापि तिष्ठति ते भर्ता न तं शोचितुमर्हसि ।
शिरश्छादय नीलेन वाससा कर्णभूषणे ।।१६।।

कर्णयोः कुरु भाले त्वं बिभ्रती कुङ्कुमं शुभम् ।
वलयानि च करयोः कण्ठे मङ्गलसूत्रकम् ।।१७।।

हिमवानुवाच

सर्वज्ञस्य मुनेर्वाक्याद् विश्वस्ता सत्यवादिनः ।
तत्कालं सर्वमानाय्य हर्षिता सा तथाऽकरोत् ।।१८।।

आकार्य ब्राह्मणान् सर्वान् सम्पूज्य नारदं पुरा ।
सम्पूज्य सकलाँस्ताँस्तु ददौ दानान्यनेकशः ।।१९।।

वादयामास वाद्यानि शर्कराञ्च गृहे गृहे ।
प्रेषयामास च तदा हर्षादिन्दुमती शुभा ।।२०।।

छ भने यहाँ आउनुहुने कुनै ऋषिसँग उहाँको कुन अवस्था छ भन्ने विषयमा सोधौँला । जुन ज्योतिषी ऋषिले भूत र भविष्यको कुरा जानेका छन्, तिनले राजाको विषयमा पनि सत्य कुरा बताउनेछन् । त्यसपछि हामीले जे गर्नुपर्छ, त्यो सबै गर्नेछौं ।।९-१०।।

**हिमालयले भने** - यसरी मानिसहरूले अनेक तरिकाबाट संझाइएकी इन्दुमती सबैका कुरा सुनेर आश्वस्त भइन् । रुमालले आँसु पुछेर त्यहाँ आएका सबै मानिसहरूसित राम्ररी बोलचाल गरी केही बेरपछि तिनलाई बिदा गरिन् । त्यस बेला ती रानी सौभाग्यका सबै चिह्नहरूलाई त्यागेर दुर्बल अवस्थामा रहेकी थिइन् ।।११-१२।। तिनले रुँदै, चिन्ता गर्दै र लामो सास लिंदै येन केन प्रकारेण शरीर धानेकी थिइन् र पटक पटक मूर्च्छा पर्ने गर्थिन् । यसरी बाह्र वर्ष बितेपछि एक दिन दिव्य स्वरूप भएका र आफ्नो इच्छाले संसारमा भ्रमण गर्ने भगवान् नारायणका भक्त नारद मुनि ती रानीका घरमा आए । तिनले नारद ऋषिलाई देखेर आफ्ना पतिको विषयमा सबै कुरा बताएर विलाप गरिन् । बाह्र वर्षसम्म आफूले भोगेका कष्टको विषयमा पनि नारदजीलाई निवेदन गरिन् । रानीको यस्तो विलाप र रोदन सुनेर तिनलाई हर्षित तुल्याउँदै नारदजीले भन्नुभयो ।।१३-१५।।

**नारदजीले भन्नुभयो** - हे रानी! तिम्रा पति कतै जीवित छन्। तिमीले तिनको विषयमा चिन्ता नगर । नीलो कपडाले शिर ढाक, कानमा माड्वारी लगाऊ, निधारमा मङ्गलमय कुङ्कुमको टीका लगाऊ, हातमा चुरा र बाला धारण गर र घाँटीमा मङ्गलसूत्र पनि लगाऊ ।।१६-१७।।

**हिमालयले भने** - सर्वज्ञ र सत्यवादी नारदमुनिका कुरा सुनेर विश्वासमा परेकी रानीले खुसी भएर तत्कालै गहना र कपडा झिकाई आफ्ना अङ्गहरूमा धारण गरिन् ।।१८।। सबै ब्राह्मणहरूलाई बोलाएर नारदजीको पूजा गरेपछि ती ब्राह्मणहरूको पनि पूजा गरी तिनलाई अनेक थरि दान प्रदान गरिन् ।।१९।। वाद्यवादकहरूलाई बोलाएर बाजागाजा बजाउन लगाइन् र आफ्ना छरछिमेकका प्रत्येक घरमा खुसियालीको उपलक्ष्यमा चिनी र सक्खर पठाइन् । हर्षले सम्पन्न मङ्गलमय स्वभाव भएकी इन्दुमतीले सबै आफ्ना सेवकहरूलाई कपडा

वस्त्रताम्बूलदानेन ददावाज्ञां जनस्य सा ।
प्रणिपत्य पुनर्देवं मुनिं नारदमादरात् ।।२१।।

स्वभर्तृप्राप्तयेऽपृच्छदुपायं राजकन्यका ।

इन्दुमत्युवाच

कुत्र तिष्ठति मे भर्ता कथं तिष्ठति वा मुने ।।२२।।

केनोपायेन वेदज्ञ ! दर्शनं तस्य मे भवेत् ।
अनुग्रहं कुरु मुने तमुपायं वदस्व मे ।
व्रतं दानं तपो वापि दुःसाध्यमपि यद् भवेत् ।।२३।।

नारद उवाच

व्रतं तु परमं तेऽहं कथयामि समासतः ।
नभःशुक्लचतुर्थ्यां तदारभेत् परया मुदा ।।२४।।

नद्यां तडागे वाप्यां वा दन्तधावनपूर्वकम् ।
स्नानं प्रभातसमये कुरु सङ्कल्पपूर्वकम् ।।२५।।

शुक्लवासा गृहं गत्वा मृन्मयीं मूर्तिमुत्तमाम् ।
कुर्याच्चतुर्भुजां सम्यग् गणेशस्य मनोरमाम् ।।२६।।

उपचारैः षोडशभिः पूजयेत् स्थिरचेतसा ।
एकान्नमेकभुक्तं वा स्वयं कुर्यात् प्रयत्नतः ।
उपोषणं वा कुर्वीत यावद् भाद्रचतुर्थिका ।।२७।।

गीतवादित्रनृत्याद्यैर्ब्राह्मणानाञ्च भोजनैः ।
महोत्सवं प्रकुर्वीत विभवे सति शोभने ।।२८।।

एवं व्रतं कुरु शुभे ! भर्त्रा सह समेष्यसि ।
पाताले नागकन्याभी रुद्धेन जीविता शुभे ।।२९।।

सत्यं ब्रवीमि ते सत्ये ! नान्यथा मम भाषितम् ।

हिमवानुवाच

इत्युक्ता तेन मुनिना व्रतं प्रारभदादरात् ।।३०।।

गते मुनौ नभोमासि दिनैः कतिभिरागते ।
द्विरदाननमूर्तिं सा चकार पार्थिवीं शुभाम् ।।३१।।

र उपहार दिएर त्यहाँ आएका आफन्तहरूको पनि सम्मान गरी तिनलाई आ-आफ्ना घर जान आज्ञा दिइन् । त्यसपछि देवतासमान पूजनीय नारद मुनिलाई आदरपूर्वक प्रणाम गरेर आफ्ना पतिको प्राप्तिका लागि के उपाय हुनसक्छ ? त्यस विषयमा बताउनुहोस् भन्दै प्रार्थना गरिन् ।

**इन्दुमतीले भनिन्** – हे वेदका ज्ञाता नारदमुनि ! मेरा पति कहाँ बस्नुहुन्छ ? कसरी बस्नुभएको छ ? कुन उपायले मैले उहाँको दर्शन पाउन सक्छु ? ममाथि दया गर्नुहोस् र त्यो उपाय बताउनुहोस् । त्यो उपाय व्रत, दान र कष्टदायक तपस्यामध्ये जुनसुकै होस् त्यसलाई म अङ्गीकार गर्दछु । मलाई जानकारी गराउनुहोस् ।।२०-२३।।

**नारदजीले भन्नुभयो-** हे इन्दुमती ! तिमीलाई म सङ्क्षेपमा उत्तम व्रत बताउँछु । श्रावण महिनाको शुक्लपक्षको चतुर्थी तिथिका दिन आनन्दका साथ त्यो व्रत आरम्भ गर्नुपर्दछ ।।२४।। नदी, तलाउ अथवा पोखरीमा गएर दन्तधावन गर्दै सङ्कल्पपूर्वक प्रातःकालमा तिमीले नुहाउने काम गर ।।२५।। सेता वस्त्र धारण गरी घरमा गई श्रीगणेशको अत्यन्त सुन्दर चार हात भएको र राम्रो माटाको मूर्ति बनाऊ ।।२६।। सोह्र प्रकारका सामग्रीहरूबाट त्यस मूर्तिमा भगवान् श्रीगणेशको पूजा गर । पूजा गर्दा चित्त स्थिर बनाऊ । कुनै पवित्र अन्न एक छाक खाएर अथवा उपवास बसेर भाद्र महिनाको शुक्लपक्षको चतुर्थी तिथिसम्म यो व्रत गर ।।२७।। आफ्नो सम्पत्तिले पुगेमा नृत्य, गीत र वाद्यवादनजस्ता मङ्गलमय कार्यले भगवान् श्रीगणेशको आराधना गर्दै ब्राह्मणहरूलाई भोजन गराउँदै श्रीगणेशको उत्सव मनाउनुपर्दछ ।।२८।। हे रानी ! यसरी तिमीले श्रीगणेशको व्रत गर्‍यौ भने आफ्ना पतिसँग अवश्य भेट हुनेछ । अहिले नागकन्याहरूले तिम्रो पतिलाई पातालमा थुनेर राखेका छन् । ती ज्यूँदै छन् । म तिमीसँग सत्य कुरा गरिरहेको छु। मैले भनेको कुरा खेर जाँदैन ।

**हिमालयले भने** – नारदमुनिले दिएको उपदेश ग्रहण गर्ने ती रानीले श्रद्धापूर्वक श्रीगणेशको व्रत आरम्भ गरिन् ।।२९-३०।। नारदमुनि फर्कनुभयो श्रावण महिनाका केही दिन बितेपछि श्रावण शुक्ल चतुर्थी तिथि आयो र ती रानीले अत्यन्त मङ्गलमय माटाको श्रीगणेशको मूर्ति

पूर्वोक्तविधिना पूजां चकार सुमनोहराम् ।
दिव्यगन्धैर्दिव्यवस्त्रैर्दिव्यैश्च कुसुमैरपि ।।३२।।

दिव्यैर्नानाविधैश्चैव नैवेद्यैः फलकाञ्चनैः ।
दीपैः पुष्पाञ्जलीभिश्च प्रक्रमैर्नतिभिः स्तवैः ।।३३।।

तन्नामस्मरणैर्ध्यानैस्तोषयामास तं विभुम् ।
गीतवादित्रनृत्याद्यैर्ब्राह्मणानाञ्च भोजनैः ।।३४।।

पलमात्रं पयो भुक्त्वा चकार व्रतमुत्तमम् ।
नभःशुक्लचतुर्थ्यादि चिरनष्टप्रियाप्तये ।।३५।।

नारदस्य मुनेर्वाक्याद् यावद् भाद्रचतुर्थिका ।।३६।।

बनाइन् ।।३१।। त्यसपछि पहिले बताएको विधिबाट उत्तम चन्दन, उत्तम कपडा र उत्तम फलफूल जम्मा गरी श्रद्धापूर्वक विधिले भगवान् श्रीगणेशको पूजा गरिन् । उत्तम किसिमका अनेक थरि नैवेद्य, फल, सुवर्ण, दीपक, पुष्पाञ्जली, प्रदक्षिणा, नमस्कार, सहस्रनामपाठ, स्तोत्रपाठ र ध्यानद्वारा सर्वव्यापक भगवान् श्रीगणेशलाई प्रसन्न गराइन् । तिनले सङ्गीत, बाजा-गाजा, नाच, ब्राह्मण भोजन आदि क्रियाहरूका साथ नारदजीको आज्ञाअनुसार प्रतिदिन एक तोला दूध खाएर श्रावण शुक्ल चतुर्थीबाट आरम्भ गरी भाद्रशुक्ल चतुर्थीसम्म आफ्ना हराएका पतिको प्राप्तिका लागि श्रीगणेशको व्रत गरिन् ।।३२-३६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे इन्दुमतीनारदसंवादो नाम चतुःपञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'इन्दुमती र नारदजीको संवाद' शीर्षकान्वित चौवन्नौं अध्याय पूर्ण भयो ।।५४।।

ॐ

# पञ्चपञ्चाशत्तमोऽध्यायः { ५५ अध्याय }

हिमवानुवाच

समाप्ते तु व्रते तस्या गणेशस्य प्रसादतः ।
पाताले नागकन्यानामन्यथाऽभून्मतिस्तदा ।।१।।

मोचयामासू राजानं पुपूजुश्च यथाविधि ।
वस्त्रैराभरणैश्चैव नानारत्नमहाधनैः ।।२।।

अश्वं मनोजवं दत्त्वा विससर्जुर्नृपं तदा ।
कासाराद् बहिरागत्य बद्ध्वा चाश्वं महाद्रुमे ।।३।।

स्नाति यावन्नागरिकैर्दृष्टः कतिपयैर्नृपः ।
अपरे प्रणिपत्यैनं पप्रच्छुः को भवानिति ।।४।।

कुत्रत्यः कुत आयातः किंनामा वद नः प्रभो ।
इति तेषां वचः श्रुत्वा पप्रच्छ नृपसत्तमः ।।५।।

इन्दुमत्याः कुमारस्य कुशलं खेदसंयुतः ।
ततो बुबुधिरे ते तमालिलिङ्गुर्मुदा जनाः ।।६।।

ऊचुश्च नृप! ते भार्या स्नात्वेदानीं गता गृहम् ।
उपवासव्रतवती कृशा धमनिसंयुता ।।७।।

कुमारे जीवमास्थाय जीवमात्रावशेषिता ।
केचिच्च नगरं गत्वा शुभां वार्तामघोषयन् ।।८।।

अत्याप्तजनवाक्येन श्रुत्वा सा नृपमागतम् ।
आनन्दाब्धौ निमग्नाऽभूद् ब्रह्मज्ञानीव योगवित् ।।९।।

ततोऽमात्यान् पुरस्कृत्य सैन्यान्यप्रेषयच्च तम् ।
चित्रध्वजपताकाभिरशोभयत सा पुरम् ।।१०।।

वीथीरासिञ्चयामास सभाः सम्पाद्य यत्नतः ।
स्वात्मानं भूषयामास वासोऽलङ्कारभूषणैः ।।११।।

गोभूहिरण्यदानाद्यैस्तोषयित्वा द्विजान् बहून् ।
आरार्तिक्यं करे दत्त्वा पतिवत्स्त्रीजनस्य सा ।।१२।।

**हिमालयले भने** - श्रीगणेशको कृपाबाट इन्दुमतीको व्रत समाप्त भएपछि पातालका रिसाएका नागकन्याहरूको बुद्धिमा परिवर्तन आयो ।।१।। ती नागकन्याहरूले राजालाई बन्धनमुक्त गरे र विधिपूर्वक वस्त्र, गहना र नानाथरिका रत्न प्रदान गरी उनको पूजा पनि गरे ।।२।। मनझैं तीव्र वेग भएको घोडा दिएर पातालबाट राजालाई विदाइ गरे । सरोवरबाट बाहिर आई ठूलो रूखमा घोडा बाँधेर राजाले नुहाउन लागेका बेला केही नागरिकहरूले तिनलाई देखे । केही मानिसले शिर झुकाएर हजुर को हुनुहुन्छ ? हजुरको घर कहाँ हो ? कहाँबाट आउनुभएको हो ? के नाम हो ? हे प्रभु ! हामीलाई बताउनुहोस् भनी सोधे। ती मानिसहरूका कुरा सुनेपछि राजा चन्द्राङ्गदले चिन्तापूर्वक इन्दुमती रानी र राजपुत्रको कुशल मङ्गल सोधनी गरे । राजाको प्रश्नबाट ती मानिसले यी त हाम्रै राजा रहेछन् भनी तिनलाई चिनेर हर्षित भई आलिङ्गन गरे ।।३-६।। ती मानिसहरूले महारानी सरोवरमा स्नान गरी भर्खर घर फर्किनुभएको कुरा पनि बताएपछि रानी इन्दुमती उपवास र व्रतका कारण दुर्बल एवं पातली हुनुहुन्छ । उहाँका शरीरका नसाहरू बाहिरबाटै देखिन्छन् । उहाँ आफ्ना राजपुत्रका कारण प्राण धानेर बाँच्नुभएको छ भन्ने कुरासमेत बताए । त्यतिबेला नै तीमध्ये केही मानिसहरूले नगरमा गएर राजा भेटिनुभएको शुभ समाचारको प्रचार गरे ।।७-८।। रानी इन्दुमती अत्यन्त विश्वस्त मानिसहरूबाट राजा आउनुभएको थाहा पाएपछि योगशास्त्रका ज्ञाता ब्रह्मज्ञानपछि आनन्दको सागरमा आकण्ठ निमग्न भएझैं आनन्दसागरमा निमग्न भइन् ।।९।। त्यसपछि रानीले मन्त्रीहरूलाई अगाडि लगाएर राजाका समीपमा सैनिकहरू पठाइन् । चित्र-विचित्र ध्वजा-पताकाहरूद्वारा नगरको शृङ्गार गर्न लगाइन् ।।१०।। राजमार्ग र गल्लीहरूलाई शीतल जलद्वारा सिञ्चन गरेर शीतल र शान्त बनाउने व्यवस्था मिलाइन्। राजसभालाई पनि सुन्दर र स्वच्छ बनाउन लगाइन्। त्यसपछि ती रानीले वस्त्र र अलङ्कारद्वारा सजिएर आफूलाई पनि दर्शनीय तुल्याइन् ।।११।। तिनले गाई, पृथिवी, सुवर्ण आदिको दान गरेर धेरै ब्राह्मणहरूलाई सन्तुष्ट बनाई सौभाग्यवती

गीतवादित्रघोषेण पुरात् सर उपागमत् ।
अमात्यास्तु पुरो गत्वा प्रणम्य नृपपुङ्गवम् ।।१३।।

आलिलिङ्गुर्मुदा सर्वे प्रणेमुश्च यथाक्रमम् ।
उपविष्टे तु नृपतावुपविष्टास्तदाज्ञया ।।१४।।

सर्वान् कुशलप्रश्नाद्यैस्तोषयित्वा यथाक्रमम् ।
मानयित्वा तथा लोकान् दत्त्वा ताम्बूलवाससी ।।१५।।

स्वयं जगाम शिबिरमिन्दुमत्या नृपोत्तमः ।
कारयामास स विधिं द्वादशाब्ददृशैर्द्विजैः ।।१६।।

पुण्याहवाचनं कृत्वा गणेशार्चनपूर्वकम् ।
सम्पूज्य शङ्करं सम्यग् द्विजाँश्च दक्षिणादिभिः ।।१७।।

बभञ्ज श्रीफलं त्यक्त्वा ततस्तत्पुरतो ययौ ।
ददर्श तत्रेन्दुमतीमिन्दोः शेषां कलामिव ।।१८।।

नीराजयित्वा राजानं युवतीभिः सभर्तृभिः ।
लाजपुष्पमयीं वृष्टिं ताभिः साऽकारयत् तदा ।।१९।।

प्रमृज्य नयने सम्यगानन्दाश्रुपरिप्लुते ।
हर्षशोकान्वितौ तौ तु परस्परमथोचतुः ।।२०।।

परस्परं वियोगाधिं कथयामासतुः शुचा ।
अनिवार्यप्रकृतिभिः सान्त्वितौ बहुलोक्तिभिः ।।२१।।

आनयित्वा तु राजानं समारोह्य महागजे ।
नानालङ्कारसंयुक्ते पताकाच्छत्रसंयुते ।।२२।।

पादचारैः परिवृते चतुर्घण्टाविराजिते ।
शतं यष्टिधरास्तस्य वारयन्तो ययुः पुरः ।।२३।।

अग्निशस्त्रधराश्चाश्वरथारोहा अनेकशः ।
सव्यदक्षिणतो राज्ञो गजलक्षं ययुर्लघु ।।२४।।

नारीहरूको हातमा आरतीको पात्र थमाइन् ।।१२ सौभाग्यवती नारीहरूलाई अगाडि लगाएर गीत र मङ्गलघोषका साथ राजाको उपस्थिति भएको सरोवरमा पुगिन् । तिनका मन्त्रीहरूले रानी जानुभन्दा पहिले नै राजाको समीपमा पुगेर प्रणाम गरी हर्षपूर्वक आलिङ्गन गरे । राजा आसनमा विराजमान भएपछि ती पनि राजाको आज्ञा पाएर आ-आफ्ना आसनमा बसे ।।१३-१४।। सबै मन्त्रीहरूलाई ज्येष्ठताक्रमले कुशल प्रश्न गरी सन्तुष्ट बनाएपछि तिनका पछि लागेर आएका नागरिकहरूलाई पनि ताम्बूल वस्त्रको उपहार दिएर ती राजा चन्द्राङ्गद रानी इन्दुमती आई बसेको शिविरतर्फ लागे ।।१५।। त्यहाँ गई रानीसँग भेट गर्नुभन्दा पहिले बाह्र वर्षमा भेट हुँदा लाग्ने दोष मेटाउन राजाले ब्राह्मणहरूबाट स्वस्ति-शान्तिको विधि सम्पन्न गराए ।।१६।। त्यसक्रममा श्रीगणेशार्चनपूर्वक पुण्याहवाचन गरी भगवान् शङ्करको पूजा गरे । पूजापछि ब्राह्मणहरूलाई दक्षिणा आदि प्रदान गरी सन्तुष्ट तुल्याएर बेल फोर्ने काम गरे । त्यसपछि ती राजा इन्दुमती बसेको ठाउँमा जान अगाडि बढे । त्यहाँ गएर उनले क्षीण चन्द्रमाझैं दुर्बल, तर सुन्दर अनुहार भएकी इन्दुमतीको दर्शन गरे ।।१७-१८।। त्यसपछि रानी इन्दुमतीले सौभाग्यवती नारीहरूद्वारा राजाको आरती गराई ती नारीहरूकै हातबाट लावा र पुष्पको वृष्टि गर्न लगाइन् । यति गरेपछि हर्षको आँसुले भरिएका आफ्ना आँखा पुछिन् । तदनन्तर चिरकालपछि भेट हुनाले आनन्दित राजा-रानी दुबै आपसमा कुरा गर्न लागे ।।१९-२०।। ती दुबैले क्रमशः चिन्तित मुद्रामा आ-आफ्ना वियोगजनित वेदना एकले अर्कालाई सुनाए । यसरी विलाप गरिरहँदा राजा र रानीलाई अभिन्न मित्र र बन्धुहरूले अनेक युक्ति र दृष्टान्तहरूद्वारा सान्त्वना प्रदान गरे ।।२१।। त्यसपछि सेवकहरूले राजालाई अगाडि लगाएर अनेक थरि अलङ्कार-सामग्रीद्वारा अलङ्कृत पताका र छाताले शोभायमान, पैदल सेनाद्वारा सुरक्षित, चारवटा घण्टाहरूद्वारा सुहाएको विशाल आकारको हात्तीमाथि राजालाई आरोहण गराई सवारी चलाए । सय जना दण्डधारी राजपुरुष र अनेक आग्नेयास्त्रधारी घोडसवार सैनिक राजाका अगाडि अगाडि सुरक्षार्थ खटिएका थिए । उनको दायाँ-बायाँ भागमा एक लाख हात्ती मन्द-मन्द हिँडिरहेका थिए। राजाका अगाडि नट-नर्तकी, वाद्यवादक

नटा नृत्याङ्गना वाद्यवादका वन्दिनः पुरः ।
ततः पश्चात् गजानीकाः पुरं विविशुरादरात् ।।२५।।

सैन्येन रजसा व्याप्ते दिननाथे हतप्रभे ।
अलङ्कृते पुरे तस्मिन्न प्राज्ञायत किञ्चन ।।२६।।

ततः परस्परं नत्वा जग्मुः स्वं स्वं निवेशनम् ।
मुख्या राजगृहं नीताः पुना राज्ञा प्रपूजिताः ।।२७।।

वस्त्रताम्बूलदानेन तेनाज्ञाता गृहं ययुः ।
राजाऽथ ब्राह्मणान् भोज्य बुभुजे ज्ञातिभिः सह ।।२८।।

ततो रात्रौ सुषुपतुः पर्यङ्के चारुनिर्मिते ।
परार्ध्यास्तरणोपेते परिच्छदुपधान्विते ।।२९।।

ऊचतुः स्वस्वदुःखं तौ शोचन्तौ च पुनः पुनः ।
पुरोधसा सान्त्वितौ तौ शयाते स्म सुखं ततः ।।३०।।

श्रुत्वा विनायकव्रतमहिमानं नृपोत्तमः ।
पत्न्याऽनुभूतं सकलं स्वयं कर्तुं मनो दधे ।।३१।।

आगते श्रावणे मासि राजा चन्द्राङ्गदस्तदा ।
महोत्सवेन कृतवान् व्रतमेतच्छुभानने ।।३२।।

ऋषिरुवाच

एवं पितृवचः श्रुत्वा पार्वती भृशहर्षिता ।
नभोमासं समासाद्य चकार व्रतमादरात् ।।३३।।

यथोक्तविधिना मूर्तिं कृत्वा पूजाञ्च यत्नतः ।
भक्षयन्ती पयोमात्रं ध्यायन्ती द्विरदाननम् ।।३४।।

ततश्चञ्चलतां यातं शङ्करस्यापि मानसम् ।
आससादाश्रमं तस्याः पार्वत्याः शूलभृत् स्वयम् ।।३५।।

गणेशस्य चतुर्थ्यां तु सम्पूर्णे तद्व्रते शुभे ।
पश्यति स्म हरं देवी वृषारूढं निजाश्रमे ।।३६।।

र स्तुतिपाठकहरू पनि आफ्नो सीप देखाउँदै र रमाउँदै अगाडि बढेका थिए। राजाको पछाडि हात्तीमा सवार वीरहरू नगरतर्फ जान अगाडि बढ्दै थिए। सेनाले उडाएको धूलोले ढाकिएका सूर्य कान्तिहीन भएपछि ध्वजा–पताकाद्वारा अलङ्कृत त्यस नगरमा केही पनि देख्न सकिने परिस्थिति थिएन ।।२२–२६।। नगरमा पुगेपछि धेरै जसो नागरिक र बन्धुजन परस्पर अभिवादन गरी आ–आफ्ना घरतर्फ गए। मुख्य–मुख्य मानिसहरूलाई राजाले राजभवन पुर्‍याएर सम्मानित गरे ।।२७।। राजभवन पुगेपछि राजाले स्वागतमा आएका स्वजनहरूको सत्कार गरी वस्त्र एवं ताम्बूल प्रदान गरी बिदाइ गरे। ती सबै बन्धुहरू पनि आ–आफ्ना घरतर्फ गए। चन्द्राङ्गद राजाले यसरी बन्धुहरूको बिदाइपछि ब्राह्मणभोजन गराए। ब्राह्मणहरू सन्तुष्ट भएपछि पारिवारिक जनहरूका साथ भोजन सम्पन्न गरे।।२८।। रातमा ती दुबै राजा रानीले बहुमूल्य बिछ्यौना, तन्ना र तकियाले सुहाएको सुन्दर पलङ्गमा बसी आ–आफ्ना दुःख सुनाई चिन्ता र शोक प्रकट गरे। त्यस बेला कुलपुरोहितले आएर राजा-रानीलाई मीठा वचनले सान्त्वना प्रदान गरेका थिए। सान्त्वना प्राप्त गरेपछिमात्र राजा र रानीलाई निद्रा लाग्यो र सुखपूर्वक शयन गरे ।।२९–३०।। राजा चन्द्राङ्गदले रानीद्वारा प्रत्यक्ष अनुभव गरिएको श्रीगणेशव्रतको महिमा सुनेर आफूले पनि श्रीगणेशको व्रत गर्ने अठोट गरे।।३१।। हिमालयले भने- हे पार्वती ! श्रावणमास आएपछि राजा चन्द्राङ्गदले ठूलो उत्सवका साथ श्रीगणेशको व्रत आरम्भ गरे ।।३२।।

ऋषिले भने - यसरी आफ्ना पिता हिमालयका वचन सुनेर पार्वती अत्यन्त हर्षित हुनुभयो। श्रावणमास लागेपछि पहिले बताएको विधिअनुसार उहाँले प्रयत्नपूर्वक श्रीगणेश भगवान्‌को पार्थिव प्रतिमा तयार गरी दूधमात्र पिएर भगवान् श्रीगणेशको ध्यान गर्दै श्रद्धापूर्वक श्रीगणेशव्रतको शुभारम्भ गर्नुभयो।।३३–३४।। पार्वतीले व्रत आरम्भ गर्नासाथ भगवान् शङ्करको मन पनि चञ्चल हुन थाल्यो र उहाँ पार्वती विराजमान हुनुभएको आश्रममा आफै आउनुभयो। भाद्रशुक्ल चतुर्थी तिथिमा व्रत पूरा भएपछि पार्वतीले साँढेमा सवार हुनुभएका भगवान् शङ्करको आफ्नै आश्रममा दर्शन पाउनुभयो ।।३५–३६।।

उत्थाय प्रणनामास्य पादाम्बुजयुगं मुदा ।
पूजयामास विधिवच्छङ्करं लोकशङ्करम् ।।३७।।
उवाच च महादेवं पार्वती प्रेमविह्वला ।

देव्युवाच

कथं मां त्यज्य गतवान् किं मां विस्मृतवानसि ।।३८।।
त्वद्वियोगान्निमेषोऽपि कल्पकल्पोऽभवद् विभो !।
गणेशस्य व्रतमिदं पित्राऽऽदिष्टं कृतं मया ।।३९।।
वरदस्य प्रसादेन सम्प्राप्तं दर्शनं तव ।।४०।।

ब्रह्मोवाच

एतस्मिन्नेव काले तु हिमवानुपजग्मिवान् ।
सत्या: करं करे तस्य न्यवेदयत सादरम् ।।४१।।
ततो देवा: सगन्धर्वा द्विरदाननमादरात् ।
पूजयामासुरथ तौ शिवौ शिवकरौ सताम् ।।४२।।
देवदुन्दुभयो नेदु: पुष्पवृष्टि: पपात ह ।
सर्वे गजाननं नत्वा स्तुत्वा च विविधै: स्तवै: ।।४३।।
जयशब्दै: शङ्करोऽपि तुष्टाव द्विरदाननम् ।
अर्धाङ्गे पार्वतीं कृत्वा वृषमारुह्य सत्वर: ।।४४।।
ययौ कैलासशिखरं सर्वे स्वं स्वं पदं ययु: ।।४५।।

ब्रह्मोवाच

इति ते कथितं सर्वं व्यास! पृष्टं त्वया तु यत् ।
माहात्म्यं गणनाथस्य व्रतस्य च महामुने ।।४६।।
इदानीं पुनरन्यञ्च कथयामि कथानकम् ।
यच्छ्रुत्वा सर्वपापेभ्यो मुक्त: कामाँल्लभेन्नर: ।।४७।।

त्यसपछि उभिएर उहाँले शिवजीका चरणकमलमा आनन्दपूर्वक प्रणाम गर्नुभयो र कल्याणकारी भगवान् शङ्करको विधिवत् पूजा पनि गर्नुभयो ।।३७।। प्रेमविह्वल भएर आफ्ना प्राणनाथसँग मनका कुरा पनि निवेदन गर्नुभयो ।

**पार्वतीले भन्नुभयो** - हे प्रभु ! मलाई एक्ली छाडेर हजुर कहाँ जानुभएको थियो ? के हजुरले मलाई बिर्सिसक्नुभएको थियो ? मेरा निमित्त हजुरको वियोगमा एक पल पनि कल्पसमान भयो ।।३८-३९।। मेरा पिता हिमालयबाट उपदेश पाएपछि मैले भगवान् श्रीगणेशको व्रत सम्पन्न गरें । वरद श्रीगणेशप्रभुको कृपाबाट आज यसरी हजुरको दर्शन गर्ने सौभाग्य पाएकी छु।।४०।।

**ब्रह्माजीले भन्नुभयो**- यसै बेला हिमालय पर्वत पनि त्यहाँ आइपुगेर उनले श्रद्धापूर्वक पार्वतीको हात शङ्करको हातमाथि राखिदिए ।।४१।। त्यसपछि गन्धर्वसहित सबै देवता र संसारका कल्याणकारी देवता देवाधिदेव शङ्कर एवं पार्वतीले पनि आदरपूर्वक श्रीगणेश भगवान्‌को पूजा गर्नुभयो।।४२।। त्यस बेला स्वर्गमा देवताका दमाहा बज्न थाले, पुष्पवर्षा भयो र सबैले भगवान् श्रीगणेशलाई प्रणाम गरी स्तुतिद्वारा जय जयकार गरे। भगवान् शङ्करले पनि जयकारपूर्वक श्रीगणेशको स्तुति गर्नुभयो। स्तुतिपछि भगवान् शङ्कर आफ्नो बायाँ अङ्गमा पार्वतीलाई राखी साँढेमा सवार भएर तीव्रगतिमा कैलासतर्फ जानुभयो । अरू देवताहरू पनि आ-आफ्नो धामतर्फ गए।।४३-४५।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! तिमीले प्रश्न गरेअनुसार मैले सबै विषयको उत्तर दिएँ । श्रीगणेशको महिमा र श्रीगणेशव्रतको महिमा पनि बताएँ । अब म आगामी अध्यायमा अर्को कथा बताउनेछु । जुन कथाको श्रवण गर्नाले मानिसले सबै पापबाट मुक्त भई अभीष्टसिद्धि प्राप्त गर्दछ ।।४६-४७।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे शिवपार्वतीसंयोगो नाम पञ्चपञ्चाशत्तमोऽध्याय:**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'पार्थिवपूजाको प्रभावबाट पार्वती र शिवको मिलन ' शीर्षकान्वित पचपन्नौं अध्याय पूर्ण भयो ।।५५।।

ॐ

# षट्पञ्चाशत्तमोऽध्यायः    { ५६ अध्याय }

भृगुरुवाच

एवं ते कथितं राजन् ! माहात्म्यं सकलं मया ।
पुनश्च शृणु व्यासेन यच्छ्रुतं ब्रह्मणो मुखात् ।।१।।

सोमकान्त उवाच

कथं श्रुतं ब्रह्ममुखाद् व्यासेनामितबुद्धिना ।
न तृप्तिमधिगच्छामि तन्मे वद महामुने ।।२।।

भृगुरुवाच

एवं श्रुत्वा कथां व्यासोऽपृच्छद् ब्रह्माणमादरात् ।
स चापि कथयामास सादरं पृच्छतेऽनघ ।।३।।

व्यास उवाच

पुनः कथय मे ब्रह्मन् ! गणनाथकथां पराम् ।
तृष्णा मे वर्धते भूयः श्रोतुं विघ्नेशसत्कथाम् ।।४।।

ब्रह्मोवाच

अपरां शृणु मे व्यास! कथां कौतुकसंयुताम् ।
शूरसेनप्रभृतिभिरनुभूतां गजाननीम् ।।५।।

मध्यदेशेऽभवद्राजा शूरसेनो महाबली ।
सहस्राख्यपुरे रम्ये वेदवेदाङ्गपारगः ।।६।।

धनवान् रूपवान् दाता होता पाता जनस्य ह।
शक्तित्रययुतो मानी षाड्गुण्यपरिनिष्ठितः ।।७।।

उपायानां चतुर्णाञ्च चालने चतुरोऽरिहा ।
चतुर्विधबलोपेतो द्विजदेवेषु भक्तिमान् ।।८।।

पृथिवीमण्डलं यस्य वशवर्त्यभवत् सदा ।
नगरं शक्रनगराद् विशिष्टं भाति भूतले ।।९।।

यस्य पत्नी पुण्यशीला नाम्नाऽभूत् पुण्यशालिनी ।
यस्या रूपेण सदृशी नासीत् त्रैलोक्यमण्डले ।।१०।।

पातिव्रत्यगुणैर्यस्या लज्जां प्राप्ताऽप्यरुन्धती ।
असूयात्यागयोगेनाप्यनसूयाऽभवल्लघुः ।।११।।

**भृगुले भन्नुभयो -** हे नरेश! मैले तपाइँलाई श्रीगणेशव्रतको सम्पूर्ण महिमा बताएँ । फेरि व्यासले ब्रह्माजीको मुखबाट जुन कथा सुन्नुभएको थियो त्यो कथा म तपाइँलाई सुनाउँछु ।।१।।

**सोमकान्तले भने -** हे महामुनि ! अपरिमित मेधा भएका वेदव्यासले ब्रह्माजीबाट कुन कुरा कसरी सुन्नुभयो ? मलाई बताउनुहोस् । किनभने भगवान् श्रीगणेशसँग सम्बद्ध कथा सुनेर म कहिले पनि तृप्त हुँदिनँ ।।२।।

**भृगुले भन्नुभयो -** हे निष्पाप राजा ! यसरी ब्रह्माजीबाट कथा सुनेपछि व्यासले पनि अरू कथा सुन्ने रहर गरी त्यसबारे प्रश्न गर्नुभयो । ब्रह्माजीले पनि आदरपूर्वक जिज्ञासा गर्ने व्यासलाई अरू कथा सुनाउनुभयो ।।३।।

**व्यासले भन्नुभयो -** हे पितामह! फेरि पनि मलाई श्रीगणेशका उत्तम कथा सुनाउनुहोस् । मेरो मनमा विघ्ननाथ श्रीगणेशका कथा सुन्ने तृष्णा बढिरहेको छ ।।४।।

**ब्रह्माजीले भन्नुभयो-** हे व्यासजी ! मबाट श्रीगणेशको कौतूहलपूर्ण दोस्रो कथा सुन्नुहोस् । जुन लीलाकथालाई राजा शूरसेन आदिले अनुभव गरेका थिए ।।५।। मध्यदेशको रमणीय सहस्रपुरमा महाबलवान् र वेद-वदाङ्गमा पारङ्गत राजा शूरसेन भए ।।६।। ती राजा धनी, सुन्दर, दाता, यज्ञकर्ता, लोकपालक, प्रभुशक्ति; मन्त्रशक्ति र उत्साहशक्ति गरी तीन प्रकारका शक्तिले सम्पन्न, स्वाभिमानी, सन्धि; विग्रह; यान; आसन; द्वैधीभाव र संश्रयजस्ता षट्गुणको प्रयोगमा निपुण, धर्म; अर्थ; काम; र मोक्षजस्ता चार प्रकारका उपायहरूको सञ्चालनमा कुशल, पद; अश्व; गज र रथजस्ता चार प्रकारका सैन्यबलले सम्पन्न र ब्राह्मण एवं देवताका भक्त पनि थिए ।।७-८।। तिनले शासनकालमा सम्पूर्ण भूमण्डललाई वशवर्ती बनाएका थिए। शूरसेनको राजधानी सहस्रनगर सौन्दर्य, वैभव र सुशासनका दृष्टिबाट अमरावतीभन्दा पनि प्रख्यात थियो ।।९।। तिनकी पत्नीको नाम पुण्यशालिनी थियो र ती नामअनुसार पुण्यशील थिइन्। त्यस बेला तिनका सुन्दर रूपको समानता गर्ने कुनै पनि नारी स्वर्ग, मर्त्य र पातालमा पनि थिएनन् ।।१०।। पुण्यशालिनीको पतिव्रताधर्मका सामु विशिष्ट पतिव्रता भनेर कहलिएकी अरुन्धतीले पनि लाज मान्दथिन् । पुण्यशालिनीको ईर्ष्या, द्वेष, अमर्षरहित

स कदाचिन्नृपोऽमात्यैः संवृतो वीरसत्तमैः ।
उपविष्टो नृपसभां ददृशे गगनेचरम् ।।१२।।

विमानं वह्निसदृशं नेत्रतेजोहरं परम् ।
गानश्रवणसक्तास्ते राज्ञा सह सभासदः ।।१३।।

विह्वलास्ते किं किमिति ज्ञातुं दूतानचोदयन् ।
ते दूताः प्रागमन् द्रष्टुं विमानं सूर्यसन्निभम् ।।१४।।

कस्यचिद् वैश्यपुत्रस्य राजदूतस्य कुष्ठिनः ।
पतितं दृष्टिपातेन तद् विमानं महीतले ।।१५।।

ततो दूताः समागम्य शशंसुर्नृपतिं तदा ।
तद् विमानं महाराज! पुण्यकृद्देवसंयुतम् ।।१६।।

देदीप्यमानं पतितं दुष्टदृष्ट्या महीतले ।
ततोऽतिहर्षितो राजा प्रकृतिद्वयसंयुतः ।।१७।।

अश्वारूढो ययौ तत्र विमानं द्रष्टुमुत्सुकः ।
मन्यमानो महाभाग्यं स्वजनैः परिवारितः ।।१८।।

अनेकवाद्यनिर्घोषैर्विमानस्यान्तिकं ययुः ।
ददृशुस्तत्र शक्रं ते नेमुरुत्तीर्य यानतः ।।१९।।

नानालङ्कारसंयुक्तं सर्वदेवगणैर्युतम् ।
बद्धाञ्जलिपुटो राजा प्रोवाच बलसूदनम् ।।२०।।

धन्येयमद्य धरणी धन्यं जन्म च सम्पदः ।
पूर्वजाः सर्वचक्षूंषि धन्यान्यद्य शचीपते ।।२१।।

यद्दर्शनं मृत्युलोके भवतां सानुगस्य मे ।
यस्य ते वशगा लोका ब्रह्मेशानादयः सुराः ।।२२।।

शताश्वमेधतो दृश्यो नान्यथा जायते क्वचित् ।
न जाने केन पुण्येन सोऽद्य दृष्टोऽखिलैर्जनैः ।।२३।।

इदञ्च ते विमानं यत् कथं निपतितं भुवि ।
एतन्मे संशयं देव! छेत्तुमर्हसि साम्प्रतम् ।।२४।।

स्वभावका सामु अनसूया पनि हलुका देखिन्थिन् ।।११।। कुनै दिन राजा शूरसेनले आफ्ना वीर सैनिक एवं अमात्यहरूका साथ राजसभामा बसेका बेला आकाशचारी, अग्निझैं तेजस्वी र आँखाको तेजलाई चकमन्न बनाउने विमान देखे ।।१२।। त्यो विमान देखेपछि गीत सुन्न व्यस्त भएका राजा र राजसभाका सदस्यहरू व्याकुल भए । के आयो? कताबाट आयो? भनेर विस्मित र व्याकुल भएता पनि तिनले ठम्याउन सकेनन् र दूतहरूलाई बुझ्न पठाए। ती दूतहरू सूर्यसमान तेजस्वी विमानको रहस्य बुझ्न गए।।१३-१४।। दूतहरू त्यहाँ पुगेकै समयमा वैश्यपुत्र राजदूत तर कुष्ठरोगी कुनै मानिसको दृष्टि पर्दा त्यो विमान भुईंमा खस्यो ।।१५।। त्यसपछि दूतहरूले फर्केर आई राजालाई निवेदन गरे - हे महाराज ! त्यो विमान पुण्यवान् देवताहरूलाई वहन गर्ने कुनै यान हो । तर पतित एवं पापी मानिसको दृष्टि पर्नाले भुईंमा खस्न विवश भयो । यो कुरा सुनेर अत्यन्त हर्षित भएका राजाले दुई जना अमात्य साथमा लिएर घोडामा सवार भई भुइँमा खसेको विमान हेर्ने उत्कण्ठाले प्रस्थान गरे ।।१६-१८।। तिनले विमानदर्शनलाई भाग्यदत्त ठूलो अवसर मानेका थिए । आफ्ना बन्धुहरूका साथ मङ्गलघोष गर्दै ती राजा विमानको अत्यन्त समीपमा पुगे । राजाले आफ्नो सवारीबाट ओर्लेपछि अनेक अलङ्कारद्वारा अलङ्कृत र सबै देवताका बीचमा शोभायमान स्वर्गका राजा इन्द्रलाई देखेर प्रणाम गरे ।।१९।। राजा शूरसेनले दुवै हात जोडेर इन्द्रलाई भने - हे शचीपति ! आज यो पृथिवी धन्य भएको छ । मेरो जन्म सफल भएको छ। मेरो सम्पत्ति सार्थक भएको छ । हाम्रा पूर्वजहरू कृतकृत्य भएका छन् र पृथिवी निवासी सबै नरनारीहरूका आँखाहरू पनि सफल भएका छन् । किनकि म र मेरा अनुयायी सबैले देवतासहित हजुरको मृत्युलोकमा दर्शन पाएका छौं । हे इन्द्र महाराज ! सम्पूर्ण लोकहरू हजुरका अधीनमा छन् र ब्रह्मा-शिव आदि देवता पनि हजुरकै अधीनमा हुनुहुन्छ ।।२०-२२।। संसारमा सय अश्वमेध सम्पन्न गरी स्वर्गराजको पदमा बहाली गर्ने पुण्यवान् पुरुष इन्द्रमहाराजभन्दा दर्शनयोग्य अरू कुन व्यक्ति हुनसक्छ? आज हाम्रा कुन पुण्यले श्रीइन्द्र देवता र सबै जनताका दृष्टिपथमा पर्नुभयो ? यो विमान भुईंमा किन खस्यो ? यस विषयमा मलाई ठुलो संशय भइरहेको छ । हे इन्द्रमहाराज ! हाम्रो शङ्कानिवारण गर्नुहोस् ।।२३-२४।। फेरि हजुर कहाँ जानुभएको थियो र कहाँबाट फर्कदै हुनुहुन्थ्यो ? कहाँ जान

यातवान् कुत्र च भवान् गन्ता वा शंस मे प्रभो ।

शक्र उवाच

राजन् शृणु महाश्चर्यं कथितं नारदेन मे ।।२५।।
तदहं कथयिष्ये त्वां शृणुष्वैकमना नृप ।

नारद उवाच

मृत्युलोकं गतः शक्र ! भ्रुशुण्डेराश्रमं प्रति ।
गणेशस्य स्वरूपेण तिष्ठतो जपतोऽनिशम् ।।२६।।
तद्ध्यानात्तत्स्वरूपस्य दृष्टं कौतुकमद्भुतम् ।
पूजितस्तेन मुनिना गजाननस्वरूपिणा ।।२७।।
नत्वा तं मुनिमापृच्छ्य दर्शनार्थं तवागतः ।
भूमौ सरूपता नैव दृष्टाऽन्यत्र शतक्रतो ।।२८।।

शक्र उवाच

अहञ्च नारदं पूज्य विसृज्य च क्षणेन तम् ।
अत्युत्सुकतया यातो मुनिं द्रष्टुं तथाविधम् ।।२९।।
विमानवरमास्थाय मनोमारुतवेगवत् ।
मुनिं दृष्ट्वा च सम्पूज्य द्विरदाननरूपिणम् ।।३०।।
भ्रुशुण्डिं प्रणिपत्याऽथ तस्य पूजां प्रगृह्य च ।
चलितः सपरीवारो गन्तुकामोऽमरावतीम् ।।३१।।
यावत् ते नगराभ्याशे विमानमिदमागतम् ।
तावद् दूतस्य ते दृष्ट्या कुष्ठिनः पापकारिणः ।।३२।।
पतितं भूमिभागेऽस्मिन् सर्वं ते कथितं नृप ।

शूरसेन उवाच

तपसा केन वा शक्र ! गजाननस्वरूपता ।।३३।।
प्राप्ता भ्रुशुण्डिना तेन तद् वदस्व मम प्रभो ।
न हि मे तृप्तिरस्तीह शृण्वतस्तत्कथामृतम् ।।३४।।

चाहनुहुन्थ्यो ? यस विषयमा पनि हामीलाई जानकारी गराउनुहोस्।

**इन्द्रले भने -** हे राजा शूरसेन ! मलाई नारद ऋषिले एउटा महान् आश्चर्यदायक विषयमा बताउनुभएको थियो। त्यो आश्चर्य तपाईंले पनि सुन्नुहोस् । म बताउँछु ।

**नारदजीले भन्नुभयो-** हे इन्द्र ! म मृत्युलोकमा आउँदा एक दिन भ्रुशुण्डीको आश्रममा पुगेको थिएँ । ती भ्रुशुण्डी श्रीगणेशकै स्वरूप लिएर बसेका थिए । श्रीगणेशको स्वरूपमै रहेर तिनले श्रीगणेशको मन्त्र जपिरहेका थिए ।।२५-२६।। श्रीगणेशको निरन्तर ध्यानका कारण तिनको शरीर पनि श्रीगणेशजस्तै बनेको देखेर मलाई कौतूहल भयो । श्रीगणेशको स्वरूप धारण गर्ने ती भ्रुशुण्डी ऋषिले मेरो स्वागत-सत्कार र पूजा गरे । म तिनलाई नमस्कार गरी बिदा भई तपाईंका सामु आएको छु । हे इन्द्र ! पृथिवीमा मैले कहीं पनि भक्त र भगवान्को एउटै रूप अथवा सारूप्य देख्न पाएको छैन ।।२७-२८।।

**इन्द्रले भने -** हे राजा शूरसेन ! नारदजीबाट यो कुरा सुनी तत्कालै उहाँलाई बिदाई गरेर अत्यन्त उत्सुकतापूर्वक श्रीगणेशका रूपमा रहेका भ्रुशुण्डी मुनिको दर्शन गर्न हावा र मनभन्दा पनि तीव्र गति भएको उत्तम विमानमा सवार भई भ्रुशुण्डीको आश्रममा गएँ । श्रीगणेशको रूपमा रहनुभएका भ्रुशुण्डीको दर्शन पाएँ । प्रणाम गरें । उहाँबाट सत्कार प्राप्त गरी आफ्ना पारिवारिक जनहरूका साथ अमरावती फर्कन उडिरहेको थिएँ ।।२९-३१।। जब मेरो विमान तपाईंका शहरको समीपमा आइपुग्यो, त्यस बेला तपाईंको सेवामा तत्पर, पापी र कुष्ठी कुनै दूतको दृष्टि मेरो विमानमा पर्‍यो । तत्कालै यो विमान यहाँ खस्यो । भएको घटना तपाईंलाई बताएँ ।

**शूरसेनले भने -** हे देवराज! कुन तपस्या गर्नाले ती भ्रुशुण्डी ऋषिले श्रीगणेशको स्वरूप प्राप्त गरे ? यो रहस्य मलाई बताउनुहोस् । यो कथामृत सुनेर मलाई तृप्ति भएको छैन । अरू सुन्न चाहन्छु ।।३२-३४।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे इन्द्रविमानपतनं नाम षट्पञ्चाशत्तमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'इन्द्रविमान पतन एवं भ्रुशुण्डीको कथाप्रसङ्ग' शीर्षकान्वित छपन्नौं अध्याय पूर्ण भयो ।।५६।।

ॐ

# सप्तपञ्चाशत्तमोऽध्यायः { ५७ अध्याय }

शक्र उवाच

हन्त ते कथयिष्यामि कथामेकां पुरातनीम् ।
यथा तेनाऽपि सादृश्यं गणनाथस्य भक्तितः ।।१।।

दण्डकारण्यदेशेषु नगरे नन्दुराभिधे ।
एकः कैवर्तको दुष्टो नाम्ना नामैव विश्रुतः ।।२।।

आबाल्याच्चौर्यनिरतो यौवने जारकर्मकृत् ।
प्रत्यक्षं दृष्टिविगमाद्धरते च शपत्यपि ।।३।।

शपथान् कुरुते मिथ्या परहृद्भेदकारकान् ।
ततो निःसारितो ग्रामाद् द्यूतमद्यरतो यतः ।।४।।

लोकैर्बहिर्दूरतरं गिरिकन्दरकानने ।
स्थितः कान्तायुतो मार्गे जघान पथिकान् बहून् ।।५।।

एवं बहुधनो जातो नानालङ्करणैः स्त्रियम् ।
भूषयामास ससुतां तोषयामास मायया ।।६।।

शस्त्रं खड्गञ्च खेटञ्च पाशान्धनुरनुत्तमम् ।
दण्डं चोभयतो लोहं वहन् पूर्णे महेषुधी ।
वृक्षाग्रे कोटरे वापि स्थितो मारयते बहून् ।।७।।

नानाविधानि वस्तूनि वासांस्याभरणानि च ।
गृहे सञ्चयते नीत्वा विक्रीणाति पुरान्तरे ।।८।।

यथेष्टं भजते नित्यं विषयान् मन्दिरे निजे ।
एवं पापसमाचारो हन्त्यरण्ये पशूनपि ।।९।।

इन्द्रले भने - हे शूरसेन ! म तपाईँलाई एउटा पुरानो कथा सुनाउँछु । यस कथाको श्रवणबाट भ्रुशुण्डीले कसरी श्रीगणेशको भक्ति गरे र श्रीगणेशसमान स्वरूप प्राप्त गरे भन्ने कुरा खुलस्त हुनेछ ।।१।। दण्डकारण्य देशको नन्दुर नगरमा एउटा दुष्टनामक नामअनुसार दुष्ट स्वभाव भएको बोटे (माझी) थियो ।।२।। बालककालदेखि नै चोरी कर्ममा अभ्यस्त र जवान भएपछि जारको काम गर्ने त्यो माझीले मानिसकै आँखासामु चोर्न सक्थ्यो । केही शङ्का गरी सोधपूछ गर्दा सोध्ने मानिसलाई उल्टै नानाथरिका आरोप लगाएर सराप पनि दिन्थ्यो ।।३।। फेरि कतिबेला चोरीको अभियोगमा समातिँदा अरू मानिसहरूको मुटु नै छेड्ने गरी अनेक थरि झुटा किरिया खान्थ्यो । जूवा र रक्सीमा ज्यादै आसक्त भएका कारण गाउँलेहरूले त्यसलाई एक दिन गाउँबाट निकाला गरे। त्यसपछि त्यो टाढा पर्वत - कन्दराको समीपमा रहेको जङ्गलमा सपत्नीक बस्न थाल्यो । त्यसले त्यहाँ गएर पनि बाटामा हिंड्ने अनेक बटुवाहरूको हत्या गर्‍यो)।।४-५।।
155 (यस्ता कुकर्मबाट धेरै धनार्जन गरेपछि त्यसले छोरीसमेत आफ्नी पत्नीलाई अनेक थरि अलङ्कारद्वारा अलङ्कृत गरायो र आफ्नो चोरीकर्मजस्तो इन्द्रजालबाट सन्तुष्ट पनि तुल्यायो।।६।। शस्त्र, तलवार, ढाल, पाश, धनु, दुबैतिर फलाम गाँसिएको लौरो र बाणले भरिएको ठोक्रो धारण गर्ने, रूखका अगाडि अथवा रूखका ठूला ठूला टोड्का (प्वाल)हरूमा लुकेर बस्ने त्यस माझीले अनेक मानिस र प्राणीहरूको हत्या गर्‍यो ।।७।। यसरी चोरीकर्मबाट त्यसले अनेक पदार्थ, वस्त्र र आभूषण जम्मा गरी सञ्चय गरिरहेको थियो। चोरेर ल्याएका पदार्थहरूमध्ये केही पदार्थलाई बजारमा पुर्‍याएर बेच्ने काम पनि गर्दथ्यो ।।८।। त्यसले दिनदिनै आफ्नो आवासमा रहेर यथेष्ट विषयभोग गरिरहेको थियो । पापमय चरित्रले दूषित त्यस दुष्टले जङ्गली जनावरहरूको निरवच्छिन्न हत्या गरिरहेको थियो ।।९।। एक दिनको कुरा हो, त्यो माझी कुनै मानिसलाई

एकदा कस्यचित् पृष्ठे धावितो योजनावधि ।
स तु तस्माद् गतो दूरं स्खलित्वा पतितो भुवि ।।१०।।
तत उत्थाय कष्टेन शनैः शनैर्ययौ खलः ।
अपश्यत् पथि गच्छन् स तीर्थं गाणेश्वरं शुभम् ।।११।।
अकरोन्मज्जनं तत्र श्रममेव व्यपोहितुम् ।
ततो गच्छन् स्वविषयं ददर्श पथि मुद्गलम् ।।१२।।
जपन्तं गणनाथस्य मन्त्रं नामसमन्वितम् ।
खड्गमुद्यम्य निष्कोशं मुद्गलस्यान्तिकं ययौ ।।१३।।
कैवर्तको नाम नामा हन्तुं कृतमतिस्तदा ।
जगलुस्तस्य शस्त्राणि खड्गोऽपि दृढमुष्टितः ।।१४।।
अन्यथा चाभवद् बुद्धिस्तस्य दुष्टस्य तत्क्षणात् ।
द्विरदाननभक्तस्य मुद्गलस्य प्रभावतः ।।१५।।
जहास मुनिमुख्योऽसौ दृष्ट्वा तं तु तथाविधम् ।
पप्रच्छ संयतः कस्माच्छस्त्राणि गलितानि ते ।।१६।।
बद्धान्यपि च सर्वाणि पतितानि कुतो वद ।

इन्द्र उवाच

गणेशतीर्थस्नानेन मुनेरालोकनेन च ।
ज्ञानवैराग्ययुक्तोऽसावब्रवीन् मुद्गलं वचः ।।१७।।

कैवर्तक उवाच

आश्चर्यं परमं मन्ये कुण्डस्नानेन मे मतिः ।
विपरीताऽभवद् ब्रह्मन् ! विशेषाद् दर्शनेन ते ।।१८।।
बाल्यात् प्रभृति मे दुष्टा बुद्धिः पापरताऽभवत् ।
असङ्ख्यातानि पापानि कृतान्यद्यावधि प्रभो ।।१९।।
इदानीमेव निर्विण्णा मतिर्मे त्वत्प्रसादतः ।
नादास्ये पुनरेतानि शस्त्राणि पतितानि मे ।।२०।।
कुरु मेऽनुग्रहं पूर्णमुद्धरस्व भवार्णवात् ।
साधवो ह्यनुगृह्णन्ति दीनान् दुष्कृतिनोऽपि च ।।२१।।
न साधुसङ्गमः क्वापि वृथा दृष्टो महामुने ! ।
यथा शेवधिसम्पर्को न धातुषु वृथा भवेत् ।।२२।।

बाटोमा हिंडेको देखेर लुट्ने र मार्ने नियतले तिनका पछि लाग्यो । चार कोश बाटोसम्म पछि लागे पनि त्यस दुष्टले ती मानिसलाई भेट्न सकेन। तर आफू भने खुट्टा चिप्लिएर भुईंमा पछारियो ।।१०।। त्यसपछि त्यो त्यहाँबाट सुस्तरी उठेर दुःखले हिंड्यो । बाटोमा अगाडि बढ्दा त्यसले श्रीगणेशको मङ्गलमय तीर्थको दर्शन पायो ।।११।। आफ्नो थकाइ मेटाउन त्यसले श्रीगणेशतीर्थमा स्नान गऱ्यो । स्नानपछि घर फर्किंदा त्यसले बाटोमा महर्षि मुद्गलको दर्शन पायो।।१२।। मुद्गल मुनि भगवान् श्रीगणेशको नाम मन्त्र जपिरहेका थिए । तिनलाई देखेर त्यो माझी म्यानबाट तलवार झिकी तिनका सामु पुग्यो।।१३।। त्यस माझीले भन्यो- मेरो नाम कैवर्तक हो। म तपाईंलाई मार्ने नियतले आएको छु । त्यसले त्यति भन्नासाथ त्यसका साथमा रहेका शस्त्र-अस्त्रहरू एकाएक भुईंमा खस्न थाले । मुठ्ठीमा कसेर राखिएको तलवार पनि भुईंमा खस्यो।।१४।। श्रीगणेशभक्त मुद्गल ऋषिको दर्शनका प्रभावले तत्काल त्यस दुष्टको बुद्धि बदलियो ।।१५।। त्यस दुष्ट कैवर्तकलाई त्यस रूपमा देखेर मुनि मुद्गल हाँस्नुभयो । केही बेरपछि संयत र सावधान भएर उहाँले भन्नुभयो- हे कैवर्तक ! तिमीले शरीरमा कसेर भिरेका शस्त्र किन खसे ? कारण बताऊ ।

इन्द्रले भने - श्रीगणेशतीर्थमा गरिएको स्नान र मुनि मुद्गलको दर्शनबाट ज्ञान र वैराग्यले सम्पन्न कैवर्तकले मुनिलाई भन्यो - म परम आश्चर्यमा परेको छु । वास्तवमा श्रीगणेशतीर्थमा स्नान गर्नाले र तपाईंको दर्शन गर्नाले मेरो बुद्धिमा परिवर्तन आएको छ ।।१६-१८।। बालककालदेखि नै मेरो दुष्ट बुद्धि थियो र पापकर्ममा निरत पनि । हे प्रभु! मैले अहिलेसम्म असङ्ख्य पाप गरेको छु।।१९।। अहिले तपाईंको कृपाबाट मेरो बुद्धिमा निर्वेद पैदा भएको छ। यी भुईंमा खसेका शस्त्रलाई अब म धारण गर्ने छैन ।।२०।। हे ऋषि ! ममाथि पूर्ण दया गर्नुहोस् । म संसारसागरमा फँसेको छु । मेरो उद्धार गर्नुहोस् । सज्जन मानिसले दीन, दुःखी, पापी र पतितमा पनि दया गर्दछन् ।।२१।। मैले संसारमा कहीं पनि सज्जनको सङ्गति खेर गएको कुरा देखेको छैन । रत्नसँग धातुको सम्पर्क व्यर्थ हुँदैन ।।२२।।

शक्र उवाच

एवमुक्तो मुद्गलोऽसौ तं जगाद कृपान्वितः ।
शरणागतसंत्यागे स्मरन् दोषं विशेषतः ।।२३।।

मुद्गल उवाच

विधिप्रयुक्ते दानादौ नाधिकारोऽस्ति कुत्रचित् ।
तथापि ते नामजपं कथयामि प्रसादतः ।।२४।।
गजाननस्य परमं सर्वसिद्धिकरं नृणाम् ।
ततः प्रमाणमकरोत् कैवर्तो मुद्गलं मुनिम् ।।२५।।
गणेशाय नम इति नाममन्त्रमुपादिशत् ।।२६।।
स्वयष्टिं रोपयामास पुरस्तस्य धरातले ।
उवाच चैनं सम्प्रीत्या यावदागमनं मम ।।२७।।
तावज्जपस्व नामेदं यावद् यष्टिश्च साङ्कुरा ।
एकासनगतो वायुभक्ष एकाग्रमानसः ।।२८।।
सायं प्रातर्जलं देहि यष्टिमूले निरन्तरम् ।।२९।।

शक्र उवाच

उपदिष्टो मुद्गलेन नाम्ना कैवर्तकस्तदा ।
निराशो जीविते तस्थौ तस्मिन्नन्तर्हिते मुनौ ।।३०।।
एकासनगतोऽरण्ये जजाप नाममन्त्रकम् ।
पुरोधाय मुनेर्यष्टिं वृक्षच्छायासमाश्रितः ।।३१।।
निराहारो निरीहश्च जितेन्द्रियगणो वशी ।
एवं सहस्रवर्षान्ते सा यष्टिः साङ्कुराऽभवत् ।।३२।।
ततः प्रतीक्षामकरोन्मुनेरागमनस्य सः ।
वल्मीकवेष्टिततनुर्लताजालसमन्वितः ।।३३।।
ततो मुनिर्मुद्गलोऽपि दैवात् तं देशमाययौ ।
संस्मार च तदा यष्टिं तञ्च कैवर्तकं यदा ।।३४।।
ददर्श भ्रममाणः स साङ्कुरां यष्टिमुत्तमाम् ।
वल्मीकाक्रान्तदेहञ्च तञ्च कैवर्तकं मुनिः ।।३५।।
दुश्चरं मुनिभिः सर्वैरास्थितं तप उत्तमम् ।
लक्षितं नेत्रमात्रेण यतता मुनिना तदा ।।३६।।
उत्साद्य तस्य देहस्थं वल्मीकं मुनिसत्तमः ।
मन्त्रितेन जलेनास्य सिषेचाङ्गञ्च सर्वशः ।।३७।।

**इन्द्रले भने -** यसरी कैवर्तकले आत्मोद्धारका लागि प्रार्थना गरेपछि शरणागतको उपेक्षा गर्दा दोष लाग्ने कुरा जानेर महर्षि मुद्गलले कृपालु हुँदै भने।।२३।।

**मुद्गलले भने-** हे कैवर्तक! विधिसम्मत दानादि कर्ममा तिम्रो अधिकार छैन, तापनि कृपा गरेर भगवान् श्रीगणेशको सर्वसिद्धिदायक नामजपबारे म तिमीलाई उपदेश गर्दछु । यो कुरा सुनेर कैवर्तकले मुद्गल ऋषिलाई प्रणाम गऱ्यो।।२४-२५।। मुद्गलले पनि त्यसको शिरमा आफ्नो वरद हात राखिदिए र **'गणेशाय नमः'** यो नाममन्त्रको उपदेश गरे। उपदेशपछि तिनले कैवर्तक बसेको जमीन अगाडि आफ्नो लौरो गाडिदिए र त्यसलाई भने - हे कैवर्तक ! म जबसम्म फर्केर आउँदिनँ र जबसम्म यस लौरामा आँकुरा लाग्दैनन् तबसम्म तिमीले उक्त नाममन्त्र जपिराख, हावा पान गर, चित्त एकाग्र बनाऊ र साँझ-बिहान यस लौराको फेदमा पानीले सिञ्चन गर।।२७-२९।।

**इन्द्रले भने -** मुद्गलद्वारा उपदेश प्राप्त गर्ने त्यो दुष्ट कैवर्तकले जीवनबाट निराश भएर वनमा एउटै आसनमा रही नाममन्त्र जप गर्न थाल्यो । मुनिले गाडेको लौरालाई सामुन्ने पारेर रूखको छायाँमा बसी सम्पूर्ण इच्छा सुकाएर निराहार भई त्यस कैवर्तकले इन्द्रियमाथि विजय गऱ्यो र कठिन तपस्यालाई निरन्तरता दियो। तपस्याका एक हजार वर्ष बितेपछि गाडिएको लौरामा आँकुरा उत्पन्न हुन थाले ।।३०-३२।। त्यसपछि पनि मुद्गल मुनि कहिले आउनुहुन्छ भनी उहाँको प्रतीक्षा गर्दै त्यो दुष्ट कठोर तपमा लागिरह्यो । त्यस बेला त्यो धमिराको माटोले पुरिएको थियो र त्यसका शरीरमा लहराहरू जेलिएका थिए ।।३३।। एक दिन दैवसंयोग मुद्गल ऋषि पनि त्यसै क्षेत्रमा आइपुगे र तिनले त्यो लौरो र कैवर्तकलाई याद गरे।।३४।। घुम्दै आउँदा तिनले अङ्कुरित भएको लौरो र धमिराको माटोले पुरिएको कैवर्तकलाई देखे।।३५।। तत्काल मुनिहरूद्वारा पनि गर्न नसकिने ठूलो तपस्या गरिरहेको तथ्य दृष्टिपात हुनासाथ थाहा पाए।।३६।। मुद्गलले त्यसको शरीर ढाक्ने धमिराको माटो हटाएर अभिमन्त्रित जलले सर्वाङ्गमा अभिषेक गरे । अभिषेक मात्र गरिँदा दिव्यशरीरले सम्पन्न दुई हातले युक्त भएता पनि नाकको फेदमा सूँढ निस्किनाले

तदैव दिव्यदेहं तं जगाद मुनिसत्तमः ।
प्राप्तवन्तं गणेशस्य सारूप्यं करयोगतः ।।३८।।

द्विकरं प्रजपन्तञ्च नाम वैनायकं शुभम् ।
उन्मीलिते तदा नेत्रे मुनिना बोधितस्तु सः ।।३९।।

तस्य नेत्रोद्भवो वह्निर्विद्युद्वद् गगनं गतः ।
त्रिलोकीमुद्यतो दग्धुं मुनिना वारितो ततः ।।४०।।

सोऽपि तं मुनिमानम्य स्वगुरुं करुणायुतम् ।
आलिलिङ्ग मुदा युक्तस्तनयः पितरं यथा ।।४१।।

उपदिष्टो मुद्गलेन नाम कैवर्तकस्तदा ।
वल्मीकात् पुनरुत्पन्नं मानयामास तं सुतम् ।।४२।।

चकार नाम कर्मास्य मुद्गलो मुनिरादरात् ।
भ्रूमध्यान्निर्गता शुण्डा भुशुण्डीति ततो नृप ।।४३।।

एकाक्षरञ्च मन्त्रञ्च तस्मै प्राहाथ मुद्गलः ।।४४।।

वरानस्मै ददौ पश्चाद् भव त्वं मुनिसत्तमः ।
इन्द्रादिदेवगन्धर्वैः सिद्धैरर्च्यतमो भव ।।४५।।

यथा गजाननो देवो ध्यातो दृष्टोऽघनाशनः ।
तथाहि त्वमपि मुने भुशुण्डी प्रथितो भव ।।४६।।

यस्य ते दर्शनं स्यात् स कृतकृत्यो भवेन्नरः ।
आयुश्च कल्पलक्षं ते भविता मम वाक्यतः ।।४७।।

एवं बहुविधान् तस्मै वरान् यच्छति मुद्गले ।
ययुरिन्द्रादयो द्रष्टुं मुनयो नारदादयः ।।४८।।

ऊचुस्तं प्रणिपत्यैव भुशुण्डे ! तव दर्शनात् ।
सार्थकं जन्म नो विद्या पितरौ च तपो यशः ।।४९।।

त्वमेव गणनाथोऽसि पूजनीयोऽसि नो मुने ।
स तु सम्पूज्य तान् सर्वान् प्रणम्य च विसृज्य च ।।५०।।

पुनः पद्मासनगतो जजापैकाक्षरं मनुम् ।
पुरो मूर्तिं प्रतिष्ठाप्य गणेशस्य मनोहराम् ।।५१।।

श्रीगणेशको आकारमा आकारित र नामजपमा लीन त्यस कैवर्तकलाई मुनिले जगाए। अभिषेकपछि कैवर्तकले आफ्ना दुबै आँखा खोल्यो । त्यसपछि मुनिले त्यसलाई उद्बोधन गरे।।३७-३९।। त्यस बेला त्यसका आँखाबाट प्रकट भएको आगो बिजुलीझैं आकाशमा फैलियो । त्यसले त्रिलोकीलाई नै डढाउन खोज्यो। त्यो देखेर मुद्गल ऋषिले पानीका छिटाले छेपेर त्यो अग्निलाई शान्त गराए।।४०।। कैवर्तकले पनि आफ्ना गुरु दयालु मुनि मुद्गललाई प्रणाम गरी छोराले बाबुलाई आलिङ्गन गरेझैं आलिङ्गन गऱ्यो ।।४१।। त्यस बेला मुद्गलले धमिराको गोलो फोरेर फेरि उत्पन्न भएका कारण छोरा मानेर उपदेश गरे। तिनले आदरपूर्वक भने - 'हे कैवर्तक ! तिम्रो आँखाको बीचबाट सूँढ उत्पन्न भएकाले तिम्रो नाम भुशुण्डी रहनेछ' । मुद्गलद्वारा उपदेश पाएपछि त्यसले उहाँलाई फेरि प्रणाम गऱ्यो । तिनले कैवर्तकलाई धमिराको माटोबाट पैदा भएका कारण तिमी मेरा पुत्र हौ भनी पुत्रका रूपमा स्वीकार गरे। यसरी नामकरण गरेपछि एकाक्षरी श्रीगणेश मन्त्रको पनि उपदेश गरे ।।४२-४४।। अन्तमा वरदान दिंदै मुनिले भने - 'अब तिमी संसारमा उत्तम मुनिका रूपमा प्रख्यात हुनेछौ र इन्द्र आदि देवता, सिद्धपुरुष र गन्धर्वहरूद्वारा पनि वन्दनीय पुरुष हुनेछौ । जसरी ध्यान गरिएका भगवान् श्रीगणेश पापनाशक बन्नुहुन्छ, त्यसरी नै तिमी पनि पापनाशक भुशुण्डी मुनिका रूपमा संसारमा प्रसिद्ध हुनेछौ ।।४५-४६।। जसले तिम्रो दर्शन पाउनेछ, त्यो दर्शक कृतकृत्य हुनेछ । तिम्रो आयु एक लाख कल्पको हुनेछ । यो मेरो आशीर्वाद हो ।' यसरी मुद्गलले भुशुण्डीलाई अनेक वरदान दिन लागेका बेला त्यहाँ इन्द्रआदि देवता र नारदआदि मुनिहरूले पनि आई भुशुण्डीलाई प्रणाम गर्दै भने- 'हे भुशुण्डी ! तपाईंको दर्शनबाट हाम्रो जन्म सार्थक भयो । विद्या, माता-पिता, तपस्या र यश पनि सार्थक भए । तपाईं नै हाम्रा लागि श्रीगणेश हुनुहुन्छ र पूजनीय पनि हुनुहुन्छ।' भुशुण्डीले पनि सबैलाई आदरपूर्वक नमस्कार गरी बिदा गरे। त्यसपछि फेरि पद्मासन बाँधी आफ्नो समीपमा श्रीगणेशको सुन्दर मूर्तिको प्रतिष्ठा गरी एकाक्षरी मन्त्र जप गर्न आरम्भ गरे ।।४७-५१।। भुशुण्डी दिनदिनै

उपचारैः षोडशभिरपुपूजद् दिने दिने ।
आश्रमश्च बभौ वापीसरोवृक्षलतादिभिः ।।५२।।

त्यक्तवैरैः सिंहमृगैर्नकुलैर्भुजगोत्तमैः ।
ततो वर्षशतस्यान्ते प्रसन्नोऽभूद् गजाननः ।।५३।।

उवाच मत्स्वरूपस्त्वं किमर्थं तपसे तपः ।
कृतकृत्योऽसि सायुज्यमायुषोऽन्ते च लप्स्यसे ।।५४।।

इदं क्षेत्रं सुविख्यातं नामलेति भविष्यति ।
अनुष्ठानकृतामत्र नानासिद्धिप्रदं नृणाम् ।।५५।।

मन्मूर्तिदर्शनादत्र न पुनर्जन्मभाग् भवेत् ।
अपुत्रश्च लभेत् पुत्रान् विद्यार्थी ज्ञानमाप्नुयात् ।।५६।।

शक्र उवाच

इति ते कथितं सर्वं शूरसेन ! नृपोत्तम ! ।
यत्त्वया परिपृष्टं मे किमन्यच्छ्रोतुमिच्छसि ।।५७।।

षोडशोपचारले श्रीगणेशको पूजा गर्दथे । त्यो आश्रम कुवा, तलाउ, पोखरी, वृक्ष, लताहरूद्वारा शोभायमान थियो । त्यहाँ आपसी द्वेष नभएका सिंह, मृग, नकुल र सर्पहरू खेलिरहेका थिए । तदनन्तर सय वर्षपछि भगवान् श्रीगणेशले प्रसन्न भई दर्शन दिनुभयो र भन्नुभयो - 'हे भ्रुशुण्डी ! तिमी मेरै रूप हौ, मजस्तै छौ, केका लागि तप गरिरहेका छौ? अब तिमी कृतकृत्य भएका छौ र आयुको अन्तमा ममा नै विलीन हुनेछौ अर्थात् मेरो सायुज्य प्राप्त गर्नेछौ ।।५२-५४।। तिमीले तपस्या गरेको यो क्षेत्र पृथिवीमा विख्यात हुनेछ, यहाँ आएर अनुष्ठान गर्नेहरूले अनेक थरि मन्त्रहरूका सिद्धि प्राप्त गर्नेछन् ।।५५।। यहाँ आएर मेरो मूर्तिको दर्शन गर्ने मानिसले फेरि जन्म लिनुपर्ने छैन । अपुत्रले पुत्र र विद्यार्थीले ज्ञान प्राप्त गर्नेछन्।।५६।।'

इन्द्रले भने - हे उत्तम राजा शूरसेन ! तपाइँले सोध्नुभएको विषयमा मैले उत्तर दिएँ । अब के सोध्न चाहनुहुन्छ भन्नुहोस् ।।५७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे भ्रुशुण्ड्युपाख्यानं नाम सप्तपञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'श्रीगणेशको नामस्मरणबाट कैवर्तकले भ्रुशुण्डीरूप प्राप्त गरेको उपाख्यान' शीर्षकान्वित सन्ताउन्नौं अध्याय पूर्ण भयो ।।५७।।

ॐ

## अष्टपञ्चाशोऽध्यायः { ५८ अध्याय }

**ब्रह्मोवाच**

**एवं श्रुत्वा शूरसेनो मरुत्वद्वाक्यमुत्तमम् ।**
**पुनः पप्रच्छ तं व्यास! प्रीतः श्रुत्वा कथामृतम् ।।१।।**

**शूरसेन उवाच**

**केनोपायेन देवेश! यानं ते गगनं व्रजेत् ।**
**तमुपायं कुरु विभो ! वद वा किं करोमि ते ।।२।।**

**ब्रह्मोवाच**

**एवं पुनः कृतप्रश्नं नृपं प्राह सुरारिहा ।**
**शृण्वतां सर्वलोकानां स्मयमान इदं वचः ।।३।।**

**इन्द्र उवाच**

**कश्चित् स्यादिह सङ्कष्टचतुर्थीव्रतकारकः ।**
**विप्रो वा क्षत्रियो वापि नगरे ते नृपोत्तम ।।४।।**
**तस्याब्दकृतपुण्येन सम्यग् दत्तेन भूभुज ! ।**
**इदानीं प्रचलेदेतन्नान्यथाऽयुतपूरुषैः ।।५।।**

**नृप उवाच**

**कथं व्रतं तु सङ्कष्टचतुर्थ्या वद मे मुने ।**
**किं पुण्यं किं फलं तस्य को विधिः कस्य पूजनम् ।।६।।**
**पुरा केन कृतं चात्र सिद्धिर्यस्मिन् कृतेऽभवत् ।**
**एतत्सर्वं सुनासीर ! कृपया वद विस्तरात् ।।७।।**

**शक्र उवाच**

**अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ।**
**कृतवीर्यस्य संवादं नारदेन महात्मना ।।८।।**
**बभूव बलवान् राजा कृतवीर्यो महीतले ।**
**सत्यशीलो वदान्यश्च यज्वा मानी महारथः ।।९।।**
**जितेन्द्रियो मिताहारो देवद्विजनिषेवकः ।**
**यस्याश्वगजयोधानां रथिनां सर्वधन्विनाम् ।।१०।।**
**न सङ्ख्या विद्यते राजन् ! सह्याद्रिविषयासिनाम् ।**
**मन्दिरे यस्य सौवर्णाः पर्यङ्का भाजनानि च ।।११।।**
**नासीदौदुम्बरं पात्रं पाकार्थमपि सर्वदा ।**
**यस्य द्वादशसाहस्रा ब्राह्मणाः पङ्क्तिभोजिनः ।।१२।।**

**ब्रह्माजीले भन्नुभयो** – हे व्यास ! यसरी इन्द्रबाट श्रीगणेशसम्बन्धी कथामृतको पान गरेपछि प्रसन्न भएर शूरसेन राजाले फेरि उनीसँग प्रश्न गरे ।।१।।

**शूरसेनले भने** – हे देवराज इन्द्र ! हजुरको विमान कुन उपायबाट फेरि आकाशमा उड्न सक्छ? त्यो उपाय बताउनुहोस् अथवा मैले हजुरका लागि के गर्नुपर्छ? त्यो आज्ञा गर्नुहोस् ।।२।।

**ब्रह्माजीले भन्नुभयो** – आफूसँग बारबार प्रश्न गरिरहने शूरसेन राजालाई इन्द्रले आश्चर्य मान्दै भने ।।३।।

**इन्द्रले भने** – हे राजा शूरसेन ! के तपाईंको नगरमा सङ्कष्टचौथीव्रत गर्ने कुनै ब्राह्मण अथवा क्षत्रिय छ ? त्यसले वर्षभर गरेको पुण्य मलाई प्रदान गर्‍यो भने यो विमान आकाशमा फेरि उड्न सक्छ, अन्यथा दशहजार वीरहरू आएर बल लगाए पनि यो उड्न सक्दैन ।।४-५।।

**शूरसेनले भने** – हे देवराज इन्द्र ! सङ्कष्टचतुर्थीव्रत कसरी गरिन्छ ? त्यसबाट कस्तो पुण्य प्राप्त हुन्छ ? त्यो व्रत गर्ने विधि कस्तो रहेको छ ? र त्यसमा कसको पूजा गरिन्छ? मलाई यी सबै प्रश्नहरूको उत्तर बताउनुहोस् । यो व्रत पहिले कसले गरे ? कस्तो सिद्धि प्राप्त गरे ? यी सबै विषयमा पनि मलाई तपाईंले विस्तारपूर्वक बताउनुहोस् ।।६-७।।

**इन्द्रले भने**– यस विषयमा म तपाईंलाई पुरानो इतिहास बताउँछु। त्यो इतिहास महात्मा नारदजीसँग कृतवीर्यको संवादका रूपमा रहेको छ ।।८।। पृथिवीमा पहिले कृतवीर्यनामक राजा प्रसिद्ध भए । ती राजा सत्यशील, उदार दाता, यज्ञशील, स्वाभिमानी, महारथी, जितेन्द्रिय, परिमित आहार गर्ने र वेद एवं ब्राह्मणका सेवक थिए। तिनका घोडा, हात्ती र योद्धाका साथै सह्याचल निवासी रथी र धनुर्धारी वीरहरूको संख्या कति थियो भन्न कुनै पनि मानिस समर्थ थिएन । तिनका घरमा सुनै सुनका भाँडा र पलङ्ग थिए । पकाउनका लागि पनि तामाको भाँडाको प्रयोग गरिँदैनथ्यो। तिनको भान्छामा दिनदिनै बाह्र हजार ब्राह्मणले पङ्क्तिबद्ध भई भोजन गर्दथे ।।९-१२।।

सुगन्धा नाम यस्यासीत् पत्नी धर्मपरायणा ।
पतिव्रता पतिप्राणा त्रैलोक्येऽतिमनोरमा ।।१३।।

नानालङ्कारसुभगा द्विजदेवातिथिप्रिया ।
एवं तौ दम्पती राजन्नपुत्रौ सम्बभूवतुः ।।१४।।

पुत्रार्थं सर्वदानानि व्रतानि च तपांसि च ।
चक्रतुर्नियमानन्यान् यज्ञाँश्च बहुदक्षिणान् ।।१५।।

नानातीर्थानि क्षेत्राणि जग्मतुः पुत्रलिप्सया ।
तथापि नाभवत् पुत्रो जन्मान्तरकृतैनसोः ।।१६।।

एकदा दुःखितो राजा समाहूय स मन्त्रिणः ।
राज्यं मुद्राञ्च कोशञ्च जनाञ्जनपदाँस्तथा ।।१७।।

तेभ्यो निवेद्य सर्वं तौ जग्मतुर्वनमुत्तमम् ।
वल्कलाजिनसंवीतौ दम्पती तप आस्थितौ ।।१८।।

जितेन्द्रियौ जिताहारौ जीर्णपर्णानिलाशिनौ ।
चक्षुर्मात्रेण लक्ष्यौ तौ दृष्ट्वाऽथ नारदो मुनिः ।।१९।।

जनकं कृतवीर्यस्य पितृलोकस्थमब्रवीत् ।
अपुत्रत्वात् प्रायगतो विद्यते तनयस्तव ।।२०।।

कृतवीर्यो मृत्युलोके श्वः परश्वो मरिष्यति ।
यदि तस्य भवेत् पुत्रो नाकलोकप्रदर्शकः ।।२१।।

कृतवीर्यस्तदा जीवेन्मृतो वा स्वर्गमाप्नुयात् ।
इत्युक्त्वा नारदो यातः पश्यति स्माद्भुतं भुवि ।।२२।।

भृशुण्डेः पितरौ पुत्री तस्य पत्नीं सकन्यकाम् ।
अग्निज्वालाकुले घोरे कुम्भीपाके ह्यधोमुखान् ।।२३।।

तिनकी सुगन्धानामक धर्मपरायणा पत्नी थिइन् । ती रानी पतिका निमित्त प्राणसमान पियारी र पतिव्रता पनि थिइन्। स्वर्ग, मर्त्य र पातालमा ती रानी अत्यन्त सुन्दर नारीका रूपमा चर्चित थिइन्। अनेक थरि अलङ्कार धारण गर्दा अत्यन्त कान्तिमय देखिने ती रानी ब्राह्मण, देवता र पाहुनाको सत्कार गर्न कुशल थिइन् । तर यस्तो समृद्धि, सौन्दर्य, सदाचार र शान-मान हुँदा पनि ती राजा रानी पुत्रहीन थिए ।।१३-१४।। पुत्रजन्मका लागि ती दुबैले सबै प्रकारका दान गरे, अनेक व्रतहरूको अनुष्ठान गरे र कठिन तपस्या पनि सम्पन्न गरे ।।१५।। अन्य आवश्यक नियमपालनका साथै ती दुबैले धेरै - धेरै दक्षिणा दिनुपर्ने वैदिक याग पनि सम्पन्न गरे । पुत्रप्राप्तिको तीव्र आशाले ती दुबैले अनेक तीर्थहरूमा भ्रमण गरी दर्शन-स्पर्शन गरे । यति विधि उपाय गर्दा पनि जन्मान्तरका प्रबल पापका कारण तिनीहरूले पुत्रको मुख देख्न पाएनन् ।।१६।। एक दिन साह्रै खिन्न भएर राजा कृतवीर्य आफ्ना मन्त्रीहरू डाकी राज्य, कोष, मुद्रा, नागरिक र जनपदलाई तिनको जिम्मा लगाई सपत्नीक वनतर्फ लागे ।।१७-१८।। रूखका बोक्रा र मृगको छाला धारण गरी ती दुबै कठोर तपस्या गर्न लागे । एक दिन देवर्षि नारदजीले इन्द्रियका वृत्ति र भोजनका प्रवृत्तिलाई नियन्त्रित गरी सुकेका पात र हावामात्र भोजन गरेर जीर्ण-शीर्ण शरीर धारण गर्ने, अत्यन्त दुर्बल र आँखाबाट मात्र चिन्न सकिने अवस्थामा पुगेका ती राजा-रानीलाई देखेर पितृलोकमा वर्तमान कृतवीर्यका पितालाई भने - तपाईंका छोरा कृतवीर्य पुत्रहीन भएका कारण मृत्युलोकमा तपस्याले क्षीण भएर मर्नै लागेका छन् । आज अथवा भोलिसम्म तिनले प्राणत्याग गर्न सक्दछन् । यदि तिनलाई स्वर्गमा पुऱ्याउने उत्तम स्वभावको छोरा जन्मिन्छ भने मात्र ती बाँच्न सक्छन् अथवा मरे पनि स्वर्गमा प्राप्त हुन सक्छन् । यति कुरा सुनाएर त्यहाँ पृथिवी-लोकका लागि प्रस्थान गरेका नारदजीले पृथिवीमा पुगेर अद्भुत दृश्य देखे ।।१९-२२।। त्यहाँ तिनले भगवान् श्रीगणेशको समान अनुहार भएका र गजाननकै रूपमा सम्मानित भृशुण्डीका माता-पिता, दुई भाइ छोरा, छोरी र पत्नीलाई अग्निको ज्वालाले आकुल भई कुम्भीपाक नरकमा मुन्टो

याम्यदूतैस्ताड्यमानान् क्रन्दतो विविधान् रवान् ।
तेषामाक्रन्दितं श्रुत्वा नारदः करुणानिधिः ।।२४।।

आगत्य कथयामास तेषां दुःखं भ्रुशुण्डये ।

नारद उवाच

शक्रादयो देवगणा मुनयः कपिलादयः ।।२५।।

यस्य ते दर्शनं कर्तुं यान्ति हेरम्बरूपिणः ।
तत्कथं पितरौ पत्नी पुत्राः पुत्र्यश्च किंकराः ।।२६।।

यमलोके कुम्भीपाके पच्यन्ते तव दोषतः ।
त्वं चापि ज्ञानसम्पन्नः कथं तन्नावबुध्यसे ।।२७।।

पूर्वजानां त्वमुद्धारे यत्नं कुरु महामुने ! ।

शक्र उवाच

भ्रुशुण्डिरतिसन्तप्तो वाक्यं श्रुत्वा मुनीरितम् ।
दुःखितः पितृदुःखेन भृशं जज्वाल वह्निवत् ।।२८।।

उपायं चिन्तयामास तेषामुद्धारकारकम् ।
ददौ श्रेयः स सङ्कष्टचतुर्थीव्रतजं तदा ।।२९।।

विलोक्य प्रणिधानेन भ्रुशुण्डिः स परोक्षवित् ।
ध्यात्वा गजाननं देवं करे धृत्वा शुभं पयः ।।३०।।

उवाच पितॄनुद्दिश्य याचन् देवं गजाननम् ।

भ्रुशुण्डिरुवाच

यदि भक्त्या कृतं मेऽस्ति गणनाथ! व्रतं तव ।।३१।।

तदा तस्य प्रभावेण शीघ्रमुद्धर पूर्वजान् ।
एवमुक्त्वा तु तत्तोयं गजाननकरेऽक्षिपत् ।।३२।।

क्षिप्तमात्रे तदा तोये गजाननप्रसादतः ।
विमानानि समारुह्य सर्वे ते देवरूपिणः ।।३३।।

सेव्यमाना अप्सरोभिः स्तूयमानाश्च चारणैः ।
गन्धर्वैर्गीयमानास्ते गणेशस्थानमाप्नुवन् ।।३४।।

झुकाएर बसेको र यमदूतहरूले ताडना गरिरहेको अवस्थामा देखे । ती सबै ठूलो स्वरले चिच्याइरहेका थिए । तिनको दुःख देखेर दयाका खानी नारद ऋषिले भ्रुशुण्डीको आश्रममा आई तिनले भोगिरहेको नारकीय कष्टको विषयमा भ्रुशुण्डी ऋषिलाई जानकारी गराए।

**नारदजीले भन्नुभयो** - हे भ्रुशुण्डी ऋषि ! इन्द्र आदि देवता र कपिल आदि महर्षिद्वारा श्रीगणेशकै रूपमा सम्मानित हुनुभएका तपाईंको दर्शन गर्न आउने दर्शकहरू अत्यन्त कृतार्थ हुन्छन् तर तपाईंका छोरा-छोरी, बाबु-आमा, पत्नी र सेवकहरू तपाईंकै दोषले यमलोकको कुम्भीपाक नरकमा नारकीय कष्ट भोगिरहेका छन् । तपाईं स्वयं ज्ञानी भएर पनि के यो कुरा थाहा पाउनुभएको छैन ? हे महामुनि ! पूर्वजहरूको उद्धारका लागि प्रयत्न गर्नुहोस्।

**इन्द्रले भने** - नारदजीका यी कुरा सुने भ्रुशुण्डी अत्यन्त सन्तापमा परे । माता-पिताले दुःख पाएको सुनेर आफै आगोझैं बल्न थाले र ती सबैको उद्धार गर्ने उपायको विषयमा चिन्तन गरी तिनले आफूले गरेको सङ्कष्टचतुर्थी व्रतको पुण्य पिता-माता आदि सबै पारिवारिक जनको उद्धारका लागि दान गरे।।२३-२९।। पुण्यदान गर्ने क्रममा परोक्षवेत्ता भ्रुशुण्डीले सर्वप्रथम ध्यानदृष्टिबाट ती सबैको दुर्दशा देखेर श्रीगणेशको ध्यान गरे। त्यसपछि हातमा जल लिएर पितृहरूको उद्धारका लागि भगवान् श्रीगणेशसँग प्रार्थना गरे ।

**भ्रुशुण्डीले भने** - 'हे श्रीगणेश ! यदि मैले हजुरको सङ्कष्टचतुर्थीको व्रत भक्तिपूर्वक गरेको छु भने त्यसका प्रभावले मेरा पिता र पारिवारिक जनहरूको छिटै उद्धार गर्नुहोस् ।' यसरी प्रार्थना गरेर तिनले आफ्नो हातमा लिएको जल श्रीगणेशको हातमा अर्पण गरे ।।३०-३२।। तिनले श्रीगणेशको हातमा जलार्पण गर्नासाथ भगवान् श्रीगणेशको कृपाबाट भ्रुशुण्डीका पिता-माता र पारिवारिक जनहरू देवताको रूप लिएर विमानमा सवार भई अप्सराहरूको सेवा, स्तुतिपाठकहरूको प्रशंसा र गन्धर्वहरूको गुणगान पाएर प्रसन्न हुँदै श्रीगणेशको धाममा प्राप्त भए ।।३३-३४।। त्यस बेला

अन्येऽपि कुम्भीपाके च नरा दुष्कृतिनोऽभवन् ।
तेऽपि सर्वे विमानस्थाः पदं गाणेश्वरं ययुः ।।३५।।
एवं व्रतस्य महिमा मया ते परिकीर्तितः ।
यदेकदिनपुण्येन सर्वे ते सद्गतिं गताः ।।३६।।
जन्मावधि कृतं येन सङ्कष्टव्रतमादरात् ।
शेषोऽपि तस्य पुण्यस्य सङ्ख्यां कर्तुं न वै क्षमः ।।३७।।
अतस्तस्य प्रभावेण विमानं प्रचलेन्मम ।।३८।।

कुम्भीपाक नरकमा अरू पनि पापी मानिसहरूले कष्टभोग गरिरहेका थिए । ती पनि तिनका सम्पर्कका कारण विमानमा सवार भई श्रीगणेशधाममा प्राप्त भए ।।३५।। यसरी मैले तपाईँलाई सङ्कष्टचतुर्थी व्रत गरेको पुण्यबाट धेरै मानिसले सद्गति प्राप्त गरेको कुरा बताएँ ।।३६।। जसले श्रद्धापूर्वक आजीवन सङ्कष्टचतुर्थीको व्रत सम्पन्न गर्दछ त्यसले प्राप्त गर्ने पुण्यको गणना गर्न शेषनाग पनि सक्दैनन्।।३७।। त्यस कारण सङ्कष्टचतुर्थीको पुण्य कसैले दान गर्दछ भने मेरो विमान भर्खरै आकाशमा उड्न सक्दछ ।।३८।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे सङ्कष्टचतुर्थीव्रतकथनं नामाष्टपञ्चाशत्तमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थीव्रत महिमाको निरूपण' शीर्षकान्वित अन्ठाउन्नौं अध्याय पूर्ण भयो ।।५८।।

ॐ

## ऊनषष्टितमोऽध्यायः { ५९ अध्याय }

राजोवाच

कुम्भीपाकाद् विनिःसृत्य तेषु यातेषु वै दिवम् ।
कमुपायं स कृतवान् कृतवीर्यपिता तदा ।।१।।

शक्र उवाच

ब्रह्मलोकं जगामाशु ददर्श कमलासनम् ।
दुःखितो नारदाच्छ्रुत्वा वंशविच्छेदमात्मनः ।।२।।

प्रणम्य तमपृच्छत् स वंशविच्छेदकारणम् ।
मम पुत्रोऽतिधर्मात्मा वदान्यो यज्ञकारकः ।।३।।

देवतातिथिभक्तश्च मान्यमानयिता भृशम् ।
नानाविधप्रयत्नं स पुत्रार्थं कृतवान् विधे ।।४।।

तथापि नाभवत् कस्मात् तस्य पुत्रः सुरेश्वर ! ।
राज्यं प्रकृतिसात् कृत्वा वायुभक्षः स्थितो वने ।।५।।

अस्थिमात्रावशेषोऽसावद्य श्वो वा मरिष्यति ।
जन्मान्तरीयं तस्यैनो येन गच्छेल्लयं प्रभो ।।६।।

तमुपायं दयां कृत्वा वद मे कमलासन ! ।
तं प्रापयिष्ये तत्राहं स्ववंशस्य विवृद्धये ।।७।।

एवं सुललितां वाणीं श्रुत्वोवाच तथा विधिः ।
श्रूयतां तव पुत्रस्य पूर्वजन्म मयेरितम् ।।८।।

सामनाम्नाऽभवत् पूर्वं तत्रैव नगरेऽन्त्यजः ।
दुष्कर्माऽतितरां यस्य दर्शनं पुण्यनाशकृत् ।।९।।

एकदा तेन वित्तस्य लोभेन पथि घातिताः ।
द्वादश ब्राह्मणाः शान्तास्त्यक्तास्तेन गुहान्तरे ।।१०।।

सर्वं तदीयमादाय निशि स्वगृहमागतः ।
माघकृष्णचतुर्थ्यां स उदये शशिनो नृप ।।११।।

**शूरसेनले भने** - कुम्भीपाक नरकबाट मुक्त भएर भ्रुशुण्डीका पूर्वजहरू स्वर्ग गएपछि कृतवीर्यका पिताले के उपाय गरे ? ।।१।।

**इन्द्रले भने** - कृतवीर्यका पिताले नारदमुनिबाट आफ्नो वंश विच्छिन्न भइरहेको परिस्थिति थाहा पाएर दुःखी भई छिटै ब्रह्मलोक पुगेर भगवान् ब्रह्माजीको दर्शन गरे ।।२।। कृतवीर्यका पिताले ब्रह्माजीलाई प्रणाम गरेपछि हात जोडेर आफ्नो वंश विच्छेद हुनुको कारण के हो भन्ने जिज्ञासा राख्दै भने- 'हे भगवन्! मेरो छोरा कृतवीर्य धर्मात्मा, दाता, यज्ञकर्ता, देवता एवं अतिथिका भक्त र सम्मान दिन पनि कुशल छ । त्यसले पुत्रप्राप्तिका लागि अनेक थरि प्रयत्न गरेता पनि त्यसलाई अहिलेसम्म पुत्र प्राप्त भएन, त्यसमा के कारण छ ? आज त्यो छोरा आफ्नो राज्य मन्त्रीहरूको जिम्मामा लगाएर हावामात्र पिएर वनमा तपस्या गरिरहेको छ ।।३-५।। त्यसको शरीरमा अब हाड-छालामात्र बाँकी छन्, आज अथवा भोलि त्यो मर्न सक्छ । हे भगवन् ! त्यसले जन्मान्तरमा गरेको पापलाई जुन उपायबाट समाप्त गर्न सकिन्छ त्यो उपाय हजुरले मलाई कृपापूर्वक बताउनुहोस्, म वंशवृद्धिका लागि त्यो छोरालाई जहाँ लैजानुपर्छ, त्यहाँ पुऱ्याउँछु' ।।६-७।। कृतवीर्यका पिताको यो प्रार्थनापूर्ण वाणी सुनेर ब्रह्माजीले भन्नुभयो - हे उत्तम पुरुष! तिम्रा छोराको पूर्वजन्मको विषयमा म बताउँछु, तिमीले सुन ।।८।। तिम्रो नगरमा पहिले सामनामक एउटा अन्त्यज थियो । त्यो साह्रै पापी भएकाले त्यसको दर्शन गर्दा मानिसहरूका पुण्य नष्ट भएर जान्थे ।।९।। एक दिन त्यस अन्त्यजले लोभको वशमा परेर बाटोमा हिंडिरहेका बाह्र जना ब्राह्मणहरूको हत्या गरी तिनका लाश कुनै गुफामा लगेर लुकायो ।।१०।। त्यो ती ब्राह्मणसँग भएका सबै धनमाल लिएर रातको समयमा आफ्नो घरमा आयो । संयोगवश त्यो दिन माघ महिनाको कृष्णपक्षको चतुर्थी तिथि थियो र त्यसका छोराको नाम श्रीगणेश थियो । त्यस दिन चन्द्रमाको उदयकालमा त्यसले आफ्नो छोरालाई पटक पटक हे श्रीगणेश! हे श्रीगणेश!

गणेशेति गणेशेति पुत्रमाहूय सत्वरम् ।
अलब्धान्नजलस्तेन सहैव बुभुजे मुदा ।।१२।।

कालेन तव पुत्रोऽसौ पञ्चत्वमगमन्निशि ।
चन्द्रोदये चतुर्थ्यां तु कृष्णायामेव भूभुज ।।१३।।

अज्ञानकृतसङ्कष्टचतुर्थीव्रतसम्भवात् ।
पुण्याद् वैनायकं धाम जगाम सुखदं तु स: ।।१४।।

विमानवरमारूढो वीक्ष्यमाणोऽप्सरोगणै: ।
वैमानिकै: स्तूयमानो दिव्यपुष्पैरथार्चित: ।।१५।।

तेनैव पुण्यशेषेण कृतवीर्याभिधो नृप: ।
तव पुत्र: समापेदे पुत्रत्वमधुना भुवि ।।१६।।

तदघौघक्षयात् तस्य पुत्र उत्पत्स्यतेऽनघ ।
इति ब्रह्मवच: श्रुत्वा चकम्पे स नृपोत्तम: ।।१७।।

पप्रच्छ पुनरेवासावुपायं पापनाशनम् ।

कृतवीर्यपितोवाच

ब्रह्महत्याकृतस्तस्य पापं नश्येत् कथं विधे ।।१८।।
तद् वदस्व दयासिन्धो ! यद्यपि स्यात् सुदुष्करम् ।

ब्रह्मोवाच

स चेद् व्रतं तु सङ्कष्टचतुर्थीसंज्ञकं तव ।।१९।।
सुत: करिष्यते सम्यक्तेन पापात् प्रमोक्ष्यते ।

राजोवाच

कथं तत्क्रियते ब्रह्मन् ! कस्मिन् मासे व्रतं शुभे ।।२०।।
तत् सर्व वद मे स्वामिन् ! येन पापं लयं व्रजेत् ।

ब्रह्मोवाच

चतुर्थी भौमवारे तु माघे कृष्णे भवेद् यदि ।।२१।।
शुभे मुहूर्ते चन्द्रे च कुर्यात् प्रारम्भमस्य ह ।
दन्तधावनपूर्वाणि स्नानानि चैकविंशतिम् ।।२२।।

भनी सम्बोधन गऱ्यो। त्यसलाई भोक लागेको थियो तर अन्न जल खान पाएन । त्यो रात भोकै रहनुपऱ्यो। अर्को दिन आफ्नो छोराले भोजन गरेपछिमात्र त्यसले भोजन गऱ्यो ।।११-१२।। धेरै समय बितेपछि त्यस अन्त्यजको छोरा कृष्णपक्षको चतुर्थीको रातमा मऱ्यो र अज्ञानमा गरेको सङ्कष्टचतुर्थीको व्रतका प्रभावले त्यो सुखदायक श्रीगणेशधाममा प्राप्त भयो ।।१३-१४।। श्रीगणेशधाममा जाने क्रममा त्यो विमानमा सवार भई अप्सराहरूको आनन्ददायक सेवा प्राप्त गर्दै विमान-चालकहरूको स्तुतिगानबाट मुग्ध हुँदै र दिव्य पुष्पवृष्टिबाट अभिनन्दित हुँदै श्रीगणेशधाममा प्राप्त भएको थियो ।।१५।। अन्त्यजको छोरा त आफ्नै पुण्यले धाममा पुग्यो तर त्यो अन्त्यज पनि सङ्कष्टचतुर्थीको दिन श्रीगणेशको नाम उच्चारण गर्नाले र अज्ञानमै भए पनि उपवास बस्नाले मरेपछि पुण्यशेष भएका कारण आज तपाईंको छोरा कृतवीर्यका रूपमा जन्मेको छ। त्यसले पूर्वजन्ममा गरेको ब्रह्महत्याजनित पापको राशि समाप्त भएपछिमात्र त्यसलाई छोरा पैदा हुनेछ । ब्रह्माजीका यी कुरा सुनेर कृतवीर्यका पिता थर्थर काँपे।।१६-१७।। केही बेरपछि तिनले त्यस पापलाई नाश गर्ने उपायका विषयमा जिज्ञासा गरे।

**कृतवीर्यका पिताले भने-** हे भगवन् ! त्यसले जन्मान्तरमा गरेको ब्रह्महत्याको पाप कुन उपायबाट नाश हुनसक्छ ? हे दयालु! त्यो उपाय जतिसुकै कठिन भए तापनि मलाई बताउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो -** यदि तिम्रो पुत्र कृतवीर्यले सङ्कष्टचतुर्थीको व्रत गर्दछ भने त्यसका पाप नाश हुनेछन् र त्यसलाई पुत्रलाभ पनि हुनेछ ।

**कृतवीर्यका पिताले भने -** हे भगवन् ! त्यो व्रत कसरी गरिन्छ ? कुन महिनामा गरिन्छ ? यी कुरा मलाई बताउनुहोस्, जसबाट कृतवीर्यका सबै पाप नष्ट हुन सकून् ।

**ब्रह्माजीले भन्नुभयो -** यदि माघकृष्ण चतुर्थी मङ्गलवारका दिन पर्दछ भने शुभमुहूर्तमा त्यो व्रत प्रारम्भ गर्नुपर्दछ । यदि त्यो चतुर्थी सोमवारका दिन पर्दछ भने पनि राम्रो मुहूर्त हेरी व्रतारम्भ गर्नुपर्दछ । दन्तधावन गरेपछि एक्काइसपटक स्नान गरी नित्यकर्म गर्नुपर्दछ । त्यसपछि

कुर्वीत नित्यकर्माणि जपेन्मन्त्रं ततः परम् ।
निराहारो भवेन्मौनी परनिन्दाविवर्जितः ।।२३।।

दुष्टकर्म च ताम्बूलं वर्जयेन्नियमेन च ।
वर्जयेज्जलपानञ्च परद्रोहञ्च पैशुनम् ।।२४।।

तिलामलककल्केन दिनान्ते स्नानमाचरेत् ।
एकाक्षरं षडर्णं वा जपेद् वा वैदिकं मनुम् ।।२५।।

गणेशप्रीतये तस्य नाममन्त्रं यथाविधि ।
ध्यायेत् स्थिरेण मनसा देवदेवं गजाननम् ।।२६।।

मुहूर्तमात्रेण ततः पूजयेद् गणनायकम् ।
उपचारैः षोडशभिर्नैवेद्यैर्विविधैरपि ।।२७।।

मोदकापूपशुष्कुलीलड्डूकैर्वटकैरपि ।
पायसैर्विविधैरन्नैर्व्यञ्जनैर्लेह्यचोष्यकैः ।।२८।।

फलैर्नानाविधैः पूगताम्बूलैर्दक्षिणादिभिः ।
एकविंशतिदूर्वाभिर्दीपैश्च कुसुमैरपि ।।२९।।

चन्द्रोदयेऽर्घ्यदानेन तिथये मन्त्रपूर्वकम् ।
गजाननाय पश्चात्तु चन्द्राय च ततः परम् ।।३०।।

निवेद्य पूजनं नत्वा क्षमाप्य च ततः पुनः ।
ब्राह्मणान् भोजयेद् भक्त्या शक्त्या वा चैकविंशतिम्।।३१।।

दश द्वादश वाऽशक्तो दक्षिणाभिः सुतोषयेत् ।
कथां श्रुत्वा ततः सम्यक् स्वयं भुञ्जीत वाग्यतः ।।३२।।

गीतवादित्रघोषेण शेषां रात्रिं ततो नयेत् ।
एवं व्रतं चैकवर्षं कृतं चेद् यत्नतो नृप ।।३३।।

सर्वपापक्षयात् तस्य भविता पुत्र उत्तमः ।
अन्यं वा चिन्तयेत् कामं यं यं तं प्राप्नुयान्नरः ।।३४।।

सर्वसङ्कटनाशः स्यात् परचक्राद् भयं न हि ।
शमीमूले जपँस्तिष्ठन्नुपवासपरायणः ।।३५।।

कर्तालि 'गणेशाय नमः' मन्त्र जप गर्नुपर्दछ । त्यो व्रत गर्दा कर्ता निराहार, मौनी र परनिन्दारहित हुनुपर्दछ ।।१८-२३।। त्यसले नियमपूर्वक रही पापकर्म र पापसेवन परित्याग गर्नुपर्दछ। त्यस समयमा जलपान, परद्रोह र छुल्याइँजस्ता काम गर्न हुँदैन ।।२४।। दिन समाप्त भएपछि तिलको पिनाले नुहाउनु पर्दछ । श्रीगणेशलाई प्रसन्न तुल्याउन एकाक्षरी श्रीगणेश मन्त्र अथवा 'गणानान्त्वा०' इत्यादि वैदिक मन्त्रको जप गर्नुपर्दछ अथवा नाममन्त्र जपे पनि हुन्छ।।२५।। मन्त्र जपपछि साधकले मन स्थिर गराई देवताका पनि देवता भगवान् श्रीगणेशको एक मुहूर्तसम्म ध्यान गर्नु पर्दछ ।।२६।। त्यसपछि षोडशोपचारका सामग्री, अनेक थरि नैवेद्य, लड्डु, मालपुवा, जुलेवी, मनभोग, खीर, बटुक आदि अनेक थरि पक्वान्न, व्यञ्जन, अचार, अनेक थरिका फल, सुपारी, पान, एक्काइस दूर्वाङ्कुर, पुष्प, दीप र दक्षिणा टक्र्याएर भगवान् श्रीगणेशको पूजा गर्नुपर्दछ ।।२७-२९।। चन्द्रोदय हुँदा मन्त्रोच्चारण गर्दै चतुर्थी तिथिका निमित्त अर्घ्य दिनुपर्दछ । त्यसपछि श्रीगणेश र चन्द्रमालाई पनि अर्घ्य दिई पूजा गरेर क्षमायाचना गर्नुपर्दछ। त्यसपछि एक्काईस जना ब्राह्मणहरूलाई भक्तिपूर्वक यथाशक्ति भोजन गराउनु पर्दछ । नसक्नेले दश जना ब्राह्मण अथवा त्यो पनि नसके एक जना ब्राह्मणलाई मात्र भए पनि भोजन र दक्षिणाद्वारा सन्तुष्ट तुल्याउनुपर्दछ । ब्राह्मण भोजन गराएपछि सङ्कष्टचतुर्थीको महिमामा आधारित कथा सुनेर मौनपूर्वक भोजन गर्नुपर्दछ ।।३०-३२।। रातको शेष समयमा भगवान् श्रीगणेशसम्बन्धी गीत, वाद्य र नृत्य गरी जाग्राम बस्नु पर्दछ। यदि कृतवीर्यले एक वर्षसम्म यो व्रत गर्दछन् भने तिनका सबै पाप समाप्त हुनेछन् र पुत्रलाभ पनि हुनेछ । तिनले चिताएका अरू कामना पनि परिपूर्ण हुनेछन् । तिनमाथि आइलाग्ने सबै प्रकारका सङ्कष्टहरूको नाश हुनेछ र परचक्रबाट भय हुने छैन । यो व्रत गर्दा शमी वृक्षको फेँदमा बसी उपवासपूर्वक चन्द्रोदयपर्यन्त श्रीगणेशको मन्त्रजप गर्नुपर्दछ ।।३३-३५।। यसरी श्रीगणेशको आराधना

चन्द्रस्योदयपर्यन्तं व्रतमेतत् समाचरेत् ।
अन्धो मूढो जडः पङ्गुस्तदीप्सितमवाप्नुयात् ।।३६।।

दारान् पुत्रान् धनं राज्यं लभते नात्र संशयः ।
श्रावणादिषु मासेषु घृतलड्ड्वादिकं पृथक् ।।३७।।

भक्षयेद् वर्षपर्यन्तं तस्य सिद्धिरनुत्तमा ।
श्रावणे सप्तलड्डूकान्नभस्ये दधिभक्षणम् ।।३८।।

आश्विने चोपवासञ्च कार्तिके दुग्धपानकम् ।
मार्गशीर्षे निराहारं पौषे गोमूत्रपानकम् ।।३९।।

तिलाञ्च भक्षयेन्माघे फाल्गुने घृतशर्कराम् ।
चैत्रमासे पञ्चगव्यं वैशाखे शतपत्रिकाम् ।।४०।।

घृतस्य भोजनं ज्येष्ठ आषाढे मधुभक्षणम् ।

कृतवीर्यपितोवाच

अङ्गारकचतुर्थ्यां तु विशेषोऽभिहितः कुतः ।।४१।।

वद त्वं कृपया ब्रह्मन् ! प्रश्रयावनताय मे ।
शृण्वतो न च मे तृप्तिर्गजाननकथां शुभाम् ।।४२।।

गर्ने मानिस अन्धो, लाटो, मूर्ख, बहिरो, लङ्गडो जस्तोसुकै भए पनि त्यसका कामना परिपूर्ण हुनेछन्। यस्ता साधकले पत्नी, पुत्र, धन, राज्य आदि सबै चिताएका विषय प्राप्त गर्न सक्नेछन् । श्रावण आदि मासमा घ्यू, लड्डू आदि अलग-अलग पदार्थ भोजन गर्दै वर्षपर्यन्त व्रत गर्नाले उत्तम सिद्धि प्राप्त हुन्छ । महिनाअनुसार पृथक् पृथक् पदार्थ भोजन गर्ने क्रममा श्रावणमा सात लड्डु, भदौमा दही, आश्विनमा उपवास, कार्तिकमा दूध, मार्गशीर्षमा निराहार, पौषमा गोमूत्र, माघमा तिल, फाल्गुनमा घ्यू-चिनी, चैत्रमा पञ्चगव्य, वैशाखमा शतपत्रिका, ज्येष्ठमा चिउ र आषाढमा मह खाएर व्रत गर्नुपर्दछ।

**कृतवीर्यका पिताले भने -** अङ्गारक चतुर्थीव्रत गर्दा सङ्कष्टचतुर्थीको व्रतविधिभन्दा विशेष कुरा किन बताइएको छ? यसबारे मलाई आज्ञा गर्नुहोस् । श्रीगणेश भगवान्का विषयमा चर्चा - परिचर्चा र कथा श्रवण गर्दा मेरो मन कहिले पनि अघाउँदैन ।।३६-४२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चतुर्थीव्रतकथनं नामैकोनषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थीव्रतको विधिनिरूपण' शीर्षकान्वित उनान्साठीऔँ अध्याय पूर्ण भयो ।।५९।।

ॐ

## षष्टितमोऽध्यायः　　{ ६० अध्याय }

ब्रह्मोवाच

अङ्गारकचतुर्थ्यास्तु महिमानं महीपते ! ।
शृणुष्वावहितो भूत्वा कथयामि समासतः ।।१।।

अवन्तीनगरे राजन् ! भारद्वाजो महामुनिः ।
वेदवेदाङ्गवित् प्राज्ञः सर्वशास्त्रविशारदः ।।२।।

अग्निहोत्ररतो नित्यं शिष्याध्ययनतत्परः ।
नदीतीरगतस्तिष्ठन्ननुष्ठानरतो मुनिः ।।३।।

एकस्मिन्नेव समये दृष्टा तेनाप्सरोवरा ।
तां दृष्ट्वा चकमे भोक्तुं भारद्वाजो महामुनिः ।।४।।

अकस्मात् कामिनीं दृष्ट्वा कामासक्तोऽभवन्मुनिः ।
कामबाणाभिभूतः सन्निपपात महीतले ।।५।।

अतिविह्वलगात्रस्य तस्य रेतः प्रचस्खले ।
प्रविष्टं तस्य तद् रेतः पृथिवीविलमध्यतः ।।६।।

तत एकः कुमारोऽभूज्जपाकुसुमसन्निभः ।
तं धरित्री स्नेहवशात् पालयामास सादरम् ।।७।।

जनुः स्वं तेन धन्यं सा मनुते पितरौ कुलम् ।
ततः स सप्तवर्षस्तां पप्रच्छ जननीं निजाम् ।।८।।

मयि लोहितिमा कस्मान्मानुषं देहमास्थिते ।
कश्च मे जनको मातस्तन्ममाचक्ष्व साम्प्रतम् ।।९।।

धरण्युवाच

भारद्वाजमुने रेतः स्खलितं मयि सङ्गतम् ।
ततो जातोऽसि रे पुत्र! वर्धितोऽसि मया शुभम् ।।१०।।

स उवाच

तर्हि तं मे मुनिं मातर्दर्शयस्व तपोनिधिम् ।

ब्रह्मोवाच

तमादाय तदा देवी भारद्वाजं जगाम कुः ।।११।।

**ब्रह्माजीले भन्नुभयो** - हे राजा ! अङ्गारक चतुर्थी अथवा मङ्गलचतुर्थीको महिमा तपाइँ सावधान भएर सुन्नुहोस्, म सङ्क्षेपमा बताउँछु ।।१।। कुनै समयमा अवन्तीनगरमा भारद्वाजनामक ठूला ऋषि थिए। वेद-वेदाङ्गका ज्ञाता, तीक्ष्णबुद्धि, शास्त्रकुशल र अग्निहोत्री ती ऋषि शिष्यहरूलाई वेद-वेदाङ्गको अध्यापन गराउन तत्पर थिए । एक दिन नदीको तीरमा बसी ती मुनि कुनै व्रत गर्दै थिए ।।२-३।। व्रतको अवसरमा तिनले एउटी राम्री अप्सरा देखे । अप्सराको रूपलावण्यबाट विमुग्ध भएका भरद्वाजका मनमा कामक्रीडा गर्ने तीव्र इच्छा पैदा भयो ।।४।। कामबाणको प्रहारबाट विह्वल भारद्वाज ऋषि एकाएक भुईंमा लडे । कामवेदनाका कारण व्याकुल भएका ती ऋषिको सहसा वीर्य पतन भयो । ऋषिको वीर्य पृथिवीको छिद्रमा पस्यो ।।५-६।। त्यसपछि पृथिवीबाट बाह्रमासे फूल झैं रातो कान्ति भएका एउटा कुमार उत्पन्न भए । पृथिवीले ती कुमारको प्रेमपूर्वक पालन-पोषण गरिन् ।।७।। अङ्ग-अङ्गमा रातो कान्ति भएका पुत्र प्राप्त गरेर पृथिवीले आफ्नो जन्म धन्य भएको ठानिन्, आफ्ना बाबु-आमालाई धन्य मानिन् र आफ्नो कुललाई पनि धन्य भएको ठानिन् । समयको क्रममा कुमार बढ्दै जाँदा सात वर्षका भए । त्यस उमेरमा तिनले एक दिन आफ्नी आमा पृथिवीसँग अनेक प्रश्न गरे ।।८।। हे आमा पृथिवी ! म मनुष्यको शरीर लिएर हजुरको काखमा बढिरहेको छु, मेरो शरीरमा रातोपन कसरी आयो ? मेरा पिता को हुनुहुन्छ? यसबारे मलाई अविलम्ब जानकारी दिनुहोस् ।।९।। पृथिवीले भनिन् - भारद्वाज मुनिको वीर्यपतन भएपछि त्यो वीर्य मेरो गर्भमा प्रविष्ट भयो । त्यसै वीर्यद्वारा तिमी मेरो कोखबाट उत्पन्न भएका हौ र मैले पुत्रवत् तिम्रो पालन-पोषण गरिरहेको छु ।।१०।। बालकले भने - त्यसो भए आमा ! मलाई तपोनिधि मुनि भारद्वाजसँग भेट गराउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि पृथिवी ती बालकलाई लिएर भारद्वाज मुनिका आश्रममा गइन् ।।११।।

उवाच प्रणिपत्यैनं त्वद्वीर्यप्रसवं सुतम् ।
वर्धितं तं पुरोधार्य स्वीकुरुष्व मुनेऽधुना ।।१२।।

तदाज्ञया ययौ धात्री स्वधाम रुचिरं तदा ।
भारद्वाजः सुतं लब्ध्वा मुमुदे चालिलिङ्ग तम् ।।१३।।

आघ्राय शिर उत्सङ्गे स्थापयामास तं मुदा ।
सुमुहूर्ते शुभे लग्ने चकारोपनयं मुनिः ।।१४।।

वेदशास्त्राण्युपादिश्य गणेशस्य मनुं शुभम् ।
उवाच कुर्वनुष्ठानं गणेशप्रीतये चिरम् ।।१५।।

सन्तुष्टो दास्यते कामान् सर्वांस्तव मनोगतान् ।
ततः स नर्मदातीरे पद्मासनगतो मुनिः ।।१६।।

सन्नियम्येन्द्रियाण्याशु ध्यायन् हेरम्बमन्तरा ।
जजाप परमं मन्त्रं वायुभक्षो भृशं कृशः ।।१७।।

एवं वर्षसहस्रं स तपस्तेपे सुदारुणम् ।
माघकृष्णाचतुर्थ्यां तमुदये शशिनोऽमले ।।१८।।

दर्शयामास रूपं स्वं गणनाथोऽथ दिग्भुजम् ।
दिव्याम्बरं भालचन्द्रं नानायुधलसत्करम् ।।१९।।

चारुशुण्डं लसद्दन्तं शूर्पकर्णं सकुण्डलम् ।
सूर्यकोटिप्रतीकाशं नानालङ्कारमण्डितम् ।।२०।।

ददर्श रूपं देवस्य स बालः पुरतः स्थितम् ।
उत्थाय प्रणिपत्यैनं तुष्टाव जगदीश्वरम् ।।२१।।

त्यहाँ गएर तिनले भारद्वाजलाई प्रणाम गर्दै निवेदन गरिन् - हे महर्षि ! तपाईंको वीर्यबाट उत्पन्न थी पुत्रको मैले पालन-पोषण गरें। अहिले तपाईंका समीपमा लिएर आएकी छु । यी तपाईंका छोरा हुन्, यिनलाई स्वीकार गर्नुहोस् ।।१२।। पृथिवीको निवेदन सुनेर भारद्वाज ऋषिले पृथिवीलाई तिम्रो काम पूरा भयो, तिमी जाऊ भनेर आज्ञा दिए । पृथिवी पनि आफ्नो धामतर्फ फर्किन् । भारद्वाज ऋषिले अकस्मात् पुत्रप्राप्ति हुँदा हर्षको अनुभव गरी बालकलाई आलिङ्गन गरे ।।१३।। तिनले बालकको शिरमा सुँघेर आनन्दपूर्वक आफ्नो काखमा राखे। ती बालक बाबुको काखमा आनन्दपूर्वक बढ्दै गए । एक दिन भारद्वाज ऋषिले राम्रो मुहूर्त र लग्न भएको समयमा ती बालकको उपनयन संस्कार गरे ।।१४।। संस्कारपछि भारद्वाजले ती बालकलाई वेद र शास्त्रको उपदेश दिए । त्यसका साथै भगवान् श्रीगणेशको उत्तम मन्त्रको पनि उपदेश गरे । उपदेशपछि प्रेमपूर्वक भने - बाबु ! तिमीले भगवान्‌को प्रसन्नताका लागि धेरै कालसम्म श्रीगणेशमन्त्रको अनुष्ठान गर ।।१५।। श्रीगणेश भगवान् सन्तुष्ट हुनुभएपछि उहाँले तिम्रा मनमा रहेका सम्पूर्ण कामनाहरू पूर्ण गराउनुहुनेछ। त्यसपछि ती बालक नर्मदा नदीको तटमा गए, त्यहाँ पद्मासन बाँधी इन्द्रियहरूलाई आफ्नो काबुमा राखेर भगवान् श्रीगणेशको ध्यान गर्दै परममन्त्रको जप आरम्भ गरे । तपस्या गर्दा अत्यन्त दुर्बल रूपमा रहेका बालकले आहारका नाममा हावामात्र पान गरिरहेका थिए ।।१६-१७।। यसरी तिनले एक हजार वर्षसम्म कठोर तपस्या गरे । तिनको कठोर तपस्या देखेर भगवान् श्रीगणेशले माघ कृष्णचतुर्थी तिथिका दिन निर्मल चन्द्रमाको उदय भएपछि तिनलाई आफ्नो दिव्य रूप देखाउनुभयो । दश हातले सुहाउनुभएका, सुन्दर वस्त्र धारण गर्नुभएका, मस्तकमा चन्द्रमा धारण गरी देदीप्यमान हुनुभएका, हातमा शस्त्र-अस्त्र धारण गर्नुहुने, अत्यन्त आकर्षक सुँढले शोभायमान, सेता दाँतका पङ्क्तिहरूबाट सेता किरण छर्नुहुने, नाङ्ला जस्ता कान धारण गर्नुहुने, कुण्डलधारी, कोटिसूर्यसमान प्रकाशद्वारा प्रकाशित र अनेक विभूषणद्वारा विभूषित भगवान् श्रीगणेशको ती बालकले दर्शन गरे । उहाँलाई प्रणाम गरी उनै जगदीश्वरको स्तुति पनि गरे ।।१८-२१।।

### भौम उवाच

नमस्ते विघ्ननाशाय नमस्ते विघ्नकारिणे ।
सुरासुराणामीशाय सर्वशक्त्युपबृंहिणे ।।२२।।

निरामयाय नित्याय निर्गुणाय गुणच्छिदे ।
नमो ब्रह्मविदां श्रेष्ठ! स्थितिसंहारकारिणे ।।२३।।

नमस्ते जगदाधार ! नमस्त्रैलोक्यपालक ! ।
ब्रह्मादये ब्रह्मविदे ब्रह्मणे ब्रह्मरूपिणे ।।२४।।

लक्ष्यालक्ष्यस्वरूपाय दुर्लक्षणभिदे नमः ।
नमः श्रीगणनाथाय परेशाय नमो नमः ।
इति स्तुतः प्रसन्नात्मा परमात्मा गजाननः ।।२५।।

उवाच श्लक्ष्णया वाचा बालकं सम्प्रहर्षयन् ।

### गजानन उवाच

तवोग्रतपसा तुष्टो भक्त्या स्तुत्याऽनयाऽपि च ।।२६।।

बालभावेऽपि धैर्यात्ते ददामि वाञ्छितान् वरान् ।
एवमुक्तो भूमिपूत्रो वच ऊचे गजाननम् ।।२७।।

### भौम उवाच

धन्या दृष्टिर्जननमपि मे दर्शनात्ते सुरेश
धन्यं ज्ञानं कुलमपि विभो भूः सशैलाऽद्य धन्या ।
धन्यं चैतत् सकलमपि तपो येन दृष्टोऽखिलेशो
धन्या वाणी वसतिरपि यया संस्तुतो मूढभावात् ।।२८।।

यदि तुष्टोऽसि देवेश! स्वर्गे भवतु मे स्थितिः ।
अमृतं पातुमिच्छामि देवैः सह गजानन ।।२९।।

**पृथिवीपुत्र भौमले भने** – 'हे विघ्ननाशक भगवान्! हजुरलाई नमस्कार गर्दछु । हजुर विघ्नकर्ता श्रीगणेश हुनुहुन्छ। हजुरका चरणारविन्दमा नमस्कार छ । देवता र दानवका स्वामी, सम्पूर्ण शक्तिहरूका स्रोत, निरामय, दिव्य, निर्गुण, सत्त्व-रज एवं तम गुणहरूका नाशक, हे श्रीगणेश ! हजुरलाई नमस्कार गर्दछु। ब्रह्मज्ञानीहरूमा श्रेष्ठ हे भगवन् श्रीगणेश ! हजुर सृष्टि, स्थिति र संहारका कारण हुनुहुन्छ । म हजुरलाई नमस्कार गर्दछु । हे जगत्का आधार ! स्वर्ग, मर्त्य र पातालका रक्षक, विघ्ननायक, ब्रह्माजीभन्दा पनि जेठा, ब्रह्मवेत्ता, ब्रह्माजीको रूपमा आविर्भाव भएर सृष्टिकार्यको सञ्चालन गर्नुहुने ब्रह्मरूप, साकार एवं निराकार स्वरूप र दुर्लक्षणको भेदन गर्नुहुने हे विघ्ननाथ ! हजुरलाई नमस्कार गर्दछु । हजुर गणनाथ हुनुहुन्छ, महान् देवता पनि । हजुर गजानन हुनुहुन्छ र कृपाका सागर पनि । म हजुरलाई नमस्कार गर्दछु ।' यसरी स्तुति गरिंदा आत्मादेखि नै प्रसन्न हुनुभएका परमात्मा श्रीगणेशले मधुर वचनद्वारा बालकलाई हर्षित तुल्याउँदै भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** – हे बालक ! म तिम्रो कठोर तपस्या, भावपूर्ण भक्ति र स्तुतिवचनबाट ज्यादै प्रसन्न भएको छु ।।२२-२६।। हे भौम ! बालक अवस्थामा पनि धैर्य धारण गरी तपस्या गर्ने तिमीलाई तिम्रो इच्छाअनुसारका वरदान दिन तयार छु । यसरी श्रीगणेशद्वारा सम्बोधन गरिएपछि भूमिपुत्र बालकले भगवान्सँग बिन्ती गरे ।

**भौमले भने** – हे उत्तम देवता ! आज मेरा आँखा धन्य भएका छन् । हजुरको दर्शन पाएर जन्म पनि सफल भएको छ । हे सर्वव्यापक! मेरा ज्ञान र कुल धन्य भएका छन्। आज वन एवं पर्वतले सुहाएकी यी पृथिवी पनि धन्य भएकी छन् र मेरो सम्पूर्ण तपस्या धन्य भएको छ । आज सम्पूर्ण ब्रह्माण्डका स्वामी हजुरको दर्शन पाउँदा मेरा सबै कुरा धन्य भएका छन् । म जहाँ बसिरहेको छु, यो आसन धन्य भएको छ र हजुरसँग प्रार्थना गर्ने यो वाणी पनि धन्य भएको छ । जसले आफूमा अज्ञान हुँदा पनि हजुरको स्तुतिमा सहयोग गरेको छ, त्यस वाणीको महिमा अपरम्पार छ । हे देवताहरूका स्वामी ! हजुर सन्तुष्ट हुनुहुन्छ भने मेरो स्वर्गमा वास होस् । मैले देवताहरूका साथमा रही अमृतपान गर्न

कल्याणकारि मे नाम ख्यातिमेतु जगत्त्रये ।
दर्शनं मे चतुर्थ्यां ते जातं पुण्यप्रदं विभो ।।३०।।

अतः सा पुण्यदा नित्यं सर्वसङ्कष्टहारिणी ।
कामदा व्रतकर्तॄणां त्वत्प्रसादात् सदाऽस्तु च ।।३१।।

गणेश उवाच

अमृतं पास्यते सम्यग् देवैः सह धरासुत ! ।
मङ्गलेति च नाम्ना त्वं लोके ख्यातिं गमिष्यसि।।३२।।

अङ्गारकेति रक्तत्वाद् वसुमत्या यतः सुतः ।
अङ्गारकचतुर्थीं ये करिष्यन्ति नरा भुवि ।।३३।।

तेषामब्दसमं पुण्यं सङ्कष्टीव्रतसम्भवम् ।
निर्विघ्नता सर्वकार्ये भविष्यति न संशयः ।।३४।।

अवन्तीनगरे राजा भविष्यसि परन्तप ! ।
व्रतानामुत्तमं यस्मात् कृतं ते व्रतमुत्तमम् ।।३५।।

यस्य सङ्कीर्तनान्मर्त्यः सर्वान् कामानवाप्नुयात् ।

ब्रह्मोवाच

इति दत्वा वरो देवः पिदधे द्विरदाननः ।।३६।।

ततस्तु मङ्गलो देवं स्थापयामास भक्तितः ।
शुण्डामुखं दशभुजं सर्वावयवसुन्दरम् ।।३७।।

प्रासादं कारयामास गजाननमुदावहम् ।
संज्ञां मङ्गलमूर्तीति देवदेवस्य सोऽकरोत् ।।३८।।

ततोऽभवत् कामदातृक्षेत्रं सर्वजनस्य तत् ।
अनुष्ठानात् पूजनाच्च दर्शनात् सर्वमोक्षदम् ।।३९।।

पाऊँ।।२७-२९।। हे सर्वव्यापक परमेश्वर ! मेरो कल्याणकारी भौम भन्ने नाम तीनै लोकमा प्रसिद्ध होस् । चतुर्थी तिथिका दिन मैले हजुरको पुण्यदर्शन पाएँ । त्यस कारण यो चतुर्थी तिथि पनि संसारमा पुण्यदायक तिथिका रूपमा र सबै प्रकारका कष्टहरूलाई हरण गर्ने सङ्कष्टचतुर्थी तिथिका रूपमा पनि प्रसिद्ध होस् । हजुरको कृपाबाट यो चतुर्थी तिथि श्रीगणेशका भक्तहरूका सबै कामनाहरू पूरा गराउने तिथिका रूपमा पनि संसारमा प्रख्यात होस्।।३०-३१।।

**श्रीगणेशले भन्नुभयो-** हे पृथिवीपुत्र ! तिमीले अब उप्रान्त देवताहरूका साथमा रही अमृतपान गर्नेछौ । तिमी संसारमा भौम अथवा मङ्गल नामबाट प्रसिद्ध हुनेछौ । तिमी पृथिवीका पुत्र हौ र राता वर्णका छौ, अर्थात् बलिरहेको आगाको कोइलाजस्ता राता छौ, त्यस कारण तिमी अङ्गारक नामबाट पनि प्रसिद्ध हुनेछौ । भाद्र महिनाको कृष्णपक्षको चतुर्थी तिथिलाई अङ्गारक चतुर्थी भनिन्छ । त्यसमा जसले श्रीगणेशको व्रत गर्ने छन्, तिनीहरूले पृथिवीमा एक वर्षसम्म निरन्तर चतुर्थीव्रत गरेको पुण्य प्राप्त गर्नेछन् । तिनका सबै कार्य निर्विघ्नतापूर्वक सम्पन्न हुनेछन्। यसमा कुनै पनि शङ्का छैन । हे भौम ! तिमी अब अवन्तीनगरका राजा हुनेछौ । यो राजा हुन पाउनु पनि तिमीले गरेका उत्तम व्रतकै कारण हो ।।३२-३५।। तिम्रो कीर्तन गर्ने मानिसका सबै प्रकारका इच्छाहरू परिपूर्ण हुनेछन्।

**ब्रह्माजीले भन्नुभयो -** यसरी भगवान् श्रीगणेश पृथिवीपुत्र भौमलाई वरदान दिएर अन्तर्धान हुनुभयो ।।३६।। त्यसपछि भौमले मुखमा सूँढ लिएर सुहाउनुभएका र दश हात धारण गर्ने सर्वाङ्गसुन्दर भगवान् श्रीगणेशको प्रतिमा भक्तिपूर्वक स्थापना गरे । श्रीगणेशको प्रतिमाको प्रतिष्ठाका लागि श्रीगणेशलाई अत्यन्त प्यारो लाग्ने सुन्दर मन्दिरको निर्माण गरे । मङ्गलद्वारा स्थापित देवताहरूका पनि देवता श्रीगणेशको नाम मङ्गलमूर्ति रहन गयो ।।३७-३८।। मन्दिरको स्थापनापछि त्यहाँ रहेका मङ्गलमूर्ति श्रीगणेशको प्रतिमा मानिसले चिताएका कुरा पुर्‍याउने मूर्तिका रूपमा प्रसिद्ध भयो र त्यो क्षेत्र श्रीगणेशक्षेत्रका नामबाट संसारमा विख्यात भयो । त्यस क्षेत्रमा श्रीगणेशमन्त्रको अनुष्ठान, श्रीगणेशको आराधना र श्रीगणेशप्रतिमाको दर्शन गर्नाले सबैले मोक्ष प्राप्त गर्दछन् । त्यस कारण यो क्षेत्र उत्तम क्षेत्र हो भन्ने कुरा पनि

ततो विनायको देवो विमानवरमुत्तमम् ।
प्रेषयामास स्वगणैर्भौममानेतुमन्तिकम् ।।४०।।

ते गत्वा तेन देहेन तं भौममानयन् बलात् ।
गणेशस्यान्तिकं राजँस्तदद्भुतमिवाभवत् ।।४१।।

ततो भौमोऽभवत् ख्यातस्त्रैलोक्ये सचराचरे ।
यतो भौमेन सङ्कष्टचतुर्थी भौमसंयुता ।।४२।।

कृता प्राप्तञ्च स्वर्गे चामृतपानं सुरैः सह ।
अतश्चाङ्गारकयुता चतुर्थी प्रथिता भुवि ।।४३।।

चिन्तितार्थप्रदानेन चिन्तामणिरिति प्रथाम् ।
प्रयातो मङ्गलमूर्तिः सर्वानुग्रहकारकः ।।४४।।

पारिनेरात्तु नगरात् पश्चिमे प्रथितोऽभवत् ।
चिन्तामणिरिति ख्यातः सर्वविघ्ननिवारणः ।।४५।।

अधुना सिद्धगन्धर्वैः पूज्यते स विधूदये ।
ददाति वाञ्छितानर्थान् पुत्रपौत्रादिसम्पदः ।।४६।।

संसारमा फैलियो ।।३९।। मङ्गलले मङ्गलमूर्ति श्रीगणेशको मूर्तिको प्रतिष्ठा गरेपछि प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले मङ्गललाई आफ्नो धाममा ल्याउन गणहरूद्वारा उत्तम विमान पठाउनुभयो ।।४०।। श्रीगणेशका गणले मङ्गलको समीपमा गएर तिनलाई त्यो विमानमा राखी श्रीगणेशधाममा पुऱ्याए । यो घटना संसारमा एउटा अचम्मको घटनाका रूपमा चर्चित भयो ।।४१।। त्यसपछि मङ्गल सम्पूर्ण त्रिलोकीमा प्रख्यात भए । मङ्गलचतुर्थीको व्रत गरेका कारण मङ्गल मङ्गलका रूपमा विख्यात भए । त्यस कारण तिनले स्वर्गमा गई देवताहरूका साथमा बसेर अमृतपान गर्ने अवसर प्राप्त गरे। चतुर्थी तिथिमा मङ्गलवारको संयोग हुँदा त्यस तिथिलाई मङ्गलचतुर्थी अथवा सङ्कष्टचतुर्थी पनि भन्ने गरिन्छ । त्यस चतुर्थीलाई मङ्गलले युक्त चतुर्थी भएका कारण अङ्गारकचतुर्थी पनि भन्दछन्। चिताएको कामना पूरा गर्ने हुँदा मङ्गलले स्थापना गरेका मङ्गलमूर्ति श्रीगणेश संसारमा चिन्तामणि श्रीगणेशका नामबाट पनि प्रसिद्ध हुनुभयो।।४२-४४।। मङ्गलमूर्ति श्रीगणेश पारीनेरनामक नगरबाट पश्चिम दिशामा सर्वविघ्नविनाशक चिन्तामणि श्रीगणेशका रूपमा पनि प्रसिद्ध हुनुभयो ।।४५।। आज पनि ती श्रीगणेश चन्द्रमाको उदयकालमा सिद्ध र गन्धर्वहरूद्वारा पूजित हुनुहुन्छ । उहाँले साधकहरूलाई पुत्र, पौत्र, सम्पत्ति, ज्ञान र अरू अभीष्टहरूको पनि सिद्धि प्रदान गर्नुहुन्छ ।।४६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डेऽङ्गारकचतुर्थीव्रतोपाख्याने षष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'अङ्गारचतुर्थीव्रतको महिमा र मङ्गलमूर्ति श्रीगणेशको प्रतिष्ठाप्रसङ्ग' शीर्षकान्वित साठीऔँ अध्याय पूर्ण भयो ।।६०।।

ॐ

# एकषष्टितमोऽध्याय:　　{ ६१ अध्याय }

**ब्रह्मोवाच**

एकदाऽहं गतो राजन् ! कैलासं गिरिशालयम् ।
उपविष्टः सभामध्येऽपश्यन्नारदमागतम् ।।१।।

तेनाऽपूर्वं फलञ्चैकं शङ्कराय निवेदितम् ।
ययाचे गणपस्तत्तु कुमारोऽपि च शम्भवे ।।२।।

कस्मै देयं फलमिदमपृच्छच्छङ्करोऽपि माम् ।
अहं प्रोवाच बालाय कुमारायेति तं तदा ।।३।।

दत्तं शिवेन तस्मै तच्चुक्रोध च गजाननः ।
ततो ब्रह्मा स्वभवनं गत्वा स्रष्टुमियेष सः ।।४।।

तत्र विघ्नकरो विघ्नं चकार परमाद्भुतम् ।
उग्ररूपं समास्थाय भीषयामास मां तदा ।।५।।

मयि भ्रान्तेऽथ स विधुर्दृष्ट्वा क्रूरतरं तु तम् ।
अहसत् परमं चन्द्रः स्वगणैर्द्विरदाननम् ।।६।।

ततः परमक्रुद्धोऽसावशपत् तं विभुं तदा ।
अदर्शनीयस्त्रैलोक्ये मद्वाक्यात् त्वं भविष्यसि ।।७।।

कदाचित् केन दृष्टः स महापातकवान् भवेत् ।
एवं शप्त्वा गतो देवो निजधाम गणैर्वृतः ।।८।।

चन्द्रस्तु मलिनो दीनो लीनश्चिन्तामये ह्रदे ।
अणिमादिगुणोपेते जगत्कारणकारणे ।।९।।

कथमाचरितं दौष्ट्यमज्ञानाद् बालवन्मया ।
अदर्शनीयः सर्वेषां विवर्णो मलिनोऽभवम् ।।१०।।

कथं सुरूपो वन्द्यश्च कलाभिः सुरतोषकः ।
एतस्मिन्नन्तरे देवैः श्रुतः शापो महान् विधोः ।।११।।

तत्रेयुर्वह्निशक्राद्या यत्रास्तेऽसौ गजाननः ।
विजिज्ञपुः सुरौघास्ते विघ्नकारणकारिणे ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** – एक दिन म भगवान् शङ्करको धाम कैलासमा पुगेको थिएँ । सभामा बसेको समयमा मैले नारद ऋषिलाई त्यहाँ आएको देखें ।।१।। नारदजीले एउटा अपूर्व फल ल्याएर भगवान् शङ्करलाई टक्र्याए । त्यो देखेर श्रीगणेशले मलाई दिनुहोस् भन्नुभयो भने स्वामी कार्तिकेयले पनि मलाई मलाई भन्दै हात फैलाउनुभयो ।।२।। शङ्करले मेरो मुखमा हेरी हे ब्रह्माजी ! मैले यो फल कसलाई दिऊँ ? भनेर सोध्नुभयो। मैले कार्तिकेयलाई दिनुहोस् भनें ।।३।। मैले भनेअनुसार उहाँले त्यो फल कार्तिकेयलाई दिनुभयो । तर श्रीगणेश भने मसँग रिसाउनुभयो । त्यसपछि म सत्यलोक गएँ । त्यहाँ गएर सृष्टि गर्ने चाहना गरें ।।४।। श्रीगणेशले अद्भुत विघ्न गर्नुभयो र डरलाग्दो रूप देखाएर मलाई तर्साउनुभयो ।।५।। म भ्रान्तिमा परें । उग्ररूप लिनुभएका श्रीगणेशलाई देखेर चन्द्रमाले आफ्ना गणका साथ बसी श्रीगणेशको उपहास गरे ।।६।। चन्द्रमाप्रति क्रुद्ध हुनुभएका श्रीगणेशले चन्द्रमालाई सराप दिंदै भन्नुभयो – 'हे चन्द्रमा ! तिमी मेरो वचनअनुसार देख्नै नहुने पतित हुनेछौ, कुनै खास समयमा तिमीलाई कसैले देख्यो भने त्यो दर्शक महापातकी हुनेछ ।' यसरी चन्द्रमालाई सराप दिएर श्रीगणेश आफ्ना गणहरूका साथ धामतर्फ जानुभयो ।।७-८।। श्रीगणेशको सराप परेपछि चन्द्रमा मलिन र दीन भएर चिन्ताको सागरमा डुबे । मनमनै भन्न लागे – अहो! अणिमा, महिमा आदि सिद्धिहरूले सम्पन्न र जगत्का कारणका पनि कारण श्रीगणेशसँग मैले अज्ञानका कारण केटाकेटीको जस्तो दुष्ट आचरण गरें । अतिसुन्दर, सबैद्वारा वन्दित र आफ्ना कलाद्वारा देवताहरूलाई पनि खुसी प्रदान गर्ने म आज धिक्कार योग्य पात्र छु र कुरूप भएको छु । यसैबीचमा देवताहरूले पनि चन्द्रमालाई श्रीगणेशले दिनुभएको सरापको विषयमा जानकारी पाए ।।९-११।। अग्नि, इन्द्र आदि देवताहरू भगवान् श्रीगणेश विराजमान हुनुभएको ठाउँमा पुगे । तिनीहरूले विघ्ननायक श्रीगणेशलाई आफ्नो भक्तिभाव समर्पण गर्दै भने।।१२।।

देवा ऊचुः

त्वं देवदेव ! जगतामसि वन्दनीय-
स्त्वं पासि हंसि विदधासि यथेष्टमीश! ।
त्वं निर्गुणोऽपि गुणकृद् गुणिनां त्र्यधीश!
त्वामेव देव ! शरणं वयमद्य याताः ।।१३।।

पाहीश ! नोऽखिलजगत् तव शापभीतं
चन्द्रेऽपराधिनि कथं पतितं सुकष्टम् ।
तस्माद् वयं च जगदीश ! जगच्च चन्द्रः
शर्माप्नुयाम भुवनेश ! तथा विधेहि ।।१४।।

कष्टे निपतितं विश्वमदृश्ये शशिनि प्रभो ! ।
अनुग्रहश्च चन्द्रेऽस्मिँस्त्रैलोक्ये कर्तुमर्हसि ।।१५।।

नाज्ञासीद् यस्य ते रूपं महिमानं श्रुतित्रयम् ।
स कस्य स्तवनीयः स्यात् तथापि स्तूयसेऽखिलैः।।१६।।

कृतकृत्या वयं तेऽद्य दर्शनाद् भाषणादपि ।
शरणं ते प्रपन्नाः स्मः प्रपन्नार्तिहराव्यय ! ।।१७।।

इति तद्वचनं श्रुत्वा जगाद द्विरदाननः ।
सुप्रसन्नः स्तवैस्तेषां धर्मकामार्थमोक्षदः ।।१८।।

विकट उवाच

प्रसन्नोऽहं सुराःस्तुत्या वृणुध्वं वाञ्छितं महत् ।
असाध्यमपि वो दद्यां त्रिषु लोकेषु यद् भवेत् ।।१९।।

देवा ऊचुः

सुधाकरेऽनुग्रहं ते सर्व ईहामहे वयम् ।
अनुगृहीते तस्मिँस्तु निखिलानुग्रहो भवेत् ।।२०।।

गणेश उवाच

एकाब्दं वा तदर्धं वा तदर्धार्धमथापि वा ।
अदर्शनीयोऽस्तु शशी वृताऽन्यं वा वरं सुराः ।।२१।।

**देवताहरूले भने** - 'हे देव ! हजुर संसारका वन्दनीय पुरुष हुनुहुन्छ र आफ्नो इच्छाअनुसार जगत्को रचना, पालन र विनाश गर्नुहुन्छ । हे त्रिलोकीका स्वामी ! हजुर गुणरहित हुनुहुन्छ तापनि गुणवान्हरूलाई सत्त्व, रज र तम नामक गुणहरूको सृष्टि गरी मोहित तुल्याउनुहुन्छ । हे देव ! हामी हजुरको शरणमा आएका छौं ।।१३।। हजुरको सरापबाट भयभीत सम्पूर्ण संसारको रक्षा हजुरबाहेक अरूबाट हुन सक्दैन। हजुरले रक्षा गर्नुहोस् । अपराधी चन्द्रमालाई आज ठूलो कष्ट आइलागेको छ । यो सरापबाट संसार र चन्द्रमासमेत हामी देवता दुःखी छौं । हे भुवनपति ! हामी सबैले जसरी कल्याण एवं शान्ति प्राप्त गर्न सक्छौं त्यस्तो उपाय गर्नुहोस्।।१४।। आज चन्द्रमा अदृश्य भएकाले संसार नै कष्टमा परेको छ । त्रिलोकी र चन्द्रमा दुबैमा हजुरले दया गर्नुहोस् ।।१५।। हजुरको महिमालाई ऋग्वेद, यजुर्वेद एवं सामवेदले पनि जान्न सकेका छैनन्। अपरम्पार महिमशाली हजुरको स्तुति कसले गर्न सक्छ? तापनि सबैले आफ्नो ज्ञानअनुसार स्तुति गरेकै हुन्छन् ।।१६।। आज हजुरको दर्शन र हजुरसँग संवादसमेत गर्न पाएर हामी कृतकृत्य भएका छौं । शरणागतहरूका दुःखनाशक हे अव्यय भगवन् ! हामी हजुरको शरणमा परेका छौं' ।।१७।। देवताहरूको प्रार्थनामय वचन सुनेर प्रसन्न हुनुभएका पुरुषार्थका दाता श्रीगणेश भगवान्ले भन्नुभयो ।।१८।।

**विकटरूप श्रीगणेशले भन्नुभयो** - हे देवगण ! तपाईंहरूको स्तुति वचनबाट म प्रसन्न भएको छु । आफूहरूले चाहेको वरदान स्वीकार गर्नुहोस् । तीनै लोकमा रहेका कुनै पनि विषयको प्राप्तिका लागि व्यक्त गरिने दुर्लभ र असाध्य कामना पनि म पूरा गर्नेछु ।।१९।।

**देवताहरूले भने** - हे भगवन् ! हामी सबै चन्द्रमामाथि हजुरको करुणा होस् भन्ने कामना गर्दछौं । हजुरको करुणा भएमा हामी सबैको कल्याण हुनेछ र अनुगृहीत पनि हुनेछौं।।२०।।

**श्रीगणेशले भन्नुभयो-** हे देवतागण! एक वर्ष अथवा त्यसको आधा अथवा त्यसको पनि आधा अथवा त्यसको पनि आधा समय चन्द्रमा अदर्शनीय नै हुनेछन् । अरू वर माग्नुहोस् ।।२१।। त्यसपछि देवताहरूले भगवान् गजाननलाई

ततस्ते दण्डवत् सर्वे प्रणेमुर्द्विरदाननम् ।
उवाच प्रणताँस्ताँस्तु विकटो भावपूर्वकम् ।।२२।।

अप्रमाणं कथमहो वचनं कर्तुमुद्यताः ।
शरणञ्च प्रपन्नानां न त्यागं कर्तुमुत्सहे ।।२३।।

मेरुश्चलेत् पतेत् सूर्यो वह्निः शीतो भवेद् यदि ।
मर्यादामुत्सृजेत् सिन्धुर्वचो मे नानृतं भवेत् ।।२४।।

अथापि गदतो वाक्यं शृणुध्वं सुरसत्तमाः ।
भाद्रशुक्लचतुर्थ्यां यो ज्ञानतोऽज्ञानतोऽपि वा ।।२५।।

अभिशापी भवेच्चन्द्रदर्शनाद् भृशदुःखभाक् ।।
इति तद्वचनं श्रुत्वा देवा मुमुदिरेऽखिलाः ।।२६।।

ओमिति प्रणिपत्योचुः पुष्पवृष्टिञ्च चिक्षिपुः ।
तदनुज्ञां गृहीत्वेयुर्देवाश्चन्द्रमसं प्रति ।।२७।।

तमूचुस्त्वं मूढतरो योऽहसद् द्विरदाननम् ।
त्रैलोक्यं सङ्कटे क्षिप्तं त्वया श्रेष्ठापराधिना ।।२८।।

त्रैलोक्यनायके देवे जगत्त्रयविधायिनि ।
अव्यये निर्गुणे नित्ये परब्रह्मस्वरूपिणि ।।२९।।

गजाननेऽखिलगुरावपराधं यतोऽचरः ।
एवं नियमितं तेन सर्वलोकहितेप्सुना ।।३०।।

अस्माभिः परमक्लेशात् प्रसन्नोऽसौ कृतो विभुः ।
भाद्रपदचतुर्थ्यां त्वं न द्रष्टव्यः कदाचन ।।३१।।

त्वं चापि शरणं याहि देवदेवं गजाननम् ।
तत्प्रसादाच्छुद्धतनुः परां ख्यातिमवाप्स्यसि ।।३२।।

इति चन्द्रो वचः श्रुत्वा देवानां हितमात्मनः ।
जगाम शरणं देवं शरणागतवत्सलम् ।।३३।।

गजाननं सुरेशानं महेशानादिवन्दितम् ।
जजाप परमं मन्त्रमेकाक्षरमघापहम् ।।३४।।

विधुरिन्द्रोपदिष्टं स परमेण समाधिना ।
दश द्वादश वर्षाणि तपस्तेपे सुदारुणम् ।।३५।।

प्रणाममात्र गरे केही बोल्न सकेनन्। विकटरूप भगवान्ले तिनलाई भावपूर्वक भन्नुभयो - हे देवतागण ! तपाईंहरू मेरो वचनलाई प्रमाणहीन र असत्य तुल्याउन किन तयार हुनुभएको छ ? तपाईंहरूको यो अवस्था देखेर शरणागत हुनुभएका तपाईंहरूलाई त्याग्न असमर्थ छु । मेरु चलायमान हुनसक्छ, सूर्य खस्न सक्छ, आगाको स्वभाव शीतल हुनसक्छ र सागरले मर्यादा नाघ्न सक्छ तर मेरो वचन असत्य हुँदैन । यी सबै कुरा साँचा हुन् तापनि म तपाईंहरूसँग कुरा गर्न तयार छु । मेरो कुरा सुन्नुहोस्- भाद्र शुक्ल चतुर्थीका दिन जसले जानी-नजानी चन्द्रमाको दर्शन गर्नेछ, त्यो मानिस अभिशप्त हुनेछ र दुःखी पनि । श्रीगणेशको यो कुरा सुनेर सबै देवता आनन्दित भए ।।२२-२६।। प्रणाम गर्दै तिनले श्रीगणेशमा पुष्पवृष्टि गरे र उहाँको आज्ञा लिएर चन्द्रमाको नजिकमा गए ।।२७।। तिनले चन्द्रमालाई भने - तिमी अत्यन्त मूर्ख छौ, तिमीले भगवान् श्रीगणेशको उपहास गर्‍यौ, ठूलामाथि अपराध गर्ने तिमीले आफूलाई र त्रिलोकीलाई पनि सङ्कटमा पुर्‍यायौ ।।२८।। त्रिलोकीका नायक र रचयिता, अव्यय, निर्गुण, नित्य, परब्रह्मरूप, सबैका गुरु गजानन भगवान्मा तिमीले अपराध गरेका कारण सबै लोकको हित चाहने प्रभुले तिमीलाई सराप दिएर तिमीमाथि आफ्नो नियन्त्रण कायम गर्नुभएको छ ।।२९-३०।। हामीले ठूलो कष्ट गरेर प्रभुलाई प्रसन्न तुल्यायौं। अब तिमी सर्वदा भाद्रशुक्ल चतुर्थी तिथिमा दर्शन गर्नै नहुने दोषीका रूपमा अभिशप्त भएका छौ ।।३१।। तिमी आफै पनि भगवान् श्रीगणेशको शरणमा जाऊ, उहाँको कृपाबाट शुद्ध भई संसारमा ठूलो ख्याति पाउनेछौ ।।३२।। आफ्नो हितका लागि भनिएका देवताहरूका कुरा सुनेर चन्द्रमा शरणागतवत्सल, सबैका स्वामी, शिव आदि देवताहरूबाट वन्दित गजानन प्रभुका शरणमा गए । त्यहाँ तिनले इन्द्रद्वारा उपदेश गरिएको भगवान् श्रीगणेशको पापनाशक एकाक्षरी मन्त्रको जप गरे ।।३३-३४।। ठूलो योगको आश्रय लिएर चन्द्रमाले सबै प्रकारका सिद्धि प्रदान गर्न समर्थ गङ्गाको तीरमा बसी एक सय बीस वर्षसम्म दीर्घकालीन तपस्या गरे ।।३५।। चन्द्रमाका तपबाट प्रसन्न, राता माला र राते वस्त्र धारण गर्नुहुने, रक्तचन्दनको लेपन गर्नुभएका, चतुर्भुज,

गङ्गाया दक्षिणे तीरे सर्वसिद्धिप्रदायिनि ।
ततः प्रसन्नो भगवान् पुरो यातो गजाननः ।।३६।।
रक्तमाल्याम्बरधरो रक्तचन्दनचर्चितः ।
चतुर्भुजो महाकायः सिन्दूरारुणविग्रहः ।।३७।।
प्रभया भासयँल्लोकान् कोटिसूर्याधिकप्रभः ।
तेजःसमूहं दृष्ट्वा तं प्रचकम्पे भृशं शशी ।।३८।।
परमं धैर्यमास्थाय कृताञ्जलिपुटः पुरः ।
तर्कयामास मनसा प्रायोऽयं द्विरदाननः ।।३९।।
वरं दातुमिहायात इति मत्वा ननाम तम् ।
तुष्टाव परया भक्त्या देवदेवं गजाननम् ।।४०।।

चन्द्र उवाच

नमामि देवं द्विरदाननं तं
य: सर्वविघ्नं हरते जनानाम् ।
धर्मार्थकामाँस्तनुतेऽखिलानां
तस्मै नमो विघ्नविनाशनाय ।।४१।।
कृपानिधे ब्रह्ममयाय देव!
विश्वात्मने विश्वविधानदक्ष! ।
विश्वस्य बीजाय जगन्मयाय
त्रैलोक्यसंहारकृते नमस्ते ।।४२।।
त्रयीमयायाऽखिलबुद्धिदात्रे
बुद्धिप्रदीपाय सुराधिपाय ।
नित्याय सत्याय च नित्यबुद्धे!
नित्यं निरीहाय नमोऽस्तु नित्यम् ।।४३।।
अज्ञानदोषेण कृतोऽपराध-
स्तं क्षन्तुमर्होऽसि दयाकर ! त्वम् ।
तवापि दोषः शरणागतस्य
त्यागे महात्मन्! कुरु मेऽनुकम्पाम्।।४४।।

ब्रह्मोवाच

इति तद्वचनं श्रुत्वा सुप्रसन्नो गजाननः ।
तस्मै वरान् ददौ देवः स्तुत्या नत्या सुतोषितः ।।४५।।

विशाल, सिन्दूर लेपनका कारण सम्पूर्ण शरीरमा रातो कान्ति धारण गर्नुहुने, आफ्नो शोभाले लोकलाई चहकिलो तुल्याउनुभएका र करोडौं सूर्यको कान्तिभन्दा पनि उत्तम कान्तिले जगत्लाई प्रकाशमय तुल्याउनुहुने भगवान् गजानन चन्द्रमाका सामु आउनुभयो । उहाँको तेजःपुञ्जको दर्शन गरेर चन्द्रमा काँप्न थाले ।।३६-३८।। ठूलो धैर्यका साथ दुवै हात जोडी उभिएका चन्द्रमाले मनमनै मेरा सामु भगवान् श्रीगणेश नै आउनुभएको छ भन्ने अनुमान गर्दै भगवान् श्रीगणेश मलाई वर दिन दुःख पाउनुभएको हो भन्ने विचार गरी बार-बार प्रणाम गरे । अनि भक्तिपूर्वक भगवान्को स्तुति गरे ।।३९-४०।।

**चन्द्रमाले भने** - सबै विघ्नहरूको विनाश गर्नुहुने गजानन श्रीगणेश प्रभुलाई म प्रणाम गर्दछु। जसले सबै मानिसका लागि धर्म, अर्थ, काम र मोक्षनामक पुरुषार्थको विस्तार गर्नुहुन्छ ती विघ्नविनाशक प्रभुलाई प्रणाम गर्दछु ।।४१।। हे करुणासागर! ब्रह्मरूप हजुरलाई प्रणाम गर्दछु । विश्व निर्माण कलाका उत्तम कलाकार हे श्रीगणेश प्रभु ! विश्वात्मा हजुरलाई प्रणाम गर्दछु! विश्वका आदिकारण, जगत्का कण-कणमा व्याप्त भएर रहनुहुने र त्रिलोकीको संहार गर्नुहुने हजुरलाई प्रणाम गर्दछु ।।४२।। नित्य बुद्धिद्वारा अनुप्राणित हे श्रीगणेश भगवान् ! वेदरूप, बुद्धिदाता, बुद्धिका प्रकाशक र देवताका अधिपति हजुरलाई म प्रणाम गर्दछु । नित्य र सत्यरूप हजुरलाई प्रणाम गर्दछु । हे नित्यबुद्धि परमेश्वर ! नित्य निरीह भइरहनुहुने हजुरलाई म दिनदिनै प्रणाम गर्दछु ।।४३।। हे दयालु भगवान्! अज्ञानका दोषबाट मैले हजुरप्रति ठूलो अपराध गरें त्यो अपराधलाई क्षमा दिनुहोस् । हजुरले शरणको मरण गर्नुभयो भने मेरो कुनै आश्रय हुने छैन । हजुरलाई पनि ठूलो दोष आइलाग्नेछ । त्यस कारण ममाथि करुणा गर्नुहोस् ।।४४।।

**ब्रह्माजीले भन्नुभयो** - भक्तिभावनाले युक्त चन्द्रमाको प्रार्थना सुनेर भगवान् गजानन प्रसन्न हुनुभयो । स्तुति र प्रणतिबाट सन्तुष्ट हुनुभएका भगवान् श्रीगणेशले चन्द्रमालाई वरदान दिंदै भन्नुभयो।।४५।। 'हे चन्द्रमा ! तिम्रो रूप पहिलेकै

यथापूर्वं स्थितं रूपं तथा तत् ते भविष्यति ।
भाद्रशुक्लचतुर्थ्यां त्वां यो नरः सम्प्रपश्यति ।।४६।।

तस्याभिशापो नूनं स्यात् पापं हानिश्च मूर्खता ।
तस्यामदर्शनीयोऽसि यदुक्तं मे सुरैः सह ।।४७।।

कृष्णपक्षे चतुर्थ्यां तु व्रतं यत् क्रियते नरैः ।
तवोदयेऽहं पूज्यस्त्वं पूजनीयः प्रयत्नतः ।।४८।।

दर्शनीयः प्रयत्नेन विपरीते व्रतं वृथा ।
ललाटे कलया तिष्ठ मम प्रीतिकरः शशिन् ।।४९।।

प्रतिमासं द्वितीयायां नमस्यश्च भविष्यसि ।
एवं लब्धवरश्चन्द्रो यथापूर्वोऽभवत् तदा ।।५०।।

स्थापयामास वरदमूर्तिं देवर्षिभिः सह ।
भालचन्द्रेति नामाऽस्य चक्रुस्ते मुनयः सुराः ।।५१।।

प्रासादं कारयामास काञ्चनं रत्नसंयुतम् ।
उपचारैः षोडशभिः पूजयामास सादरम् ।।५२।।

पूजयित्वा सुराः सर्वे मुनयश्च वरान् ददुः ।
सिद्धिक्षेत्रमिदं लोके विख्यातं तु भविष्यति ।।५३।।

अनुष्ठानवतामत्र सर्वसिद्धिकरं भवेत् ।
ततस्ते देवमुनयो नत्वा तं द्विरदाननम् ।।५४।।

ययुः प्रसन्नमनसः स्वं स्वं स्थानं मुदा युताः ।
यातेषु देवमुनिषु देवोऽपि पिदधे वपुः ।।५५।।

अन्तर्हिते भालचन्द्रे चन्द्रो हृष्टमना इव ।
स्वं धाम प्रतिपद्यैव स्वं धाम प्रययौ तदा ।।५६।।

जस्तै ज्योतिर्मय हुनेछ, भाद्र शुक्ल चतुर्थी तिथिमा जुन मानिसले तिम्रो दर्शन गर्नेछ, त्यसमाथि मात्र मेरो सराप प्रभावकारी हुनेछ । त्यसको परिणामस्वरूप त्यस मानिसले पाप, हानि र मूर्खताजस्ता दुर्गुणहरू सहनु पर्नेछ, तिमी त्यस चतुर्थी तिथिमा दर्शनका लागि अयोग्य हुनेछौ, यो कुरा मैले देवताहरूलाई पनि भनिसकेको छु ।।४६-४७।। कृष्णपक्षको चतुर्थी तिथिमा मेरो व्रत गर्ने साधकले चन्द्रमाको उदय हुँदा पूजा गर्नुपर्दछ । त्यसबाट म प्रसन्न हुनेछु र दर्शनीय पनि । त्यसपछि तिमी पनि पूजनीय र दर्शनीय हुनेछौ । त्यो दिन साधकले तिम्रो दर्शन गर्नु पर्नेछ, दर्शन नगर्दा विपरीत फल प्राप्त हुनेछ । हे चन्द्रमा ! तिमी मेरा प्यारा छौ, मेरो निधारमा बस । हरेक महिनाको कृष्णपक्षको द्वितीया तिथिमा तिम्रो आराधना कल्याणकारी हुनेछ । यसरी वरदान प्राप्त गरेका चन्द्रमा पहिलेजस्तै कान्तिसम्पन्न भए ।।४८-५०।। चन्द्रमाले देवता र ऋषिहरूका साथ भगवान् श्रीगणेशको वरदमूर्तिको स्थापना गरे । ती मुनि र देवताले ती वरदमूर्ति श्रीगणेशलाई भालचन्द्रको नामबाट सम्बोधन गरे ।।५१।। भालचन्द्र भगवान् श्रीगणेशको मूर्तिप्रतिष्ठापछि चन्द्रमाले सुवर्ण र रत्नले झकिझकाउ सुन्दर मन्दिर पनि बनाए । त्यहाँ रहेर षोडशोपचारले श्रद्धापूर्वक भगवान् भालचन्द्रको पूजा गरे । त्यसपछि सबै देवता र मुनिले भने - 'यो क्षेत्र संसारमा सिद्धिक्षेत्रका नामबाट विख्यात हुनेछ र यहाँ आई व्रत गर्ने मानिसहरूले सबै प्रकारका सिद्धि प्राप्त गर्नेछन् ।' त्यसपछि देवता र मुनिहरू श्रीगणेशलाई प्रणाम गरी सहर्ष आ-आफ्ना धामतर्फ गए । तिनीहरूको प्रस्थानपछि भगवान् श्रीगणेश पनि अन्तर्धान हुनुभयो । भगवान् भालचन्द्रको अन्तर्धानपछि प्रसन्न भएका चन्द्रमा आफ्नो कलामय स्वरूप धारण गरेर मात्र चन्द्रलोकतर्फ फर्किए ।।५२-५६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चन्द्रशापानुग्रहदर्शनं नामैकषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'चन्द्रमालाई सराप र अनुग्रह' शीर्षकान्वित एकसठीऔं अध्याय पूर्ण भयो ।।६१।।

ॐ

# द्विषष्टितमोऽध्यायः { ६२ अध्याय }

कृतवीर्यपितोवाच

चतुर्थ्यां कृष्णपक्षे तु भक्तिश्चन्द्रोदये यतः ।
क्रियते तन्निमितं यत्पृष्टं तन्मे निरूपितम् ।।१।।

दूर्वाङ्कुरार्पणस्यापि श्रोतुमिच्छामि कारणम् ।
किमर्थं गणनाथस्य प्रिया दूर्वाङ्कुरा वद ।।२।।

ब्रह्मोवाच

हन्त ते कथयिष्यामि दूर्वाङ्कुरसमर्पणे ।
यत् फलं गणनाथस्य श्रूयतां तन्नृपोत्तम ।।३।।

जाम्बेति नगरी ख्याता देशे दक्षिणतोऽभवत् ।
क्षत्रियः सुलभोऽस्यां तु गुणी दानी धनी बली ।।४।।

विवेक्यासीन् मान्यमानी शमी दमपरायणः ।
सर्वशास्त्रार्थतत्त्वज्ञः सर्ववेदार्थतत्त्ववित् ।।५।।

विकटे भक्तिमान् नित्यं स्तुतिस्तोत्रपरायणः ।
तस्य भार्या सुमुद्राऽऽसीन्नाम्ना परमविश्रुता ।।६।।

अत्यन्तसुन्दरी साध्वी स्वरूपाद्धिक्कृताप्सराः ।
देवविप्राऽतिथिपरा पत्युश्चित्तानुवर्तिनी ।।७।।

पतिव्रतानां सर्वासां मान्या श्रेष्ठतमा नृप ! ।
एकस्मिन् दिवसे तौ तु दम्पती स्राननिर्मलौ ।।८।।

उपविष्टौ पुराणार्थं परस्परमनोनुगौ ।
यावत्तावत् समायातो ब्राह्मणो मधुसूदनः ।
भिक्षाभिलाषी सततं परमेश्वरचिन्तकः ।।९।।

कुचैलश्च दरिद्रत्वात् साम्बरोऽपि दिगम्बरः ।
सुलभस्तं तु दृष्ट्वैव प्रणनाम मुदा युतः ।।१०।।

जहास चैनं सहसा मोहाविष्टो द्विजोत्तमम् ।
स उवाच ततः शापं प्रतिक्षुब्धो महामुनिः ।।११।।

क्रोधसंरक्तनयनस्त्रैलोक्यं प्रदहन्निव ।
हलकर्षणको नित्यं नित्यं दुःखसमन्वितः ।।१२।।

**कृतवीर्यका पिताले भने -** कृष्ण पक्षको चतुर्थी तिथिमा चन्द्रोदय हुँदा कुन कारणले भक्ति गरिन्छ त्यसबारे प्रश्नको उत्तर सुन्ने मौका पायौं । श्रीगणेशलाई दूबो किन अर्पण गरिन्छ? त्यसको कारण बताउनुहोस्। फेरि श्रीगणेशलाई किन दूबो अत्यन्त प्यारो लाग्छ ? यस प्रश्नको पनि उत्तर दिनुहोस् ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो -** हे नृपोत्तम ! भगवान् श्रीगणेशलाई दूर्वाङ्कुर समर्पण गर्दा जुन फल प्राप्त हुन्छ, त्यसबारे म बताउँछु ।।३।। भारतको दक्षिण भागमा जाम्बा नगरी थियो । त्यहाँ सुलभ नामक क्षत्रिय बस्ने गर्दथे । ती गुणी, दानी, धनी, बलवान्, विवेकी, मान्यहरूको सम्मान गर्ने, शम-दम सम्पन्न, शास्त्रका रहस्य र वेदका ज्ञाता, विकटरूप भगवान् श्रीगणेशका नित्य भक्त र स्तोत्रहरूको पाठमा समर्पित थिए। तिनकी भार्याको नाम सुमुद्रा थियो । ती सौन्दर्य र गुणका कारण अत्यन्त प्रसिद्ध थिइन् ।।४-६।। सुमुद्रा विशिष्ट सुन्दरी, पतिव्रता र सरलहृदया भनेर सर्वत्र परिचित थिइन्। आफ्नो रूप र कान्तिबाट अप्सराहरूलाई पनि लज्जित तुल्याउने, देवता-ब्राह्मण र पाहुनाहरूको सेवामा तल्लीन र पतिको चित्त बुझेर काम गर्ने उत्तम नारी थिइन् ।।७।। ती सबै पतिव्रताहरूकी मान्या र उत्तम व्यक्तित्वकी स्वामिनी पनि थिइन् । एक दिन दुवै दम्पती स्नान गरी निर्मल भएर पुराण सुन्ने मनोयोगका साथ बसिरहेका थिए । त्यस बेला त्यहाँ भिक्षाको अभिलाषा गर्ने मधुसूदननामक ब्राह्मण आइपुगे । ती ब्राह्मण परमेश्वरको चिन्तनमा तत्पर र दरिद्र थिए । दरिद्र भएका कारण मैला र फाटेका वस्त्र धारण गर्दा पनि नाङ्गै देखिन्थे । सुलभ क्षत्रियले तिनलाई देखेपछि हर्षपूर्वक प्रणाम गरे । तर अचानक मोहको आवेशमा आएर उत्तम ब्राह्मणलाई खिसी गर्दै हाँसे । सुलभले उपहास गर्दा ती ब्राह्मण क्षुब्ध भए र तिनले सुलभलाई सराप दिए ।।८-११।। तिनले रीसले राता आँखा गराउँदै भने - तिमी दुर्बुद्धि भएका क्षत्रिय रहेछौ, मलाई दरिद्र, दुःखी देखेर दाँत देखाएर हाँसेका छौ, त्यस कारण तिमी सधैं हलो तान्ने जस्ता दुःखको काम गर्नुपर्ने स्वभाव भएको

वृषो भव कुबुद्धे त्वं योऽहसद् विवृतैर्द्विजैः ।
भर्तुः शापं परिश्रुत्य सुमुद्रा क्रोधमूर्च्छिता ॥१३॥
अशपत् तं द्विजं रुष्टा सर्पिणीव पदाहता ।
यतस्त्वयाऽविवेकेन शापो दत्तः पतेर्मम ॥१४॥
अतस्त्वं चक्रिवान् भूत्वा विष्ठाशी भव कुद्विज ।
सोऽपि तामशपत् क्रूरं श्रुत्वा शापं तदीरितम् ॥१५॥
स्त्रीत्वात् त्वमशपो यस्मात्त्वं चाण्डाली भविष्यसि ।
दरिद्रा दोषबहुला विण्मूत्रादाऽशुभङ्करी ॥१६॥
एवं परस्परं शप्त्वा त्यक्त्वा देहान् सुदुर्लभान् ।
सुलभो वृषभो जातो हलकर्षणवान् भवन् ॥१७॥
न विश्रान्तिः क्षणं तस्य विप्रशापात् तदाऽभवत् ।
द्विजोऽपि रासभे योनौ जातोऽसौ मधुसूदनः ॥१८॥
जाता सुमुद्रा चाण्डाली दुष्टा प्राणिविहिंसिका ।
दरिद्रा पैशाचवती विण्मूत्राशनतत्परा ॥१९॥
अतिशुष्कशरीरा सा दन्तुरा विकटानना ।
कदाचिदटमाना सा दक्षिणे नगरस्य तु ॥२०॥
प्रासादं गणनाथस्य ददर्श परमाद्भुतम् ।
नानावृक्षलताजालैर्नानापक्षिगणैर्युतम् ॥२१॥
यत्र योगीश्वराः केचिदनुष्ठानरताः सदा ।
उपासका गणेशस्य नियमस्था वसन्ति हि ॥२२॥
केचित् कामार्थिनः केचित् पुत्रमोक्षधनार्थिनः ।
कदाचिद् भाद्रमासस्य चतुर्थ्यां तु गृहे गृहे ॥२३॥
तस्मिन् पुरे सम्प्रवृत्तो गणनाथमहोत्सवः ।
अतिवृष्टिः प्रवृत्ता च महाप्रलयसूचिका ॥२४॥
चाण्डाली वृष्टिभीता सा याति यद् यन्निवेशनम् ।
ततस्ततोऽखिलजनैर्निरस्ता ताडनादिभिः ॥२५॥
ततो देवालयं याता पाणावग्निं प्रगृह्य सा ।
तत्राप्यताडयन् केचिद् योगिभिस्ते निराकृताः ॥२६॥
प्रज्वाल्य सा तृणैरग्निमुष्णान्यङ्गानि कुर्वती ।
अकस्माद् वायुना प्रागादेको दूर्वाङ्कुरस्तदा ॥२७॥

गोरुको योनिमा प्राप्त हुनेछौ । आफ्ना श्रीमान्माथि परेको सराप सुनेर क्षत्रियपत्नी सुमुद्रा पनि रीसले चूर भइन् ॥१२-१३॥ खुट्टाले कुल्चिएकी नागिनी झैं क्रुद्ध भएर तिनले ती ब्राह्मणलाई सराप दिँदै भनिन्- हे दुष्ट ब्राह्मण! तिमीले विवेक गुमाएर मेरा पतिलाई सराप दिएका छौ, त्यस कारण तिमी पनि गधाको रूप लिई सधैं विष्ठा खाएर बस। सुमुद्राको सराप सुनेर ब्राह्मणले पनि तिनलाई सराप दिए ॥१४-१५॥ हे सुमुद्रा ! नारी जाति भएर पनि बाठी हुँदै तिमीले मलाई सराप दिएका कारण तिमी दरिद्र र मलमूत्रको आहार गर्ने अमङ्गलमय स्वभाव भएकी दोषी चाण्डाली हुनेछौ ॥१६॥ यसरी एकले-अर्कालाई सराप दिएपछि ती सबै दुर्लभ मानवयोनि त्याग गरी सरापअनुसारका योनिहरूमा जन्म लिन विवश भए । तदनुसार सुलभ क्षत्रिय हलो तान्ने गोरु भएर जन्मे, ब्राह्मणको सरापका कारण तिनलाई गोरुको रूपमा रहँदा कहिले विश्राम प्राप्त भएन । मधुसूदन ब्राह्मण पनि गधाको योनिमा जन्मे । क्षत्रियपत्नी सुमुद्रा पनि प्राणीको हत्या गर्ने, दरिद्र, वरिपरि पिशाच लिएर हिंड्ने, विष्ठा एवं मूत्र खाने, अत्यन्त रूखो शरीर भएकी, लामा-लामा दाँत हुनाले विकृत र भयङ्कर अनुहारकी दुष्टा चाण्डाली भइन्। कुनै दिन यताउति भौंतारिएकी ती चाण्डालीले नगरको दक्षिण भागमा अत्यन्त अनौठा, साना-साना नानाथरिका रूख र लहराहरू एवं अनेक किसिमका चराचुरुङ्गीले घेरिएको भगवान् श्रीगणेशको मन्दिर देखिन् । त्यहाँ श्रीगणेशका उपासक योगीश्वरहरू नियममा रहेर मन्त्रको अनुष्ठान गर्दै थिए । केही विभिन्न कामनाले उपासना गर्ने श्रीगणेशका भक्त पनि त्यहाँ देखिन्थे । कुनै भक्त पुत्र र धनको इच्छाले भगवान्को आराधना गरिरहेका थिए। केही मोक्षको इच्छाले साधना गर्दै थिए । तिनले ती सबैको दर्शन गरिन् । कुनै समयमा भाद्र महिनाको चतुर्थी तिथिमा त्यस नगरका घर-घरमा श्रीगणेश महोत्सव मनाइयो । त्यस बेला महाप्रलय संझाउने ठूलो झरी पर्‍यो ॥१७-२४॥ झरीबाट डराएर ती चाण्डाली जुन - जुन घरमा शरण लिन जान्थिन्, ती-ती घरका मानिसहरूले तिनलाई त्यहाँबाट धपाउँथे ॥२५॥ यसरी आश्रयहीन भएकी चाण्डाली हातमा आगो लिएर मन्दिरमा गइन् । तिनलाई त्यहाँ देखेर केही मानिसहरूले पिटे तर साधनामा लागेका योगीहरूले भने ती मानिसहरूलाई त्यहाँबाट धपाए । निरुपाय ती चाण्डालीले

पतितो गणनाथस्य मस्तके दैवयोगतः ।
स रासभः शीतभीतो यातो देवालयं तदा ।।२८।।

तदा वृषो लाङ्गलात् तु मुक्तो दैवात् समाययौ ।
प्रासादं गणनाथस्य भाविनोऽर्थस्य गौरवात् ।।२९।।

उभावपि तृणं तस्याश्चाण्डाल्यास्तौ बभक्षतुः ।
परिसुप्ते जने तत्र तयोर्युद्धमवर्तत ।।३०।।

लत्ताभ्यां चैव शृङ्गाभ्यां गजाननसमीपतः ।
तयोरास्यान्निपतितौ शुण्डायां च पदे तदा ।।३१।।

दूर्वाङ्कुरौ गणेशस्य तुतोष च गजाननः ।
ततः सा यष्टिमादाय देवान्तिकमुपागमत् ।।३२।।

अहनत् तौ खरवृषौ स्वयं पूजां बभक्ष च ।
खुरशब्दं तयोः श्रुत्वा बुबुधे निद्रितो जनः ।।३३।।

बहिश्चकार दण्डेन मुष्टिकूर्परघाततः ।
पलायनपरा साऽपि ताडिता शर्करादिभिः ।।३४।।

चाण्डाल्या रासभस्यापि स्पर्शशङ्काकुलैर्जनैः ।
स्नापितस्तीर्थतोयेन मन्त्रितेन गजाननः ।
पूजितः परया भक्त्या नानाद्रव्यैरनेकशः ।।३५।।

वृषरासभचाण्डालीरतिदुष्टा जनाः पुनः
ताडयामासुरव्यग्रा लगुडैर्जानुभिस्तलैः ।
देवद्वारे च पिहिते गतिस्तेषां न विद्यते ।।३६।।

भ्रमतां क्रन्दतां तेषां त्रयाणां दारुणैः स्वरैः ।
मनस्तु देवदेवस्य विकटस्य तदा हृतम् ।।३७।।

एतेषां तु प्रसङ्गेन पुनः पूजा ममाऽभवत् ।
एतैश्च पूजितश्चाहमेकदूर्वाङ्कुरादिभिः ।।३८।।

प्रदक्षिणा बहुतरा कृता दुष्टेषु सत्स्वपि ।
भाद्रशुक्लचतुर्थ्यां मे दूर्वामेकां समर्पयेत् ।।३९।।

झिंजा-झिंजी र सुकेका घाँसपात बटुलेपछि आगो सल्काएर तापेर बसिन् । तिनले जम्मा गरेका तृणहरूमध्ये एउटा सुकेको दूर्वाङ्कुर हावाले उडेर दैवयोगले भगवान् श्रीगणेशका मूर्तिको निधारमा पऱ्यो । त्यस बेला त्यो गधा पनि जाडोले काँप्दै त्यसै मन्दिरमा आइपुग्यो । त्यत्तिखेर नै संयोगवश भावी गौरवपूर्ण घटनाको कारण बनेर हलाबाट फुकेको त्यो गोरु पनि त्यसै मन्दिरमा आइपुग्यो ।।२६-२९।। ती गधा र गोरुले चाण्डालीद्वारा जम्मा गरिएका काँचा र सुकेका घाँसपात खाए। त्यहाँका मानिसहरू सुतेपछि ती गधा र गोरु आपसमा युद्ध गर्न थाले ।।३०।। खुट्टा र सिङले ती दुवैले भगवान् श्रीगणेशका मूर्तिसामु एक-आपसमा प्रहार गरिरहेका थिए । त्यस बेला गधा र गोरुको मुखबाट खसेका दुई दूर्वाङ्कुर श्रीगणेशको सूँढ र चरणमा पर्न गए। यसरी थाहै नपाईकन पूजा हुन जाँदा भगवान् श्रीगणेश प्रसन्न हुनुभयो । त्यसपछि ती चाण्डाली हातमा लौरो लिएर श्रीगणेशको नजिकमा आइपुगिन् ।।३१-३२।। त्यहाँ आएर तिनले गधा र गोरुलाई पिट्दै श्रीगणेशका सामु रहेको पूजाको सामग्री खान थालिन् । गोरु र गधाको खुरको स्वर सुनेर निदाएका मानिस पनि जागे ।।३३।। तिनले लौराले हिर्काएर ती दुवैलाई बाहिर भगाए । मुड्की र कुहिनाले चाण्डालीमाथि पनि प्रहार गरी तिनलाई पनि बाहिर भगाए । भागिरहेकी चाण्डालीलाई वरपरका मानिसहरूले ढेला र ढुङ्गाले हानेर लखेटिरहेका थिए। मन्दिरको मूर्तिमा चाण्डाली र गधाको स्पर्श भएको शङ्का गरेर ती मानिसहरूले तीर्थका जलले श्रीगणेशको मूर्तिलाई नुहाइदिए। भक्तिपूर्वक अनेक पदार्थहरू टक्र्याएर भगवानको आराधना गरे ।।३४-३५।। मन्दिर बाहिर बस्ने निर्दयी मानिसहरूले गधा, गोरु र चाण्डालीलाई लौरो, घुँडा र चपेटाले प्रहार गरेका थिए । मन्दिरको ढोका बन्द भएका कारण तिनीहरूले भागेर जिउ जोगाउन पनि पाएनन् । पिटाइ खाएर चिच्याइरहेका तिनीहरूको आर्तनाद सुनेर विकटरूप भगवान् श्रीगणेशको मन पग्लियो ।।३६-३७।। भगवान्ले मनमनै भन्नुभयो – यी गोरु, गधा र चाण्डालीको प्रसङ्गबाट मेरो पटक पटक पूजा भयो । यी सबैले जानी-नजानी एउटा- एउटा दूर्वाङ्कुर चढाएर मेरो पूजा पनि गरेका छन् । यी सबै दुष्ट हुन् तापनि अज्ञानमै भए पनि यिनले मेरो धेरै पटक परिक्रमा गरेका छन् । जसले भाद्र शुक्ल चतुर्थी तिथिमा

स मे मान्यश्च पूज्यश्च यश्च कुर्यात् प्रदक्षिणाम् ।
तस्मादेतान् विमानेन स्वधाम प्रापयाम्यहम् ।।४०।।

एवं विमानमप्रैषीत् स्वगणैरुपलक्षितम् ।
स्वरूपधारिभिर्देवो गन्धर्वाप्सरसां गणैः ।।४१।।

युतं वादित्रनिचयैः पुष्पैः परिमलैरपि ।
दिव्यभोगसमायुक्तं पताकाध्वजमण्डितम् ।।४२।।

तानादाय गणास्ते तु गजाननस्वरूपिणः ।
तस्मिन् विमाने निक्षिप्य दिव्यदेहान् मुदायुतान् ।।४३।।

गजाननाज्ञया तस्य धाम सम्प्रापयन् जवात् ।
पश्यतां सर्वलोकानामाश्चर्यमभवद् हृदि ।।४४।।

एतेषां पूर्वपुण्येन गतिरेषेति चाब्रुवन् ।
ततो योगीश्वराः केचित् त्यक्त्वा ध्यानं गता गणान्।।४५।।

पप्रच्छुः कथमेतेषां ब्रूत पुण्या गतिर्ध्रुवा ।
अतिपातकिनामेषां पुण्यलेशो न विद्यते ।।४६।।

गतिः सुदुर्लभा कस्मात् प्राप्ता नो वदताऽनघाः ।
तदेवाशु चरिष्यामस्त्यक्त्वानुष्ठानमात्मनः ।।४७।।

असङ्ख्यातो गतः कालो न देवो दृक्पथं गतः ।
विरक्तानां वायुभुजामनुष्ठानवतां सदा ।।४८।।

धामप्राप्तिः कदा नः स्याद् गणेशस्य वदन्तु नः ।।४९।।

मलाई एउटा दूबो चढाउँछ त्यो मेरा निमित्त अत्यन्त प्रिय हुन्छ । जसले प्रदक्षिणा गर्दछ त्यो पनि मेरा लागि प्रिय र मान्य हुन्छ । तसर्थ यी सबैलाई म विमानद्वारा मेरो धाममा पठाउँछु। यसरी विचार गरी भगवान् श्रीगणेशले आफ्ना गण, गन्धर्व एवं अप्सराहरूसमेत रहेको, वाद्यवादनका सामग्री र थरि-थरिका सुगन्धित पदार्थहरूले सम्पन्न, दिव्य भोगहरूले परिपूर्ण र ध्वजा-पताकाद्वारा सजिएको विमान तिनीहरूलाई लिन भनी पठाउनुभयो। श्रीगणेशकै आकार-प्रकारका गणहरू भगवान्‌का कृपाले सहसा दिव्य देह प्राप्त गर्ने ती गधा, गोरु र चाण्डालीलाई लिन भनेर त्यहाँ गए । तिनीहरूले गधा, गोरु र चाण्डालीलाई विमानमा राखी भगवान् श्रीगणेशको आज्ञाअनुसार अनेक थरि मानिसहरूले हेर्दा-हेर्दै श्रीगणेशको धाममा पुऱ्याए। गोरु, गधा र चाण्डालीले अचानक विमानमा आरोहण गरेको देखेर धर्तीका ती दर्शकहरू आश्चर्य मानिरहेका थिए ।।३८-४४।। केही मानिसहरूले 'यी तीनवटै प्राणीहरू आफ्नो पूर्वजन्मको पुण्यका कारण सद्‌गतिमा प्राप्त भए' भनिरहेका थिए । त्यसपछि त्यस मन्दिरमा साधना गर्ने केही योगीश्वरहरूले ध्यान छोडेर श्रीगणेशका गणका सामु गई त्यस्ता साधारण प्राणीहरूले विमानमा आरोहण गरी श्रीगणेशधाम कसरी प्राप्त गरे ? भन्ने विषयमा प्रश्न गरे। तिनीहरूले भने - यी प्राणीहरूको स्थिरधाममा प्राप्ति कसरी भयो ? यी त अत्यन्त पातकी छन् र यिनीसँग त लेशमात्र पनि पुण्यको गन्ध छैन । हे निष्पाप गणहरू यिनले दुर्लभ धाम कसरी पाए ? हामीलाई बताउनुहोस् । तपाईंहरूले बताउनुभयो भने हामी पनि आफ्नो ध्यान र अनुष्ठान छोडी तिनले जस्तै साधना गरी श्रीगणेशधाम प्राप्त गर्ने प्रयास गर्नेछौं ।।४५-४७।। हामीले साधना गर्न आरम्भ गरेको असङ्ख्य समय बितिसकेको छ, तर आजसम्म भगवान्‌को दर्शनमात्र पनि पाउन सकेका छैनौं । हामीजस्ता विरक्त र तृण एवं हावा खाएर तपस्या गर्ने साधकले श्रीगणेशको धाम कहिले पाउने? यस विषयमा हजुरले बताउनुहोस्।।४८-४९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे दूर्वोपाख्यानं नाम द्विषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'दूर्वाङ्कुरको महिमप्रकाशनको प्रसङ्गमा सुमुद्रा, सुलभ र मधुसूदनको उपाख्यान' शीर्षकान्वित बैसाठीऔं अध्याय पूर्ण भयो ।।६२।।

ॐ

## त्रिषष्टितमोऽध्याय:  { ६३ अध्याय }

गणा ऊचु:

शृणुध्वं योगिन: सर्वे स्थिरीकृत्य मनश्चलम् ।
यत्र शेषो भवेद् वक्तुं समर्थश्चतुराननः ।।१।।
तद् वक्तुं कः समर्थः स्याद् यथाशक्ति वदाम च ।
कुर्वन्ति स्तवनं यस्य सर्वदाऽजशिवादय: ।।२।।
तस्य को गणनाथस्य महिमानं वदेत् स्फुटम् ।
इत्थं तदीयां लीलां वा तथापि शृणुतानघा: ।।३।।
दूर्वाङ्कुराणां महिमा न ज्ञातो मुनिभिः सुरैः ।
यज्ञैर्दानैस्तपोभिश्च व्रतैर्होमैर्न वाप्यते ।।४।।
अत्राप्युदाहरन्तीममितिहासं पुरातनम् ।
वासवस्य च संवादं नारदस्य महात्मनः ।।५।।
एकदा नारदोऽगच्छद् वासवं द्रष्टुमुत्सुकः ।
पूजितं परया भक्त्या कृतासनपरिग्रहम् ।।६।।
मुनिं पप्रच्छ बलहा दूर्वामाहात्म्यमादरात् ।

इन्द्र उवाच

किमर्थं देवदेवस्य गणेशस्य महात्मनः ।
विशेषतः प्रिया ब्रह्मन् ! महादूर्वाङ्कुरा मुने ।।७।।

मुनिरुवाच

कथयामि यथाज्ञातं दूर्वामाहात्म्यमुत्तमम् ।
स्थावरे नगरे पूर्वं कौण्डिन्योऽभून्महामुनिः ।।८।।
उपासको गणेशस्य तपोबलसमन्वितः ।
रमणीयतरस्तस्य ग्रामदक्षिणभागतः ।।९।।
आश्रमः सुमहानासील्लतावृक्षसमन्वितः ।
सरांसि फुल्लपद्मानि यत्रासन् सुमहान्ति च ।।१०।।
भ्रमरैरुपजुष्टानि हंसकारण्डवैरपि ।
चक्रवाकैर्बकैश्चैव कच्छपैर्जलकुक्कुटैः ।।११।।
स तु ध्यानरतस्तत्र प्रारभत् तप उत्कटम् ।
पुरः स्थाप्य महामूर्तिं गणेशस्य चतुर्भुजाम् ।।१२।।

**गणहरूले भने** – हे योगीश्वरहरू ! तपाईंहरूले चञ्चल मनलाई स्थिर बनाएर सुन्नुहोस् । जुन कुरालाई शेषनाग र ब्रह्माजी पनि बताउन समर्थ छैनन् त्यो बताउन को सक्छ ? यसो हो तापनि आफ्नो ज्ञानको सीमाअनुसार हामी बताउन प्रयास गर्ने छौं। ब्रह्मा, शिव आदि देवताहरूले दिनदिनै जसको स्तुति गर्दछन्, त्यस्ता श्रीगणेश भगवान्को महिमा अवर्णनीय छ । यसैले उहाँका लीलाहरूका विषयमा कसैले पनि पूरापूर बताउन सक्दैन। हामी केही मात्र लीलाहरूको विषयमा तपाईंहरू सामु बताउँछौं। दूर्वाङ्कुरको महिमा देवता र मुनि पनि सम्पूर्ण रूपमा बताउन असमर्थ छन् । दूबो अर्पण गरेर श्रीगणेशको आराधना गर्दा जुन फल प्राप्त हुन्छ त्यो यज्ञ, दान, तपस्या र हवनबाट पनि सुलभ हुँदैन ।।१-४।। दूबोको महिमासम्बन्धमा प्राचीन ग्रन्थहरूमा एउटा इतिहास रहेको छ- त्यो हो नारद र देवराज इन्द्रको संवाद । कुनै समयमा नारदजी उत्सुक भएर देवराज इन्द्रलाई भेट्न स्वर्गमा जानुभयो। भक्तिपूर्वक पूजा गरी आसनमा विराजमान गराइएका नारदजीसँग इन्द्रले दूबाको महिमाका विषयमा जिज्ञासा गरेका थिए ।

**इन्द्रले भने** - हे देवर्षि नारदजी ! देवदेव महात्मा श्रीगणेशलाई दूर्वाङ्कुर किन प्यारो लाग्छ ? ।।५-७।।

**नारदजीले भन्नुभयो** - म तपाईंलाई आफ्नो ज्ञानअनुसार दूबाको उक्त महिमा बताउँछु । पहिले स्थावरनगरमा कौण्डिन्यनामक महामुनि थिए ।।८।। ती तपस्वी र भगवान् श्रीगणेशका उपासक पनि थिए । स्थावरनगरको बायाँ भागमा रमणीय, विशाल र लता एवं वृक्षले सम्पन्न एउटा आश्रम थियो । त्यहाँ कमलद्वारा शोभायमान ठूला-ठूला सरोवरहरू थिए ।।९-१०।। सरोवरका कमलहरूमा भ्रमरहरू गुञ्जन गर्दथे। ती सरोवरहरूमा हाँस, चखेवा, बकुला, कछुवा र पानीकुखुरा खेलिरहेका थिए।।११।। एक दिन कौण्डिन्य ऋषिले ध्याननिष्ठ भएर उत्कट तपस्या आरम्भ गर्नुभयो । उहाँले आफ्ना सामु दूबाको अङ्कुरद्वारा पूजा गरिएका चतुर्बाहु, सुवरद र प्रसन्नमुद्रामा वर्तमान वरदमूर्तिको स्थापना गर्नुभयो।

सुप्रसन्नां सुवरदां दूर्वायुक्तां सुपूजिताम् ।
जजाप परमं मन्त्रं षडर्णं देवतोषकम् ।।१३।।

पप्रच्छ संशयाविष्टा पत्नी नाम्नाऽऽश्रयाऽस्य तम् ।

आश्रयोवाच

स्वामिन् ! गजानने देवे दूर्वाभारं दिने दिने ।।१४।।

समर्पयसि कस्मात् त्वं तृणैः कोऽपि न तुष्यति ।
अस्ति चेत् पुण्यमेतेन तन्मे त्वं कृपया वद ।।१५।।

कौण्डिन्य उवाच

शृणु प्रिये ! प्रवक्ष्यामि दूर्वामाहात्म्यमुत्तमम् ।
धर्मस्य नगरे पूर्वमासीदुत्सव उत्तमः ।।१६।।

सर्वे देवाः सगन्धर्वा आहूताश्चाप्सरोगणाः ।
सिद्धचारणनागाश्च मुनयो यक्षराक्षसाः ।।१७।।

तिलोत्तमाया नृत्यन्त्याः प्रावारो न्यपतत् भुवि ।
ददर्श तस्याः स यमः कुचौ चारुबृहत्तमौ ।।१८।।

अभवत् कामसन्तप्तोऽविश्रान्तो निरपत्रपः ।
इयेषाऽऽलिङ्गितुं तस्याश्चुम्बितुञ्च तदाननम् ।।१९।।

सदसो निर्गतस्तस्माल्लज्जयाऽधोमुखो यमः ।
गच्छतस्तस्य रेतश्च स्खलितं पतितं भुवि ।।२०।।

ज्वालामाल्यभवत् तस्मात् पुरुषो विकृताननः ।
कुर्वन् दंष्ट्रारवं क्रूरं त्रासयन् भुवनत्रयम् ।।२१।।

ददाह पृथिवीं सर्वां जटाभिर्गगनं स्पृशन् ।
चकम्पे तस्य शब्देन त्रिलोकीमानसं भृशम् ।।।२२।।

तदैव विष्णुमगमँस्ते तु सर्वे सभासदः ।
स्तुतिं नानाविधां कृत्वा नानास्तोत्रैर्यथामति ।।२३।।

प्रार्थयामासुरव्यग्राः सर्वलोकहिताय तम् ।
स तैः सर्वैः समगमद् गजाननमनामयम् ।।२४।।

श्रीगणेश-मूर्तिलाई अगाडि राखेर उहाँले श्रीगणेशलाई सन्तुष्ट तुल्याउन समर्थ षडक्षरी महामन्त्र जप्नुभयो ।।१२-१३।। संशयमा परेकी उनकी धर्मपत्नी आश्रयाले कौण्डिन्यमुनिसँग प्रश्न गरिन् ।

**आश्रयाले भनिन्** - हे स्वामी ! हजुरले किन भगवान् गजाननको मूर्तिमा दिनहुँ दूबाले पूजा गर्नुहुन्छ?।।१४।। के कुनै पनि देवता घाँस-पात चढाएर खुसी हुन्छन् ? यदि दूबो चढाएर पुण्यप्राप्ति हुन्छ भने त्यो कसरी हुन्छ मलाई बताउनुहोस् ।।१५।।

**कौण्डिन्यले भने** - हे प्रिया ! म तिमीलाई दूबाको महिमा बताउँछु सुन । धर्मराजको नगरमा कुनै दिन ठूलो उत्सव चलिरहेको थियो।।१६।। त्यसमा देवता, गन्धर्व, अप्सरा, सिद्ध, चारण, नाग, यक्ष, राक्षस र मुनिहरू निमन्त्रित थिए ।।१७।। त्यहाँ तिलोत्तमा अप्सरा आनन्दपूर्वक नाचिरहेकी थिइन् । नाच्दानाच्दै तिनको पछ्यौरी शरीरबाट भुईंमा खस्यो। पछ्यौरी खसेपछि धर्मराज यमले तिलोत्तमाको सुन्दर शरीर र ठूला कुचहरूको दर्शन गरे ।।१८।। सौन्दर्यपूर्ण कुचको दर्शनपछि धर्मराज कामपीडाले सन्तप्त, निर्लज्ज र आतुर पनि भए । उनले तिलोत्तमालाई आलिङ्गन गर्ने र गालामा चुम्बन गर्ने इच्छा गरे ।।१९।। कामवेदनाका कारण निर्लज्ज बनेका धर्मराज, लाज मानेर शिर निहुर्‍याई सभाबाट बाहिर निस्किए । बाहिर निस्कँदा बाटैमा तिनको वीर्य स्खलित भयो र भुईंमा खस्यो।।२०।। त्यस वीर्यबाट भयङ्कर अनुहार भएको, अग्निको ज्वालाको माला लगाउने पुरुष प्रकट भयो। त्यसले आफ्ना दाह्रा बजाउँदा निस्किएको डरलाग्दो आवाजबाट स्वर्ग, मर्त्य र पाताल नै भयभीत भए।।२१।। आफ्ना जटाहरूले आकाश छुनसक्ने त्यस पुरुषले आफ्नो जटाबाट निस्किएको आगोद्वारा पृथिवी डढाउन थाल्यो । त्यसको क्रूर आवाजबाट सबै लोकका मानिसहरू थर्थर काँपिरहेका थिए ।।२२।। त्यस बेला यमलोकमा जम्मा भएका सबै सभासद्‌हरू डराए र संसारको रक्षाका निमित्त प्रार्थना गर्न भगवान् विष्णुका नजिकमा गए। तिनले आफ्नो बुद्धिअनुसार अनेक स्तुतिहरूबाट विष्णुको प्रार्थना गरे । भगवान् विष्णु पनि देवताहरूको प्रार्थना सुनेर तिनलाई साथमा लिई सबै लोकका स्वामी निर्मल ब्रह्मरूप भगवान् श्रीगणेशका सामुमा जानुभयो ।।२३-२४।।

तस्य नाशं ततो ज्ञात्वा तुष्टुवुः सर्व एव तम् ।

देवा मुनयश्चोचुः

नमो विघ्नस्वरूपाय नमस्ते विघ्नहारिणे ।।२५।।

नमस्ते सर्वरूपाय सर्वसाक्षिन् ! नमोस्तु ते ।
नमो देवाय महते नमस्ते जगदादये ।।२६।।

नमः कृपानिधे ! तुभ्यं जगत्पालनहेतवे ।
नमस्ते पूर्णतमसे सर्वसंहारकारिणे ।।२७।।

नमस्ते भक्तवरद! सर्वदात्रे नमो नमः ।
नमस्तेऽनन्यशरण! सर्वकामप्रपूरक !।।२८।।

नमस्ते वेदविदुषे नमस्ते वेदकारिणे ।
कमन्यं शरणं यामः को नु नः स्याद् भयापहः ।।२९।।

अकाल एव प्रलयः कथं लब्धो जनैरयम् ।
हा गजानन ! देवेश ! हा हा विघ्नहराव्यय ! ।।३०।।

सर्वेषां मरणे प्राप्ते कथमस्मानुपेक्षसे ।
इति तद्वचनं श्रुत्वा करुणाब्धिर्गजाननः ।।३१।।

आविरासीत् पुरस्तेषां शिशुरूपोऽरिभीतिहा ।
बिभ्रत् कमलनयने शतचन्द्रनिभाननम् ।।३२।।

कोटिसूर्यप्रभाजालः कोटिकन्दर्पजिद्वपुः ।
कुन्दकुड्मलशोभाजिद्दशनोऽधरबिम्बजित् ।।३३।।

उन्नसो भ्रुकुटीचारुनयनः कम्बुकण्ठयुक् ।
विशालवक्षा जानुस्पृग्भुजद्वययुतो बली ।।३४।।

भगवान् श्रीगणेशलेमात्र त्यस डरलाग्दो पुरुषको वध गर्न सक्नुहुन्छ भन्ने जानेर सबै देवताले श्रीगणेशको स्तुति गरे ।

**देवता र मुनिहरूले भने** – 'विघ्नस्वरूप र विघ्नहर्ता श्रीगणेशलाई प्रणाम गर्दछौं ।।२५।। सबैका साक्षी हे प्रभो ! सर्वव्यापक र सबैमा रहनुहुने हजुरको वन्दना गर्दछौं । हजुर महान् देवता हुनुहुन्छ र जगत्का आदिकारण पनि । त्यस कारण नम्रतापूर्वक वन्दना गर्दछौं ।।२६।। हे कृपालु भगवान्! जगत्को पालनका मूलकारण हजुरलाई प्रणाम गर्दछौं। तमोगुणबाट सम्पन्न र संहारशक्तिका अधिपति हजुरको वन्दना गर्दछौं ।।२७।। भक्तलाई वरदान दिएर कृतार्थ गराउनु हुने हे श्रीगणेश ! सबैलाई सबै कुरा प्रदान गर्नुहुने हजुरको बारबार वन्दना गर्दछौं । सबैको कामना पूरा गर्नुहुने अनन्यशरण हे देव ! हजुरको वन्दना गर्दछौं ।।२८।। हामी नम्रतापूर्वक वेद आदि शास्त्रका ज्ञाता हजुरको बारबार वन्दना गर्दछौं । वेदका रचयिता हे देवताका देवता श्रीगणेश ! हामी हजुरको वन्दना गर्दछौं । हे भगवन्! हामी हजुरलाई छाडेर अरू कसको शरणमा जाऔं? हजुर बाहेक कुन देवताले हाम्रो भयलाई हटाउन सक्छन्?।।२९।। हे प्रभो ! आज प्राणीहरूले अकालमा प्रलयको पीडा भोग्नुपर्‍यो। हे गजानन ! हे देवेश ! हे विघ्नहर्ता ! हे अविनाशी श्रीगणेश प्रभो ! आज हामी सबै मृत्युको मुखमा पर्ने परिस्थितिमा पुगेका छौं । हजुरले हाम्रो उपेक्षा नगर्नुहोस् ।' विष्णुका साथमा आएका देवताहरूको यो प्रार्थना सुनेर करुणासागर एवं शत्रुसंहारक भगवान् श्रीगणेश ती सबैका सामु बालकरूप लिएर प्रकट हुनुभयो । उहाँ त्यस बेला कमलझैं राम्रा नयनहरूले सुहाउनुभएको थियो । एक सय चन्द्रमाभन्दा पनि सुन्दर मुखमण्डलले धप्प बल्नुभएको थियो र करोडौं सूर्यको तेजले सम्पन्न हुनुहुन्थ्यो । उहाँ करोडौं कामदेवको सौन्दर्यलाई पराजित गर्ने रूप सौन्दर्यबाट सुहाउनुभएको थियो\ कुन्दपुष्पको कोपिलाको कान्तिलाई परास्त गर्ने सेता दन्तपङ्क्ति धारण गर्नुहुने, काँक्रोबियाँको कान्तिलाई परास्त गर्ने ओंठले सुहाउनुभएका, उँचो नाक र सुन्दर आँखीभौंद्वारा आकर्षक दुबै आँखा धारण गर्नुहुने, शङ्खजस्तो कण्ठले रमणीय, छातीदेखि घुँडासम्म फैलिएका, बाहुद्वारा अत्यन्त आकर्षक देखिनुहुने, पराक्रमी, गहिरो

गम्भीरनाभिविलसदुदरोऽतिलसत्कटिः ।
रम्भाशोभापरिस्पर्धिगुरूरुश्चारुजानुयुक् ।।३५।।

सुचारुजङ्घागुल्फश्रीविलसत्पादपद्मकः ।
नानालङ्कारशोभाढ्यो महार्घवसनावृतः ।।३६।।

एवं देवं निरीक्ष्यैव नगरस्य पुरो भुवि ।
उत्तस्थुर्देवमुनयो जयशब्दपुरःसरम् ।।३७।।

प्रणेमुर्दण्डवद् भूमौ शक्रं देवगणा यथा ।

देवा ऋषयश्चोचुः

को भवान् कुत आयातः किं कार्यं वद नो विभो ।।३८।।

वयमेवं विजानीमो ब्रह्मैव बालरूपधृक् ।
अनलासुरसन्त्रासात् त्यक्त्वा कर्माणि संस्थितान् ।।३९।।

आविर्भूतं तु नस्त्रातुं दुष्टसंहारकारकम् ।
इति तद्वचनं श्रुत्वा शिशुरूपी गजाननः ।।४०।।

बभाषे हास्यवदनः सर्वान् देवमुनीन् प्रति ।

बाल उवाच

भवन्तो ज्ञानसम्पन्ना यदुक्तं सत्यमेव तत् ।।४१।।

अहं तस्य वधायैव दुष्टस्य परपीडिनः ।
निजेच्छया बालरूपी वेगेनागां सुरर्षयः ।।४२।।

उपायं वच्मि वस्तस्य वधे तं कुरुतानघाः ।
सर्वैर्भवद्भिस्तं दृष्ट्वा नोदनीयो बलादहम् ।।४३।।

द्रष्टव्यं कौतुकं तस्य मम चैव महत्तरम् ।
एवं श्रुत्वा कृपावाक्यं सर्वे ते हर्षनिर्भराः ।।४४।।

ऊचुः परस्परं सर्वे न जानीमोऽस्य पौरुषम् ।
ईश्वरो बालरूपेण कर्तुमस्य वधं नु किम् ।।४५।।

नाभिद्वारा सुशोभित उदर धारण गर्नुहुने, अत्यन्त आकर्षक कम्मरले सुहाउनुभएका, केराका स्तम्भसँग प्रतिस्पर्धा गर्ने जङ्घाद्वारा शोभायमान, अत्यन्त सुन्दर चरणकमल धारण गर्नुहुने, अनेक थरि गहनाका शोभाले सम्पन्न र मूल्यवान् वस्त्र धारण गर्नुहुने भगवान् श्रीगणेशले देवताहरूलाई पुण्यदर्शन प्रदान गरिरहनुभएको थियो । नगरको सामु रहेको मैदानमा भगवान् श्रीगणेशको दिव्य दर्शन पाएर देवता र ऋषिहरू जय जयकार गरिरहेका थिए ।।३०-३७।। स्वर्गका देवताले जसरी निहुरेर इन्द्रलाई प्रणाम गर्दछन् त्यसरी नै ती सबैले भगवान् श्रीगणेशलाई दण्डवत् प्रणाम गरिरहेका थिए ।

**देवता र ऋषिहरूले भने-** हे दिव्यदर्शन! हजुर को हुनुहुन्छ? कहाँबाट पाल्नुभयो ? हामीलाई बताउनुहोस् ।।३८।। हामी त हजुरको दिव्य रूप देखेर बालकरूपधारी परब्रह्म नै हुनुहुन्छ भन्ने विचार गरिरहेका छौं । डराएर आ-आफ्ना कर्म परित्याग गरी बसेका हामीहरूले ज्वालामाली दैत्यको भयबाट हाम्रो रक्षा गर्न प्रकट हुनुभएका, दुष्टहरूको संहार गर्नुहुने ब्रह्मका रूपमा हजुरलाई जानेका छौं । देवता र मुनिहरूका कुरा सुनेर बालरूप श्रीगणेशले मुसुक्क मुस्काउँदै तिनलाई भन्नुभयो ।

**बालरूप श्रीगणेशले भन्नुभयो -** हे देवता र ऋषिहरू! तपाईंहरू ज्ञानी हुनुहुन्छ। जे भन्नुभयो त्यो साँचो हो।।३९-४१।। अरूलाई सताउने दुष्ट ज्वालासुरको वधका लागि म स्वेच्छापूर्वक बालकको रूप धारण गरेर प्रकट भएको छु । म त्यसको कसरी वध गर्ने भन्ने विषयमा तपाईंहरूलाई उपाय बताउँछु । तपाईंहरूले त्यसको प्रयोग गर्नुहोस् । तपाईंहरूले जुनबेला त्यस दानवलाई देख्नुहुन्छ त्यस बेला मलाई भाग्नुहोस् - भाग्नुहोस् भनेर सङ्केत गर्नुपर्नेछ। त्यसपछि तपाईंहरूले त्यो ज्वालासुर र मेराबीचमा जुन अनौठो घटना हुनेछ त्यसको दर्शन पाउनुहुनेछ। बालक श्रीगणेशका यी कुरा सुनेर सबै हर्षमग्न भए ।।४२-४४।। तिनले आपसमा विचार-विमर्श गर्न लागे- 'कस्तो अचम्मको कुरा, यी बालकले भन्न त भने हामीले यिनको पराक्रम देखेका छैनौं । ईश्वर बालकरूप लिएर ज्वालासुरको वध गर्न अवतीर्ण हुनुभएको हो अथवा

अवतीर्णो भवेत् त्रातुं पीडितं भुवनत्रयम् ।
इत्थमुक्त्वा तु ते सर्वे प्रणेमुः सादरञ्च तम् ।।४६।।

एतस्मिन्नेव काले तु कालानलस्वरूपधृक् ।
दहन् दश दिशो भक्षन्नरलोकं स आययौ ।।४७।।

कोलाहलो महानासील्लोकानां क्रन्दतां तदा ।
दृष्ट्वैव सर्वे मुनयः पलायनपरा ययुः ।।४८।।

तञ्च ते मुनयः प्रोचुः शीघ्रं कुरु पलायनम् ।
नो चेद्धिंसिष्यते त्वाद्य सुमहाननलो ध्रुवम् ।।४९।।

तिमिङ्गिलो यथा मीनानुरगान् गरुडो यथा ।
इति तद्वचनं श्रुत्वा परमात्मा गजाननः ।।५०।।

बालरूपधरोऽतिष्ठत् पर्वतो हिमवानिव ।
सुरर्षयो ययुर्दूरात् त्यक्त्वा तत्रैव बालकम् ।।५१।।

त्रिलोकीको रक्षा गर्न अवतीर्ण हुनुभएको हो? हामी ठम्याउन सक्दैनौं ।' यसरी विमर्श गरेपछि ती सबैले मनका तर्क हटाएर बालगणेशलाई सादर प्रणाम गरे ।।४५-४६।। त्यसै बेला प्रलयकालको आगाको जस्तो ज्वालाधारण गर्ने त्यो ज्वालासुर दसै दिशामा आगो लगाउँदै मानिस र अरू प्राणीहरूलाई खाँदै त्यहाँ आइपुग्यो ।।४७।। त्यो आउँदा आत्तिएका मानिसहरूले ठूलो कोलाहल गरे । त्यसलाई देख्नासाथ अघि भगवान्ले बताएअनुसार देवता र ऋषिहरू बालगणेशका सामु गई भन्न लागे - हे बालक ! तपाईं भाग्नुहोस्, तपाईं भाग्नुहोस्, अन्यथा तपाईंलाई ज्वालासुरको ज्वालाले खरानी बनाउनेछ ।।४८-४९।। जसरी तिमिङ्गिल नामक ठूलो माछाले सानो माछालाई खान्छ र गरुडले सर्पलाई खान्छ, त्यसैगरी यो दानवले तपाईंलाई खानेछ। देवता र ऋषिको कुरा सुनेर बालरूप भगवान् श्रीगणेश हिमालयपर्वतझैं अडिग भएर रहनुभयो । देवता र ऋषिहरू बालगणेशलाई एक्लै छाडेर टाढा गई बसे ।।५०-५१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे दूर्वामाहात्म्यनिरूपणं नाम त्रिषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'दूर्वामहत्त्व निरूपण र कालानलासुरको उपाख्यान' शीर्षकान्वित त्रिसठ्ठीऔं अध्याय पूर्ण भयो ।।६३।।

ॐ

# चतु:षष्टितमोऽध्याय: { ६४ अध्याय }

**आश्रयोवाच**

देवर्षिषु प्रयातेषु बाले चाचलवत् स्थिते ।
किमासीत् कौतुकं तत्र बालकालानलोद्भवम् ।।१।।
तत्सर्वं विस्तरान्मह्यं कथयाशु महामुने ! ।

**नारद उवाच**

एवं तया कृतप्रश्न: कौण्डिन्यो मुनिसत्तम: ।।२।।
यदब्रवीच्छचीभर्तस्तत्त्वं शृणु मयोदितम् ।

**कौण्डिन्य उवाच**

अचलेऽचलवद् बाले स्थिते तस्मिन् गजानने ।।३।।
कालानल इवाक्षोभ्य आययौ सोऽनलासुर: ।
तस्मिन् क्षणेऽचला वाऽपि चचालाचलसंयुता ।।४।।
नभोध्वानेन सदृशैर्घनगर्जितनि:स्वनै: ।
निपेतुर्वृक्षशाखाभ्य: पक्षिवृन्दानि भूतले ।।५।।
निर्वारिर्वारिधिर्जातो वृक्षा उन्मूलितास्तदा ।
प्रकम्पनेन महता न प्राज्ञायत किञ्चन ।।६।।
तस्मिन्नेव क्षणे देवो बालरूपी गजानन:।
दधारानलरूपं तं दैत्यं मायाबलेन हि ।।७।।
प्राशत् सर्वेषु पश्यत्सु जलधिं कुम्भजो यथा ।
तत: सोऽचिन्तयद् देवो यद्ययं जठरे गत: ।।८।।
दहेत् त्रिभुवनं कुक्षौ दृश्यमाश्चर्यमुत्कटम् ।
तत: शक्रो ददौ चन्द्रं तस्य वह्ने: प्रशान्तये ।।९।।
भालचन्द्रेति तं देवास्तुष्टुवुर्मुनयोऽपि च ।
तथापि न च शान्तोऽभूदनल: कण्ठमध्यग: ।।१०।।

**आश्रयाले भनिन्** - हे महामुनि ! देवता र ऋषिहरू टाढा गएपछि र बालक श्रीगणेश हिमालझैं अटल भएर रहनुभएपछि कस्तो अनौठो घटना घट्यो ? ।।१।। त्यस विषयमा मलाई विस्तारपूर्वक बताउनुहोस् ।

**नारदजीले भन्नुभयो** - हे देवराज इन्द्र ! आश्रयद्वारा यसरी सोधिएपछि कौण्डिन्य ऋषिले बताउनुभएको कुरा म तपाईंलाई बताउँछु ।

**कौण्डिन्यले भने** - बालगणेश पर्वतझैं अचल भएर रहनुभएको बेला प्रलयकालको आगो झैं डरलाग्दो, अविजेय र अत्यन्त पराक्रमी ज्वालासुर उहाँका सामु आयो । त्यो सामु आउँदा अचला भनेर सम्बोधन गरिएकी पृथिवी पनि पर्वतहरूका साथ कम्पायमान भइन् ।।२-४।। मेघ गर्जेजस्तै आकाश पनि गर्जन थाल्यो । रूखका हाँगाहरूबाट चराचुरुङ्गी फुतुफुतु भुईंमा खस्न थाले । समुद्रको पानी सुक्यो, रूखहरू आफैं लड्न थाले र पृथिवीमा ठूलो भूकम्प आउनाले कहाँ कति क्षति भयो ? कसैले केही चाल पाउन सकेन ।।५-६।। त्यस बेला बालरूप श्रीगणेशले ज्वालासुर दैत्यलाई आफ्नो मायाको सामर्थ्यबाट समात्नुभयो ।।७।। त्यसपछि अगस्त्य मुनिले समुद्र पिएझैं सबैका सामु ज्वालासुरलाई निल्नुभयो । त्यतिबेला उहाँले सोच्नुभयो कि - यदि यो मेरो पेटमा गएर रह्यो भने यसले त्रिलोकलाई नै खरानी तुल्याउन सक्नेछ । त्यस बेला उहाँको पेटमा ज्वालासुर दैत्यको बास हुँदा अनौठो कुरा भयो । भगवान्‌को पेटमा रहेको दैत्यको आगो निभाउन इन्द्र महाराजले चन्द्रमा समर्पण गरे ।।८-९।। चन्द्रमाले आएर वरद श्रीगणेशको शिरमा बास गरे । त्यसपछि श्रीगणेशको नाम भालचन्द्र रह्यो । देवता र मुनिले भालचन्द्रको स्तुति गरे। त्यसपछि पनि भगवान्‌को घाँटीको माझमा रहेको अग्निज्वाला शान्त भएन ।।१०।। त्यो देखेर ब्रह्माजीले सिद्धि र बुद्धिनामक मानस कन्याहरू ल्याई श्रीगणेशमा अर्पण गर्नुभयो । ती युवतिहरू अत्यन्त सुन्दर थिए। केराको स्तम्भजस्तै जाँघ भएका, कमलजस्तै आँखा भएका, सेवारजस्तै चिल्ला

ततो ब्रह्मा ददौ सिद्धिबुद्धी मानसकन्यके ।
रम्भोरूपद्मनयने केशशैवालसंयुते ।।११।।

चन्द्रवक्त्रेऽमृतगिरौ कूपनाभी सरिद्गती ।
मृणालमध्ये प्रवालहस्ते शैत्यस्य कारणे ।।१२।।

उवाचेमे समालिङ्ग्य तव शान्तोऽनलो भवेत् ।
तयोरालिङ्गने शान्तः किञ्चिदेव हुताशनः ।।१३।।

ददौ सुकोमलं तस्मै कमलं कमलापतिः ।
पद्मपाणिरिति प्रोचुस्तं सर्वे सुरमानुषाः ।।१४।।

अशान्तेऽग्नौ तु वरुणः सिषेच शीतलैर्जलैः ।
सहस्त्रफणिनं नागं गिरिशोऽस्मै ददावथ ।।१५।।

तेन बद्धोदरो यस्माद् व्यालबद्धोदरोऽभवत् ।
तथापि शैत्यं नापेदे कण्ठोऽस्यानलसंयुतः ।।१६।।

अष्टाशीतिसहस्त्राणि मुनयस्तं प्रपेदिरे ।
अमृता इव दूर्वास्ते प्रत्येकं सैकविंशतिम् ।।१७।।

आरोपयन् मस्तकेऽस्य ततः शान्तोऽनलोऽभवत् ।
तुतोष परमात्माऽसौ दूर्वाङ्कुरभरार्चितः ।।१८।।

एवं ज्ञात्वा तु ते सर्वे पुपूजुस्तं गजाननम् ।
दूर्वाङ्कुरैरनेकैस्तैर्जहर्षासौ गजाननः ।।१९।।

उवाच च मुनीन् देवान् मत्पूजा भक्तिनिर्मिता ।
महती स्वल्पिका वापि वृथा दूर्वाङ्कुरैर्विना ।।२०।।

विना दूर्वाङ्कुरैः पूजाफलं केनापि नाप्यते ।
तस्मादुषसि मद्भक्तैरेका वाऽप्येकविंशतिः ।।२१।।

भक्त्या समर्पिता दूर्वा ददाति यत् फलं महत् ।
न तत्क्रतुशतैर्दानैर्व्रतानुष्ठानसञ्चयैः ।।२२।।

तपोभिरुग्रैर्नियमैः कोटिजन्मार्जितैरपि ।
प्राप्यते मुनयो देवा यद् दूर्वाभिरवाप्यते ।।२३।।

केश भएका, चन्द्रमाजस्तो अनुहार भएका, अमृतझैं गुलियो कुरा गर्ने, कुवाझैं गहिरो नाभि भएका, नदीझैं तीव्र गति भएका, कमलको डाँठझैं कम्मर भएका, मुँगाझैं राता ओठ एवं हातले सुहाएका र सौन्दर्यले जगमगाएका ती सुन्दरी शीतलताका कारक बनेर रहेका थिए ।।११-१२।। ब्रह्माजीले भन्नुभयो- हे बालगणेश! यी सिद्धि-र बुद्धि शीतल गुणले सम्पन्न छन् । यिनलाई आलिङ्गन गर्नुहोस्। तपाईंमा रहेको अग्निज्वाला शान्त हुनेछ। यो कुरा सुनेर श्रीगणेशले ती दुवै युवतिलाई आलिङ्गनको पाशमा बाँध्नुभयो। अग्निज्वाला केही मात्र शान्त भयो ।।१३।। त्यसपछि नारायणले आएर बालगणेशलाई कमल अर्पण गर्नुभयो । त्यसपछि देवता र ऋषिले श्रीगणेशलाई पद्मपाणि भनेर सम्बोधन गरे।।१४।। त्यति हुँदा पनि अग्नि शान्त भएन । त्यसपछि वरुणले आएर चीसो जल चढाई श्रीगणेशको सेचन गरे । भगवान् शङ्करले हजार फणा भएको नाग अर्पण गर्नुभयो।।१५।। त्यसै नागलाई कम्मरपेटी बनाएर श्रीगणेशले बाँध्नुभयो । त्यसपछि उहाँको नाम व्यालबद्धोदर रह्यो । त्यति हुँदा पनि श्रीगणेशका घाँटीको आगो शान्त भएन ।।१६।। त्यसपछि ८८ हजार ऋषिहरूले एक्काइस-एक्काइस दूर्वाङ्कुर श्रीगणेशको शिरमा अर्पण गरी बालगणेशको अर्चना गरे । त्यसपछिमात्र श्रीगणेशको घाँटीमा रहेको अग्निज्वाला शान्त भयो । यसरी दूर्वाङ्कुरद्वारा पूजा गरिनुभएका परमात्मा श्रीगणेश साह्रै प्रसन्न हुनुभयो।।१७-१९।। उहाँलाई प्रसन्न हुनुभएको जानेर अरू सबै देवताहरूले पनि दूबो चढाई उहाँको पूजा गरे । भगवान् श्रीगणेश सबैप्रति प्रसन्न हुनुभयो । त्यसपछि उहाँले भन्नुभयो – हे ऋषिगण र देवगण ! मेरो पूजा अथवा भक्ति सानो – ठूलो जस्तै भए पनि दूबो नचढाउँदा असफल हुनेछ । त्यस कारण मेरो पूजा गर्दा भक्तहरूले दूर्वाङ्कुर चढाउनै पर्छ अन्यथा त्यो पूजा निष्फल हुनेछ ।।२०।। मलाई आराधना गर्ने भक्तहरूले प्रातःकालमा एउटा अथवा एक्काइसवटा दूर्वाङ्कुर मेरो प्रतिमामा अर्पण गर्दछन् भने त्यसबाट ठूलो फल प्राप्त हुनेछ। सयौं यज्ञ, दान, व्रत, अनुष्ठान, तपस्या, कोटि-कोटि जन्ममा पालन गरेका नियम र यमबाट जुन कुरा प्राप्त गर्न सकिंदैन, त्यो कुरा दूबो चढाएपछि प्राप्त गर्न सकिन्छ।।२१-२३।।

**कौण्डिन्य उवाच**

**इति तद्वचनं श्रुत्वा देवा दूर्वाङ्कुरैः पुनः ।**
**आनर्चुः परमात्मानं देवदेवं गजाननम् ।।२४।।**

**जगर्जानन्दयुक्तोऽसौ नादयन् रोदसी भृशम् ।**
**हृष्टानां सर्वदेवानां मुनीनाञ्च नृणामपि ।।२५।।**

**अनेकशो वरान् दत्त्वा पिदधे बालरूपधृक् ।**
**कालानलप्रशमन इति तं ते समूचिरे ।।२६।।**

**प्रासादे निर्मिते सर्वे स्थाप्य मूर्तिं गजाननीम् ।**
**विघ्नहरोऽयमित्यस्याभिधां चक्रुर्मुदा सुराः ।।२७।।**

**अत्र स्नानं तथा दानं तपोऽनुष्ठानमेव च ।**
**अनन्तं जायते विघ्नहरस्यास्य प्रसादतः ।।२८।।**

**जयः प्राप्तो यतस्तेन पुरञ्च विजयाभिधम् ।**
**सर्वेषां च हता विघ्ना विघ्नहर्तेति सोऽभवत् ।।२९।।**

**कौण्डिन्य उवाच**

**इति ते कथितं सर्वं दूर्वामाहात्म्यमुत्तमम् ।**
**श्रवणात् पठनाच्चास्य सर्वपापक्षयो भवेत् ।।३०।।**

**पुरातनमितिहासं शृणु मे गदतः प्रिये ।।३१।।**

**कौण्डिन्यले भने** - बालरूप श्रीगणेशका यी कुरा सुनेर देवता र ऋषिहरूले फेरि पनि दूबो चढाएर परमात्मा गजाननको पूजा गरे ।।२४।। त्यसपछि भगवान् श्रीगणेश आनन्दित हुनुभयो । उहाँले आफ्नो ॐकारमय नादबाट पृथिवी र अन्तरिक्षलाई निनादित गर्दै गर्जन गर्नुभयो । देवता र मुनि प्रसन्न भए । तिनलाई अनेक थरि वरदान दिएर भगवान् अन्तर्धान हुनुभयो । त्यसपछि श्रीगणेशलाई कालाग्निशमन नामबाट सबैले सम्बोधन गरे ।।२५-२६।। देवता र ऋषिहरूले श्रीगणेशको मन्दिर बनाए, मूर्तिको प्रतिष्ठा गरे । त्यस मूर्तिलाई देवताहरूले विघ्नहर श्रीगणेशको नामबाट सम्बोधन गरे ।।२७।। विघ्नहर्ता श्रीगणेशको कृपाबाट त्यस क्षेत्रमा गई गरेका स्नान, दान, अनुष्ठानजस्ता सबै कर्मको अनन्त फल प्राप्त हुन्छ ।।२८।। त्यहाँ श्रीगणेशले ज्वालासुरमाथि विजयप्राप्त गर्नुभएकाले त्यस क्षेत्रलाई विजयपुर भनिन्छ । उहाँले सबैका विघ्नको हरण गर्नुभएकाले उहाँलाई भक्तहरूले विघ्नहर्ता पनि भन्दछन् ।।२९।।

**कौण्डिन्यले भने** - यसरी मैले तिमीलाई दूर्वाङ्कुर समर्पणको उत्तम महिमा बताएँ ।।३०।। यस कथाको श्रवण, पाठ र मनन गर्नाले पापनाश हुन्छ । अब म अर्को अध्यायमा तिमीलाई प्राचीन इतिहास सुनाउने छु ।।३१।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे दूर्वामाहात्म्यवर्णनं नाम चतुःषष्टितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'दूर्वाको महिमानिरूपण' शीर्षकान्वित चौंसठ्ठीऔं अध्याय पूर्ण भयो ।।६४।।

ॐ

## पञ्चषष्टितमोऽध्यायः    { ६५ अध्याय }

कौडिन्य उवाच

कस्मिँश्चित् समये देवि ! सुखासीनं गजाननम् ।
नारदो मुनिरभ्यागाद् द्रष्टुं तं बहुवासरैः ।।१।।

साष्टाङ्गं प्रणिपत्यैनं प्राह नः सार्थकं जनुः ।
यत् पुण्यनिचयैर्जातं दर्शनं ते गजानन ! ।।२।।

इत्युक्त्वा स्वाञ्जलिं बद्ध्वा तस्थौ तत् पुरतो मुनिः ।
धृत्वा करेण तत्पाणिमुपावेशयदासने ।।३।।

गजाननो महाभागो महाभागं महामुनिम् ।
नारदो भगवाँस्तेन सन्तुष्टो मुनिपुङ्गवः ।।४।।

उवाच तं गणाधीशमाश्चर्यं हृदि मेऽस्ति यत् ।
तन्निवेदितुमायातो नत्वा त्वां पुनराव्रजे ।।५।।

गजानन उवाच

किमाश्चर्यं त्वया दृष्टं हृदि किं तेऽभिवर्तते ।
वद सर्वं विशेषेण ततो व्रज निजाश्रमम् ।।६।।

नारद उवाच

मैथिले विषये देव जनको राजसत्तमः ।
अतिमानी वदान्यश्च वेदवेदाङ्गपारगः ।।७।।

अन्नदानरतो नित्यं ब्राह्मणान् पूजयत्यसौ ।
नानालङ्कारवासोभिर्दक्षिणाभिरनेकशः ।।८।।

दीनान्धकृपणेभ्यश्च बहु द्रव्यं ददात्यसौ ।
याचकैर्याच्यते यद् यत् तत् तत् तेन प्रदीयते ।।९।।

तथापि न व्ययं याति द्रव्यं तस्य महात्मनः ।
गजाननस्य सन्तुष्ट्या द्रव्यं तद् वर्धते नु किम् ।।१०।।

इत्याश्चर्यं महद् द्रष्टुं प्रयातस्तद्गृहानहम् ।
ब्रह्मज्ञानाभिमानेन चोपहासं ममाऽकरोत् ।।११।।

अहञ्च तमुवाचेत्थं धन्योऽसि नृपसत्तम ! ।
चिन्तितं तेऽपि भक्त्याऽयं प्रयच्छति गजाननः ।।१२।।

**कौण्डिन्यले भने** – हे आश्रया ! कुनै समयमा भगवान् श्रीगणेश आनन्दपूर्वक आफ्नो धाममा विराजमान हुनुहुन्थ्यो। धेरै दिनपछि उहाँको दर्शन गर्न देवर्षि नारदजी आउनुभयो।।१।। उहाँले आएर श्रीगणेशलाई प्रणाम गरी निवेदन गर्नुभयो । हे गजानन! हजुरको दर्शन पाएर आज मेरो जन्म सफल भएको छ ।।२।। यसरी हृदयको भावना निवेदन गरी हात जोडेर नारदजी श्रीगणेशका सामु उभिनुभयो । भगवान् श्रीगणेशले भाग्यशाली नारदजीलाई हातमा समातेर आफ्नो अर्धासनमा बसाउनुभयो।।३।। सन्तुष्ट हुनुभएका नारदजीले फेरि श्रीगणेशलाई भन्नुभयो- मेरो मनमा एउटा आश्चर्यजनक विषयले तर्क उत्पन्न गराइरहेको छ। म त्यो निवेदन गर्न आएको छु। त्यसको उत्तर पाएपछि हजुरका पाउमा प्रणाम गरी आजै फर्कने छु र फेरि सेवामा हाजिर हुनेछु।।४-५।।

**श्रीगणेशले भन्नुभयो** – हे नारदमुनि ! तपाईंले कस्तो आश्चर्य देख्नुभयो ? तपाईंको मनमा कस्ता तर्क उठिरहेका छन्? मलाई बताउनुहोस् । त्यसपछि तपाईं आफ्नो आश्रमतर्फ फर्कनु हुनेछ ।।६।।

**नारदजीले भन्नुभयो** – हे भगवन् ! मिथिला देशमा उत्तम राजा जनकले राज्य गर्दछन्। ती राजा स्वाभिमानी, दाता र वेद-वेदाङ्गमा पारङ्गत छन् ।।७।। ती राजा अन्नदानमा तत्पर छन् र तिनले अनेक अलङ्कार, वस्त्र एवं दक्षिणा प्रदान गरेर दिनदिनै ब्राह्मणहरूलाई तृप्त र सन्तुष्ट गराउँछन् ।।८।। यसैगरी तिनले दीन-दुःखी, अन्धा र गरीबहरूलाई पनि धन र सम्पत्ति प्रदान गर्दछन् । तिनका सामु आएर याचकहरूले जे-कुरा माग्दछन्, ती कुरा दिएर याचकलाई प्रसन्न तुल्याउँछन् ।।९।। यसरी निरन्तर खर्च हुँदा पनि तिनको राजकोष कहिले पनि रित्तिँदैन। भगवान् श्रीगणेश प्रसन्न हुनुभएका कारण राजा जनकको कोष रित्तो हुँदैन र धन बढ्दै जान्छ कि भन्ने कुरा मनमा चिन्तन गर्दै आश्चर्य हेर्न म जनक राजाको दरबारमा एक दिन गएँ । तर तिनले म ब्रह्मज्ञानी छु भन्ने अभिमानले मेरो उपहास गरे।।१०-११।। मैले उपहासको पीडा सहँदै भने- हे महाराजा जनक ! तपाईं धन्य हुनुहुन्छ, किनकि भगवान्

स तु गर्वादुवाचेत्थमहमीशो जगत्त्रये ।
अहं दाता च भोक्ता च पाता दापयिता तथा ।।१३।।

मत्स्वरूपं विना नान्यद् विद्यते भुवनत्रये ।
कर्ता च कारणं चाहं करणं मुनिसत्तम ।।१४।।

श्रीगणेशले तपाईंले चिताएका कुरा पुऱ्याउनु हुन्छ । मैले गरेको कुरा सुनेर जनकले अभिमानपूर्वक मलाई जवाफ दिए - म स्वर्ग, मर्त्य र पातालको स्वामी हुँ, म नै दाता, भोक्ता, पालक र दान गर्न अभिप्रेरक पनि हुँ । यस त्रिलोकीमा मेरो स्वरूपबाहेक अरू कसैको पनि सत्ता छैन । हे नारदमुनि! म नै कर्ता, कारण र सहयोगी कारण पनि हुँ ।।१२-१४।।

### नारद उवाच

इति तद्वचनं श्रुत्वा क्रोधेनाहं जगाद तम् ।
ईश्वराज्जगतः कर्ता नान्यः कश्चन विद्यते ।।१५।।

त्वं तु धर्ममिमं राजन् ! दम्भेनैव करोषि किम् ।
दर्शयिष्ये साक्ष्यमस्य स्वल्पकालेन तेऽनघ ।।१६।।

इत्युक्त्वा तमहं यातस्त्वदन्तिकमिभानन ! ।

**नारदजीले भन्नुभयो** - जनक राजाको गर्वपूर्ण उक्ति सुनेर मलाई रीस उठ्यो र मैले भनें - हे राजा ! संसारमा परमेश्वरभन्दा ठूलो कुनै पनि प्राणी छैन र कुनै पनि मानिस जगत्को कर्ता हुन सक्दैन । तपाईंले धर्म त गर्नुहुन्छ, तर तपाईंको धर्ममा दम्भ घुसेजस्तो लाग्छ । थोरै समयभित्र नै तपाईं जगत्को कर्ता होइन, परमेश्वरमात्र जगत्का कर्ता हुनुहुन्छ भन्ने प्रमाण तपाईंका सामु देखाउनेछु ।।१५-१६।। हे गजानन! यसरी मैले आफ्ना कुरा राखें । त्यसपछि तुरुन्तै हजुरका समक्ष आएको छु ।

### कौण्डिन्य उवाच

आकर्ण्येत्थं मुनेर्वाक्यं पूजयामास तं विभुः ।।१७।।

अर्घ्यादिभिरलङ्कारैर्दिव्यैः पुष्पैः सचन्दनैः ।
मुनिराज्ञां प्रगृह्यैव वैकुण्ठं विष्णुमभ्यगात् ।।१८।।

गजाननोऽपि मिथिलां राजभक्तिं परीक्षितुम् ।
कुत्सितं वेषमादाय सर्वज्ञोऽपि समाययौ ।।१९।।

अनेकक्षतसंयुक्तं स्रवद्रक्तममङ्गलम् ।
मक्षिकानिचयाक्रान्तं रदहीनमिवातुरम् ।।२०।।

गच्छन्तं तादृशं दृष्ट्वा नरा नासानिरोधनम् ।
कुर्वन्ति वाससा केचित् ष्ठीवनञ्च यथा तथा ।।२१।।

स्खलन् मूर्च्छन् पतन् गच्छन्नर्भकावलिसंयुतः ।
नृपद्वारं समागम्य द्वारपालानुवाच सः ।।२२।।

राज्ञे निवेद्यतां दूता अतिथिं मां समागतम् ।
ब्राह्मणं क्षुधितं वृद्धमिच्छाभोजनकाङ्क्षिणम् ।।२३।।

**कौण्डिन्यले भने** - नारदजीका कुरा सुनेर भगवान् श्रीगणेशले अर्घ, पाद्य, आचमनीय, अलङ्कार, चन्दन, पुष्प आदिद्वारा नारद ऋषिको आराधना गर्नुभयो ।।१७।। त्यसपछि नारद मुनि भगवान् श्रीगणेशसँग आज्ञा लिएर भगवान् विष्णुको दर्शन गर्न वैकुण्ठतर्फ जानुभयो ।।१८।। भगवान् श्रीगणेश आफू सर्वज्ञ हुनुभएता पनि राजा जनकको भक्ति कस्तो किसिमको रहेछ भन्ने परीक्षा गर्न अत्यन्त घृणित स्वरूप लिएर मिथिलातर्फ प्रस्थान गर्नुभयो ।।१९।। त्यस बेला उहाँको शरीर घाउले भरिएको थियो । शरीरबाट रगतका धारा बगिरहेका थिए। स्वरूप अमङ्गलमय थियो, अङ्ग-अङ्गमा झिंगा भन्किरहेका थिए, मुखमा दाँत थिएनन्, उहाँ अशक्त र रुग्ण अवस्थामा देखिनुभएको थियो ।।२०।। त्यस्तो घृणित रूप भएको मानिसलाई देखेर केही दर्शकहरूले कपडाले आफ्नो नाक थुन्दथे, कोही थुकिरहेका थिए ।।२१।। त्यो सबै सहेर भगवान् भुईंमा लड्दै, पछारिंदै, मूर्च्छित हुँदै, जाग्दै र हिंड्दै तमासे केटाकेटीहरूले घेरिएर जनक राजाको दरबारमा पुगी पालेहरूलाई भन्नुभयो - हे सेवकजन ! तपाईंहरूले एउटा भोको वृद्ध मानिस इच्छानुसार भोजन गर्ने कामनाले ढोकामा आएको छ, त्यो ब्राह्मण हो र पाहुना पनि भन्ने कुरा राजालाई निवेदन गर्नुहोस् ।।२२-२३।।

ते तद्वाक्यं तथाचख्युर्गत्वा तं जनकं नृपम् ।
आनीयतामिति प्राह दूता द्रष्टुं तु कौतुकम् ।।२४।।

ते दूताः प्रापयामासुः कुचैलं मलिनं नृपम् ।
ददर्श दूराज्जनको कम्पन्तं मक्षिकावृतम् ।।२५।।

असृक्स्रवन्तं वृद्धं तं ब्राह्मणं श्रमवारिणम् ।
तर्कयामास जनक ईश्वरो रूपधृङ् नु किम् ।।२६।।

छलितुं मां समायातो यदि पुण्यं भवेन्मम ।
समाधास्ये मनो ह्यस्य भविष्यं नान्यथा भवेत् ।।२७।।

इत्येवं चिन्तयत्येव जनके नृपसत्तमे ।
प्रवेशितो द्वारपालैर्ब्राह्मणः पर्यदृश्यत ।।२८।।

ब्राह्मण उवाच

चन्द्रांशुधवलां कीर्तिं श्रुत्वा तेऽहं समागतः ।
देहि मे भोजनं राजन्! क्षुधितस्य चिराद् भृशम् ।।२९।।

मम तृप्तिर्भवेद् यावत् तावदन्नं प्रदीयताम् ।
तव क्रतुशतं पुण्यं भविष्यति नरेश्वर ।।३०।।

कौण्डिन्य उवाच

इति वाचं निशम्यासौ गृहमध्ये निनाय तम् ।
सम्पूज्य विधिवच्चैनं स्वाद्वन्नमुपवेषयत् ।।३१।।

एकग्रासेन सर्वं स जग्रास द्विजसत्तमः ।
अयाचदन्नमन्यत् स नृपोऽदात् पर्वतोपमम् ।।३२।।

तदप्येकेन जग्रास कवलेन द्विजोत्तमः ।
यावदन्नं स्थितं सिद्धं पर्याप्तमयुतस्य यत् ।।३३।।

तद्दत्तं पुरतस्तस्य बभक्ष तत्क्षणेन सः ।
असङ्ख्यातेषु पात्रेषु पक्तुं क्षिप्ताः सुतण्डुलाः ।।३४।।

दीयते पुरतस्तस्य यः सिद्धश्चोदनोऽभवत् ।
स भक्षयति सर्वं तं तत ऊचे जनो नृपम् ।।३५।।

राक्षसोऽयं भवेत् प्रायः किमर्थं दीयते बहु ।
राक्षसेभ्यः प्रदानेन न किञ्चित् पुण्यमाप्यते ।।३६।।

केचिदूचुस्त्रिभुवने भक्षितेऽप्यस्य नो भवेत् ।
तृप्तिः परमिका राजन् ! धान्यमस्मै प्रदीयताम् ।।३७।।

ती पालेहरूले राजाका सामु गएर घृणित मगन्तेको भनाइलाई जस्ताको तस्तै प्रस्तुत गरे । राजाले पनि घृणित ब्राह्मणको दर्शन गर्ने उत्कण्ठाले दूतहरूलाई ल्याउन आज्ञा दिए । राजाको आज्ञा पाएर ती दूतले ती मलिन ब्राह्मणलाई राजा सामु पुऱ्याए। जनक राजाले टाढैबाट काँपिरहेका, झिंगाले घेरिएका, शरीरबाट रगत चुहाइरहेका र पसिनाले ढाकिएका वृद्ध ब्राह्मणलाई देखे। त्यस वेला उनको मनमा तर्क चल्यो- के ईश्वर यो रूप लिएर मलाई छल्न आउनुभएको त होइन ? ।।२४-२६।। मेरो पुण्य रहेछ भने यी ब्राह्मणका समस्याको समाधान गर्नेछु र मेरो भविष्य प्रतिकूल हुने छैन । जनकले यसरी चिन्तन गरिरहेको समयमा द्वारपालद्वारा ल्याइएका ब्राह्मण राजासामु देखिए ।।२७-२८।।

**ब्राह्मणले भने** - हे राजा जनक ! म तपाईँको चन्द्रमाको किरणझैं सेतो कीर्ति फैलिएको कुरा सुनेर आएको छु । म धेरै दिनको भोको छु । सर्वप्रथम मलाई भोजन गराउनुहोस् ।।२९।। हे राजन् ! जति परिमाणको भोजनबाट मेरो तृप्ति हुन्छ त्यत्ति परिमाणको भोजन मलाई गराउनुहोस्। तपाईँले एक सय यज्ञ गरेको पुण्य पाउनुहुनेछ ।।३०।।

**कौण्डिन्यले भने** - वृद्ध ब्राह्मणका यी कुरा सुनेर जनक राजाले तिनलाई घरभित्र लगी विधिवत् सम्मान गरेर आफ्ना भान्छेहरूलाई स्वादु भोजन पस्किन लगाए ।।३१।। ती ब्राह्मणले टक्र्याएको भोजन एकै गासमा खाइदिए । त्यसपछि राजाले अनेक भाँडाहरूमा भोजन तयार गर्न लगाए । भोजन तयार भएपछि टक्र्याउँदा अरू भोजनको याचना गरे। राजाले पनि यिनले यसै गरी मागिरहन्छन् भन्ने बुझेर पर्वतको थुप्रो झैं भोजनको थुप्रो लगाइदिए । त्यो भोजनको थुप्रोलाई पनि ती ब्राह्मणले एकै गासमा निलिदिए। त्यसपछि दश हजार मानिसलाई पुग्ने पाकेको भोजन पस्कियो । त्यो पनि तिनले एकै क्षणमा खाइदिए । त्यसपछि कुनै मानिसले भन्यो- यो वृद्ध मानिस राक्षसकै स्वभावको रहेछ । यसलाई अब अरू भोजन किन पस्किने? यस्तालाई खुवाएर कुनै पुण्य प्राप्ति हुँदैन।।३२-३६।। केही मानिसहरूले भने - स्वर्ग, मर्त्य र पातालमा रहेको सम्पूर्ण भोजन निले पनि यस मानिसले पूरा तृप्ति पाउने छैन। यसलाई भात होइन बरु सिङ्गै धानको थुप्रो लगाइदिनुपर्छ ।।३७।।

ततो धान्यानि सर्वाणि गृहे भूमौ स्थितानि च ।
आनीय चिक्षिपुस्तस्य पुरग्रामगतानि च ।।३८।।

पुंसोऽस्य द्विजरूपस्य सर्वभक्षस्य चातिथेः ।
न तृप्तिमगमत्सोऽथ भक्षितेषु च तेषु च ।।३९।।

ततो दूता नृपं प्रोचुर्धान्यं क्वापि न लभ्यते ।
इति दूतवचः श्रुत्वा जनकेऽधोमुखे स्थिते ।।४०।।

स्वस्तीत्युक्त्वाऽगमद् विप्रो न तृप्तोऽसौ गृहं गृहम् ।
दीयतामन्नमित्याह ते जनास्तं जगुस्तदा ।।४१।।

सर्वेषां गृहगं धान्यं सर्वं राज्ञा समाहृतम् ।
जग्धं त्वयाऽखिलं ब्रह्मन्! गम्यतां यत्र ते रुचिः।।४२।।

द्विज उवाच

कीर्तिरस्य श्रुता लोकान् न दाता जनकात् परः ।
तृप्तिकामः समायातो ह्यतृप्तोऽहं कथं व्रजे ।।४३।।

तूष्णीम्भूतेषु लोकेषु बभ्रमन् स ददर्श ह ।
विरोचनात्रिशिरसोर्मन्दिरं द्विजयोर्वरम् ।।४४।।

तन्मध्यं प्राविशत् सोऽपि गृहस्वामीव सत्तया ।
सर्वोपस्कारहितं धातुपात्रविवर्जितम् ।।४५।।

त्यसपछि राजाका कामदारहरूले घरमा र जमीनमा समेत रहेका धान र गाउँ र नगरमा थुपारिएका धानहरू समेत ल्याउन लगाई पाहुनाका रूपमा आएका सर्वभक्षी वृद्ध ब्राह्मणका अगाडि राखिदिए।।३८।। ती सबै धान खाँदा पनि ब्राह्मण अघाएनन् । त्यसपछि दूतहरूले राजालाई निवेदन गरे - अब धान कहीँ पनि पाइँदैन। दूतको यो खबर सुनेर राजा जनकले लाजले मुख निहुर्‍याए । त्यसपछि तपाईंको कल्याण होस् भन्दै ती ब्राह्मण त्यहाँबाट उठी गाउँ र नगरका प्रत्येक घरमा गएर म भोको छु, मलाई भोजन अथवा अन्न दिनुहोस् भन्न थाले । ती मानिसहरूले पनि भने - हामी सबैका घरमा भएको धान र अन्नसमेत राजाले लगिसक्नुभएको छ र तपाईंले खाइसक्नुभएको छ । हामीकहाँ केही पनि छैन, तपाईं जहाँ मन लाग्छ जानुहोस्।।३९-४२।।

**वृद्ध ब्राह्मणले भने** - संसारमा जनक राजाभन्दा ठूलो दाता कुनै पनि मानिस छैन भन्ने कीर्ति सुनेर म अघाउँछु भन्ने विश्वास गरी आएको थिएँ तर दुर्भाग्यले म अघाउन पाइनँ। अतृप्त भएर कसरी फर्कूँ ।।४३।। यो कुरा सुनेर सबै मानिस चुप लागे । ती ब्राह्मण घुम्दै अलि पर पुगे । तिनले त्यहाँ विरोचना र त्रिशिराको घर देखे र आफू घरको मालिक भएजस्तै गरी कुनै पनि सामग्री र धातुका भाँडासम्म पनि नभएको त्यो घरभित्र पसे ।।४४-४५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे विदेहजनकतेजोहरणं नाम पञ्चषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'महादानी राजा जनकको तेजोवध' शीर्षकान्वित पैंसठ्ठीऔं अध्याय पूर्ण भयो ।।६५।।

ॐ

## षट्षष्टितमोऽध्यायः　　{ ६६ अध्याय }

कौण्डिन्य उवाच

धरामात्रासनौ तौ तु नभःप्रावारसंयुतौ ।
दिगम्बरौ सर्वधातुसंस्पर्शवर्जितावुभौ ।।१।।

अयाचितभुजौ नित्यं जलेनैवाखिलाः क्रियाः ।
द्विजरूपधरोऽपश्यत् कुर्वाणौ सत्वशुद्धये ।।२।।

गृहञ्च मक्षिकापुञ्जैर्मशकैरभितो वृतम् ।
मूर्तिं च गणनाथस्य पूजितां पुष्पपल्लवैः ।।३।।

अनन्यभक्त्या ताभ्याञ्च तत्पराभ्यां ददर्श सः ।
तावूचे श्रूयतां वाक्यं यन्मया प्रोच्यतेऽनघौ ।।४।।

मिथिलाधिपतेः कीर्तिं श्रुत्वाहं क्षुधितो भृशम् ।
तृप्तिकामः समायातो न स तृप्तिं ममाकरोत् ।।५।।

कर्मणा दाम्भिकेनैव सत्त्वं न परिरक्ष्यते ।
मम तृप्तिकरं किञ्चिद् गृहे चेदस्ति दीयताम् ।।६।।

दम्पती ऊचतुः

चक्रवर्ती नृपो योऽसौ तेन तृप्तिर्न ते कृता ।
आवाभ्यां तु दरिद्राभ्यां किं देयं तृप्तिकारकम् ।।७।।

नदीनदजलैरब्धिरसङ्ख्यैर्यो न पूर्यते ।
विन्दुमात्रेण पयसा स कथं पूर्यते वद ।।८।।

द्विज उवाच

भक्त्या दत्तं स्वल्पमपि बहुतृप्तिकरं मम ।
अभक्त्या वाऽथ दम्भेन बहु दत्तं वृथा भवेत् ।।९।।

तावुचतुः

आवयोर्न गृहे किञ्चिच्छपथस्ते द्विजोत्तम ! ।
पूजायै गणनाथस्य प्रातर्दूर्वाङ्कुरा हृताः ।।१०।।

पूजितो गणनाथस्तैस्तत एकोऽवशिष्यते ।

द्विज उवाच

भक्त्या दत्तः स एकोऽपि तृप्तये स्यात् प्रदीयताम् ।।११।।

**कौण्डिन्यले भने** – ती वृद्ध ब्राह्मणले विरोचना र त्रिशिराको घरभित्र पसेर नाङ्गो भुईंमा बसेका, आकाशको च्यादर ओढ्ने दिगम्बर, सबै प्रकारका धातुहरूको स्पर्श र सम्पर्कबाट रहित, नमागीकन जे प्राप्त हुन्छ, त्यो मात्र भोजन गर्ने, आत्मशुद्धिका लागि कर्म गरिरहेका विरोचना र त्रिशिरालाई देखे ।।१-२।। त्यो घरमा लामखुट्टे कीरा र झिंगाहरू व्यापकरूपमा घुमिरहेका थिए । घरभित्र श्रीगणेशभक्तिमा निरन्तर लागिरहेका ती दुवै दम्पतीद्वारा भक्तिपूर्वक पुष्पपत्रद्वारा पूजित श्रीगणेशको मूर्ति देखे । त्यसपछि ती ब्राह्मणले ती दुवै दम्पतीलाई भने – हे निष्पाप दम्पती ! मेरा कुरा सुन्नुहोस् । म अत्यन्त भोको छु। जनक राजा दानी छन् भन्ने कुरा धेरै पटक सुनेका कारण तृप्ति हुन्जेल भोजन गर्न जनकको दरबारमा आएको थिएँ तर उनले मलाई तृप्ति दिलाउन सकेनन् ।।३-५।। दम्भमय कर्मबाट आत्मतत्त्वको सुरक्षा गर्न सकिंदैन । मलाई तृप्ति दिने जस्तोसुकै वस्तु भए पनि तपाईं दिनुहोस् ।।६।।

**दम्पतीले भने** – चक्रवर्ती राजा जनकले त तपाईंलाई तृप्ति दिन सकेनन् भने हामी दरिद्र दम्पतीले के दिएर तपाईंलाई तृप्त गराउन सक्छौं ।।७।। जुन भाँडो असङ्ख्य नदी र नदका जलबाट भर्न सकिंदैन के त्यो एक थोपा पानीले भरिन सक्छ? ।।८।।

**वृद्ध ब्राह्मणले भने** – मलाई कसैले भक्तिपूर्वक थोरै वस्तु दिन्छ भने पनि म खुसी हुन्छु र अघाउँछु । अभक्ति र दम्भपूर्वक दिइने कुरा जति धेरै भए पनि त्यसले मलाई तृप्त गराउँदैन र त्यो व्यर्थ हुन्छ ।।९।।

**दम्पतीले भने** – हे ब्राह्मण ! हामी कसम खाएर भन्न सक्छौं, हाम्रो घरमा केही पनि छैन । आज बिहान भगवान् श्रीगणेशलाई चढाउन धेरै दूबो टिपेर ल्याएका थियौं, तिनबाट हामीले उहाँको पूजा गर्‍यौं । तीमध्ये एउटा दूबोमात्र बाँकी छ।

**ब्राह्मणले भने** – भक्तिपूर्वक दिइन्छ भने त्यो एउटा दूबो पनि मेरो तृप्तिका लागि पर्याप्त हुनेछ । दिनुहुन्छ भने त्यो मलाई दिनुहोस् ।।१०-११।।

### कौण्डिन्य उवाच

विरोचना ददौ तस्मै श्रुत्वा वाक्यं तदीरितम् ।
एकं दूर्वाङ्कुरं भक्त्या तेन तृप्तोऽभवद् द्विजः ।।१२।।

शाल्यन्नं पायसान्नञ्च नानापक्वान्नमेव च ।
व्यञ्जनानि च सर्वाणि लेह्यचोष्यान्यनेकधा ।।१३।।

विरोचना ददौ कल्प्य तस्मिन् दूर्वाङ्कुरे च तम् ।
गृहीत्वा ब्रह्मणस्तं तु बभक्ष परया मुदा ।।१४।।

तस्मिन् दूर्वाङ्कुरे भक्त्या दत्ते तेनाथ भक्तितः ।
प्रशशाम द्विजस्यास्य तत्क्षणाज्जठरानलः ।।१५।।

तृप्तिश्च परमा तेन प्राप्ता तत्क्षणमात्रतः ।
आलिलिङ्ग त्रिशिरसं तृप्तो हर्षाद् द्विजस्तदा ।।१६।।

तत्याज कुत्सितं रूपं प्रकटोऽभूद् गजाननः ।
चतुर्भुजोऽरविन्दाक्षः शुण्डादण्डविराजितः ।।१७।।

कमलं परशुं मालां दन्तं करतलैर्दधत् ।
महार्हमुकुटो राजत्कर्णकुण्डलमण्डितः ।।१८।।

दिव्यवस्त्रपरीधानो दिव्यगन्धानुलेपनः ।
उवाच तौ प्रसन्नात्मा दम्पती स गजाननः ।।१९।।

वृणीतं तं वरं शीघ्रं मनसा यं यमिच्छथः ।

### तावूचतुः

जन्मनी यत्र नौ स्यातां तत्र ते दृढभक्तिता ।।२०।।

मुक्तिर्वा दीयतां देव ! दुस्तराद् भवसागरात् ।
नावयोश्चित्तयोरन्यदपेक्षितमिभानन ।।२१।।

### कौण्डिन्य उवाच

इति तद्वाक्यमाकर्ण्य तथेत्युक्त्वा गजाननः ।
पुनरालिङ्ग्य पिदधे भक्तं त्रिशिरसं मुदा ।।२२।।

**कौण्डिन्यले भने-** ती ब्राह्मणका कुरा सुनेर विरोचनाले दूबो ल्याएर वृद्ध ब्राह्मणलाई प्रदान गरिन् । त्यसबाट ती ब्राह्मण अत्यन्त तृप्त भए । विरोचनाले दूबो टक्र्याउँदा त्यसमा चामलको भात, खीर, अरू अनेक प्रकारका मीठा-मीठा पकवान, व्यञ्जन, चुसेर खाइने र चाटेर खाइने पदार्थ पनि टक्र्याएको कल्पना गरेकी थिइन् । तिनको श्रद्धा, भक्ति, पतिव्रता धर्म र दानधर्मका प्रतापले ती पदार्थ त्यहाँ साकार भए र ब्राह्मणले पनि ती सबै पदार्थ स्वीकार गरी परम आनन्दले भोजन गरे । भक्तिपूर्वक दूर्वाङ्कुर प्रदान गरिएपछि त्यसबाट ब्राह्मण प्रसन्न भए । तत्काल नै उनको पेटको आगो शान्त भयो । एक छिनमा नै तिनले परम तृप्ति प्राप्त गरे । वृद्ध ब्राह्मणले हर्षित भएर त्रिशिरालाई आलिङ्गन गरे । त्यसैबेला अत्यन्त घृणित स्वरूप भएका ती वृद्ध ब्राह्मणले त्यो रूप परित्याग गरी आफूलाई गजानन श्रीगणेशका रूपमा प्रकट गराए । भगवान् गजानन त्यस बेला चतुर्बाहु, कमलनयन, सुन्दर सूँढद्वारा सुहाउनुभएका, कमलको माला धारण गर्नुहुने, हातमा बञ्चरो लिनुभएका र एक दन्तबाट सुशोभित अति राम्रा देखिनुभयो । उहाँको शिरमा मूल्यवान मुकुट टल्किरहेको थियो । उहाँका कानहरू चञ्चल-चञ्चल कुण्डलद्वारा अलङ्कृत थिए । उहाँले दिव्य वस्त्र धारण गर्नुभएको थियो र उहाँको शरीरमा दिव्य चन्दनको लेपन टल्किरहेको थियो । त्यसपछि प्रसन्नात्मा श्रीगणेशले ती दम्पतीलाई भन्नुभयो- तपाईंहरूले के चाहनुहुन्छ ? त्यो बताउनुहोस् ।

**दम्पतीले भने** - हे गजानन! हामीहरू जहाँ जहाँ जन्मन्छौं, त्यहाँ त्यहाँ रहँदा हाम्रा मनमा हजुरका प्रति दृढ भक्ति रहोस् । हामीलाई हजुरले दुस्तर संसार सागरबाट मुक्त गराउनुहोस् । हे गजानन ! हामीहरूका चित्तमा अरू कुनै पनि चाहना छैन ।।१२-२१।।

**कौण्डिन्यले भने** - दम्पतीका यी कुरा सुनेपछि भगवान् श्रीगणेश तथास्तु भन्दै त्रिशिरालाई आलिङ्गन गरी अन्तर्धान हुनुभयो। दूर्वाङ्कुर चढाएका कारण विरोचना र त्रिशिराको कल्याण भएको कुरा मनन गरी मैले दिनदिनै श्रीगणेशलाई दूबो चढाउने गरेको छु। असङ्ख्य भोजन र धान

एतस्मात्कारणाद् दूर्वाङ्कुरोऽस्मै दीयते मया ।
असङ्ख्यभक्षणाद् यो न तृप्तिं देवः समाययौ ।।२३।।
दूर्वाङ्कुरेण चैकेन स तृप्तिं परमां ययौ ।
इति ते कथितः सम्यगाश्रये ! महिमा शुभः ।
दूर्वासमर्पणभवः श्रवणात् सर्वकामदः ।।२४।।
इतिहासमिमं भक्त्या शृणुते श्रावयेच्च यः ।
स पुत्रधनकामाढ्यः परत्रेह च मोदते ।।२५।।
गजानने लभेद् भक्तिं निष्कामो मुक्तिमाप्नुयात् ।

गणा ऊचुः

श्रुत्वापीत्थमितिहासमाश्रया संशयं पुनः ।।२६।।
प्रपेदे हृदि तं ज्ञात्वा कौण्डिन्यः पुनरब्रवीत् ।
आश्रये ! शृणु मे वाक्यं संशयस्यापनुत्तये ।।२७।।
यद् ब्रवीमि हृदिस्थस्य मया ज्ञातस्य तेऽनघे ।
एकं दूर्वाङ्कुरं गृह्य गच्छ शीघ्रं बिडौजसम् ।।२८।।
वदाशीर्वचनं पूर्वं पश्चाद् याचस्व काञ्चनम् ।
दूर्वाङ्कुरेण तुलितं गृहीत्वा सदिहानय ।।२९।।
न न्यूनं नाधिकं ग्राह्यं तस्य भाराच्छुभानने ।।३०।।

गणा ऊचुः

इति वाणीं तस्य श्रुत्वा गृहीत्वैकं तदाश्रया ।
दूर्वाङ्कुरं ययौ शक्रं भर्तृवाक्यपरायणा ।।३१।।

खाँदा पनि जुन भगवान् तृप्त हुनुभएन, उहाँ ब्राह्मण दम्पतीको एउटा दूर्वाङ्कुर खाएर अत्यन्त तृप्त हुनुभयो । हे आश्रया ! मैले तिमीलाई दूबो चढाउँदा भगवान्लाई परम तृप्ति हुने विषयमा उदाहरण दिएर दूबोको महिमा सुनाएँ । यो कथाले श्रवणगर्दा मात्र पनि मानिसहरूको कल्याण गर्छ र कामना परिपूर्ण तुल्याउँछ ।।२२-२४।। जुन मानिसले श्रीगणेशको यो इतिहास भक्तिपूर्वक श्रवण गर्छ र गराउँछ, त्यो मानिस धन, पुत्र र अन्य चिताएका पदार्थहरूले सम्पन्न भई यो लोक र परलोकमा पनि रमाउँछ ।।२५।। त्यसको निरन्तर भगवान् श्रीगणेशमा भक्ति जागृत रहन्छ र पछि सबै प्रकारका कामनाहरू त्यागेर मुक्तिधाम प्राप्त गर्दछ।

**गणहरूले भने** - दूबोको महिमामा आधारित यो कथा सुनेपछि पनि आश्रयाको मनमा सन्देह रहिरह्यो । कौण्डिन्य ऋषिले सन्देह रहेको कुरा बुझेर तिनलाई फेरि भने - हे आश्रया ! तिमीले आफ्नो सन्देह निवारण गर्न मेरो यो उपदेश सुन ।।२६-२७।। तिम्रो हृदयमा रहेको र मैले बुझेको सन्देह हटाउन उपदेश गर्दैछु - एउटा दूबो टिपेर तिमी इन्द्र महाराजका नजिकमा जाऊ । पहिले आशीर्वाद दिएर पछिबाट अलिकति सुन माग । दूबोसँग तौलेर जति मात्राको सुन प्राप्त हुन्छ त्यतिमात्र लिएर आऊ अर्थात् धेरै पनि नल्याऊ, थोरै पनि नल्याऊ। त्यसपछि मुनिको आज्ञाअनुसार ती आश्रया एउटा दूबो टिपेर इन्द्रका समीपमा गइन् ।।२८-३१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे दूर्वामहिमकथनं नाम षट्षष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'विरोचना र त्रिशिराको उपाख्यानको प्रसङ्गमा दूर्वामहिमाको निरूपण' शीर्षकान्वित छैसट्ठीऔं अध्याय पूर्ण भयो ।।६६।।

ॐ

# सप्तषष्टितमोऽध्याय: { ६७ अध्याय }

गणा ऊ चु:

आज्ञप्ता तेन मुनिना स्वाभिप्रेतार्थसिद्धये ।
एकं दूर्वाङ्कुरं गृह्य शक्रसन्निधिमाययौ ।।१।।

तमुवाचाऽऽश्रया शक्र ! देहि मे काञ्चनं शुभम् ।
याचितुं त्वां समायाता भर्तृवाक्यात् सुरेश्वर ।।२।।

इन्द्र उवाच

किमर्थं त्वमिहायाता यद्याज्ञा प्रेषिता भवेत् ।
मया सम्प्रेषितं स्यात् ते जातरूपं स्वशक्तित: ।।३।।

आश्रयोवाच

दूर्वाङ्कुरस्य तुलया यद् भवेत् काञ्चनं सुर ! ।
तद् ग्रहीष्ये शचीभर्तर्न न्यूनं न च वाधिकम् ।।४।।

शक्र उवाच

दूतैनां नय शीघ्रं त्वं कुबेरभवनं प्रति ।
स दास्यति सुवर्णञ्च दूर्वाङ्कुरमितं शुभम् ।।५।।

गणा ऊचु:

आज्ञया देवराजस्य देवदूतस्तया सह ।
प्रायात् कुबेरभवनं शक्रस्य वचनात् तदा ।।६।।

अस्यै दूर्वाङ्कुरमितं जातरूपं प्रदीयताम् ।
इन्द्रेण प्रेषिता साध्वी मुनिपत्नी मया सह ।
प्रापिता भवनं तेऽद्य यामि देव ! नमोऽस्तु ते ।।७।।

कुबेर उवाच

अत्याश्चर्यमहं मन्ये मुनि: शक्रस्तथाऽऽश्रया ।
मोहाविष्टा न जानन्ति दूर्वाङ्कुरमितं कियत् ।।८।।

काञ्चनं तेन किं वा स्याद् बहुलं किं न याचितम् ।

गणा ऊचु:

एवमेव ददौ तस्यै बहुलं काञ्चनं स ह ।।९।।

न जग्राह भयाद् भर्तुर्न्यूनाधिकविशङ्कया ।
स्वर्णकारतुलायान्तं दूर्वाङ्कुरमधारयत् ।।१०।।

**गणहरूले भने** - महर्षि कौण्डिन्यको आज्ञा पाएर तिनकी पत्नी आश्रया आफ्नो कामना पूर्ण गर्न एउटा दूबो लिएर इन्द्रका नजिकमा गइन् ।।१।। उनले इन्द्रसँग भनिन् - हे देवराज ! म मेरा पतिको आज्ञाअनुसार तपाईँको समक्षमा आएकी छु । मलाई उत्तम सुवर्ण दिनुहोस् ।।२।।

**इन्द्रले भने** - हे मुनिपत्नी ! त्यति सुनका लागि तपाईँले आफै किन दु:ख पाउनुभयो । आज्ञा दिनुभएको भए म आफै आफ्नो शक्तिअनुसारको सुवर्ण तपाईँको आश्रममा पठाइदिने थिएँ ।।३।।

**आश्रयाले भनिन्** - हे इन्द्रमहाराज ! तुलामा तौलिंदा यो दूबो बराबर जति सुन चढ्छ, त्यतिमात्र लिने मेरो अधिकार छ, त्योभन्दा धेरै अथवा थोरै सुवर्ण मैले लिने छैन ।।४।।

**इन्द्रले भने** - हे दूत ! तिमीले मुनिपत्नी आश्रयालाई कुबेरको निवासमा पुऱ्याउने काम गर । उनले नै दूबो बराबर सुवर्ण प्रदान गर्नेछन् ।।५।।

**गणहरूले भने** - इन्द्रको आज्ञा पाएपछि एउटा देवदूत मुनिपत्नीका साथ कुबेरनिवासमा गए । तिनले कुबेरसँग भने - इन्द्र महाराजबाट आज्ञा पाएअनुसार यी मुनिपत्नीलाई लिएर आएको छु । तपाईँले मुनिपत्नी आश्रयाले ल्याउनुभएको दूबोको तौल बराबर सुन दिनुहोस् । हे देव ! पतिव्रता मुनिपत्नीलाई मेरा साथ लगाएर मलाई देवराज इन्द्रले यहाँ पठाउनुभएको छ। मैले मेरो कर्तव्य पालन गरेँ । हजुरलाई नमस्कार छ । म अब जान्छु ।।६-७।।

**कुबेरले भने** - मलाई अचम्म लागेको छ, कौण्डिन्य ऋषि, देवराज इन्द्र र मुनिपत्नी आश्रया यी सबै आज किन अज्ञानमा पर्नुभयो ? यति सानो दूबोसँग तौलिंदा कति सुन चढ्ला ? त्यसले के हुन्छ ? उहाँहरूले धेरै किन माग्नुभएन?

**गणहरूले भने** - त्यसपछि कुबेरले बिना तौल सुन झिकेर आश्रयालाई टक्र्याए, तर तिनले यो सुन दूर्वाङ्कुरभन्दा धेरै अथवा थोरै हुनसक्छ भन्ने विचार गरी आफ्ना पति कौण्डिन्यसँग डराएर लिन स्वीकार गरिनन् । त्यसपछि सुनारको तराजु ल्याएर दूबो र सुन जोख्ने काम गरियो ।।८-१०।। त्यो

नाभवत् तुलया तस्य पर्याप्तं तत् तु हाटकम् ।
वणिक्तुला समानीता तत्रापि नाभवत् समम् ।।११।।
तैलकारतुलायान्तु दूर्वाङ्कुरसमं न च ।
धटो बद्धस्ततस्तत्र हाटकं दत्तमेकतः ।।१२।।
दूर्वाङ्कुरोऽपरत्रापि याति पत्रमधस्तदा ।
अन्यदन्यद् दधौ तत्र कुबेरः काञ्चनं बहु ।।१३।।
तच्चापि नाभवत् तेन समं दूर्वाङ्कुरेण च ।
सर्वं कोशगतं द्रव्यं दत्तं तेन गिरीन्द्रवत् ।।१४।।
तथापि नाभवत् साम्यं तेन दूर्वाङ्कुरेण तत् ।
पत्नीमाहूय तां प्राह कुबेरः कौतुकान्वितः ।।१५।।
कुरु मद्वाक्यतः सुभ्रु ! धटारोहणमग्रतः ।
न समं चेत् समारोक्ष्ये निजसत्त्वरिरक्षया ।।१६।।
पतिव्रताऽऽज्ञया तस्य धटमारुरुहे तदा ।
न समा साऽपि तेनासीत् ततः सर्वां पुरीं ददौ ।।१७।।
धटमध्ये कुबेरोऽसौ न चोर्ध्वं जायतेऽङ्कुरः ।
श्रुत्वा दूतमुखादिन्द्रो गजारूढः समाययौ ।।१८।।
स्वकीयद्रव्यसहितो धटमारुरुहे स्वयम् ।
दूर्वाङ्कुरो न चोर्ध्वं स तथापि समजायत ।।१९।।
अधोमुखो गतश्चिन्तां किमेतदिति चिन्तयन् ।
विष्णुं हरञ्च सस्मार तत्रारोहणकाम्यया ।।२०।।
तत्रागतौ सनगरौ धटमारुहतां तदा ।
तथापि नोर्ध्वमगमत् तदा दूर्वाङ्कुरं स्फुटम् ।।२१।।
ततस्ते तत उत्तेरुः शिवविष्णुधनेश्वराः ।
वरुणेन्द्राग्निमरुतः कौण्डिन्यमभितो ययुः ।।२२।।
देवा देवर्षयश्चैव सिद्धविद्याधरोरगाः ।
दिनान्ते समनुप्राप्ते स्वं नीडमिव पक्षिणः ।।२३।।
नमस्कृत्य मुनिं सर्वे प्रोचुरुद्विग्नचेतसः ।

सर्व ऊचुः

वृजिनं विलयं यातं दर्शनात् तव भो मुने ।।२४।।

सुन जोख्दा दूबोका लागि पर्याप्त भएन । बनियाँको तराजु ल्याएर जोख्दा पनि त्यो सुन दूबोबराबर हुन सकेन । त्यसपछि तेलको व्यवसाय गर्ने व्यापारीको तुलामा जोख्दा पनि सुन र दूबोको तौल बराबरी हुन सकेन। तराजुलाई फेरि राम्ररी कसियो। एकातर्फ सुन र अर्कोतर्फ दूबो गराई जति पटक जोखे ता पनि दूर्वाङ्कुरको पलडा गहुँगो भयो अर्थात् दूबो तल जाने र सुन माथि जाने प्रक्रिया जारी रह्यो । त्यसपछिको जोखाईमा कुबेरले सुन थप्न थाले । जति थप्दा पनि दूबो भारी नै भएर रह्यो, बराबर भएन । सुन थप्दा थप्दा त्यहाँ सुनको पहाडै खडा भयो तर दूर्वाङ्कुर बराबर भएन। आश्चर्यमा परेका कुबेरले त्यस बेला आफ्नी पत्नीलाई बोलाएर भने - हे सुन्दरी ! मेरा आज्ञाले तिमी तराजुमा चढ, तिमी चढ्दा पनि बराबर भएन भने म आफै मेरो सम्मान राख्न तुलामा जोखिने छु।।११-१६।। पतिव्रता कुबेरकी पत्नी तराजुमा चढिन्, त्यसो गर्दा पनि दूबो रहेको पलडा गहुँगो नै भयो । त्यसपछि कुबेरले आफ्नो नगरीलाई नै तराजुमा जोख्न सुम्पिदिए। त्यसो गर्दा पनि दूबोको पलडा माथि आएन । त्यसपछि कुबेर आफै तराजुमा चढे। तर त्यो दूर्वाङ्कुर गहुँगो नै भयो । दूतका मुखबाट यस घटनाको जानकारी पाएर देवराज इन्द्र ऐरावत हात्तीमा सवार भई त्यो घटना हेर्न आए ।।१७-१८।। सम्पूर्ण आफ्नो सुनसहित इन्द्र महाराज तराजुमा चढे, तर दूबो रहेको पलडा नै भारी भयो। इन्द्रले शिर निहुऱ्याई चिन्ता गर्दै तराजुमा चढ्नका लागि भगवान् विष्णु र शङ्करको ध्यान गरे ।।१९-२०।। विष्णु र शङ्कर पनि आ-आफ्ना धाम कैलास र वैकुण्ठ साथमा लिएर त्यहाँ आई क्रमैले तराजुमा चढ्नुभयो । त्यस बेला पनि तराजुमा राखिएको दूबो गहुँगो भएका कारण माथि उठेन ।।२१।। त्यसपछि तुलाबाट झरेर विष्णु, शङ्कर, इन्द्र, कुबेर, वरुण, मरुत्, देवता, देवर्षि, सिद्ध, विद्याधर र महासर्प यी सबै सायँकालमा चराहरू आफ्नो गुँडतर्फ लागेझैं कौण्डिन्यको आश्रमतर्फ लागे ।।२२-२३।। कौण्डिन्यको आश्रममा गई उहाँलाई प्रणाम गरेर उद्विग्न भएका ती सबै देवताहरूले प्रार्थना गरे ।

**देवताहरूले भने** - 'हे मुनिवर ! हजुरको दर्शनबाट हाम्रा पाप नष्ट भएका छन् ।।२४।। पूर्व पुण्यका कारण यसपछि

पूर्वपुण्यभवादग्रे कल्याणं नो भविष्यति ।
तव पत्न्या हृतं सत्त्वं सर्वेषामद्य नः स्फुटम् ।।२५।।

महिमानं न जानीमो दूर्वाङ्कुरसमुद्भवम् ।
एकदूर्वाङ्कुरतुलां त्रैलोक्यमपि नालभत् ।।२६।।

गजाननशिरस्थस्य त्वया भक्त्याऽर्पितस्य च ।
जानीयान्महिमानं कः सम्यग् दूर्वाङ्कुरस्य ह ।
यज्ञदानव्रततपःस्वाध्यायोऽपि न तत्समः ।।२७।।

गजाननैकभक्तस्य जपतस्तपतोऽनिशम् ।
तवापि महिमानं को जानीयात् सर्वदेहिनः ।।२८।।

एवमुक्त्वा मुनिं सर्वे पूर्वं पूज्य गजाननम् ।
सर्वे सभार्यं पुपूजुस्तुष्टुवुर्ननृतुर्जगुः ।।२९।।

न ब्रह्मा न हरिः शिवेन्द्रमरुतो नाग्निर्विवस्वान् यमः
शेषोऽशेषकलानिधिश्च वरुणो नो चन्द्रमा नाश्विनौ।
नो वाचामधिपो न चैव गरुडो नो यक्षराट् नाङ्गिरा
माहात्म्यं परिवेद देव ! नियमैरज्ञातरूपस्य ते ।।३०।।

एवं सन्तोष्य सर्वे ते देवदेवं गजाननम् ।
मुनिञ्च समनुज्ञाप्य ययुः स्वं स्वं निकेतनम् ।।३१।।

आश्रयाऽपि ततो ज्ञात्वा दूर्वामाहात्म्यमुत्तमम् ।
विश्वस्ता भर्तृवाक्ये सा दूर्वाभिः प्रत्यपूजयत् ।।३२।।

विघ्नेश्वरं सर्वदेवं सर्वैर्दूर्वाभिरर्चितम् ।
प्रणनाम च कौण्डिन्यं भर्तारं सत्यवादिनम् ।।३३।।

उवाच सुप्रसन्ना सा स्वात्मानं निन्दती भृशम् ।

आश्रयोवाच

मादृशी नैव दुष्टाऽस्ति या ते वाक्ये ससंशया ।।३४।।

विशेषविदुषां स्वामिन् ! विशेषविदुषा त्वया ।
सम्यक् कृतं मम विभो ! सर्वभूतदयावता ।।३५।।

तत् क्षमस्वापराधं मे त्वामहं शरणागता ।
ततः प्रातः समुत्थाय दूर्वामादाय सत्वरौ ।।३६।।

पनि हाम्रो कल्याण नै हुनेछ । तपाइँकी धर्मपत्नीले धारण गर्नुभएको दूबोको आन्तरिक शक्ति आज हाम्रा सामु स्पष्ट भएको छ । हामीले दूबोको महिमा जान्न सकेनौं । एउटा दूबोको समानता तीनै लोकले प्राप्त गर्न सकेनन् । हजुरले भक्तिपूर्वक श्रीगणेशका शिरमा अर्पण गरेको दूबोको महिमा कसैले जान्न सक्दैन । श्रीगणेशमा चढाएका दूबाको समानता यज्ञ, दान, व्रत, तपस्या र स्वाध्यायवले पनि गर्न सक्दैनन् ।।२५-२७।। अहोरात्र जप एवं तपमा समर्पित श्रीगणेशका महान् भक्त र सबै प्राणीहरूमा आत्मभाव राख्ने हजुरको महिमा कसले जान्न सक्दछ ?' यसरी देवताहरूले प्रार्थना गरेपछि ती सबैले श्रीगणेशको पूजा गरी आश्रयासहित कौण्डिन्यको पूजा एवं स्तुति गरी नृत्य गर्दै गुणगान गरे ।।२८-२९।। हे मुनिवर ! ब्रह्मा, विष्णु, शिव, इन्द्र, मरुत्, अग्नि, सूर्य, यम, सम्पूर्ण कलाका खजाना चन्द्रमा, शेषनाग, वरुण, अश्विनी-कुमार, बृहस्पति, गरुड, कुबेर र अङ्गिरा यीमध्ये कसैले पनि श्रीगणेशका परमभक्त अज्ञात स्वरूपका स्वामी तपाइँको महिमा जान्न सक्दैनन् ।।३०।। यसरी देवताहरूले प्रार्थना गरी कौण्डिन्य ऋषि र भगवान् श्रीगणेशलाई प्रसन्न तुल्याए । त्यसपछि मुनिसँग आज्ञा लिई ती सबै देवताहरू आ-आफ्नो धामतर्फ लागे ।।३१।। कौण्डिन्य ऋषिकी पत्नी आश्रयाले पनि यो घटनाबाट दूबाको उत्तम महिमा जानेर आफ्ना पतिको वचनमा विश्वास गर्दै श्रद्धापूर्वक दूर्वार्पण गरी देवताका पनि देवता विघ्नेश्वर भगवान् श्रीगणेशको पूजा गरिन् । अनि सबै देवताले पनि दूबोले पूजा गरे । त्यसपछि तिनले आफ्ना पति कौण्डिन्य ऋषिलाई प्रणाम गरिन् ।।३२-३३।। प्रसन्न स्वभावकी आश्रयाले पटक- पटक आफ्नो निन्दा गर्दै भनिन् ।

**आश्रयाले भनिन्** - हे प्राणनाथ! हजुरको वचनमा सन्देह गर्ने मसमान दुष्ट नारी अरू हुँदैनन् । श्रीगणेशको सम्पूर्ण महिमा जान्ने, विशेष विद्वान् र सम्पूर्ण प्राणीमा दया राख्ने हजुरले मेरा लागि अत्यन्त कल्याणकारी कार्य गर्नुभएको छ।।३४-३५।। मैले गरेको अपराध क्षमा गर्नुहोस् । म हजुरको शरणमा परेकी छु । आश्रयाले प्रार्थना गरेपछि ती दुबै दम्पतीले प्रात:कालमा छिटै जागेर दूबो जम्मा गरी स्नान गरेपछि अत्यन्त

स्नात्वा देवं समभ्यर्च्य दूर्वार्पणमकुर्वताम् ।
अनन्यभक्त्या ज्ञात्वा तौ दूर्वामाहात्म्यमुत्तमम् ।।३७।।

सायं प्रातर्देवदेवं पूजयन्तौ निरन्तरम् ।
त्यक्त्वा यज्ञं व्रतं दानं ज्ञात्वा देवो गजाननः ।।३८।।

कृपया परयाऽऽविष्टः स्वधाम प्रत्यपादयत् ।

गणा ऊचुः

अगाधं वर्णितं दूर्वामाहात्म्यमिदमुत्तमम् ।।३९।।

अशेषवर्णने शेषो नेशो नेशौ हरीश्वरौ ।
त्रैलोक्यं तुलया यस्याः पत्रेणैवाऽभवत् समम् ।।४०।।

दूर्वेतिस्मरणात् पापं त्रिविधं विलयं व्रजेत् ।
तत्स्मृतौ स्मर्यते देवो यतः सोऽपि गजाननः ।।४१।।

इति चिन्तामणिक्षेत्रमहिमा वर्णितः स्फुटम् ।
श्रवणात् कीर्तनात् ध्यानाद् भुक्तिमुक्तिफलप्रदः ।।४२।।

एतस्मात् कारणाद् यानं त्रयाणां प्रेषितं शुभम् ।
रासभस्य मुखाद् दूर्वा गता देवे वृषस्य च ।।४३।।

चाण्डाल्याः शीतनाशाय त्वानीता तृणभारतः ।
वायुना प्रबलेनापि गता दूर्वा गजानने ।।४४।।

यतस्तस्य प्रिया दूर्वा सन्तुष्टोऽसौ विनायकः ।
निष्पापत्वात् त्रयाणां स सान्निध्यं दत्तवान् निजम् ।।४५।।

गन्धमात्रेण दूर्वायाः सन्तुष्टो जायते विभुः ।
प्रसङ्गेन तु भक्त्या वा किं पुनर्मस्तकार्पणात् ।।४६।।

ब्रह्मोवाच

इति दूतमुखाद् राज्ञा स श्रुतो महिमा तदा ।
दूर्वाया मुनिभिः सर्वैर्न दृष्टो न च संश्रुतः ।।४७।।

स्नात्वा दूर्वाङ्कुरान् गृह्य पुपूजुस्ते विनायकम् ।
सेवकाश्चापि दूर्वाभिरानर्चुः श्रीगजाननम् ।।४८।।

तीव्र भक्तिका साथ श्रीगणेशको पूजा गर्दा दूबाको महत्त्वबोध गरी दिनदिनै भगवान्लाई चढाउने गर्दथे । यसरी निरन्तर यज्ञ, व्रत र दान आदि कार्य छाडेर देवताका पनि देवता श्रीगणेश भगवान्को पूजा गरिरहने ती दम्पतीलाई कृपालु भगवान् श्रीगणेशले आफ्नो धाममा पुऱ्याउनुभयो ।

**गणहरूले भने** – 'तपाईंले अत्यन्त उत्तम दृष्टान्तको माध्यमबाट दूबाको महिमा बताउनुभयो ।।३६-३९।। दूर्वाङ्कुरको सम्पूर्ण महिमा बताउन शेषनाग, विष्णु, शङ्कर पनि समर्थ हुनुहुन्न । तुलना गर्दा स्वर्ग, मर्त्य र पाताल पनि एउटा दूर्वाङ्कुरसमान देखिए । कसैले दूर्वा भनेर उच्चारण गर्दा र संझदा मात्र पनि मन, वचनबाट गरेका पापहरू समाप्त हुन्छन् । दूबाको संझना गर्दा सर्वशक्तिमान् भगवान् श्रीगणेशको पनि संझना हुन्छ' ।।४०-४१।। यसरी मैले तपाईंलाई श्रवण, कीर्तन र ध्यान गर्नाले भुक्ति र मुक्ति दुवै फल प्रदान गर्ने चिन्तामणि क्षेत्रको महिमा बताएँ । चिन्तामणि क्षेत्रमा श्रीगणेशमा दूर्वाङ्कुर समर्पण गरेका कारण नै गोरु, गधा र चाण्डालीले श्रीगणेशधाममा जान विमान यात्रा गर्ने सौभाग्य पाएका हुन्। गधा र गोरुको मुखबाट खसेका दूर्वाङ्कुर संयोगवश भगवान् श्रीगणेशका शरीरमा पर्न गए र चाण्डालीले पनि जाडोबाट बच्नका लागि जम्मा गरेको घाँस-तृणबाट उडेर गएको एउटा दूबो श्रीगणेशको मूर्तिमा पर्न जाँदा भगवान् श्रीगणेश ती सबैमाथि प्रसन्न हुनुभयो, किनकि उहाँलाई दूबो साह्रै प्यारो लाग्छ । महत्त्व नजानेर पनि दूबो चढाउनाले गधा, गोरु र चाण्डालीका पाप नाश भए । त्यस कारण भगवान् श्रीगणेशले तिनीहरूलाई आफ्नो धाममा स्थान दिनुभयो । दूबाको गन्धमात्रले भगवान् श्रीगणेश सन्तुष्ट हुनुहुन्छ । विशेष प्रसङ्गमा र भक्तिपूर्वक दिनदिनै भगवान्को मूर्तिमा दूबो चढाउँदा उहाँ खुसी नहुने कुरा छैन ।।४२-४६।।

**ब्रह्माजीले भन्नुभयो** – राजाले यसरी दूतको मुखबाट दूबोको महिमा सुने । सबै मुनिहरूले पनि कहिले नदेखेको र नसुनेको दूर्वाङ्कुरको महिमा सुन्न पाए । ती सबैले स्नान गरेपछि दूबो टिपेर भगवान् श्रीगणेशको पूजा गरे । सेवकहरूले पनि दूर्वाङ्कुर अर्पण गरी भगवान् गजाननको पूजा गरे।।४७-४८।।

आसन् सर्वे दिव्यदेहास्तेजसा सूर्यवर्चसः ।
शृण्वन्तो देववाद्यानां नानारावान् समन्ततः ।।४९।।

विमानवरमारूढा दिव्यवस्त्रानुलेपिनः ।
याता वैनायकं धाम केचित् तद्रूपधारिणः ।।५०।।

नरा नागरिकाः केचिदागतास्तं महोत्सवम् ।
द्रष्टुं दूर्वाभिरानर्चुरेकविंशतिभिः पृथक् ।।५१।।

भुक्त्वा भोगाँश्च ते सर्वे गाणेशस्थानमागमन् ।
विमानं चापि चलितमूर्ध्वं तत् पुण्यपुञ्जतः ।।५२।।

तस्माद् गणेशभक्तेन कार्यं दूर्वाभिरर्चनम् ।
न करोति नरो यस्तु प्रमादात् ताभिरर्चनम् ।।५३।।

स चाण्डालस्तु विज्ञेयो नरकान् प्राप्नुयाद् बहुन् ।
न तन्मुखं निरीक्षेत कदाचिदपि मानवः ।।५४।।

यस्तु दूर्वाभिरर्चेत् तं देवदेवं गजाननम् ।
तस्य दर्शनतोऽन्योऽपि पापः शुद्धिमवाप्नुयात् ।।५५।।

अलाभे बहुदूर्वाणामेकयैवाऽभिपूजयेत् ।
तेनापि कोटिगुणिता कृता पूजा न संशयः ।।५६।।

इति नानाविधो राजन् ! महिमा कथितस्तव ।
सेतिहासस्तु दूर्वाणां श्रवणात् पापनाशनः ।।५७।।

नाख्येयो दुष्टबुद्धेस्तु प्रिये पुत्रे निवेदयेत् ।

इन्द्र उवाच

इति ब्रह्ममुखाच्छ्रुत्वा परमाख्यानमुत्तमम् ।।५८।।

ननन्द परमप्रीतो ननाम कमलासनम् ।
तदाज्ञया ययौ स्थानं स्वकीयं विस्मयान्वितः ।।५९।।

ती सबै उत्तम वस्त्र एवं अलङ्कारले दिव्य र सूर्यजस्तै तेजस्वी देखिएका थिए । त्यसपछि देववाद्यको मधुर ध्वनि श्रवण गर्दै उत्तम विमानमा सवार भएर श्रीगणेशको धाममा प्राप्त भए। तीमध्ये केही त श्रीगणेशमा तन्मय भएका कारण श्रीगणेशकै रूपमा परिणत भएका थिए ।।४९-५०।। केही नगरवासीहरू पनि त्यो उत्सव हेर्न आएका थिए। तिनले पनि २१-२१ दूर्वाङ्कुर टिपेर पृथक्-पृथक् भगवान् श्रीगणेशको पूजा गरे । ती सबैले संसारका अनेक भोग भोगी अन्तमा श्रीगणेशको धाम प्राप्त गरे। सबै मानिसहरूका पुण्यका कारण भुईंमा खसेको विमान पनि आकाशतर्फ उड्न लाग्यो ।।५१-५२।। श्रीगणेशका भक्तहरूले श्रीगणेशलाई सकेसम्म धेरै दूबो चढाएर पूजा गर्दा परमकल्याण प्राप्त हुन्छ । जसले श्रीगणेशको पूजा गर्दा प्रमादवश दूबो चढाउँदैन, त्यसलाई अधम भक्त मान्नुपर्दछ । वास्तवमा दूर्वाको तिरस्कार गर्नाले त्यस्ता भक्तले नारकीय कष्ट भोग्नुपर्दछ। कल्याण चाहने मानिसले दूबाको तिरस्कार गर्ने प्रमादी मानिसको मुख पनि हेर्न हुँदैन ।।५३-५४।। जसले दूबो चढाएर श्रीगणेशको पूजा गर्दछन्, तिनको दर्शनबाट पापी मानिस पनि निष्पाप बन्दछन्। दूबो चढाएर श्रीगणेशको पूजा गर्न चाहने मानिसले देश, काल र परिस्थितिवश दूबो धेरै नपाएमा एउटै दूबाले भए पनि पूजा गर्नुपर्दछ । जसले यसरी दूबोले पूजा गर्दछन्, तिनले करोडौं पटक पूजा गरेको फल प्राप्त गर्दछन् ।।५५-५६।। यसरी मैले तिमीलाई इतिहाससहित दूर्वाङ्कुरको पापनाशक महिमा सुनाएँ। दुष्ट बुद्धि भएका मानिसलाई यो महिमा सुनाउनु हुँदैन। आफ्ना प्रियजन र पुत्रलाई मात्र बताउनुपर्दछ ।

**इन्द्रले भने** - ब्रह्माजीको मुखबाट यो उत्तम आख्यान सुनेर ती प्रसन्न भए र उहाँलाई प्रणाम गरी श्रीगणेश र दूर्वाङ्कुरको महिमाबाट चकित हुँदै आफ्नो निवासतर्फ गए ।।५७-५९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे दूर्वामाहात्म्यं नाम सप्तषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'मुनिपत्नी आश्रयाको कथाप्रसङ्गमा दूर्वामहिमाको प्रकाशन' शीर्षकान्वित सतसठ्ठीऔं अध्याय पूर्ण भयो ।।६७।।

ॐ

## अष्टषष्टितमोऽध्यायः { ६८ अध्याय }

शूरसेन उवाच
अन्यां कथय शक्र ! त्वं गणनाथकथां पुनः ।
कृतवीर्यस्य जनकः किञ्चकार ततः परम् ।।१।।

इन्द्र उवाच
श्रुत्वाऽऽख्यानं तु सङ्कष्टचतुर्थ्या राजसत्तमः ।
दूर्वाख्यानं तु संश्रुत्य चिन्ताविष्टो नृपोऽभवत् ।।२।।
अपुत्रस्य गतिर्नास्ति पुत्रो मे भविता कथम् ।
स्वप्ने ददर्श पितरं कृतवीर्यस्तथाविधः ।।३।।
सगद्गदाभ्यां कण्ठाभ्यां नोचतुस्तौ परस्परम् ।
आलिलिङ्गतुरन्योन्यं प्रेमविह्वलचेतसा ।।४।।
ततः पुत्रं करे धृत्वा पर्यङ्केऽस्थापयत् पिता ।
उवाच च त्वया पुत्र ! पुत्रार्थं बहुधा श्रमः ।।५।।
क्रियते चाहमप्येकमुपायं वच्मि तेऽनघ ।
मृत्युलोकादागतेन कथितं नारदेन मे ।।६।।
तदैवाहं गतः पुत्र ब्रह्मणः सदनं प्रति ।।७।।
पप्रच्छाऽहं नमस्कृत्य ब्रह्माणं सर्ववेदिनम् ।
कथं मे भविता पुत्रसन्ततिः कमलासन ।।८।।
कथितं तेन सङ्कष्टचतुर्थीव्रतमुत्तमम् ।

क उवाच
अस्मिन् व्रते कृते पापक्षये जाते नृपोत्तम ।।९।।
सन्ततिस्तव पुत्रस्य भविष्यति न संशयः ।

पिता उवाच
तदा तथैव लिखितं ब्रह्मणा कथितं यथा ।।१०।।
गृहाण पुस्तकं चैतद् यथावत् कुरु तद् व्रतम् ।
यावदब्दं समाप्येत तावत् सिद्धिविनायकः ।।११।।
प्रसन्नो भविता देवः सर्वसङ्कष्टहारकः ।
तस्मिन् प्रसन्ने पुत्रस्ते भविता नात्र संशयः ।।१२।।
इत्युक्त्वाऽन्तर्हितस्तस्य पुत्रस्य जनको नृपः ।
जजागार ततो राजा कृतवीर्यस्तु वै बली ।।१३।।

**शूरसेनले भने -** हे देवराज ! तपाइँले फेरि श्रीगणेशका अरू कथा पनि मलाई सुनाउनुहोस् । कृतवीर्यका पिताले त्यसपछि के गरे ? त्यसको पनि जानकारी गराउनुहोस् ।।१।।

**इन्द्रले भने -** हे शूरसेन ! सङ्कष्टचतुर्थीसम्बन्धी कथा सुनेर दूर्वाङ्कुरको महिमा बुझेर राजा कृतवीर्य चिन्तामा परे। जसको छोरा हुँदैन त्यस्ता मानिसको गति पनि हुँदैन । मलाई कसरी पुत्रप्राप्ति हुनसक्छ ? यस्तो चिन्तन गरिरहेका ती कृतवीर्यले सपनामा आफ्ना पितालाई देखे ।।२-३।। पिताले आफ्ना छोरालाई आनन्दित भएर आलिङ्गन गरे । दुबैका कण्ठ प्रेमले गद्गद थिए र चित्त पनि विह्वल भएका थिए । त्यस कारण केही बेर बोल्न पनि सकेनन् । त्यसपछि पिताले छोरा कृतवीर्यलाई हातमा समाती उठाएर पलङ्गमा लगी बसाएर भने - हे छोरा कृतवीर्य ! तिमीले पुत्रप्राप्तिका लागि अनेक परिश्रम गरिसकेका छौ ।।४-५।। हे निष्पाप पुत्र ! म आज तिमीलाई एउटा उपाय बताउँछु । मलाई त्यो उपाय मृत्युलोकबाट फर्केर आएका नारद ऋषिले उपदेश गरेका हुन् । नारदजीबाट उपदेश पाएपछि म ब्रह्माजीको धाम सत्यलोक पुगेको थिएँ । त्यहाँ मैले सबै रहस्यका ज्ञाता ब्रह्माजीलाई प्रणाम गरी जिज्ञासा प्रकट गरें - हे विधाता ! मेरा पुत्रलाई सन्तानप्राप्ति कसरी हुनसक्छ ? त्यो सुनेर उहाँले संसारमा उत्तम मानिएको सङ्कष्टचतुर्थीव्रतको महिमा बताउनुभएको थियो ।

**ब्रह्माजीले भन्नुभयो -** हे राजन् ! सङ्कष्टचतुर्थीव्रत पूरा गरेपछि पापनाश हुँदा तपाइँका छोरा कृतवीर्यलाई सन्तान पैदा हुनेछ । यसमा कुनै पनि सन्देह छैन ।

**कृतवीर्यका पिताले भने-** त्यस बेला जसरी मलाई ब्रह्माजीले उपदेश गर्नुभएको थियो, तदनुसार मैले सङ्कष्ट-चतुर्थीको महिमाका साथै पूजाविधि बताउने पुस्तकको पनि रचना गरें ।।६-१०।। यो पुस्तक तिमी आफै राख र यसमा लेखिएबमोजिम व्रत आरम्भ गर । व्रतको एक वर्ष पूरा हुँदा सिद्धिविनायक श्रीगणेश प्रसन्न हुनुहुनेछ र तिमीलाई पुत्रप्राप्ति हुनेछ । यसमा सन्देह छैन ।।११-१२।। इन्द्रले भने- हे राजा शूरसेन! यति कुरा गरेर कृतवीर्यका पिता अन्तर्धान भए । त्यसपछि बलवान् राजा कृतवीर्यले पनि सपनाबाट ब्यूँझेपछि

ददर्श पुस्तकं हस्ते स्वप्नार्थान् परिसस्मरे ।।१४।।

मुमोचाश्रूणि नेत्राभ्यां शोकानन्दपरिप्लुत: ।
पितुर्वियोगाच्छोकार्त: पुस्तकाप्तेश्च हर्षित: ।।१५।।

अमात्यास्तावदायाता: परिवार्याऽब्रुवन् नृपम् ।

अमात्या ऊचु:

जहि प्रमादं राजन् ! त्वं सावधानमना भव ।।१६।।

त्यज शोकं वदास्मान् किं कारणं शोककारकम् ।
अस्मानपि समाविष्टस्त्वच्छोकाच्छोक उत्कट: ।।१७।।

इन्द्र उवाच

श्रुत्वा वाक्यममात्यानां कृतवीर्यो जगाद तान् ।
मया स्वप्ने पिता दृष्टस्तेन मे विह्वलं मन: ।।१८।।

पुस्तकञ्चैव सङ्कष्टचतुर्थीव्रतबोधकम् ।
दत्तं मम करे तेन पिदधे तत्क्षणाच्च स: ।।१९।।

तद्वियोगेन शोचामि गतार्थं निधनो यथा ।
उक्तश्च तेन मे वाक्यं पुत्रार्थं कुर्विदं व्रतम् ।।२०।।

प्रबुद्धोऽहं यदामात्या हस्ते दृष्टञ्च पुस्तकम् ।
आश्चर्यहर्षशोकैश्चाप्यश्रु मुञ्चामि नान्यथा ।।२१।।

अमात्या ऊचु:

य: पिता सर्वलोकानां मनुष्योरगरक्षसाम् ।
स एव पितृरूपेण परितुष्टो गजानन: ।।२२।।

उपायमवदत् ते स सन्तत्यै राजसत्तम ! ।
अन्यथा पुस्तकं क्वत्यं स्वप्नार्थ: क्व प्रमा भवेत् ।।२३।।

विना प्रसादं स्वप्नोऽपि विपर्ययमुदाहृत: ।

इन्द्र उवाच

इत्यमात्यवच: श्रुत्वा सावधानमना नृप: ।।२४।।

आहूय परिपप्रच्छ पण्डितान् सुहृदोऽपि च ।
वदन्तु पुस्तकस्यार्थं प्रसादात् तस्य भो द्विजा: ।।२५।।

त ऊचु: पुस्तकं दृष्ट्वा तस्यार्थं सर्वसंसदि ।

आफ्नो हातमा पुस्तक देखेर सपनामा पितासँग भेट भएको घटना याद गरे ।।१३-१४।। शोक र हर्षले परिपूर्ण राजा कृतवीर्यका आँखाबाट आँसु बगिरहेका थिए । पिताको वियोगका कारण ती दु:खी थिए भने पुस्तक प्राप्तिका कारण प्रसन्न पनि थिए ।।१५।। त्यसपछि कृतवीर्यका मन्त्रीहरूले आई उनलाई चारैतिरबाट घेरेर निवेदन गरे ।

**मन्त्रीहरूले भने** - हे राजन् ! अब हजुर सावधान र निश्चिन्त हुनुहोस् । हजुरलाई कुनै विषयको शोक छ भने त्यो हामीलाई बताउनुहोस् । हामी शोक बाँड्न तयार छौं । हजुरलाई सधैं शोकापन्न अवस्थामा देखेर हामी पनि उत्कट शोकले युक्त भएका छौं ।।१६-१७।।

**इन्द्रले भने**- मन्त्रीहरूका कुरा सुनेर कृतवीर्यले भने- आज सपनामा मैले मेरा पिताश्रीलाई देखें । त्यस कारण मेरो मन बेग्लै भएको छ। उहाँले मेरो हातमा सङ्कष्टचतुर्थीको व्रत गर्ने विधि लेखिएको पुस्तक पनि दिनुभयो र अन्तर्धान हुनुभयो। पितासँग वियोगका कारण म धन हराएको गरीबजस्तो चिन्तित भएको छु । उहाँले मलाई पुत्रप्राप्तिका लागि सङ्कष्टचतुर्थीको व्रत गर्न उपदेश दिनुभएको छ ।।१८-२०।। हे मन्त्रीहरू ! जब म सपनाबाट ब्यूँझें, त्यस बेला आफ्नो हातमा पुस्तक देखेर आश्चर्य, हर्ष र शोकले युक्त भएँ । त्यस कारण आँखाबाट आँसु बगिरहेका छन् । अरू कुनै कुरा भएको होइन ।।२१।।

**मन्त्रीहरूले भने**- हे महाराज ! सम्पूर्ण संसारमा रहने प्राणी र मानिसहरूका पिता भगवान् श्रीगणेशले नै तपाईँलाई पिताको रूपमा आएर दर्शन दिनुभएको छ । उहाँले नै तपाईँलाई पुत्र प्राप्तिको उपाय पनि बताउनुभएको छ ! अन्यथा कहाँ त्यो दिव्य पुस्तक ? कहाँ त्यो स्वप्नदर्शन ? यी दुबैको तुलना हुन सक्दैन । कसैको कृपा र आशीर्वाद हुँदैन भने सपनालाई पनि भ्रम नै मानिएको छ ।

**इन्द्रले भने** - मन्त्रीहरूका यस्ता कुरा सुनेर राजा कृतवीर्य सावधान भए ।।२२-२४।। त्यसपछि तिनले विद्वान् एवं मित्रहरूलाई बोलाएर उक्त व्रतको विषयमा जानकारी लिंदै भने - हे विद्वान् ब्राह्मणहरू ! पिताश्रीको कृपाबाट प्राप्त यस उत्तम पुस्तकको अर्थ र रहस्यबारे मलाई उपदेश गर्नुहोस्। यो सुनेर ती विद्वान्हरूले पनि पुस्तकको दर्शन गरेपछि सबैका सामु त्यसको तात्पर्य खुलस्त गरिदिए ।

द्विजा ऊचुः

ब्रह्मणः कृतवीर्यस्य संवादोऽत्र महान् नृप ।।२६।।

चतुर्थी सर्वसङ्कष्टनाशिन्यत्र निरूपिता ।
चन्द्रोदये गणेशस्य पूजा प्रोक्ता सविस्तरा ।।२७।।

अङ्गारकचतुर्थ्यास्तु महिमा बहुशोऽपि च ।
तिथिदेवविधूनाञ्च ह्यर्घ्यदानं समन्त्रकम् ।।२८।।

एकविंशतिविप्राणां भोजनञ्चैव पूजनम् ।
नानादानानि तेभ्यश्च देयानीति निरूपितम् ।।२९।।

दूर्वासमर्पणफलं श्वेतदूर्वाफलं पृथक् ।
एतद् व्रतं महाभाग! भाग्यात् प्राप्तं त्वयाऽनघ ।।३०।।

न दृष्टं न श्रुतं लोके भविष्यत्युपकारकम् ।
श्रवणात् स्मरणाच्चापि सङ्कष्टहरणं नृणाम् ।।३१।।

इन्द्र उवाच

श्रुत्वा तत्पण्डितमुखाद् राजा सर्वजनश्च ह ।
आश्चर्यानन्दसंयुक्तः पुपूजे तान् द्विजोत्तमान् ।।३२।।

वस्त्रालङ्काररत्नानि धनं धान्यं ददौ बहु ।
अत्रिमाहूय राजाऽपि गुरुं निजकुलस्य च ।।३३।।

सुमुहूर्ते ततोऽगृह्णात् परिपूज्य यथाविधि ।
देवं विनायकं तञ्च विद्यामेकाक्षरां शुभाम् ।।३४।।

जजाप मन्त्रं तमनन्यभक्त्या
ध्यायन् गणेशं विजितेन्द्रियः सः ।
व्रतञ्च चक्रे गणनाथतुष्ट्यै
सुताप्तये सङ्कटनाशकं तत् ।।३५।।

**ब्राह्मणहरूले भने** - हे राजन् ! यस पुस्तकमा ब्रह्माजी र कृतवीर्य राजाको बीचमा भएको महत्त्वपूर्ण संवाद रहेको छ।।२५-२६।। सबै प्रकारका सङ्कट नाश गर्ने सङ्कष्टचतुर्थीको वर्णन गरिएको छ । चन्द्रोदयमा गरिने श्रीगणेशपूजाको विस्तारपूर्वक बयान गरिएको छ । अनेक किसिमबाट अङ्गारक चतुर्थीको महिमा बताइएको छ । तिथि, देवता र चन्द्रमालाई मन्त्रपूर्वक अर्घ्य दिने विधि उपदेश गरिएको छ । एक्काइस ब्राह्मणको पूजा गरी तिनलाई भोजन गराउने र अनेक थरि दान दिनुपर्ने कुरा यसमा निरूपण गरिएको छ ।।२७-२९।। भगवान् श्रीगणेशलाई दूबो चढाउनुको फल बताउनुको साथै सेतो दूबो अर्पण गरेको विशेष फल पनि महत्त्वपूर्वक बताइएको छ । हे भाग्यशाली राजा! भाग्यका कारण हजुरले यो श्रीगणेशव्रतको उपदेश पाउनुभयो । अहिलेसम्म नदेखिएको र नसुनिएको यो व्रत लोकका निमित्त उपकारक हुनेछ। श्रवण र स्मरण गर्नाले मात्र पनि यो व्रत मानिसहरूको सङ्कटनाश गर्न समर्थ हुनेछ ।।३०-३१।।

**इन्द्रले भने** - ब्राह्मणहरूका मुखबाट यी कुरा सुनेर राजा कृतवीर्य र उनका मानिसहरू आश्चर्य एवं आनन्दले युक्त भए । ती सबैले विद्वान्हरूको पूजा गरे ।।३२।। ब्राह्मणहरूलाई दानका रूपमा वस्त्र, अलङ्कार, रत्न, धन-धान्य आदि प्रदान गरे । त्यसपछि राजा कृतवीर्यले आफ्ना कुलगुरु अत्रिलाई बोलाई उत्तम मुहूर्तमा भगवान् श्रीगणेश र गुरुको समेत विधिवत् पूजा गरेर उहाँबाट भगवान् श्रीगणेशको एकाक्षरी मन्त्र श्रवण गरे । मन्त्रश्रवणपछि कृतवीर्यले जितेन्द्रिय भई उत्तम भक्तिका साथ श्रीगणेशमन्त्रको अनुष्ठान आरम्भ गरे। श्रीगणेशमन्त्रको अनुष्ठान सकिएपछि तिनले पुत्रप्राप्तिका लागि श्रीगणेशलाई अत्यन्त प्यारो लाग्ने सङ्कष्टचतुर्थीको व्रत पनि सम्पन्न गरे ।।३३-३५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे व्रतनिरूपणं नामाष्टषष्टितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कृतवीर्यका पिताद्वारा कृतवीर्यलाई सङ्कष्टीव्रतको उपदेश' शीर्षकान्वित अठसट्ठीऔँ अध्याय पूर्ण भयो ।।६८।।

ॐ

# ऊनसप्ततितमोऽध्यायः { ६९ अध्याय }

**शूरसेन उवाच**

ब्रह्मणा कथमादिष्टं कृतवीर्याय सिद्धिदम् ।
तन्ममाचक्ष्व सङ्कष्टचतुर्थीव्रतमुत्तमम् ।।१।।

**इन्द्र उवाच**

सत्यलोके सुखासीनं सर्वज्ञं चतुराननम् ।
कृतवीर्यपिता गत्वा पप्रच्छ प्रणतो नृप ! ।।२।।

**कृतवीर्यपिता उवाच**

देवदेव ! जगद्धातः ! प्रणतार्तिनिवारण ! ।
वर्तते हृदये यन्मे पृच्छामि त्वां वदस्व तत् ।।३।।
आपत्सु वर्तमानानां नृणां व्याकुलचेतसाम् ।
चिन्तया व्यग्रमनसां वियोगे सुहृदां तथा ।।४।।
दुर्लभप्राप्तये नृणां कार्यसिद्धिः कथं भवेत् ।
अर्थसिद्धिः कथं नित्यं पुत्रसौभाग्यसम्पदाम् ।।५।।
सर्वसङ्कष्टनाशार्थं कार्यं किं मानवैः प्रभो ! ।

**ब्रह्मा उवाच**

शृणु राजन् ! प्रवक्ष्यामि सर्वसिद्धिप्रदं व्रतम् ।।६।।
यस्यानुष्ठानमात्रेण चिन्तितं प्राप्नुयान्नरः ।
ओषधीभिः शुक्लतिलैर्दिवा स्नायात् प्रसन्नधीः ।।७।।
सङ्कल्पं कारयेत् सम्यग् ध्यात्वा देवं गजाननम् ।
गणेशं पूजयेद् भक्त्या मन्त्रैरागमसम्भवैः ।।८।।
कृष्णपक्षे चतुर्थ्याञ्च निशि चन्द्रोदयेऽपि च ।

**नृप उवाच**

कथं सम्पूजयेद् ब्रह्मन् ! देवदेवं गजाननम् ।।९।।
विस्तरेण मम ब्रूहि प्रणयात् परिपृच्छते ।

**शूरसेनले भने** - ब्रह्माजीले राजा कृतवीर्यलाई सिद्धिदायक एवं उत्तम सङ्कष्टचतुर्थीव्रतको उपदेश कसरी गर्नुभयो ? त्यो मलाई पनि बताउनुहोस् ।।१।।

**इन्द्रले भने** - एक दिन कृतवीर्यका पिताले सत्यलोकमा सुखपूर्वक विराजमान ब्रह्माजीका समक्ष गएर प्रणाम गरी जिज्ञासा प्रकट गरे ।।२।।

**कृतवीर्यका पिताले भने-** जगत्का रचयिता, देवताहरूका पनि देवता, शरणमा आएका मानिसहरूको दुःख निवारण गर्ने दयालु स्वभावका स्वामी हे विधाता ! मेरो हृदयमा जुन प्रश्न छ, त्यस विषयमा म हजुरसँग सोध्न चाहन्छु, मलाई बताउनुहोस्। आपत्तिमा परेका, व्याकुल चित्त भएका, चिन्ताले आत्तिएका, आफ्ना इष्ट-मित्र र बन्धुहरूको वियोगबाट दुःखित मानिसहरूले चिताएका दुर्लभ वस्तुहरूको प्राप्ति कसरी हुनसक्छ ? कार्यसिद्धि कसरी हुनसक्छ ? अर्थसिद्धि कसरी हुनसक्छ ? र पुत्र, सौभाग्य एवं सम्पत्तिको सिद्धि कसरी हुनसक्छ ? हे प्रभु ! सबै प्रकारका सङ्कटनाश गर्न मानिसहरूले कुन कार्य गर्नुपर्छ ?

**ब्रह्माजीले भन्नुभयो** - हे राजा ! तिमी सुन, म सर्वसिद्धि प्रदान गर्ने व्रतको विषयमा उपदेश गर्दछु ।।३-६।। जुन व्रतको पालन गर्नाले मानिसले आफूले चिताएको कुरा पाउन सक्छ। कृष्ण पक्षको चतुर्थी तिथि र रातमा चन्द्र उदाएको बेला भगवान् श्रीगणेशको पूजाको अधिकार पाउनका लागि मानिसहरूले बुद्धि निर्मल बनाई दिनमा सेता तिल र औषधिहरू मिसाएर नुहाउनुपर्दछ । नुहाएपछि श्रीगणेशको ध्यान गरी "आज राति मैले तपाईंको पूजा गर्नेछु" भनी सङ्कल्प गर्नुपर्दछ। त्यसपछि भक्तिपूर्वक शास्त्रमा बताएका मन्त्रहरू पढेर श्रीगणेशको पूजा गर्नुपर्दछ । यस्तो पूजा कृष्णपक्षको चतुर्थी तिथि र रातमा चन्द्रोदय हुँदा गर्नुपर्दछ ।।७-८।।

**राजाले भने-** हे विधाता ! म श्रद्धा एवं प्रेमका साथ हजुरसँग प्रश्न गरिरहेको छु । मलाई देवदेव श्रीगणेशको पूजा कसरी गर्नुपर्छ भन्ने विषयमा पनि विस्तारपूर्वक बताउनुहोस्।

ब्रह्मोवाच

नित्यकर्म समाप्याऽथ निशायामुदये विधोः ।।१०।।

शुचौ देशे गोमयेन लिप्ते मण्डपिकान्विते ।
तत्र पीठं गणेशस्य पूजयेत् कुङ्कुमाक्षतैः ।।११।।

स्थापयेत् कलशं तत्र पञ्चरत्नसमन्वितम् ।
तस्योपरि न्यसेत् पात्रं सौवर्णं कलशान्वितम् ।।१२।।

तदभावे तु रौप्यं वा ताम्रं वैणवमेव च ।
तस्योपरि न्यसेद् वस्त्रं क्षौमं वा शक्तिसंयुतः ।।१३।।

तस्योपरि लिखेद् यन्त्रमागमोक्तविधानतः ।
तत्र मूर्तिं गणेशस्य सौवर्णीं लक्षणान्विताम् ।।१४।।

ध्यानम्

एकदन्तं महाकायं तप्तकाञ्चनसन्निभम् ।
लम्बोदरं विशालाक्षं ज्वलत्पावकलोचनम् ।।१५।।

आखुपृष्ठसमारूढं चामरैर्वीजितं गणैः ।
शेषयज्ञोपवीतञ्च चिन्तयेत् तं गजाननम् ।।१६।।

आवाहनम्

आगच्छ देवदेवेश ! सङ्कटान्मां निवारय ।
यावद् व्रतं समाप्येत तावत् त्वं सन्निधौ भव ।।१७।।
अथवा सहस्त्रशीर्षा० ।

आसनम्

गणाधीश ! नमस्तेऽस्तु सर्वसिद्धिप्रदायक ! ।
आसनं गृह्यतां देव ! सङ्कटान्मां निवारय ।।१८।।
अथवा पुरुष एव० ।

**ब्रह्माजीले भन्नुभयो** - रातमा चन्द्रमाको उदय हुँदा आफ्नो नित्य कर्म समाप्त गरी गाईका गोबरले लिपिएको वेदीद्वारा शोभायमान पवित्र पूजास्थलमा श्रीगणेशपीठको स्थापना गरी कुङ्कुम र अक्षताले पूजा गर्नुपर्दछ ।।९-११।। त्यस पीठमाथि पञ्चरत्नले युक्त कलशको स्थापना गर्नुपर्दछ। कलशमाथि सुनले बनेको कलशसहित एउटा थाली राख्नुपर्दछ ।।१२।। सुनको थाली नभएमा चाँदी, तामा अथवा बाँसले बनाएको थाली राख्नुपर्दछ । त्यस कलशलाई वस्त्रले बेर्नुपर्दछ । शक्ति भएका मानिसले रेशमको वस्त्रले बेरे पनि हुन्छ ।।१३।। त्यस थालीमाथि शास्त्रको विधानअनुसार यन्त्र लेख्नुपर्दछ र त्यसमाथि सुनद्वारा तयार गरिएको श्रीगणेशको सुन्दर र सुलक्षण प्रतिमा राख्नुपर्दछ। त्यसपछि ध्यान, आवाहन, आसन आदि समर्पण गर्नुपर्दछ ।।१४।।

**ध्यान** - 'एउटा दाँतले सुहाउनुभएका- **एकदन्त**, ठूलो शरीर धारण गर्नुहुने-**महाकाय**, गालेको सुनझैं पहेंलो वर्णले चम्किलो देखिनुहुने- **तप्तकाञ्चनसन्निभ**, विशाल उदरले शोभायमान-**लम्बोदर**, ठूला आँखा धारण गर्नुहुने-**विशालाक्ष**, बलिरहेको अग्निझैं ज्योतिर्मय आँखाले हेर्नुहुने-**ज्वलत्पावकलोचन**, मूसाको पीठयूँमा सवार हुनुभएका-**आखुपृष्ठसमारूढ**, गणहरूद्वारा चामर डुलाएर सेवा गरिनुभएका - **चामरवीजित**, शेषनागलाई यज्ञोपवीत बनाएर धारण गर्नुहुने - **शेषयज्ञोपवीती**, हात्तीको जस्तो मुख-मण्डलद्वारा शोभायमान - **गजानन** भगवान् श्रीगणेशको स्मरण गरी ध्यान गर्दछु', भनी ध्यान गर्नुपर्दछ।।१५-१६।।

**आवाहन** - हे देवताका पनि देवता भगवान् श्रीगणेश ! हजुर यहाँ आउनुहोस् र सङ्कटबाट मलाई मुक्त गर्नुहोस् । जबसम्म व्रत चल्दछ, तबसम्म हजुर मेरा नजिकमा विराजमान हुनुहोस् । (आवाहन गर्दा **सहस्त्रशीर्षा०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ ।)।।१७।।

१८८ (**आसन** - हे गणहरूका स्वामी, सबै प्रकारका सिद्धि प्रदान गर्नुहुने भगवान् श्रीगणेश ! म हजुरलाई नमस्कार गर्दछु। हजुरले यो आसन ग्रहण गर्नुहोस् र मलाई सङ्कटबाट मुक्त गर्नुहोस् । (आसन समर्पण गर्दा **पुरुष एवेद०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।१८।।

**पाद्यम्**

**उमापुत्र! नमस्तेऽस्तु नमस्ते मोदकप्रिय !।**
**पाद्यं गृहाण देवेश ! सङ्कटं मे निवारय ।।१९।।**
अथवा **एतावानस्य०** ।

**अर्घ्यम्**

**लम्बोदर ! नमस्तेऽस्तु रत्नयुक्तं फलान्वितम् ।**
**अर्घ्यं गृहाण देवेश ! सङ्कटं मे निवारय ।।२०।।**
अथवा **त्रिपादूर्ध्व०** ।

**आचमनीयम्**

**गङ्गादिसर्वतीर्थेभ्य आहृतं तोयमुत्तमम् ।**
**गृहाणाऽऽचमनीयार्थं सङ्कटं मे निवारय ।।२१।।**
अथवा **तस्माद् विराडजायत०** ।

**पञ्चामृतम्**

**पयो दधि घृतञ्चैव शर्करामधुसंयुतम् ।**
**पञ्चामृतं गृहाणेदं सङ्कटं मे निवारय ।।२२।।**
अथवा **पय: पृथिव्याम्०** ।

**स्नानम्**

**चन्द्रभागानर्मदयोर्गङ्गासङ्गमजैर्जलै: ।**
**स्नापितोऽसि मया भक्त्या सङ्कटं मे निवारय ।।२३।।**
अथवा **यत्पुरुषेण०** ।

**वस्त्रयुग्मम्**

**इभवक्त्र ! नमस्तुभ्यं गृहाण परमेश्वर ! ।**
**वस्त्रयुग्मं गणाध्यक्ष ! सङ्कटं मे निवारय ।।२४।।**
अथवा **तं यज्ञम्०** ।

**यज्ञोपवीतम्**

**विनायक ! नमस्तुभ्यं नम: परशुधारिणे ! ।**
**उपवीतं गृहाणेदं सङ्कटं मे निवारय ।।२५।।**
अथवा **तस्मा०** ।

**चन्दनम्**

**ईशपुत्र ! नमस्तुभ्यं नमो मूषकवाहन ! ।**
**चन्दनं गृह्यतां देव ! सङ्कटं मे निवारय ।।२६।।**
अथवा **तस्माद्यज्ञात्०** ।

**पाद्य** - हे पार्वतीपुत्र ! हजुरलाई नमस्कार गर्दछु । हे मोदकप्रिय ! म हजुरलाई फेरि पनि नमस्कार गर्दछु । हे देवताका पनि देवता श्रीगणेश ! मैले अर्पण गरेको यो पाद्यजल ग्रहण गर्नुहोस् र मेरो सङ्कट निवारण गर्नुहोस् । (पाद्य समर्पण गर्दा **एतावानस्य०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ ।)।।१९।।

**अर्घ्य** - हे लम्बोदर ! हजुरलाई नमस्कार गर्दछु । यो रत्न र पुष्पले सम्पन्न अर्घ्य स्वीकार गर्नुहोस् र मेरो सङ्कट निवारण गर्नुहोस् । (अर्घ्यसमर्पण गर्दा **त्रिपादूर्ध्व०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।२०।।

**आचमनीय** - हे श्रीगणेश ! गङ्गा आदि सबै तीर्थहरूबाट ल्याइएको यो उत्तम तीर्थजल आचमनका लागि ग्रहण गर्नुहोस् र मलाई सङ्कटबाट मुक्त तुल्याउनुहोस् । (आचमनीय अर्पण गर्दा - **तस्माद्०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।२१।।

**पञ्चामृत** - हे श्रीगणेश ! दूध, दही, घ्यू, मह र चिनी राखेर तयार गरिएको यो पञ्चामृत ग्रहण गरी मलाई सङ्कटमुक्त बनाउनुहोस् । (पञ्चामृत अर्पण गर्दा **पय:पृथिव्याम्०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।२२।।

**स्नान** - हे श्रीगणेश ! नर्मदा, चन्द्रभागा र गङ्गाको सङ्गमबाट ल्याइएका जलहरूद्वारा मैले हजुरको स्नान सम्पन्न गराएको छु, मलाई सङ्कटमुक्त तुल्याउनुहोस् । (स्नान गराउँदा- **यत्पुरुषेण०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ ।) ।।२३।।

**वस्त्र** - हे गजानन ! हजुरलाई नमस्कार छ । म हजुरका निमित्त वस्त्रको जोडा अर्पण गर्दैछु, हजुरले स्वीकार गर्नुहोस् र मेरो सङ्कट निवारण गर्नुहोस् । (वस्त्र अर्पण गर्दा - **तं यज्ञम्०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।२४।।

**यज्ञोपवीत** - हे विनायक ! हातमा परशु धारण गर्नुहुने हजुरलाई मेरो बारबार प्रणाम छ । यो यज्ञोपवीत स्वीकार गर्नुहोस् र मलाई सङ्कटमुक्त बनाउनुहोस् । (यज्ञोपवीत समर्पण गर्दा - **तस्मादश्वा०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।२५।।

**चन्दन** - हे शिवजीका पुत्र श्रीगणेश ! हजुरलाई मेरो प्रणाम छ । हे मूषकवाहन ! म हजुरका पाउमा पर्दछु । हे भगवन् श्रीगणेश ! हजुरले यो चन्दन ग्रहण गर्नुहोस् र मलाई सङ्कटबाट मुक्त गर्नुहोस् । (चन्दन अर्पण गर्दा **तस्माद् यज्ञात्०** मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।२६।।

अक्षता:

घृतकुङ्कुमसंयुक्तास्तन्दुला: सुमनोहरा: ।
अक्षतास्ते नमस्तुभ्यं सङ्कटं मे निवारय ।।२७।।
अथवा अक्षन्नमीमदन्त० ।

अक्षता - हे भगवन् ! घ्यू र कुङ्कुममा मुछिएका चामलका दानालाई अत्यन्त राम्रा अक्षताका रूपमा तयार गरेको छु । हजुरले स्वीकार गर्नुहोस् र मेरो सङ्कट निवारण गर्नुहोस्। (अक्षता अर्पण गर्दा अक्षन्नमीमदन्त० मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।२७।।

पुष्पम्

चम्पकं मल्लिका दूर्वा: पुष्पजातीरनेकश: ।
गृहाण त्वं गणाध्यक्ष ! सङ्कटं मे निवारय ।।२८।।
अथवा तस्मादश्वा० ।

पुष्प - हे गणनायक ! चम्पक, मल्लिका, दूबो र अनेक जात-जातका फूलहरू ल्याई हजुरमा समर्पण गर्दैछु। हजुरले यी फूल ग्रहण गर्नुहोस् र मेरो सङ्कट निवारण गर्नुहोस्। (पुष्प अर्पण गर्दा तस्मादश्वा० मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।२८।।

धूपम्

लम्बोदर ! महाकाय ! धूम्रकेतो ! सुवासितम् ।
धूपं गृहाण देवेश ! सङ्कटं मे निवारय ।।२९।।
अथवा यत्पुरुषम्० ।

धूप - हे लम्बोदर ! हे महाकाय ! हे धूम्रकेतु ! हजुरले अत्यन्त मीठो सुगन्ध भएको यो धूप स्वीकार गर्नुहोस् र मेरा सङ्कट हटाउनुहोस् । (धूप प्रयोग गर्दा - यत्पुरुषम्० मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।२९।।

दीपम्

विघ्नान्धकारसंहारकारक! त्रिदशाधिप ! ।
दीपं गृहाण देवेश ! सङ्कटं मे निवारय ।।३०।।
अथवा ब्राह्मणोऽस्य० ।

दीप - विघ्नका अन्धकारलाई समाप्त गर्नुहुने, देवताहरूका स्वामी हे भगवन् श्रीगणेश ! यो दीप ग्रहण गर्नुहोस् र मेरो सङ्कट निवारण गर्नुहोस् । (दीप समर्पण गर्दा- ब्राह्मणोऽस्य० इत्यादि मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।३०।।

नैवेद्यम्

मोदकापूपलड्डूकपायसं शर्करान्वितम् ।
पक्वान्नं सघृतं देव ! नैवेद्यं प्रतिगृह्यताम् ।।३१।।
अथवा चन्द्रमा मनसो जात० ।

नैवेद्य - हे श्रीगणेश ! मोहनभोग, मालपुवा, लड्डु र खीरसहित चिनी राखेका मीठा पक्वान्नलाई नैवेद्यको रूपमा अर्पण गरेको छु, स्वीकार गर्नुहोस् । (नैवेद्य अर्पण गर्दा चन्द्रमा मनसो जात० मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।३१।।

फलम्

नारिकेलफलं द्राक्षां रसालं दाडिमं शुभम् ।
फलं गृहाण देवेश ! सङ्कटं मे निवारय ।।३२।।
अथवा नाभ्या० ।

पुष्प - नरीवल, दाख, आँप र दाडिम आदि विभिन्न जातका यी फल हजुरलाई टक्र्याउँदैछु, हजुरले स्वीकार गर्नुहोस्। (पुष्प अर्पण गर्दा नाभ्या० इत्यादि मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।३२।।

ताम्बूलम्

क्रमुकैलालवङ्गादिनागवल्लीदलानि च ।
ताम्बूलं गृह्यतां देव ! सङ्कटं मे विनाशय ।।३३।।

ताम्बूल - सुपारी, अलैंची, ल्वाङ र पानको पातसमेत मिलाई तयार गरिएको यो ताम्बूल हजुरलाई टक्र्याउँदैछु, ग्रहण गरी मेरा सङ्कट निवारण गर्नुहोस् ।।३३।।

दक्षिणा

सर्वप्रीतिकरं देव ! हिरण्यं सर्वसिद्धिदम् ।
दक्षिणार्थं गृहाणेदं सङ्कटं मे विनाशय ।।३४।।
अथवा हिरण्यगर्भ० ।

दक्षिणा - हे श्रीगणेश भगवान् ! सबैलाई राम्रो लाग्ने, सबै प्रकारका सिद्धि प्रदान गर्ने यो सुवर्ण द्रव्य दक्षिणाका रूपमा हजुरलाई अर्पण गर्दैछु, स्वीकार गर्नुहोस् र मेरा सङ्कट नाश गर्नुहोस् । (दक्षिणा अर्पण गर्दा हिरण्यगर्भ० इत्यादि मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।) ।।३४।।

एकविंशतिदूर्वाङ्कुरसमर्पणम्

ततो दूर्वाङ्कुरान् गृह्य विंशत्येकञ्च भक्तितः ।

एभिर्नामपदैर्देवमर्चयेत् सुसमाहितः ।।३५।।

दूर्वार्पणमन्त्राः -

गणाधिपतये नमः ।।१।।

उमापुत्राय नमः ।।२।।

अघनाशनाय नमः ।।३।।

एकदन्ताय नमः ।।४।।

इभवक्त्राय नमः ।।५।।

मूषकवाहनाय नमः ।।६।।

विनायकाय नमः ।।७।।

ईशपुत्राय नमः।।८।।

सर्वसिद्धिप्रदाय नमः ।।९।।

लम्बोदराय नमः ।।१०।।

वक्रतुण्डाय नमः ।।११।।

मोदकप्रियाय नमः।।१२।।

विघ्नविध्वंसकर्त्रे नमः।।१३।।

विश्ववन्द्याय नमः ।।१४।।

अमरेशाय नमः ।।१५।।

गजकर्णाय नमः ।।१६।।

नागयज्ञोपवीतिने नमः ।।१७।।

भालचन्द्राय नमः ।।१८।।

**दूर्वार्पण** - दक्षिणा टक्र्याएपछि एक्काइसवटा दूर्वाङ्कुर हातमा लिएर तल लेखिएका नामहरूबाट एकाग्र भई भक्तिपूर्वक भगवान् श्रीगणेशलाई अर्पण गर्नुपर्दछ। १. **गणाधिपतये नमः** (गणका अधिपतिलाई नमस्कार गर्दछु), २. **उमापुत्राय नमः** (पार्वतीका पुत्र श्रीगणेशलाई नमस्कार गर्दछु), ३. **अघनाशनाय नमः** (पापनाश गर्ने श्रीगणेशलाई नमस्कार गर्दछु), ४. **एकदन्ताय नमः** (एउटा दाँतले सुहाउनुभएका श्रीगणेशलाई नमस्कार गर्दछु), ५. **इभवक्त्राय नमः** (हात्तीको अनुहारले सुहाउनुभएका भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), ६. **मूषकवाहनाय नमः** (मूसाको वाहनमा सवार हुनुहुने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), ७. **विनायकाय नमः** (जसको अरू कुनै नायक छैन अर्थात् आफू नै सबैका नायक हुनुहुन्छ, त्यस्ता सर्वशक्तिमान् भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), ८. **ईशपुत्राय नमः** (संसारका स्वामी कैलासपति शिवजीका पुत्र भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), ९. **सर्वसिद्धिप्रदाय नमः** (सबै प्रकारका सिद्धि प्रदान गर्ने श्रीगणेशलाई नमस्कार गर्दछु), १०. **लम्बोदराय नमः** (ठूलो पेट धारण गर्नुहुने श्रीगणेशलाई नमस्कार गर्दछु), ११. **वक्रतुण्डाय नमः** (बाङ्गो आकार गराएर मुखको शोभा प्रकट गर्नुहुने श्रीगणेशलाई नमस्कार गर्दछु), १२. **मोदकप्रियाय नमः** (नैवेद्यको रूपमा लड्डूलाई अत्यन्त मन पराउनुहुने श्रीगणेशलाई नमस्कार गर्दछु), १३. **विघ्नविध्वंसकाय नमः** (विघ्नको ध्वंस गर्ने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), १४. **विश्ववन्द्याय नमः** (सम्पूर्ण संसारका प्राणीहरूद्वारा प्रणाम गरिनुहुने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), १५. **अमरेशाय नमः** (देवताहरूका अधिपति र परमेश्वर भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु) १६. **गजकर्णाय नमः** (हात्तीका जस्ता ठूला–ठूला कान धारण गर्नुहुने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), १७. **नागयज्ञोपवीतिने नमः** (शेषनागलाई यज्ञोपवीतका रूपमा धारण गर्नुहुने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), १८. **भालचन्द्राय नमः** (निधारमा चन्द्रमा धारण गर्नुहुने भगवान् श्रीगणेशलाई नमस्कार

परशुधारिणे नमः ।।१९।।

विघ्नाधिपाय नमः ।।२०।।

विद्याप्रदाय नमः ।।२१।।

नीराजनम्

कर्पूरानलसंयुक्तं शेषाघौघविनाशनम् ।
नीराजनं गृहाणेश ! सङ्कटान्मां विमोचय ।।३६।।
अथवा आरात्त्रिपार्थिवम्० ।

पुष्पाञ्जलिः

चम्पकाशोकबकुलपारिजातभवैः शुभैः ।
पुष्पाञ्जलिं गृहाणेमां सङ्कटान्मां विमोचय ।।३७।।
अथवा यज्ञेन यज्ञ० ।

स्तुतिः

त्वमेव विश्वं सृजसीभवक्त्र !
त्वमेव विश्वं परिपासि देव !।
त्वमेव विश्वं हरसेऽखिलेश !
त्वमेव विश्वात्मक ! आविभासि ।।३८।।

नमस्काराः

नमामि देवं गणनाथमीशं
विघ्नेश्वरं विघ्नविनाशदक्षम् ।
भक्तार्तिहं भक्तविमोक्षदक्षं
विद्याप्रदं वेदनिधानमाद्यम् ।।३९।।

प्रदक्षिणा

एवं स्तुवीत विधिवत् प्रणमेत पुनः पुनः ।
प्रदक्षिणां प्रकुर्वीत यथाशक्त्यैकविंशतिम् ।।४०।।

प्रार्थना

ये त्वामसम्पूज्य गणेश ! नूनं
वाञ्छन्ति मूढा विहितार्थसिद्धिम् ।
त एव नष्टा नियतं हि लोके
ज्ञातो मया ते सकलः प्रभावः ।।४१।।

गर्दछु), **१९. परशुधारिणे नमः** (हातमा बञ्चरो धारण गर्नुहुने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), २०. **विघ्नाधिपाय नमः** (विघ्नहरूका स्वामी भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु), २१. **विद्याप्रदाय नमः** (सम्पूर्ण विद्या प्रदान गर्नुहुने भगवान् श्रीगणेशलाई नमस्कार गर्दछु) ।।३५।।

**आरती** – कपूर र अग्निको ज्योतिले सम्पन्न सबै प्रकारका पापहरू नाश गर्ने यो आरतीको ज्योति हजुरले ग्रहण गर्नुहोस् र मलाई सङ्कटबाट मुक्त गर्नुहोस्।(आरती अर्पण गर्दा **आरात्रिपार्थिवम्०** इत्यादि मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।३६।।

**पुष्पाञ्जलि** – चम्पक, अशोक, बकुल, पारिजात आदि वृक्षहरूका फूलहरूबाट गरिएको यो पुष्पाञ्जली–अर्पण हजुरले ग्रहण गर्नुहोस् र मलाई सङ्कटबाट मुक्त गर्नुहोस् । (पुष्पाञ्जली अर्पण गर्दा यज्ञेनयज्ञ० इत्यादि मन्त्रको पनि प्रयोग गर्न सकिन्छ।)।।३७।।

**स्तुति** – हे श्रीगणेश देव ! हजुरले नै संसारको रचना गर्नुहुन्छ । हे गजानन ! हजुरले नै संसारको पालन गर्नुहुन्छ । हे संसारका अधिपति ! हजुरले नै संसारको संहार पनि गर्नुहुन्छ। हे देवदेव ! हजुर नै विश्वरूप भएर विराजमान हुनुहुन्छ ।।३८।।

**नमस्कार** – सम्पूर्ण संसारका स्वामी, गणहरूका नाथ, विघ्नहरूका स्वामी, विघ्नविनाश गर्ने कार्यमा कुशल, भक्तका पीर–मर्का नाश गर्नुहुने, भक्ति गर्ने मानिसहरूलाई मोक्ष प्रदान गर्न निपुण, विद्यादाता र वेदका ज्ञाता श्रीगणेशलाई नमस्कार गर्दछु ।।३९।।

**प्रदक्षिणा**– स्तुति र नमस्कार आदि गरेपछि भक्तले श्रीगणेशलाई बारबार प्रणाम गर्नुपर्दछ । त्यसपछि एक्काइस पटक भगवान् श्रीगणेशको प्रदक्षिणा गर्नुपर्दछ अथवा एक्काइस पटक प्रदक्षिणा गर्न नसक्नेले यथाशक्ति प्रदक्षिणा गरे हुन्छ।।४०।।

**प्रार्थना** – हे भगवन् श्रीगणेश ! जुन मूर्ख मानिसले हजुरको आराधना नगरीकन आफूले गरेका कार्यको सिद्धि चाहन्छन् ती वास्तवमा आफै नष्ट भएर जान्छन्, यो निश्चित तथ्य हो । म हजुरको सम्पूर्ण प्रभाव जान्दछु ।।४१।।

**वायनम्**

**आचार्यस्त्वं द्विजाध्यक्ष ! सर्वसिद्धिप्रदायक ! ।**

**वायनं गृह्यतां ब्रह्मन् ! सङ्कटान्मां निवारय ।।४२।।**

**विशेषार्घ्यम्**

**फलपुष्पाक्षतैर्युक्तं जलं ते दक्षिणान्वितम् ।**

**विशेषार्घ्यं मया दत्तं सङ्कटान्मां निवारय ।।४३।।**

**। इति षोडशोपचारार्चनम् ।**

**गणेशमन्त्रार्चनम्**

**ॐ नमो हेरम्ब मदमोदित मम सङ्कटं निवारय स्वाहा।**

**इन्द्रादि लोकपालाँश्च समन्तात् पूजयेत् सुधीः ।।४४।।**

**पक्वमुद्गतिलैर्युक्तान् मोदकान् घृतपाचितान् ।**

**भक्ष्यान्यन्यानि ताम्बूलं यथाशक्ति प्रकल्पयेत् ।।४५।।**

**ततो दूर्वाङ्कुरान् गृह्य विंशत्येकञ्च भक्तितः ।**

**एभिर्नामपदैर्देवमर्चयेत् सुसमाहितः ।।४६।।**

**गणाधिप! नमस्तुभ्यमुमापुत्राभयप्रद ! ।**

**एकदन्तेभवक्त्रेति तथा मूषकवाहन ! ।।४७।।**

**विनायकेशपुत्रेति सर्वसिद्धिप्रदायक ! ।**

**लम्बोदर ! नमस्तुभ्यं वक्रतुण्डाघनाशन ! ।।४८।।**

**विघ्नविध्वंसकर्तेति विश्ववन्द्यामरेश्वर ! ।**

**गजवक्र ! नमस्तुभ्यं नागयज्ञोपवीतिने ।।४९।।**

**वायन** - हे आचार्यवर श्रीगणेश ! हजुर ब्राह्मणहरूका स्वामी हुनुहुन्छ र सिद्धिदाता पनि । म हजुरलाई मीठा पक्वान्न र शृङ्गारको सामग्री चढाउँछु। मलाई सङ्कटबाट मुक्त गर्नुहोस्।।४२।।

**विशेष अर्घ्य** - हे भगवन् श्रीगणेश ! मैले हजुरलाई फल, फूल, अक्षताले युक्त दक्षिणासमेत रहेको यो जल विशेष अर्घ्यको रूपमा टक्र्याउँछु। मलाई सङ्कटबाट मुक्त गर्नुहोस्।।४३।। यसरी षोडशोपचारले पूजा गरेपछि तलको मन्त्रले श्रीगणेशको फेरि मन्त्रपूजा गर्नुपर्दछ ।

**मन्त्रद्वारा श्रीगणेशको पूजा - मन्त्र - ॐ नमो हेरम्ब मदमोहित मम सङ्कटं नाशय स्वाहा** यो भगवान् श्रीगणेशको पवित्र मन्त्र हो। यसको यथशक्ति जप गर्नुपर्दछ। यसपछि बुद्धिमान् साधकले श्रीगणेशमूर्तिका चारैतिर इन्द्र आदि दश लोकपालहरूको पूजा गर्नुपर्दछ ।।४४।। पूजापछि भगवान् श्रीगणेशलाई पाकेको मुगी, मास र तिलले युक्त घ्यूमा पकाएको लड्डु र अन्य नैवेद्यहरू शक्तिअनुसार अर्पण गर्नुपर्दछ । त्यसपछि ताम्बूल टक्र्याउनुपर्दछ। ताम्बूल टक्र्याएपछि भक्तिपूर्वक एक्काइस वटा दूर्वाङ्कुर हातमा लिएर तल लेखिएका नामहरू उच्चारण गर्दै क्रमशः एकाग्र भएर पूजा गर्नुपर्दछ ।।४५-४६।।

१- हे गणाधिप ! हजुरलाई नमस्कार छ ( **गणाधिपाय नमः** )
२- हे अभयदाता ! हजुरलाई नमस्कार छ ( **अभयप्रदाय नमः** )
३- हे उमापुत्र ! हजुरलाई नमस्कार छ ( **उमापुत्राय नमः** )
४- हे एकदन्त ! हजुरलाई नमस्कार छ ( **एकदन्ताय नमः** )
५- हे इभानन ! हजुरलाई नमस्कार छ ( **इभाननाय नमः** )
६- हे मूषकवाह ! हजुरलाई नमस्कार छ ( **मूषकवाहनाय नमः** )
७- हे विनायक ! हजुरलाई नमस्कार छ ( **विनायकाय नमः** )
८- हे ईशपुत्र ! हजुरलाई नमस्कार छ ( **ईशपुत्राय नमः** )
९- हे सर्वसिद्धिदाता ! हजुरलाई नमस्कार छ ( **सर्वसिद्धिप्रदाय नमः** )
१०- हे लम्बोदर ! हजुरलाई नमस्कार छ ( **लम्बोदराय नमः** )
११- हे वक्रतुण्ड ! हजुरलाई नमस्कार छ ( **वक्रतुण्डाय नमः** )
१२- हे पापनाशक ! हजुरलाई नमस्कार छ ( **अघनाशनाय नमः** )
१३- हे विघ्नविध्वंसक ! हजुरलाई नमस्कार छ ( **विघ्नविध्वंसकाय नमः** )
१४- हे विश्ववन्द्य ! हजुरलाई नमस्कार छ ( **विश्ववन्द्याय नमः** )
१५- हे अमराधिप ! हजुरलाई नमस्कार छ ( **अमराधिपाय नमः** )

भालचन्द्र ! नमस्तुभ्यं नमः परशुधारिणे ।
विघ्नाधिप ! नमस्तुभ्यं सर्वविद्याप्रदायक ।।५०।।

एवं सम्पूजयेद् देवं दूर्वाभिश्च पृथक् पृथक् ।
यदुद्दिश्य कृतं सम्यग् यथाशक्ति प्रपूजनम् ।।५१।।

तेन तुष्टो भवाशु त्वं हृत्स्थान् कामान् प्रपूरय ।
विघ्नान् नाशय मे सर्वान् दुष्टाँश्च समुपस्थितान् ।।५२।।

त्वत्प्रसादेन सर्वाणि कार्याणीह करोम्यहम् ।
शत्रूणां बुद्धिनाशञ्च मित्राणामुदयं कुरु ।।५३।।

इति विज्ञाप्य देवेशं प्रणिपत्य पुनः पुनः ।
ततो होमं प्रकुर्वीत शतमष्टोत्तरं व्रती ।।५४।।

मोदकैर्वायनं कार्यं व्रतसम्पूर्तिहितवे ।
लड्डूकैर्वटकाद्यैर्वा त्रिसप्तफलसंयुतम् ।।५५।।

रक्तवस्त्रेण सञ्छाद्य स्वाचार्याय निवेदयेत् ।
गणाधिप ! नमस्तुभ्यं सर्वसङ्कल्पसिद्धिद ! ।।५६।।

वायनस्य प्रदानेन सङ्कटान्मां निवारय ।

तिथ्यर्घ्यम्

कथां श्रुत्वा ततः पुण्यां दद्यादर्घ्यं समाहितः ।।५७।।

तिथीनामुत्तमे ! देवि ! गणेशप्रियवल्लभे ! ।
सङ्कटं हर मे देवि ! गृहाणार्घ्यं नमोऽस्तु ते ।।५८।।

देवार्घ्यम्

लम्बोदर ! नमस्तुभ्यं सततं मोदकप्रिय ! ।
सङ्कटं हर मे देव ! गृहाणार्घ्यं नमोऽस्तु ते ।।५९।।

चन्द्रार्घ्यम्

चन्द्राय सप्तवारन्तु मन्त्रेणानेन पार्थिव !।
क्षारोदार्णवसम्भूत ! अत्रिगोत्रसमुद्भव ! ।
गृहाणार्घ्यं मया दत्तं रोहिण्या सहितः शशिन् ।।६०।।

१६- हे गजवक्त्र! हजुरलाई नमस्कार छ ( गजवक्त्राय नमः )
१७- हे सर्पलाई यज्ञोपवीतका रूपमा धारण गर्ने हे गजानन! हजुरलाई नमस्कार छ ( नागयज्ञोपवीतिने नमः )
१८- हे भालचन्द्र! हजुरलाई नमस्कार छ ( भालचन्द्राय नमः )
१९- हे परशुधारी श्रीगणेश! हजुरलाई नमस्कार छ ( परशुधारिणे नमः )
२०- हे विघ्नाधिप! हजुरलाई नमस्कार छ ( विघ्नाधिपाय नमः )
२१- हे सर्वविद्यादाता! हजुरलाई नमस्कार छ ( सर्वविद्याप्रदायकाय नमः ) ।।४७-५०।।

यसरी छुट्टाछुट्टै दूर्वाङ्कुरद्वारा भगवान् श्रीगणेशको पूजा गर्नुपर्दछ। मैले जुन उद्देश्य लिएर यथाशक्ति हजुरको पूजा गरें, यसबाट हजुर छिटै प्रसन्न हुनुहोस् र मेरा हृदयमा रहेका सबै इच्छालाई परिपूर्ण तुल्याउनुहोस् । सबै विघ्नहरूका साथै मेरा दुष्टहरूको पनि नाश गरिदिनुहोस् ।।५१-५२।। हजुरको कृपाबाट म यो संसारमा सम्पूर्ण कर्तव्यपालन गर्न समर्थ हुनसकूँ। हजुरले मेरा शत्रुहरूको बुद्धिनाश गर्नुहोस् र मित्रहरूको उदय गराउनुहोस् ।।५३।। यसरी भगवान्लाई आफ्ना मनका भावनाहरू समर्पण गरेर बारबार प्रणाम गरेपछि साधकले १०८ सङ्ख्यामा होम गर्नुपर्दछ ।।५४।। व्रतको पूर्णताका लागि एक्काइस लड्डु अथवा वटुक तयार गरी रातो कपडाले ढाकेर वायन( उपहार )का रूपमा आचार्यलाई निवेदन गर्नुपर्दछ ।।५५।। सबै प्रकारका सङ्कल्पहरूलाई सिद्धि प्रदान गर्नुहुने हे भगवन् श्रीगणेश ! हजुरलाई नमस्कार छ ।।५६।। म उपहार टक्र्याउँदैछु। मलाई सङ्कटबाट मुक्त गर्नुहोस् भनी प्रार्थना गर्नुपर्दछ । यसरी प्रार्थना गर्दै वायन चढाएपछि श्रीगणेशको महिमा बताउने कथा सुनेर तिथिलाई अर्घ्य चढाउनु पर्दछ ।।५७।।

**तिथिलाई अर्घ्य** - श्रीगणेशका लागि अत्यन्त प्यारो लाग्ने हे चतुर्थी तिथि ! तिमीले मेरो सङ्कट निवारण गर। म अर्घ्य टक्र्याउँछु, स्वीकार गर। तिमीलाई मेरो नमस्कार छ।।५८।।

**श्रीगणेशलाई अर्घ्य** - हे मोदकप्रिय भगवान् श्रीगणेश! हजुरलाई मेरो नमस्कार छ । मेरो सङ्कट हरण गर्नुहोस्। म प्रणाम गर्दै हजुरलाई अर्घ्य अर्पण गर्दछु ।।५९।।

**चन्द्रलाई अर्घ्य** - अत्रिगोत्रमा उत्पन्न हुनुभएका, क्षीरसागरबाट उदाउनुभएका, रोहिणीका साथमा सुहाउनु हुने हे चन्द्रमा ! मैले अर्पण गरेको अर्घ्य ग्रहण गर्नुहोस् ।।६०।।

ततः क्षमापयेद् देवं ततो विप्रांश्च भोजयेत् ।

स्वयं भुञ्जीत तच्छेषं ब्राह्मणेभ्यो यदर्पितम् ।।६१।।

सप्तग्रासान् मौनयुक्तो यथाशक्त्या यथासुखम् ।

इत्थं कुर्यात् तु मासेषु चतुर्ष्वपि विधानतः ।।६२।।

त्यसपछि साधकले भगवान् श्रीगणेशसँग क्षमायाचना गर्नुपर्दछ। क्षमायाचनपछि ब्राह्मणलाई भोजन गराई आफूले भोजन गर्नुपर्दछ। आफूले भोजन गर्दा ब्राह्मणभोजनमा बाँकी रहेको शेष भोजनलाई भगवान्को प्रसाद मानेर ग्रहण गर्नुपर्दछ । यजमानले भोजन गर्दा सात गाससम्म केही नबोली खानुपर्दछ। त्यसपछि अरू भोजन आनन्दपूर्वक आफ्नो शक्तिअनुसार ग्रहण गर्नुपर्दछ । यस किसिमबाट लगातार चार महिनासम्म विधिपूर्वक व्रत गर्नुपर्दछ ।।६१-६२।।

ॐ

॥ इति श्रीगणेशपुराणे उपासनाखण्डे सङ्कष्टचतुर्थीव्रतान्तर्गतपूजाविधिर्नामैकोनसप्ततितमोऽध्यायः ॥

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थी व्रतमा गरिने पूजाविधिको निरूपण' शीर्षकान्वित उनान्सत्तरीऔं अध्याय पूर्ण भयो ।।

ॐ

# अथ सप्ततितमोऽध्यायः　{ ७० अध्याय }

राजोवाच

व्रतं पुरा कृतं केन भुवि केन प्रकाशितम् ।
किं पुण्यं किं फलञ्चास्य कारुण्याद् वद मे प्रभो ।।१।।

ब्रह्मोवाच

पुरा स्कन्दे गते चैव पार्वत्यैव कृतं व्रतम् ।
चतुर्ष्वपि च मासेषु शिववाक्येन पार्थिव ।।२।।

पञ्चमे मासि दृष्टस्तु कार्तिकेयो ह्यपर्णया ।
अगस्त्येन कृतं पूर्वं समुद्रं पातुमिच्छता ।।३।।

त्रिषु मासेषु विघ्नेशप्रसादात् पीतवानमुम् ।
षण्मासावधि राजेन्द्र दमयन्त्या पुरा कृतम् ।।४।।

नलमन्वेषयन्त्या तु ततो दृष्टो नलस्तया ।
प्रद्युम्नस्य सुतं राजँश्चित्रलेखाऽनयत् पुरा ।।५।।

क्व गतः केन नीतो वा इति शोचन्तमाकुलम् ।
प्रद्युम्नं पुत्रशोकार्ता रुक्मिणी प्रत्यभाषत ।।६।।

शृणु पुत्र ! प्रवक्ष्यामि यद् व्रतं स्वस्य मन्दिरे ।
शम्बरेण पुराऽऽनीते बालके त्वयि षड्दिने ।।७।।

त्वद्वियोगजदुःखेन हृदयं मे व्यदूयत ।
कदा द्रक्ष्याम्यहं पुत्रमपूर्वमतिसुन्दरम् ।।८।।

अन्यस्त्रीणां सुतं दृष्ट्वा मम चेतसि जायते ।
ममापि भविता पुत्रः समोऽनेन प्रमाणतः ।।९।।

इति चिन्ताकुलाया मे गतान्यब्दानि भूरिशः ।
ततो मे दैवयोगात् तु लोमशो मुनिरागतः ।।१०।।

तेनोपदिष्टं सङ्कष्टचतुर्थीव्रतमुत्तमम् ।
सर्वचिन्ताहरं पुत्र ! चतुर्वारं कृतं मया ।।११।।

तत्प्रसादात् त्वमायातो हत्वा शम्बरमाहवे ।
त्वमप्येतत् कुरु व्रतं ततो ज्ञास्यसि तं सुतम् ।।१२।।

**राजाले भने** - यो सङ्कष्टचतुर्थीको व्रत पहिले कसले गऱ्यो र संसारमा यसलाई कसले फैलायो ? यो व्रत सम्पन्न गर्दा कस्तो पुण्य र कस्तो फल प्राप्त हुन्छ ? यसबारे मलाई बताउनुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे राजन्! प्राचीन समयमा स्वामी कार्तिकेय घर छाडेर अज्ञात स्थानमा जानु हुँदा छोराको दर्शन नपाएर छट्पटिएकी पार्वतीले शिवजीको उपदेशबाट चार महिनासम्म यो व्रत गर्नुभयो ।।२।। पाँचौं महिना लाग्दा उहाँले आफ्ना प्यारा पुत्र कार्तिकेयको दर्शन पाउनुभयो । समुद्रको पान गर्न चाहने ऋषि अगस्त्यले तीन महिनासम्म यो व्रत गरेपछि श्रीगणेशको कृपाबाट समुद्रपान गरेका थिए । हे राजन्! राजा नलको खोजीमा लागेकी दमयन्तीले छ महिनासम्म यो व्रत गरिन् । त्यसपछि उनले पनि आफ्ना प्यारा पति नलको दर्शन पाएकी थिइन् । प्रद्युम्नका छोरा अनिरुद्धलाई चित्रलेखाले बाणासुरको नगरमा पुऱ्याएकी थिइन् ।।३-५।। मेरो छोरा कहाँ गयो ? कसले लग्यो ? भनी व्याकुल भएका प्रद्युम्नलाई रुक्मिणीले भनिन् - हे छोरा ! मैले आफै घरमा बसी जुन व्रत गरें, त्यस विषयमा सुन । तिमी छ दिनको हुँदा शम्बरासुरले तिम्रो अपहरण गऱ्यो ।।६-७।। तिम्रो वियोगबाट म साह्रै व्याकुल भएँ । त्यस बेला अरू नारीहरूका छोरा-छोरी देखेर मेरो मनमा कहिले मैले अत्यन्त प्यारो छोराको मुख हेर्न पाउली भन्ने भावना आउँथ्यो । मेरो छोरा पनि यत्तिकै ठूलो भयो होला भन्ने चिन्ता गर्दागर्दै मेरा कैयन वर्ष बिते । त्यसपछि भाग्यको संयोगबाट कुनै दिन मेरो घरमा लोमश ऋषि आउनुभयो ।।८-१०।। उहाँले मलाई चिन्तानाश गर्ने सङ्कष्टचतुर्थीको महान् व्रतको विषयमा उपदेश गर्नुभयो । उहाँको उपदेशबाट मैले चार पटकसम्म दोहोऱ्याएर यो व्रत सम्पन्न गरें । यस व्रतको प्रभावबाट तिमी शम्बरासुरलाई युद्धमा मारेर द्वारका फर्केका थियौ । तिमीले पनि यो व्रत गर। त्यसपछि आफ्ना छोरा अनिरुद्धको विषयमा सबै कुरा थाहा पाउने छौ ।।११-१२।।

ब्रह्मोवाच

प्रद्युम्नेन कृतं पूर्वं गणनाथसुतोषकम् ।
श्रुतो बाणासुरपुरे निरुद्धो नारदात् पुरा ।।१३।।

उद्धवस्याज्ञया कृष्णः कृतवान् व्रतमुत्तमम् ।
भीत ईश्वरसङ्ग्रामादेकवारं यथाविधि ।।१४।।

गत्वा स शोणितपुरं जित्वा बाणासुरं मृधे ।
आनीत उषया सार्द्धमनिरुद्धः क्षणान्नृपः ।।१५।।

मयाऽपि सृष्टिकामेन कृतमेतन्नृपोत्तम ! ।
कृता नानाविधा सृष्टिर्व्रतस्यास्य प्रभावतः ।।१६।।

अन्यैर्देवासुरनरैः कृतं विघ्नोपशान्तये ।
ऋषिभिर्दानवैर्यक्षैः किन्नरोरगराक्षसैः ।।१७।।

आपद्यपि च कष्टायां कुर्यात् तच्छान्तये व्रतम् ।
नानेन सदृशं लोके सर्वसिद्धिकरं व्रतम् ।।१८।।

तपो दानं जपस्तीर्थं मन्त्रो विद्या न च क्वचित् ।
इमां श्रुत्वा कथां राजन् ! स्वयं भुञ्जीत वाग्यतः ।।१९।।

जानुमध्ये करं कृत्वा गणेशं हृदि चिन्तयेत् ।
द्विजातीनाञ्च यच्छेषं भोक्तव्यं सह बान्धवैः ।।२०।।

कार्यं बह्वल्पमासैस्तु सिद्ध्यते नात्र संशयः ।
बहुनात्र किमुक्तेन नान्यत् स्याच्छीघ्रसिद्धिदम् ।।२१।।

नोपदेश्यमभक्ताय नास्तिकाय शठाय च ।
देयं पुत्राय शिष्याय भक्तियुक्ताय साधवे ।।२२।।

मम प्रियोऽसि राजेन्द्र ! धर्मिष्ठः क्षत्रियर्षभः ।
कार्यकर्ताऽसि लोकानामुपदिष्टमथो व्रतम् ।।२३।।

तस्मात् सर्वव्रतेष्वेतत् कर्तव्यं प्रथमं त्वया ।
सिद्धिं यास्यन्ति कार्याणि नान्यथा भाषितं मया ।।२४।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी रुक्मिणीको आज्ञा पाएर प्रद्युम्नले भगवान् श्रीगणेशलाई प्रसन्न तुल्याउने यो व्रत सम्पन्न गरे । व्रतका प्रभावले तिनले नारद मुनिका मुखबाट अनिरुद्ध बाणासुरको नगरमा रहेको कुरा थाहा पाए ।।१३।। उद्धवको आज्ञा लिएर भगवान् कृष्णले पनि शिवजीसँग सङ्ग्राम गर्न नपरोस् भनी विधिपूर्वक यो उत्तम व्रत गर्नुभएको थियो । त्यसपछि उहाँ शोणितपुर गएर युद्धमा बाणासुरलाई जिती एक छिन्मा नै उषा र अनिरुद्धलाई लिएर द्वारका फर्कनुभएको थियो ।।१४-१५।। हे राजन् ! सृष्टि गर्न चाहने मैले पनि यो व्रत सम्पन्न गरेको छु । यसै व्रतका प्रभावले मैले अनेक थरि सृष्टि गरें । देवता, ऋषि, मानिस, दानव, यक्ष, किन्नर, नाग र राक्षसहरूले पनि विघ्नशान्तिका लागि यो व्रत गरेका थिए ।।१६-१७।। मानिसहरूले अत्यन्त ठूलो आपत्ति आइलाग्दा त्यसको निवारणका लागि यो व्रत गर्नुपर्दछ। यो समान सर्वसिद्धिदायक व्रत संसारमा अरू कुनै पनि छैन।।१८।। यस व्रतका सामु तपस्या, दान, जप, तीर्थ, मन्त्रानुष्ठान र विद्यासाधना कुनैको पनि महत्त्व छैन । साधकले श्रीगणेशको यो व्रत सम्पन्न गरेपछि कथा सुनेर मौन भई भोजन गर्नुपर्दछ।।१९।। दुइवटा घुँडाको बीचमा हात राखेर श्रीगणेशलाई हृदयमा चिताउनुपर्दछ । ब्राह्मणभोजन गराउँदा शेष रहेको भोजन आफ्ना बन्धुहरूका साथमा बसेर खानु पर्दछ ।।२०।। आफूले जुन कार्यको सिद्धिका लागि यो व्रत गरिएको छ, त्यो कार्य थोरै धेरै महिनामा अवश्य सिद्ध हुन्छ । यसमा कुनै पनि सन्देह छैन । यस व्रतको महिमाको विषयमा धेरै के भनूँ - यो समान छिटो सिद्धि दिने अरू कुनै व्रत छैन ।।२१।। यस व्रतको उपदेश नास्तिक र दुर्जनलाई गर्न हुँदैन । यसको उपदेश भक्तिभावनाले प्रेरित भएका, सज्जन छोरा, शिष्य र बन्धु-बान्धवहरूलाई गर्नुपर्दछ ।।२२।। हे राजा! तपाइँ मेरा प्यारा हुनुहुन्छ, धर्मात्मा क्षत्रिय हुनुहुन्छ र संसारको कल्याण गर्ने काममा जुट्नु हुन्छ । तसर्थ मैले तपाईंलाई उत्तम अधिकारी ठानेर यो व्रतको उपदेश गरेको हुँ ।।२३।। तपाईंले सबै व्रतहरूभन्दा पहिले यस व्रतको अनुष्ठान गर्नुहोस्। यसबाट तपाईंका कार्यहरू सिद्ध हुनेछन्। मैले अन्यथा बोलेको छैन।।२४।। नारी अथवा

यदा यदा पश्यति कार्यमुद्यतं
नारी नरो वा विदधातु सद्व्रतम् ।
सिद्ध्यन्ति कार्याणि मनीषितानि
किन्दुर्लभं विघ्नहरे प्रसन्ने ।।२५।।

पुरुषले जब जब कुनै कार्य सिद्ध गर्नुपर्ने हुन्छ, तब तब यो व्रत गर्नुपर्दछ । यसबाट आफूले चाहेका कार्यहरू सिद्ध हुन्छन् र भगवान् विघ्ननाशक प्रसन्न हुनुहुन्छ । उहाँ प्रसन्न भएपछि संसारमा कुनै पनि कुरा दुर्लभ हुँदैन)।२५।।

सूत उवाच

इत्थं स श्रुत्वा विधिवन्नृपोत्तमो
व्रतं चकाराऽखिलदुःखशान्तये ।
व्रतप्रभावाज्जितवान् स वैरिणो
बुभोज राज्यं स सुतैरकण्टकम् ।।२६।।

(सूतजीले भन्नुभयो - कृतवीर्य राजाले ब्रह्माजीबाट विधिवत् उक्त व्रतको उपदेश पाएर सबै प्रकारका दुःखहरूको शान्तिका लागि यो व्रत सम्पन्न गरेका थिए । व्रतको प्रभावबाट तिनले आफ्ना वैरीहरूमाथि विजय प्राप्त गरे । पछि आफ्ना छोराहरूका साथ निष्कण्टक राज्यभोग गरे ।।२६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चतुर्थीव्रतोपाख्याने कृतवीर्यविजयो नाम सप्ततिमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थी व्रतको प्रभावबाट कृतवीर्यको शत्रुमाथि विजय' शीर्षकान्वित सत्तरीऔं अध्याय पूर्ण भयो ।।

ॐ

# एकसप्ततितमोऽध्यायः { ७१ अध्याय }

राजोवाच

उद्यापनं कथं कार्यं व्रतस्याऽस्य महामते !
तन्मे विस्तरतो ब्रूहि लोकानां हितकाम्यया ।।१।।

ब्रह्मोवाच

प्रथमे मासि कर्तव्यं पञ्चमे सप्तमेऽथवा ।
उद्यापनं मनुष्येन्द्र ! व्रतसम्पूर्तिहेतवे ।।२।।

पूर्वोक्तेन विधानेन पूजयेद् भक्तिमान् नरः ।
पुष्पमण्डपिकां कृत्वा नानावस्त्रविचित्रिताम् ।।३।।

कृत्वा तु सर्वतोभद्रं नानारङ्गविचित्रितम् ।
पूजयेत् तत्र देवेशं कलशोपरि पूर्ववत् ।।४।।

चन्दनेन सुगन्धेन पुष्पैर्नानाविधैरपि ।
नारीकेलफलेनैव दद्यादर्घ्यं समाहितः ।।५।।

तिथीनामुत्तमे ! देवि ! गणेशप्रियवल्लभे !
सङ्कटं हर मे देवि ! गृहाणार्घ्यं नमोऽस्तु ते ।।६।।

लम्बोदर ! नमस्तुभ्यं सततं मोदकप्रिय !
सङ्कष्टं हर मे देव ! गृहाणार्घ्यं नमोऽस्तु ते ।।७।।

क्षीरोदार्णवसम्भूत ! अत्रिगोत्रसमुद्भव !
गृहाणार्घ्यं मया दत्तं रोहिण्या सहितः शशिन् ।।८।।

भोज्यं भक्ष्यञ्च लेह्यञ्च पेयञ्चोष्यं निवेदयेत् ।
फलैरन्यैश्च बहुभिस्तोषयेद् गणनायकम् ।।९।।

आचार्यं वरयेत् तत्र ऋत्विजश्चैकविंशतिम् ।
गणानान्त्वेति मन्त्रेण ह्ययुतं होममाचरेत् ।।१०।।

**राजाले भने -** बुद्धिमान्हरूका शिरोमणि हे विधाता! यस व्रतको उद्यापन कसरी गर्नुपर्छ ? यो कुरा लोकहितका लागि उपदेश गर्नुहोस् ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** व्रतहरूको पूर्णताका लागि तिनको उद्यापन पहिलो अथवा पाँचौं अथवा सातौं महिनामा गर्नुपर्दछ।।२।। अघिल्लो अध्यायमा बताएको विधानअनुसार भक्तिमान् मानिसले श्रीगणेश भगवान्को पूजा गर्नुपर्दछ । पूजाका लागि अनेक वस्त्र र ध्वजा-पताकाहरूद्वारा राम्रो बनाइएको मन्दिर तयार भएपछि अनेक रङ्गहरूले सर्वतोभद्र तयार गर्नुपर्दछ। त्यसमाथि कलश राखेर कलशमाथि थालीमा भगवान्को प्रतिमा राखी शास्त्रोक्त विधिले श्रीगणेशको पूजा गर्नुपर्दछ । चन्दन, सुगन्ध र अनेक थरि पुष्प एवं नरीवल चढाएर पूजा गर्नुपर्दछ। एकाग्र भएर तिथि, चन्द्रमा र श्रीगणेशलाई अर्घ्य दिनुपर्दछ ।।३-५।। तिथिलाई अर्घ्य दिंदा तल लेखिएको प्रार्थना गर्नुपर्दछ - **तिथिको प्रार्थना-** हे श्रीगणेशकी पियारी, तिथिहरूमा उत्तम तिथि ! तिमीलाई नमस्कार छ । म तिमीलाई अर्घ्य टक्र्याउँदैछु। मेरो सङ्कट हरण गर ।।६।। **श्रीगणेशको प्रार्थना-** हे लम्बोदर! हजुरलाई नमस्कार छ । हे मोदकप्रिय श्रीगणेश ! म हजुरलाई अर्घ्य टक्र्याउँदैछु, यसलाई स्वीकार गरी मेरो सङ्कटनाश गर्नुहोस् ।।७।। **चन्द्रमाको प्रार्थना -** अत्रि गोत्रमा क्षीरसागरबाट उत्पन्न हुनुहुने रोहिणीसमेत सुहाउनुभएका हे चन्द्रमा ! म तपाईंलाई अर्घ्य टक्र्याउँदैछु, स्वीकार गर्नुहोस्।।८।। यसरी अर्घ्य दिएपछि भक्तले श्रीगणेशलाई चपाएर खाइने भक्ष्य पदार्थ, मीठा पक्वान्नका रूपमा खाइने भोज्य पदार्थ, पिएर ग्रहण गरिने पेय पदार्थ, चुसेर ग्रहण गरिने चोस्य पदार्थ र चाटेर ग्रहण गरिने लेह्य पदार्थ यी सबै प्रकारका पदार्थहरू निवेदन गर्नुपर्दछ। त्यसपछि अनेक थरि फल चढाएर श्रीगणेशलाई तृप्त र सन्तुष्ट तुल्याउनुपर्दछ ।।९।। यजमानले श्रीगणेशव्रतको उद्यापनका लागि एक जना आचार्य र एक्काइस जना ब्राह्मणको वरणी गर्नुपर्दछ। **गणानान्त्वा०** इत्यादि मन्त्रद्वारा दश हजार होम

अथवा मूलमन्त्रेण सहस्रं वा तदर्धकम् ।
अष्टोत्तरशतञ्चापि बलिदानं ततश्चरेत् ।।११।।

पूर्णाहुतिं ततः कुर्याद् वसोर्धाराञ्च पातयेत् ।
होमशेषं समाप्यैवं ब्राह्मणान् भोजयेत् ततः ।।१२।।

वस्त्रयुग्मञ्च कलशान् दक्षिणासनसंयुतान् ।
तेभ्यो दद्याद् यथाशक्ति वित्तशाठ्यं न कारयेत्।।१३।।

आचार्यं पूजयेत् पश्चाद् वस्त्रालङ्करणादिभिः ।
तस्मै भुक्तवते दद्याद् वायनं फलसंयुतम् ।।१४।।

शूर्पं पायससम्पूर्णं रक्तवस्त्रेण वेष्टितम् ।
सौवर्णं तं गणाधीशं तस्मै दद्यात् सदक्षिणम् ।।१५।।

तिलानामाढकं दद्याद् व्रतसम्पूर्तिहेतवे ।
ततो गां कपिलां दद्यात् सवत्सां सविभूषणाम् ।।१६।।

ततः क्षमापयेद् विप्रान् विघ्नेशः प्रीयतामिति ।
व्रतस्योद्यापनं कृत्वा हयमेधफलं लभेत् ।।१७।।

कृतवीर्यपिता उवाच

एवं मे ब्रह्मणादिष्टं व्रतं लोकोपकारतः ।
तदेतत् कथितं तेऽद्य कुरु पुत्रार्थमादरात् ।।१८।।

इन्द्र उवाच

यथा यथा समादिष्टं पित्रा तेन महाव्रतम् ।
तथा तथा कृतं तेन कृतवीर्येण धीमता ।।१९।।

व्याख्याय कथितं सम्यक् पण्डितैर्व्रतमुत्तमम् ।
सिद्धिबुद्धियुतां मूर्तिं स्थाप्य काञ्चननिर्मिताम् ।।२०।।

महामण्डपिकामध्ये ब्राह्मणैः पठ्यते क्वचित् ।
क्वचित् पुराणं पाण्डित्यं क्वचिद् गायननर्तने ।।२१।।

गर्नुपर्दछ । अथवा मूल मन्त्रले एक हजार अथवा पाँच सय सङ्ख्यामा हवन गर्नुपर्दछ। यो पनि सम्भव नभएमा एक सय आठ सङ्ख्यामा हवन गर्नुपर्दछ । हवनपछि बलि दिएर पूर्णाहुति हवन गर्दै वसुधाराको काम सम्पन्न गर्नुपर्दछ । शेषहोम सम्पन्न गरेपछि ब्राह्मणभोजन गराउनुपर्दछ ।।१०-१२।। ती ब्राह्मणहरूलाई एक-एक जोडा वस्त्र, कलश, आसन र दक्षिणा दिनुपर्दछ । दक्षिणा आदि पदार्थ यथाशक्ति दिनुपर्दछ। दाताले दान दिंदा छुच्याइँ गर्न हुँदैन । ब्राह्मणहरूको सम्मानपछि बहुमूल्य वस्त्र अलङ्कारद्वारा आचार्यको सम्मान गर्नुपर्दछ । आचार्यले भोजन गरेपछि तिनलाई फलसहित वायन (उपहार) टक्र्याउनुपर्दछ।।१३-१४।। रातो वस्त्रले ढाकिएको खीरसमेत रहेको सुनको सुपो (नाङ्लो) दक्षिणासहित आचार्यलाई दिनुपर्दछ। व्रत पूर्ण होस् भन्ने कामना राखी एक पाथी तिल दान गर्नुपर्दछ। त्यसपछि अलङ्कारद्वारा सजिएकी र बाच्छो रहनाले सुहाएकी कपिला गाई ब्राह्मणलाई दिनुपर्दछ ।।१५-१६।। गोदानपछि ब्राह्मणहरूसँग क्षमायाचना गरी 'हजुरहरूको कृपाबाट ममाथि भगवान् श्रीगणेश प्रसन्न हुनुहोस्' भनी प्रार्थना गर्नुपर्दछ । साधकले व्रतको उद्यापन सकेर अश्वमेध यज्ञको फल प्राप्त गर्दछ।।१७।।

**कृतवीर्यका पिताले भने** - यसरी मलाई ब्रह्माजीले लोकको उपकारको भावना राखेर व्रतको उपदेश गर्नुभएको थियो । आज मैले तिमीलाई पुत्र प्राप्त होस् भन्ने आशयले यस व्रतको उपदेश गरें । अब तिमीले पुत्रप्राप्तिका लागि आदरपूर्वक यस व्रतको अनुष्ठान गर ।।१८।।

**इन्द्रले भने** - हे शूरसेन! आफ्ना पिताले जसरी महाव्रतको उपदेश गरेका थिए, त्यसैगरी कृतवीर्यले पनि सङ्कष्टचतुर्थीको व्रत सम्पन्न गरे ।।१९।। विद्वान्‌हरूले व्याख्या गरेर उक्त व्रतको रहस्य खुलाए । ठूलो वेदी बनाएर सिद्धि र बुद्धिले सहित सुवर्णको श्रीगणेशप्रतिमा स्थापित गरी पूजा गरेपछि ब्राह्मणहरूले स्वयं पनि पुराणपाठ गरे, कसैले प्रवचन गरे र कसैले नाचगान गरी गणेशप्रभुको आराधना गरे ।।२०-२१।। अनेक थरि बाजाहरूको वाद्यघोष

नानाविधानां वाद्यानां ध्वनयो निर्गता दिवम् ।
विवदन्ते जनाः क्वापि मध्यस्थाः केचनाऽभवन् ।।२२।।

स तु राजा महाधीमान् जजाप परमं मनुम् ।
जप्त्वा हुत्वा पूजयित्वा भोजयित्वा द्विजान् बहून् ।।२३।।

गा ददावयुतं तेभ्योऽलङ्कृतेभ्यो ह्यलङ्कृतः ।
दीनान्धकृपणेभ्योऽन्नं ददौ दानान्यनेकशः ।।२४।।

सन्तुष्टानामाशिषं स पुत्रस्य जगृहे पुनः
तेषां द्विजानां तपतां सर्वदा सत्यवादिनाम् ।।२५।।

आशीर्भिः स्वल्पकालेन ससत्त्वाऽभून्नृपाङ्गना ।
सुषुवे शुभवेलायां पुत्रं लक्षणसंयुतम् ।।२६।।

ददौ दानान्यनेकानि पुत्रजन्मप्रहर्षितः ।
व्रतबन्धं विवाहञ्च काले तस्याऽकरोन्नृपः ।।२७।।

ज्ञानविज्ञानसम्पन्नं पुत्रं राज्येऽभिषिच्य च ।
सत्पुत्रो भोगसम्पन्नो जगामान्ते पदं विभोः ।।२८।।

ऋत्विक्भिः पण्डितैः सार्धं प्रेक्षकैः सकलैरपि ।
तस्य पुण्येन ते सर्वे गाणेशं धाम चागमन् ।।२९।।

गगनमण्डलमा व्याप्त भयो। त्यस बेला कतिपय मानिसहरू शास्त्रीय विधि-विधानका विषयमा तर्क-वितर्क गरिरहेका थिए । कुनै मानिसहरू तटस्थ मनोवृत्ति लिएर हेरिरहेका थिए ।।२२।। ती बुद्धिमान् राजा भने श्रीगणेश भगवान्को उत्तम मन्त्रको जप गर्दै थिए । यसरी जप, ध्यान, पूजा, ब्राह्मण भोजनसमेत सम्पन्न गरी राजाले अनेक अलङ्कारबाट अलङ्कृत ब्राह्मणहरूलाई वस्त्र र अलङ्कारले सजाइएका गाई दिएर सम्मान गरे । दीन, दुःखी, अन्धा र गरीबहरूलाई अन्न र वस्त्र पनि दिए ।।२३-२४।। सन्तुष्ट भएका ती सबै ब्राह्मणहरूसँग राजाले पुत्रप्राप्तिका लागि आशीर्वाद ग्रहण गरे । तपस्वी र सधैं सत्यभाषण गर्ने ब्राह्मणहरूका आशीर्वादले थोरै समयमा नै महारानीले पनि गर्भधारण गरिन्। दसौं महिना लागेपछि उत्तम मुहूर्तमा ती रानीले सर्वलक्षणसम्पन्न पुत्र जन्माइन् ।।२५-२६।। पुत्रजन्मका कारण हर्षित भएका राजाले अनेक थरि दान दिए । त्यसपछि समयअनुसार तिनले छोराको व्रतबन्ध र विवाह संस्कार सम्पन्न गरे ।।२७।। अन्तमा ज्ञान-विज्ञानसम्पन्न छोरालाई राज्यसिंहासनमा अभिषेक गरी ती राजा गणपतिको धाममा प्राप्त भए ।।२८।। ती परमधाममा जाँदा यज्ञका ब्राह्मण, आचार्य, यज्ञका दर्शक सबै मानिसहरू पनि सँगै गएका थिए । वास्तवमा राजाले गरेको पुण्यबाट नै राजाको सम्पर्कमा रहेका ती सबै मानिसहरू श्रीगणेशको धाममा प्राप्त भएका थिए ।।२९।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे व्रतोद्यापनविधिनिरूपणं नामैकसप्ततितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थी व्रतको उद्यापनविधि-निरूपण' शीर्षकान्वित एकहत्तरौं अध्याय पूर्ण भयो ।।

ॐ

## द्विसप्ततितमोऽध्यायः { ७२ अध्याय }

**शूरसेन उवाच**

व्रते जाते कथमभूत् तयोः पुत्रः शतक्रतो ! ।
तत् सर्वं मे वद विभो ! विस्तरात् परिपृच्छतः ।।१।।

**इन्द्र उवाच**

किं किं न जायते राजन् ! परितुष्टे गजानने ।
प्रसादात् तस्य सा राज्ञी गर्भं दधे नृपस्य यत् ।।२।।

प्रसूता नवमे मासि मङ्गलं पुत्रमैक्षत ।
द्विस्कन्धं चारुवदनं बाहुहस्तविवर्जितम् ।।३।।

सुनासं पद्मनयनमूरुजानुविवर्जितम् ।
जङ्घापादविहीनन्तं दृष्ट्वा माता रुरोद ह ।।४।।

**सा उवाच**

दुर्भगायाः कथमभूदीदृशो बालको मम ।
करपादविहीनोऽयं कथं दत्तो गजानन ।।५।।

आसं शुभाऽहं बन्ध्यैव किमीदृक्पुत्रवत्यहम् ।
कथं न जातो नाशो मे पूर्वजन्मकृतैनसः ।।६।।

कथं प्रसादः फलितस्तवापि द्विरदानन ! ।
कथं ब्राह्मणवाक्यानि निष्फलानीदृशानि मे ।।७।।

पाणिभ्यां निघ्नती वक्षो ललाटञ्च मुहुर्मुहुः ।
तस्यां रुदत्यां सर्वास्ता रुरुदुस्तत्र याः स्थिताः ।।८।।

तासां कोलाहलं श्रुत्वा नृपोऽपि तत्र चागमत् ।
तस्यापि रुदितं श्रुत्वा प्रधाना अपि चागमन् ।।९।।

तेषाञ्च रुदितं श्रुत्वा नागरा रुरुदुस्तदा ।।१०।।

**राजोवाच**

कथं दीनानुकम्पी त्वं तव देव गजानन ! ।
कथं दया कृता तेऽद्य मह्यमेवं प्रदर्शिता ।।११।।

कथं स्मरणमात्रेण पापानि हरसेऽनघ ! ।
जपस्तपः स्मृतिर्दानं पूजनं द्विजतर्पणम् ।।१२।।

**शूरसेनले भने** - हे इन्द्रमहाराज ! व्रत गरेपछि तिनलाई कसरी पुत्रप्राप्ति भयो ? त्यस बारे म सबै कुरा जान्न चाहन्छु, मलाई विस्तारपूर्वक बताउनुहोस् ।।१।।

**इन्द्रले भने** - हे राजन् ! भगवान् श्रीगणेश प्रसन्न हुनुभएपछि के कुरा पाईंदैन र के हुँदैन ? भगवान् श्रीगणेशको कृपाबाट कृतवीर्य राजाकी रानीले गर्भधारण गरिन् । नवौं महिनामा प्रसव भयो र तिनले मङ्गलमय छोराको अनुहार हेरिन् । दुइटा काँध, सुन्दर अनुहार, सुन्दर नाक र कमलझैं राम्रा आँखा भएको त्यो छोरा, हात-घुँडा, पिंडौला, जाँघ र खुट्टाजस्ता अङ्गहरूबाट हीन विकलाङ्ग थियो । बालकको यस्तो स्वरूप देखेर ती रानी पीरले रोइरहिन् ।।२-४।।

**रानीले भनिन्** - म अभागिनी रहेछु, मलाई यस्तो छोरा किन उत्पन्न भयो ? हे भगवन् श्रीगणेश ! हात-खुट्टा नभएको यो बालक मलाई किन दिनुभयो ? बरु म बाँझी नै रहेकी भए ठिकै हुनेथियो । किन मैले यस्तो अपाङ्ग पुत्रकी आमा बन्नुपर्‍यो ? के मेरा पूर्वजन्ममा अर्जित पापहरूको नाश भएन र ? हे भगवन् ! तपाईंको प्रसन्नता किन यस रूपमा फलित भयो ? किन मेरा लागि ब्राह्मणहरूले दिएका आशीर्वादवचन निष्फल भए ?।।५-७।। यसरी विलाप गर्दै तिनले आफ्ना दुवै हातले छाती र निधारमा बारंबार प्रहार गरिन् । रानीलाई रोइरहेकी देखेर त्यहाँ रहेका अरू रानी र नारीहरू पनि रुन लागे । नारीहरूको क्रन्दनमय कोलाहल सुनेर राजा कृतवीर्य पनि त्यहाँ आइपुगे । यस्तो कारुणिक दृश्य देखेपछि ती पनि रुन लागे । तिनको क्रन्दन थाहा पाएर मन्त्रीहरू त्यहाँ आई रुन लागे । मन्त्रीहरूको रोदन सुनेर नगरवासी नर-नारीहरू त्यहाँ आए र ती पनि रुन लागे ।।८-१०।।

राजाले भने - हे भगवन् गजानन ! हजुरलाई दीनदयालु किन भनिन्छ ? आज हजुरले ममाथि कस्तो दया देखाउनुभएको हो ? हे निष्पाप देवता ! संझनासाथ पापनिवारण गर्ने के हजुर होइन ? आज मेरा लागि अनर्थ भयो । जप, तप, स्मरण, दान, पूजन, ब्राह्मणतर्पण, अनुष्ठान र होम यी सबै कार्यहरू व्यर्थ भए । मैले निधो गरें - दैव नै

अनुष्ठानं तथा होमः सर्वं व्यर्थङ्गतं मम ।
तस्माद् दैवं हि बलवत् प्रयत्नस्तु निरर्थकः ।।१३।।
न ज्ञायते कर्मगतिः कदा किं वा भविष्यति ।
मूषकः प्राप्यते यद्वत् पर्वतस्य विदारणात् ।।१४।।
तथा मेऽजनि पुत्रोऽयमाजन्मकृतयत्नतः ।
तत ऊचुः प्रकृतयो नृपं शोकाकुलं तदा ।।१५।।

प्रधाना ऊचुः

अलं शोकेन भूपाल ! कथं भाव्यन्यथा भवेत् ।
रामः किं न मृगं वेद तत्पृष्ठं गत एव सः ।।१६।।
धर्मराजो न किं वेद निषिद्धं द्यूतकर्म तत् ।
तथापि स गतो रन्तुं सर्वं हित्वा वनं गतः ।।१७।।
चारुता न भवेदस्य भृशमाक्रन्दिते सति ।
अदृष्टं चेद् भवेत् सम्यगग्रे चारुरयं भवेत् ।।१८।।
पुष्पं फलं वा कालेन यथा याति महीरुहाम् ।
तथा कालेन भविता सम्यक् च पृथिवीपतिः ।।१९।।

इन्द्र उवाच

इत्यमात्यवचः श्रुत्वा सावधानोऽभवन्नृपः ।
उवाच नृपपत्नीं तामुत्तिष्ठोतिष्ठ मा शुचः ।।२०।।
स्वयञ्च सुमना राजा समाहूय द्विजोत्तमान् ।
गणेशपूजनं चक्रे स्वस्तिवाचनमेव च ।।२१।।
कृत्वाऽऽभ्युदयिकं श्राद्धं ददौ दानान्यनेकशः ।
माल्यालङ्कारवासांसि गावो रत्नान्यनेकशः ।।२२।।
सुहृत्सम्बन्धिभृत्येभ्यो वस्त्राणि विविधानि सः ।
नानावादित्रजीवेभ्यो ददौ राजा यथार्हतः ।।२३।।
बन्दिचारणदीनान्धकृपणेभ्यश्च सर्वशः ।
गृहे गृहे च ताम्बूलं शर्करां दापयच्च सः ।।२४।।
कार्तवीर्येति नामास्य चकारैकादशेऽहनि ।
भोजयामास नगरं महोत्साहपुरःसरम् ।।२५।।
ततो द्वादश वर्षाणि व्यतीतानि सुतस्य ह ।
आययौ स्वेच्छया तस्य दत्तात्रेयस्तदा गृहम् ।।२६।।

बलवान् रहेछ । अरू कुनै पनि सांसारिक प्रयासहरू औचित्यहीन रहेछन् ।।११-१३।। कर्मको गति जानिँदैन र कहिले के हुने हो भन्ने कुरा पनि थाहा छैन । मलाई पूरा पर्वत खनेर मूसो फेला पारेझैं भयो ।।१४।। मैले जन्मकालदेखि आजसम्म त्यत्ति धेरै प्रयास गरें, परिणाममा यस्तो हात-खुट्टा नभएको छोरा जन्मियो । राजाले यसरी निराश भएर विलाप गरेपछि मन्त्रीहरूले राजालाई संझाए ।।१५।।

**मन्त्रीहरूले भने** -हे राजन् ! शोक गर्नु व्यर्थ छ । हुनुपर्ने कुरा भएरै छाड्छ, अन्यथा हुँदैन । भगवान् रामले के मृगलाई चिन्नुभएको थिएन ? के युधिष्ठिरलाई जूवा खेल्नु निन्दनीय कर्म हो भन्ने थाहा थिएन ? तापनि ती जूवा खेल्न गए, सर्वस्व हारे र सबै छाडेर वनतर्फ लागे ।।१६-१७।। हामीहरू क्रन्दन गर्न थाल्यौं भने बालकको मनमा नराम्रो असर पर्दा तिनले मनको मिठास पनि लिन पाउने छैनन् । यदि भाग्य राम्रो रहेछ भने भोलि गएर यी बालक राम्रा पनि हुनसक्छन् । उचित समय आएपछि रूखहरूमा फूल र फल लाग्दछन् । त्यसैगरी समय आएपछि यी बालक पनि पृथिवीपति हुन सक्छन्।।१८-१९।।

**इन्द्रले भने** – मन्त्रीहरूका यी कुरा सुनेर राजा सावधान भए । तिनले आफ्नी रानीलाई तिमी उठ, पीर नगर भनेर संझाए ।।२०।। आफू प्रसन्नचित्त भई तिनले उत्तम ब्राह्मणहरूलाई बोलाएर स्वस्तिवाचन र श्रीगणेशपूजन गरे ।।२१।। त्यसपछि आभ्युदयिक श्राद्ध गरी धेरै प्रकारका माल्य, अलङ्कार, वस्त्र र गाई दान गरे ।।२२।। तिनले आफ्ना मित्र, नातेदार, सेवक, बन्दी, चारण, दीन, अन्धा, गरीब र वाद्यवादकहरूलाई योग्यताअनुसार अनेक किसिमका वस्त्र प्रदान गरे ।।२३।। तिनले घर-घरमा पान र चिनी वितरण गर्न लगाए र एघारौं दिनका दिन बालकको नाम कार्तवीर्य राखे । नामकरण संस्कारका दिन सारा नगरवासीहरूलाई बोलाएर उत्साहका साथ भोजन गराए ।।२४-२५।। त्यसपछि बालकको १२ वर्षको आयु पूरा हुँदा कृतवीर्यको राजभवनमा दत्तात्रेय ऋषि आफ्नो इच्छाले घुम्दै-फिर्दै आइपुगे ।।२६।। दत्तात्रेय ऋषिका

पादयोः स्वशिरः स्थाप्य कृतवीर्यो ननाम तम् ।
आलिलिङ्ग मुनिस्तं स उत्थाय नृपसत्तमम् ।।२७।।

उपवेश्यासने रम्ये पूजयामास सादरम् ।
विष्टरं पाद्यमर्घ्यञ्च गाञ्च वस्त्रोपवीतकम् ।।२८।।

ददौ धूपञ्च दीपञ्च नैवेद्यं विविधं फलम् ।
उद्वर्तनञ्च ताम्बूलं रत्नकाञ्चनदक्षिणाम् ।।२९।।

सुप्रसन्नं सुखासीनं पादसंवाहनादिभिः ।
उवाच राजा सम्यक् तं दत्तात्रेयं महामुनिम् ।।३०।।

जन्मजन्मातरीयं मे पुण्यं फलितमद्य वै ।
यच्चर्मचक्षुषां जातं साक्षात् ते दर्शनं मुने ।।३१।।

अग्रे शुभतरं भावि प्रसादात् तव सुव्रत ! ।
यतो भवादृशां नैव दर्शनं पापकर्मणाम् ।।३२।।

कृतवीर्यवचः श्रुत्वा दत्तात्रेयस्तमब्रवीत् ।
अपूर्व तनयं तेऽद्य द्रष्टुकामोऽहमागतः ।।३३।।

तत आनन्दयुक्तोऽसौ नृपः प्राह मुनिं पुनः ।

नृप उवाच

अनुष्ठानं तपो दानं वृथा मम गतं व्रतम् ।।३४।।

जगदीशेन दत्तोऽयं पुत्रो हृच्छल्य एव सः ।
अनेनाऽदर्शनीयेन गतश्चादर्शनीयताम् ।।३५।।

इन्द्र उवाच

आनीय बालकं तस्मै मुनयेऽदर्शयन्नृपः ।
आच्छादयन्नेत्रकञ्जे तत्सुतं वीक्ष्य सन्मुनिः ।।३६।।

ज्ञात्वा ध्यानेन तत्कर्म मुनिस्तं पुनरब्रवीत् ।
अयमेव सुतो राजन् ! कर्ता सर्वान् विजित्य ह ।।३७।।

नाचान्तोऽसि विजृम्भ्य त्वं सङ्कष्टीव्रतजागरे ।
निन्दितो व्रतराजस्तु सर्वसङ्कष्टनाशनः ।।३८।।

अङ्गहीनः सुतो जात उपायात् साङ्गतामियात् ।

चरणमा आफ्नो शिर राखेर राजाले श्रद्धापूर्वक प्रणाम गरे । ती मुनिले पनि उत्तम राजा कृतवीर्यलाई भुईंबाट उठाएर आलिङ्गन गरे।।२७।। सुन्दर आसनमा बसाएर श्रद्धापूर्वक पूजा गरे । पूजाको क्रममा राजाले दत्तात्रेय ऋषिलाई आसन, पाद्य, अर्घ्य, गाई, वस्त्र, जनै, धूप, दीप, नैवेद्य, फल, उवटन, पान, रत्न र सुवर्णमुद्राको दक्षिणासमेत प्रदान गरे ।।२८-२९।। सुखले बिराजमान भई अत्यन्त प्रसन्न हुनुभएका दत्तात्रेय महर्षिका पाउ दबाउँदै राजा कृतवीर्यले भने - हे मुनिवर! आज निश्चय नै मेरा जन्म-जन्मान्तरका अर्जित पुण्यहरू फलीभूत भएका छन् । किनकि मैले चर्मचक्षुबाट हजुरको प्रत्यक्ष दर्शन पाएको छु । हे सुव्रत! हजुरको कृपाबाट आउने दिनहरूमा पनि मेरो निश्चय नै कल्याण हुनेछ। किनकि हजुरजस्ता पुण्यात्मा ऋषिहरूको दर्शन पापीहरूलाई सुलभ हुँदैन ।।३०-३२।। कृतवीर्यका वचन सुनेर दत्तात्रेयले भने - हे राजन् ! म तपाईंको अपूर्व रूप भएको छोरालाई हेर्ने उद्देश्यले यहाँ आएको छु ।।३३।। ऋषिको वचन सुनेर हर्षित भएका राजाले भने ।

**राजाले भने** - हे गुरुवर ! मेरा अनुष्ठान, तपस्या, दान र व्रत व्यर्थ भएका छन् । जगदीश्वरले मलाई दिनुभएको छोरा मेरो मुटुको काँडो भएको छ। यस अदर्शनीय र कुरूप बालकको उपस्थितिका कारण म पनि मनबाट कुरूप भएको छु।।३४-३५।।

**इन्द्रले भने** - राजाले त्यसपछि बालक ल्याएर मुनिलाई देखाए। कृतवीर्यका छोरालाई देखेर तिनका नेत्रकमल चिम्लिए। ध्यानद्वारा त्यसको कर्म थाहा पाएर उनले भने - हे राजन् ! यस बालकले भविष्यमा सबैलाई जितेर पृथिवीमा दीर्घकालसम्म शासन गर्नेछ । अघि तपाईंले सङ्कष्टचतुर्थीको व्रत लिंदा राति जागरण गर्ने क्रममा हाई गरिराख्नुभयो र अन्तसम्म जागा रहेर बस्नु भएन । तपाईंले व्रतको अङ्ग पुऱ्याउनुभएन । फेरि तपाईंले सबै प्रकारका सङ्कटनाश गर्ने यस व्रतको निन्दा पनि गर्नुभयो ।।३६-३८।। त्यस कारण आज अङ्गहीन छोराको दर्शन गर्नुपरेको छ। तर उपाय गर्नुभयो भने यो विकलाङ्ग बालक पनि पूर्णाङ्ग हुनेछ ।

राजोवाच

ऋतमुक्तं त्वया स्वामिन् ! कृपां कृत्वा वदस्व मे ।।३९।।
येनोपायेन साङ्गो मे त्वत्प्रसादात् सुतो भवेत् ।

इन्द्र उवाच

मुनिः स कृपयाविष्टस्तत्सुताय तदाऽब्रवीत् ।।४०।।

मन्त्रमेकाक्षरं साङ्गं तत ऊचे पुनश्च तम् ।
आराधनं गणेशस्य मन्त्रेणानेन भक्तितः ।।४१।।

उपवासैकभक्तानां नियमान् कुरु सुव्रत ! ।
द्वादशाब्दं ततस्तुभ्यं दर्शनं स च दास्यति ।।४२।।

तद्दृष्टिपातमात्रेण दिव्यदेहो भविष्यसि ।
इत्युक्त्वा नृपमामन्त्र्य पिदधे मुनिपुङ्गवः ।।४३।।

गते मुनौ ततः पुत्रः पादहीनो महामनाः ।
जगाद कृतवीर्यं स गहनं प्रापयस्व माम् ।।४४।।

गजाननप्रसादार्थमनुष्ठानं करोम्यहम् ।
रुदित्वा पितरौ तस्य श्रुत्वा वाणीं तदीरिताम् ।।४५।।

अप्रेषयद् वनं चारु नरयानेन तं पिता ।
भृत्याः पर्णकुटीमध्ये संस्थाप्य नगरं ययुः ।।४६।।

तस्थौ तत्र स्वयं सम्यक् तपसे कृतनिश्चयः ।।४७।।

राजाले भने - हे महर्षि ! हजुरले सत्य भन्नुभएको छ, वास्तवमा मैले त्यसैगरी उपेक्षा गरेको थिएँ । हे ऋषिवर ! मलाई त्यो उपाय बताउनुहोस्, जुन उपायबाट हजुरको कृपाद्वारा मेरो अपाङ्ग पुत्र पूर्णाङ्ग हुनसक्नेछ ।

इन्द्रले भने - बालकको परिस्थिति र राजाको मानसिक स्थिति बुझेर कृपावेशमा आउनुभएका दत्तात्रेय ऋषिले त्यस बालकलाई अङ्गसहित श्रीगणेशको एकाक्षरी मन्त्र सुनाउनुभयो। त्यसपछि भन्नुभयो - हे वत्स ! यस मन्त्रको जपबाट श्रीगणेश भगवान्को आराधना गर । उपवासका नियम र एकभक्त रही साधना गर्ने प्रक्रियाका नियम बाह्र वर्षसम्म पालन गर । व्रत पूरा भएपछि भगवान् श्रीगणेशको दर्शन पाउनेछौ ।।३९-४२।। उहाँको दृष्टिपातबाट मात्र तिमी दिव्य शरीर सम्पन्न भई सुहाउने छौ । यति भनी राजासँग मन्त्रणा गरेर मुनि अन्तर्धान हुनुभयो। उहाँ अन्तर्धान हुनुभएपछि हात खुट्टा नभएका बालक कार्तवीर्यले आफ्ना पिता कृतवीर्यसँग भने - हे पिता ! मलाई हजुरले जङ्गलमा पुऱ्याउनुहोस् ।।४३-४५।। म त्यहाँ गएर भगवान् गजाननको प्रसन्नताका लागि मन्त्रानुष्ठान गर्नेछु। बालकले भनेको वाणी सुनेर बालकका बाबु-आमा रोए । पिता कृतवीर्यले नरयानमा सवार गराई ती बालकलाई सुन्दर वनमा पठाए । सेवकहरू बालकलाई वनको पर्णशालामा राखेर नगरतर्फ फर्किए । तपस्याको अठोट गरेर वन पसेका ती बालक त्यहाँ मुनिले बताएको विधानअनुसार तपस्यामा लीन भए ।।४६-४७।।

ॐ

॥ इति श्रीगणेशपुराणे उपासनाखण्डे कार्तवीर्यप्रादुर्भावो नाम द्विसप्ततितमोऽध्यायः ॥

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कृतवीर्यलाई अङ्गहीन पुत्रको प्राप्ति र कार्तवीर्य नामकरण' शीर्षकान्वित बहत्तरौं अध्याय पूर्ण भयो ।।

ॐ

## त्रिसप्ततितमोऽध्यायः { ७३ अध्याय }

इन्द्र उवाच

गुरूपदिष्टं मन्त्रं तं जजाप नियमेन सः ।
ध्यायन् गजाननं देवं निष्ठामास्थाय नैष्ठिकीम् ।।१।।
वायुभक्षो निराहारो लोष्ठपाषाणसन्निभः ।
एवं द्वादशवर्षाणि व्यतीतानि तपस्यतः ।।२।।
हस्तपादविहीनस्य बालकस्य महात्मनः ।
निर्वाणं तस्य तद् दृष्ट्वा द्वादशाब्दं गजाननः ।।३।।
तडागमध्यादुत्तस्थौ प्रवालमयमूर्तिगः ।
उवाच सम्मुखो भूत्वा निष्ठाभक्तिसुतोषितः ।।४।।

गणेश उवाच

निर्जनेऽस्मिन् वने यस्मात् सिंहव्याघ्रनिषेविते ।
निकुञ्जबहुलेऽतिष्ठद् यतो द्वादशवार्षिकम् ।।५।।
अतस्तेऽहं वरं दास्ये शृणु यत् ते मनोगतम् ।
श्रुत्वा वाणीं तदुदितामास्थितो देहभावनाम् ।।६।।
कृतवीर्यसुतो नत्वा प्रोवाच द्विरदाननम् ।
शृण्वत्सु सर्वमुनिषु विमानस्थेषु भूरिशः ।।७।।

पुत्र उवाच

त्वत्पादयुगले देव ! भक्तिरव्यभिचारिणी ।
अस्तु मे सततं नान्यदुत्साहो मे प्रयाचितुम् ।।८।।
तथापि याचे देवेश ! पित्रोः सन्तोषहेतवे ।
शरीरे चारुतां देहि सर्वसन्तोषकारिणीम् ।।९।।

इन्द्र उवाच

श्रुत्वा वाक्यं तदीयन्तु मायावी स गजाननः ।
अणिमानं समास्थाय विवेशोदरमादरात् ।।१०।।
तस्मिन् प्रविष्टे पुत्रोऽसौ दिव्यदेहोऽभवन्नृप! ।
सहस्रभुजवान् जातः कृतवीर्यात्मजस्तदा ।।११।।
ऋजुपादद्वययुतः स्थितः पर्वतसन्निभः ।
ववर्षुः पुष्पवर्षाणि देवा देवर्षयोऽपि च ।।१२।।

**इन्द्रले भने -** कृतवीर्यका अपाङ्ग पुत्रले वनमा गई एउटा नैष्ठिक ब्रह्मचारीको रूपमा निष्ठाका साथ आफ्ना गुरुद्वारा प्राप्त श्रीगणेश मन्त्रको जप गरिरहे ।।१।। तपस्याका ती दिनहरूमा तिनले निराहार रही पवनपान गर्दै ढुङ्गाझैं निश्चल भएर आराधना गरे । यसरी तपस्या र आराधना गर्दा बाह्र वर्ष बिते ।।२।। भगवान् श्रीगणेशले हात-खुट्टा नभएका त्यागी बालकको बाह्र वर्षसम्मको त्याग देखेर तलाउको बीचबाट प्रवाल मूर्तिको रूपमा दर्शन दिनुभयो । अपाङ्ग बालकको निष्ठा र भक्तिबाट खुसी हुनुभएका श्रीगणेशले बालकलाई सम्बोधन गर्नुभयो।।३-४।।

**श्रीगणेशले भन्नुभयो-** बाघ र सिंहले भरिभराउ र अनेकौं गहन झाडीले व्याप्त यस निर्जन वनमा तिमीले बाह्र वर्षसम्म कठोर तपस्या गर्‍यौ ।।५।। अब म तिम्रा मनले चिताएको कुरा पूरा गर्न वरदान दिन्छु । श्रीगणेशको वाणी सुनेर विकलाङ्ग देहलाई सबलाङ्ग बनाउने भावना लिएका कृतवीर्य राजाका तपस्वी छोराले श्रीगणेशलाई प्रणाम गरी मनका कुरा प्रकट गर्न थाले । त्यस बेला देवताहरूले विमानमा रहेर श्रीगणेश र ती बालकको संवाद सुनिरहेका थिए ।।६-७।।

**बालकले भने-** हे भगवन् श्रीगणेश! हजुरका चरणकमलमा मेरो निरन्तर निश्चल भक्ति रहिरहोस् । म यही वर माग्दछु । अरू वर माग्ने मेरो उत्साह छैन ।।८।। यसो हो ता पनि माता-पिताको सन्तोषका लागि मागिरहेको छु । हे प्रभो ! मेरो शरीरमा सबैलाई आनन्द र सन्तोष प्रदान गर्ने सौन्दर्य भरिदिनुहोस् ।।९।।

**इन्द्रले भने -** बालकका वचन सुनेर मायाका स्वामी प्रभु श्रीगणेशले अणिमासिद्धिको सहयोग लिएर बालकको पेटभित्र प्रवेश गर्नुभयो।।१०।। भगवान्को पेटमा प्रवेश हुनासाथ बालकको शरीर दिव्य बन्यो । कृतवीर्यका अपाङ्ग पुत्र तत्काल एक हजार भुजाले शोभायमान सुन्दर बालकका रूपमा देखिए।।११।। सरल, सुन्दर र दुई खुट्टामा उभिएका ती बालक हेर्दाहेर्दै पर्वतको आकारमा परिणत भए । भगवान्का कृपाले अपाङ्ग बालकको शरीरमा आएको परिवर्तन देखेर देवता र देवर्षिहरूले पुष्पवर्षा गरे।।१२।। ती सबैले विभिन्न स्तुतिद्वारा

तुष्टुवुस्तञ्च देवञ्च गीतवादित्रनिस्वनैः ।
जगर्ज कार्तवीर्योऽसौ सहस्त्रभुजमण्डितः ।।१३।।

तस्य शब्दं समाकर्ण्य घनगर्जितसन्निभम् ।
समवर्ती भृशं त्रस्तः परेषां गणना कुतः ।।१४।।

पृथिव्यां सर्वराजानः समकम्पन्त तद्भयात् ।
अयं पञ्चशतं बाणान् सङ्ग्रामे मोचयेदिति ।।१५।।

ब्रह्मादयस्ततो यानादुत्तीर्याथ तमब्रुवन् ।
स्मरणात् तव देवानां प्राप्तिः स्याद् गतवस्तुनः ।।१६।।

हृदिस्थं सर्वलोकानामामयं त्वं विनेष्यसि ।
यतः साक्षाद् विष्णुरूपः सहस्त्रार्जुनसंज्ञया ।।१७।।

त्रिषु लोकेषु विख्यातो यावत्कल्पं भविष्यसि ।
साधुत्राणे च निरतः शरणागतपालकः ।।१८।।

विजेता सर्वशत्रूणां पृथिवीमण्डलाधिपः ।
इति नाना वरान् दत्वा पिदधुर्देवतागणाः ।।१९।।

हस्त्यश्वनरयानानि छत्रचामरदीपिकाः ।
रथानुपायनान्यन्यान्याजह्रुरखिला नृपाः ।।२०।।

ततः संस्थापयामास महाप्रासादमध्यगाम् ।
प्रावालीं गणनाथस्य मूर्तिं द्विजपुरःसरः ।।२१।।

प्रवालगणपश्चेति तस्य नाम दधुर्द्विजाः ।
ददौ ग्रामान् ब्राह्मणेभ्यः पूजार्थं स्थापिताश्च ये ।।२२।।

प्रवालक्षेत्रमिति तत् पप्रथे भुवि सिद्धिदम् ।
तत्र शेषो धरां धर्तुमनुष्ठानपरोऽभवत् ।।२३।।

प्राप तस्माद् गणेशात् तु वरान् बहुतरानपि ।
धराधरणसामर्थ्यं सर्वज्ञत्वं तथैव च ।।२४।।

मूर्ध्नां सहस्त्रं श्रैष्ठ्यञ्च नवनागकुलेष्वपि ।
अतिसन्तुष्टमनसा तेन यत् स्थापितं पुरा ।।२५।।

धरणीधर इत्येवं द्वितीयं नाम पप्रथे ।
स्मरतां शृण्वताञ्चापि सर्वकामफलप्रदम् ।।२६।।

गीत र बाद्यका साथ भगवान् श्रीगणेश र तपस्वी बालक कार्तवीर्यको स्तुति गरे । एक हजार भुजाले देदीप्यमान बालक कार्तवीर्यले त्यस बेला वीरभावमा आएर घोर गर्जन गरे ।।१३।। कार्तवीर्यको मेघसमान गर्जन सुनेर यमराज पनि डराए भने अरू शत्रुको त कुरा नै नगरौं।।१४।। कार्तवीर्यको वीरभाव र विचित्र शरीरका कारण पृथिवीका सबै राजाहरू डराएर थर्थर काँप्न थाले । अब यी बालकले सङ्ग्राममा एकैचोटि एक हजार बाहुबाट पाँच सय बाण प्रहार गर्न सक्नेछन् भन्ने भावले ती राजाहरू डराएका थिए।।१५।। त्यस बेला ब्रह्मा आदि देवताहरूले पनि विमानबाट ओर्लेर कार्तवीर्यको नजिकमा आई भने - हे कार्तवीर्य ! तिम्रो याद गर्दा देवता र देवप्रकृतिका मानिसहरूले हराएको वस्तु भेटाउने छन्।।१६।। तिमीले आफ्नो ध्यान र प्रार्थना गर्ने भक्तहरूको हृदयका कष्ट र पीडा निवारण गर्नेछौ किनकि तिमी साक्षात् विष्णुका स्वरूप हौ । संसारमा तिमी सहस्त्रार्जुन कार्तवीर्यका नामबाट कल्प-कल्पसम्म विख्यात हुनेछौ। तिमी सज्जनहरूका रक्षक, शरणागतका पालक, सबै शत्रुहरूका संहारक र पृथिवीमण्डलका अधिपति हुनेछौ। यस्ता अनेक थरि वर दिएर ब्रह्मा आदि देवताहरू पनि अन्तर्धान भए।।१७-१९।। त्यस बेला पृथिवीका राजाहरूले कार्तवीर्यको समीपमा आएर हात्ती, घोडा, नरयान, छाता, चामर, बहुमूल्य पानसका पङ्क्ति, रथ र अरू उपहार पनि टक्र्याए ।।२०।। त्यसपछि कार्तवीर्यले एउटा भव्य मन्दिर बनाए र त्यसमा प्रवालमूर्ति भगवान् श्रीगणेशको प्राणप्रतिष्ठा गराए । त्यसपछि ती श्रीगणेशको नाम प्रवालगणपति भनी राखे । गणपतिको प्रतिमाप्रतिष्ठा र मन्दिरको वास्तुपूजनमा नियुक्त भएका ब्राह्मणहरूलाई तिनले गाउँसमेत अनेक पदार्थ प्रदान गरे।।२१-२२।। त्यो क्षेत्र संसारमा सिद्धिदायक प्रवालक्षेत्रका नामबाट प्रख्यात भयो। त्यहीं नै आएर पृथिवी धारण गर्ने सामर्थ्य पाऊँ भनी शेषनागले पनि प्रवालगणपतिको आराधना गरेका थिए ।।२३।। आराधनाबाट प्रसन्न हुनुभएका प्रवालगणपतिबाट शेषनागले पृथिवीधारण गर्ने सामर्थ्य, एक हजार शिर, नौ नागकुलहरूमा श्रेष्ठता र सर्वज्ञता जस्ता अनेक वर प्राप्त गरेका थिए । त्यसपछि प्रसन्न भएका शेषनागले श्रीगणेशको पूजा गरी प्रबाल गणपतिको धरणीधर भनी नामकरण गरे । यो नाम पनि संसारमा प्रख्यात भयो । श्रवण र स्मरण गर्ने भक्त-साधकहरूका लागि धरणीधर नाम पनि सबै कामना पूरा गराउने प्रभावकारी नामका रूपमा प्रख्यात भयो ।।२४-२६।। कार्तवीर्यले भगवान्को

सम्पूज्य सर्वान् द्विजपुङ्गवाँस्तान्
राज्ञश्च सर्वाननुपृच्छ्य चैतान् ।
सहस्त्रबाहुर्नगरं स्वकीयं
द्रष्टुं स्वमातापितरावथागात् ।।२७।।

तौ तं जहृषतुर्दृष्ट्वा नगरञ्च तथाविधम् ।
ददतुर्द्विजमुख्येभ्यो नानादानानि सर्वशः ।।२८।।

इन्द्र उवाच

अभ्यधायि तु सङ्कष्टचतुर्थीमहिमाऽद्भुतः ।
कृतवीर्यसुताच्चायं मृत्युलोकङ्गतः शुभः ।।२९।।

अनुभूतः सुरगणैश्चन्द्रसेनादिभिर्नृपैः ।
अतिपुण्यतमश्चायं स्मरणादपि सिद्धिदः ।।३०।।

एतत्प्रसादात् सम्प्राप्ता रावणेनाखिलज्ञता ।
एतत्प्रसादात् सम्प्राप्तं पुरा राज्यञ्च पाण्डवैः ।।३१।।

एतद्व्रतस्य यत् पुण्यं हस्ते मे दीयते यदि ।
तदैव तद् विमानन्तु प्रचलेदमरावतीम् ।।३२।।

क उवाच

इति शक्रमुखात् तस्य व्रतस्य महिमा श्रुतः ।
शूरसेनेन भूपेन स्वानन्दाब्धौ निमज्जता ।।३३।।

वन्दिते पादकमले शक्रस्य प्रतिगर्जता ।
तमुवाच ततः प्रीतः शूरसेनो नृपोत्तमः ।।३४।।

श्रुत्वा कथां दिव्यरूपां चतुर्थीव्रतसम्भवाम् ।

स उवाच

फलितं पूर्वपुण्यं मे येनाश्रावीदृशं व्रतम् ।।३५।।

न ह्येतस्मात् पुण्यतरं त्रिषु लोकेषु किञ्चन ।
इत्युक्त्वा शक्रमारेभे व्रतं कर्तुं स्वयं ततः ।।३६।।

स्थापना र प्रतिष्ठा गरेपछि ब्राह्मणहरूको समेत पूजा गरे । त्यहाँ दर्शन गर्न आएका राजाहरूसँग बिदावारी भई आफ्ना माता-पिताको दर्शन गर्न नगरतर्फ प्रस्थान गरे ।।२७।। तपस्याद्वारा भगवान्लाई प्रसन्न तुल्याउने र सुन्दर स्वरूपमा परिणत भएका छोरा कार्तवीर्यलाई देखेर कृतवीर्य राजा र महारानी दुवै प्रसन्न भए । छोरा घरमा फर्केको खुसियालीमा ती दुवै दम्पतीले अनेक थरि दान र उपहार पनि दिए ।।२८।।

**इन्द्रले भने -** हे शूरसेन! मैले तपाईंलाई सङ्कष्टचतुर्थीको महिमा बताएँ। कृतवीर्यका पुत्रको अनुष्ठान र उपलब्धिका कारण यो व्रत मर्त्यलोकमा फैलिएको हो ।।२९।। देवतागण र चन्द्रसेन आदि राजाहरूले पनि कृतवीर्यका पुत्र कार्तवीर्यको शरीरपरिवर्तनको घटनाबाट अतिपुण्यदायक र संझदामात्र पनि सिद्धिदायक सङ्कष्टचतुर्थीको महिमा अवगत गरेका हुन् ।।३०।। सङ्कष्टचतुर्थीको व्रतको प्रभावबाट रावणले पनि सर्वज्ञता र शास्त्रज्ञान प्राप्त गरेका थिए। यसै व्रतका प्रभावबाट पाण्डवहरूले राज्यमा अधिकार प्राप्त गरेका थिए ।।३१।। यदि कसैले यो व्रत गरेको पुण्य मलाई अर्पण गर्दछ भने मेरो यो विमान तत्काल नै अमरावतीका लागि उड्न समर्थ हुनेछ। ।३२।।

**ब्रह्माजीले भन्नुभयो -** आनन्दको सागरमा गोता लगाइरहेका राजा शूरसेनले इन्द्रको मुखबाट सङ्कष्टचतुर्थीको महिमा श्रवण गरेपछि खुसीले गर्जन गर्दै इन्द्रमहाराजका पाउमा प्रणाम गरे । चतुर्थी तिथिसँग सम्बद्ध भगवान् श्रीगणेशको दिव्य कथा सुनेर प्रसन्न भएका शूरसेनले इन्द्रलाई भावनिवेदन गरे ।

**शूरसेनले भने -** हे इन्द्र महाराज ! मेरो पूर्वजन्मको पुण्यफलका कारण आज मैले हजुरका मुखबाट सङ्कष्टचतुर्थी व्रतको महिमा सुन्न पाएँ ।।३३-३५।। यो व्रतभन्दा पुण्यदायक व्रत तीन लोकमा कुनै पनि छैन । अब म आफै पनि यो व्रत आरम्भ गर्दछु । यसरी इन्द्रलाई भनेर राजा शूरसेनले आफै सङ्कष्टचतुर्थीको व्रत आरम्भ गरे ।।३६।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे चतुर्थीव्रतमाहात्म्यं नाम त्रिसप्ततितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कार्तवीर्यद्वारा प्रवालक्षेत्रमा श्रीगणेशको आराधना, सहस्त्रार्जुन नामबाट ख्याति र चतुर्थीव्रतको महिमा' शीर्षकान्वित त्रिहत्तरौं अध्याय पूर्ण भयो ।।

ॐ

# चतुःसप्ततितमोऽध्यायः { ७४ अध्याय }

**व्यास उवाच**

ब्रह्मन् ! कथं कृतं तेन शूरसेनेन भूभुजा ।
सेतिहासं शक्रमुखाच्छ्रुत्वा सादरमुत्तमम् ।।१।।

**ब्रह्मोवाच**

ततः स्वदूतान् प्राहेदं गच्छन्तु नगरं प्रति ।
स आनेयस्तु सङ्कष्टचतुर्थीव्रतकारकः ।।२।।

ते दूतास्त्वरया याताः पप्रच्छुस्ते गृहं गृहम् ।
ददृशुर्भ्रममाणास्ते विमानं सुन्दरं शुभम् ।।३।।

याऽभवद् दुष्टचाण्डाली गलत्कुष्ठा स्त्रवन्मुखा ।
मक्षिकाकृमिभारेण दुर्गन्धेन समावृता ।।४।।

शुष्कोदरी दीर्घकेशा शुष्कदन्ताक्षिनासिका ।
अत्यन्तमलिना दीर्घश्रोत्ररन्ध्रा घनस्वना ।।५।।

नेतुं तामीदृशीं दूतैरानीतां गणपस्य हि ।
अत्याश्चर्यमिदमिति राजदूताः प्रणम्य ताम् ।।६।।

ऊचुस्ते देवदूताँस्तान् गणनाथस्य किङ्करान् ।
अत्यन्तं कुत्सिता जात्या हीनेयं स्वर्गगा कथम् ।।७।।

केयमासीत्पुरा दूताः कथमीदृग् बभूव च ।
केन पुण्येन युष्माभिः स्वर्गन्तु नीयते कथम् ।।८।।

एतद् वदन्तु सर्वं नो यदि वक्तुं क्षमं भवेत् ।

**देवदूता ऊचुः**

आसीद् वङ्गालविषये शारङ्गधरनामतः ।।९।।

क्षत्रियस्तस्य कन्येयं सुन्दरा नाम सुन्दरी ।
पिककण्ठा शशिमुखी रतिलावण्यजित्वरी ।।१०।।

**व्यासले भन्नुभयो** - हे भगवन् ! इन्द्रका मुखबाट इतिहाससहित आदरपूर्वक यो व्रतको महिमा सुनेपछि शूरसेन राजाले कसरी व्रत सम्पन्न गरे ?।।१।।

**ब्रह्माजीले भन्नुभयो** - शूरसेन राजाले दूतहरूलाई भने- हे दूत ! तिमीहरूले नगरमा गएर जसले सङ्कष्टचतुर्थीको व्रत पूरा गरेको छ, त्यसलाई लिएर आउने काम गर ।।२।। दूतहरू पनि राजाको आज्ञा पाएर द्रुतगतिले नगरमा गई प्रत्येक घरमा सङ्कष्टचतुर्थीको व्रत पूरा गर्ने व्यक्तिको खोजी गर्दै घुमिरहेका थिए । घुम्दै जाँदा तिनले मङ्गलमय र अत्यन्त राम्रो विमान भुईंमा ओर्लिएको देखे ।।३।। त्यस विमानभित्र शरीरका औंला आदि अङ्ग पाक्दै झर्ने प्रकृतिको गलत्कुष्ठ रोगले ग्रस्त, मुखबाट र्‍याल चुहाइरहेकी, जिउभरि बाक्लै झिंगा र कीरा सल्बलाएका कारण दुर्गन्धले भरिएकी, सुकेको पेट, लामा केश, सुकेका दाँत, आँखा र नाक धारण गर्ने अत्यन्त मलिन स्वरूप भएकी, ठूला-ठूला कानका प्वाल भएकी, मोटो आवाजमा कुरा गर्ने, दुष्ट स्वभावकी चाण्डालीलाई श्रीगणेशका दूतहरूले ल्याएको देखेर शूरसेन राजाका दूतहरूले ती नारीलाई प्रणाम गर्दै श्रीगणेशका सेवक देवदूतलाई भने - जातिबाट कुत्सित र रोगबाट घृणित यस्ती नारीलाई तपाइँहरू स्वर्गतर्फ लैजान लाग्नुभएको छ । यी नारी कसरी स्वर्गमा जान अधिकारी हुन्छिन् ? ।।४-७।। हे देवदूतहरू! पहिले यी नारी को थिइन्? किन यी विरूप बनिन्? यिनका कुन पुण्यले तपाइँहरू आज यिनलाई स्वर्ग लैजादै हुनुहुन्छ? तपाईंहरूले बताउन हुनेसम्म यी आइमाईका सम्बन्धमा जति कुराहरू छन्, ती सबै हामीलाई बताउनुहोस्।

**देवदूतहरूले भने** - बङ्गालदेशमा शारङ्गधर नामक एउटा क्षत्रिय थिए ।।८-९।। यी नारी तिनै क्षत्रियकी कन्याको रूपमा उत्पन्न सुन्दरा हुन् । कोइलीको जस्तो कण्ठ र चन्द्रमा जस्तो अनुहार भएकी, अत्यन्त आकर्षक सौन्दर्यले सम्पन्न यी युवति सबै सुन्दरीहरूलाई लज्जित तुल्याउने विश्वसुन्दरी नै थिइन् । इतिहास र पुराणमा प्रसिद्ध अष्टनायिकाहरू यिनका सुसारे हुन पनि सुहाउँदैनथे । इतिहास र पुराणअनुसार

यद्दास्यकरणे नार्हाः प्रसिद्धा अष्टनायिकाः ।
योगिनामपि या चेतः कटाक्षेन विमोहयेत् ।।११।।

युवानो मुमुचुः शुक्रं केचित् तद्रूपवीक्षणात् ।
जारमार्गेषु निरता साऽभवद् विश्वमोहिनी ।।१२।।

महार्हवस्त्रालङ्कारा नानाविषयभोगिनी ।
बङ्गालनगरे ख्याता वेश्येवासीद् गतत्रपा ।।१३।।

भर्तारं चित्रनामानं वञ्चयत्येव सर्वदा ।
व्ययादसङ्ख्यद्रव्यस्य पित्रा सम्पादितं पुरा ।।१४।।

कदाचिच्छयने तं सा हित्वा सुन्दरवेषभृत् ।
निशीथे चलिता तेन हस्तेऽधारि रुषावशात् ।।१५।।

उवाच भर्त्सयँस्ताञ्च चित्रनामा पतिस्तदा ।
धिक् त्वां पापसमाचारे! या जारे निरताऽनिशम्।।१६।।

तद्वाक्यमित्थमाकर्ण्य शान्तकोपाऽभवत् तदा ।
अभक्ष्यभक्षणेनासौ मत्ता बलवती भृशम् ।।१७।।

अन्धे तमसि संगृह्य शस्त्रिकां दक्षहस्ततः ।
तया तदुदरं भित्वा चित्रनामपतेस्तदा ।।१८।।

गता तं पुरुषं रन्तुं यो जारो मनसि स्थितः ।
यावत् सा रमते तत्र तावत्पर्यन्तवासिना ।।१९।।

अष्टनायिकाहरूमा उग्रचण्डा, प्रचण्डा, चण्डोग्रा, चण्डनायिका, चामुण्डा, चण्डा, अतिचण्डा र चण्डवती पर्दछन् । यसैगरी श्रीकृष्णका आठ महारानीहरू- रुक्मिणी, सत्यभामा, जाम्बवती, कालिन्दी, मित्रवृन्दा, नाग्नजिती, भद्रा र लक्ष्मणा पनि अष्टनायिकामा पर्दछन्। यसैगरी इन्द्रका आठ नायिकाहरू- उर्वशी, मेनका, रम्भा, तिलोत्तमा, पूर्वचित्ति, स्वयंप्रभा, भीमकेशी र जनवल्लभा पनि अष्टनायिकाभित्र पर्दछन् । यी सुन्दरा नामक सुन्दरीले आफ्नो कटाक्ष प्रहार गरेर योगीका चित्तलाई पनि मोहित तुल्याउँथिन् ।।१०-११।। यिनको सुन्दर रूप देखेर युवकहरूको वीर्य स्खलित हुने गर्दथ्यो । विश्वलाई नै मुग्ध तुल्याउने यी विश्वसुन्दरी यति राम्रो रूप भएर पनि चरित्र शिथिल भएको हुँदा नाठाहरूसँग रङ्गरस गर्न मन पराउँथिन् ।।१२।। अत्यन्त मूल्यवान् वस्त्र र गहना धारण गर्न रुचाउने, थरि-थरिका पदार्थहरूको भोगमा आसक्त यी सुन्दरा नामक सुन्दरी बङ्गालदेशमा निर्लज्ज वेश्याका रूपमा प्रसिद्ध भइन् ।।१३।। चित्र नामक आफ्ना पतिलाई यिनले रातँदिन अनेकरूपमा ठगिरहेकी थिइन्। आफ्ना पतिका पिताले जोडेको असङ्ख्य धन-सम्पत्ति खर्च गरेर यिनले आफ्ना पतिलाई गरीब बनाइरहेकी थिइन् ।।१४।। एक दिनको कुरा हो, रात परेपछि यी सुन्दराले राम्रा वस्त्र र अलङ्कार धारण गरिन् र शय्यामा निदाइरहेका आफ्ना पतिलाई एक्लै छाडेर घरबाट प्रस्थान गरिन् । यिनले प्रस्थान गरेपछि चित्र नामक यिनका पति पनि जागे र आफ्नी पत्नीको खोजीमा हिंडे । तिनले बाटामा हिंडिरहेकी आफ्नी पत्नीलाई देखेर रिसाउँदै हात समातेर गाली गर्दै भने - पापाचार गर्ने हे स्त्री ! तँलाई धिक्कार छ, तँलाई नाठाहरूसँग निरन्तर भोग गरेर रमाउने बानी परेको रहेछ, तँ पापिनी होस् । आफ्ना पतिका यस्ता कुरा सुनेर ती सुन्दरा शान्तमुद्रामा उभिइराखिन् । शक्तिमती ती सुन्दरी नखाने कुरा खाएकाले अर्थात् मदिरापान गरेकाले भित्रभित्र मात्तिइसकेकी थिइन्।।१५-१७।। त्यसपछि दुबै श्रीमान्-श्रीमती सँगै फर्किए। फर्किंदा बाटोमा अँध्यारो पर्‍यो । त्यस बेला यी सुन्दरीले दाहिने हातमा छुरा लिएर आफ्ना पति चित्रको पेटमा प्रहार गरिन् र तिनको हत्या गरिन् । त्यसपछि ती सुन्दरा जुन नाठोसँग पल्केकी थिइन्, त्यसका घरमा भोगविहार गर्ने उद्देश्यले गइन्। जब ती जारसँग रमण गर्न

जाग्रता चरितं तस्या ज्ञात्वा राज्ञे निवेदितम् ।
तद्दूतास्तमसि स्थित्वा तावत् सा गृहमागता ।।२०।।

दधुस्तां राजदूतास्ते निन्यू राजसमीपतः ।
निजघ्नुस्तां बहिर्नीत्वा दूता राजाज्ञया तदा ।।२१।।

सा नीता नरके घोरे यमदूतैस्तदाज्ञया ।
अधोमुखी स्थिता तत्र संदष्टा कृमिभिर्भृशम् ।।२२।।

अत्यन्तं बुभुजे दुःखं स्मरन्ती पूर्वचेष्टितम् ।
कल्पान्ते मृत्युलोकेऽभूच्चाण्डाली दुर्भगा भृशम् ।।२३।।

एकदा मदिरां पीत्वा मत्ता सुप्ता दिवैव सा ।
निशायां प्रथमे यामे प्रबुद्धा क्षुधिता भृशम् ।।२४।।

तदैव भिक्षितुं याता गृहं सा व्रतकारिणः ।
तेनान्नमस्यै दत्तं यत् तया भुक्तं विधूदये ।।२५।।

गणेशेति च जल्पन्त्या स्वेच्छया दैवयोगतः ।
तदैव गणनाथेन विमानं प्रेषितं भृशम् ।।२६।।

ब्रह्मोवाच

देवदूतवचः श्रुत्वा पुनरूचुर्नमस्य ते ।

राजदूता ऊचुः

इदमत्यद्भुतं दृष्टमस्माभिः कार्यकारिभिः ।।२७।।

राज्ञा यदुपदिष्टं नो वाक्यमेतन्निबोधत ।
शक्रो गृत्समदं द्रष्टुं विमानवरमास्थितः ।।२८।।

भृगुण्डिमाययौ देवैर्दृष्ट्वा नत्वा प्रपूज्य तम् ।
तदनुज्ञाञ्च पूजाञ्च गृहीत्वा स्वां पुरीं ययौ ।।२९।।

थालिन् तब जागा रहेको कुनै छिमेकीले तिनको चरित्र थाहा पाएर आफ्नो देशका राजालाई तिनले गरेका सम्पूर्ण कुकर्म जाहेर गऱ्यो । बिहानसम्म भोगमा लिप्त रहेकी ती सुन्दरा सूर्य उदाएपछि घरमा आइपुगिन् । यी घरमा आउनासाथ लुकेर रहेका राजाका सिपाहीहरूले तिनलाई समातेर राजाका समीपमा पुऱ्याए। राजाको आज्ञा पाएर सिपाहीहरूले ती वेश्यालाई नगरबाहिर एकान्तमा लगी मारे ।।१८-२१।। यमदूतहरूले तिनलाई मृत्युपछि घोर नरकमा पुऱ्याए । नरकमा अनेक थरि कीराहरूद्वारा टोकिएर मर्मान्तक वेदना खप्नुपर्दा ती घोप्टेमुन्टो लगाएर बसिरहेकी थिइन्। तिनले आफ्ना सम्पूर्ण पापमय क्रियाकलाप याद गर्दै नरकको कठोर यन्त्रणा भोगिन्। एक कल्पसम्म अर्थात् ४ अरब ३२ करोड वर्षसम्म नरकमा यन्त्रणा भोगेपछि ती वेश्या पृथिवीमा अत्यन्त कुरूप चाण्डालकन्याको रूपमा पैदा भइन्।।२२-२३।। एक दिनको कुरा हो, ती चाण्डाली कन्या मदिरापान गरेर उन्मत्त भई दिउँसै सुतिरहेकी थिइन् । रातको पहिलो प्रहर बितेपछिमात्र जागिन्। तिनलाई त्यस बेला अत्यन्त भोक लागेको हुँदा भिक्षा माग्न भगवान् श्रीगणेशको व्रत गरिरहेका एउटा गृहस्थको घरमा पुगिन् । गृहस्थले तिनलाई भिक्षाको रूपमा अन्न दिए । तिनले चन्द्रोदय भएपछि त्यो अन्न ग्रहण गरिन्। त्यस बेला संयोगवश तिनले आफ्नै इच्छाले श्रीगणेश श्रीगणेश नाम जप गरेकी थिइन्। तिनले श्रीगणेशको नाम उच्चारण गरेको सुनेर प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले तिनलाई लिन तुरुन्तै विमान पठाउनुभयो। त्यस कारण यी अहिले यस विमानमा बसिरहेकी छिन् ।

**ब्रह्माजीले भन्नुभयो** - देवदूतहरूका कुरा सुनेर राजाका दूतहरूले तिनलाई नमस्कार गर्दै भने ।

**दूतहरूले भने** - हामी राजाको कार्य गर्न खटिएका राजदूतहरूले अद्भुत दृश्य देख्न पायौं।२४-२७।। हामीलाई हाम्रा राजा शूरसेनले जस्तो आदेश दिनुभएको छ, त्यो तपाईंहरूलाई बताउँछौं । एक दिन देवराज इन्द्र गृत्समद ऋषिको दर्शन गर्न विमानमा सवार हुनुभयो । उहाँको दर्शन गरेपछि देवताहरूका साथ भृशुण्डी ऋषिको दर्शन गर्न जानुभयो। उहाँको दर्शन, नमस्कार र पूजन गरेपछि उहाँबाट आज्ञा प्राप्त गरी इन्द्र अमरावती जान विमानमा सवार हुनुभयो ।।२८-२९।।

गच्छतस्तस्य यानं तच्छूरसेनपुरेऽपतत् ।
कुष्ठिनो वैश्यपुत्रस्य दृष्टिपातेन तत्क्षणात् ।।३०।।

शूरसेनो गतस्तत्र नमस्कृत्य प्रपूज्य तम् ।
विमानपतनेऽपृच्छदुपायं गमनेऽपि च ।।३१।।

इन्द्रेणोक्तं तु सङ्कष्टचतुर्थीव्रतसम्भवात् ।
पुण्यात् प्रस्थास्यते यानं तदर्थे यत्नमाचर ।।३२।।

वयं तदाज्ञया दूतास्तं गवेषितुमागताः ।
अनया चेद् व्रतमिदं देवदूताः कृतं यदि ।।३३।।

तर्हीयं नीयतां शूरसेनं भूमिपतिं प्रति ।
श्रेयो दास्यति चाण्डाली सङ्कष्टीव्रतसम्भवम् ।।३४।।

पुनर्द्विगुणपुण्येयं विमानं प्रति यास्यति ।
विमानमपि शक्रस्य स्वपुरीमागमिष्यति ।।३५।।

युष्माकमस्या अस्माकं कार्यं राज्ञः शचीपतेः ।
एवं कृते तु भविता क्रियतां यदि रोचते ।।३६।।

इति तद्वचनं श्रुत्वाऽभिदधुर्देवसेवकाः ।
आज्ञा नो नो गणेशस्यास्तीमां दातुं परस्य हि ।।३७।।

इत्युक्त्वा तां समुत्थाय विमाने निदधुर्यदा ।
तदैव सा दिव्यकान्तिर्दिव्यवस्त्राङ्गभूषणा ।।३८।।

देवदूतैस्तु सा नीता दिव्यवादित्रनिःस्वनैः ।
गजाननसमीपे सा राजदूता यथागतम् ।।३९।।

ययुस्ते शूरसेनं तं वृत्तान्तं समनुब्रुवन् ।
ब्रुवत्सु तेषु तद्यानं चाण्डाल्या सह संव्रजत् ।।४०।।

ददृशुस्ते दीप्यमानं भासयत् प्रदिशो दिशः ।
तस्या दृष्टिर्निपतिता तस्मिन् याने शचीपतेः ।।४१।।

अमरावतीका लागि उडेको उहाँको विमान शूरसेन राजाको नगरमा आउँदा दुर्घटनाग्रस्त भई भुईंमा खस्यो) (वास्तवमा कुष्ठरोगी, पापी र पतित बनियाँको छोराले विमानमा नजर लगाउँदा त्यो विमान भुईंमा खसेको थियो । देवराज इन्द्रको विमान भुईंमा खसेपछि राजा शूरसेनले त्यहाँ पुगेर इन्द्रको नमन र पूजन गरी विमान खस्नुको कारण सोध्नुभयो र विमान फेरि कसरी उड्न सक्छ ? त्यसबारेमा पनि जिज्ञासा गर्नुभयो ।।३०-३१।। इन्द्रले उत्तर दिंदै भने - राजा शूरसेन ! कसैले सङ्कष्टचतुर्थीको व्रत पूरा गरेको रहेछ भने त्यस्ता व्यक्तिले आफ्नो पुण्यदान गरेमा यो विमान फेरि उड्न सक्छ । त्यस कार्यका लागि तपाईंले प्रयास गर्नुहोस् ।।३२।। त्यसपछि राजा शूरसेनले हामीलाई सङ्कष्टचतुर्थी व्रत पूरा गरेको मानिस खोज्न पठाउनुभयो। हामी यहाँ आएका छौं । हे देवदूतहरू ! यदि यी चाण्डालीले सङ्कष्टचतुर्थीको व्रत गरेर पुण्य कमाएकी छन् भने यिनलाई शूरसेन राजाको समीपमा पुऱ्याइदिनुहोस् । यिनले सङ्कष्टचतुर्थी व्रतको पुण्य प्रदान गरिन् भने पुण्यदानका कारण दुई गुणा पुण्य कमाउने छन् र देवराज इन्द्रको विमान पनि अमरावती जान सक्नेछ ।।३३-३५।। यसो गर्नुभयो भने तपाईंहरूको काम सम्पन्न हुनेछ, यिनको काम पनि पूरा हुनेछ । हामी सफल हुनेछौं, राजा शूरसेनको दुनियाँमा नाम चल्नेछ र इन्द्रमहाराज पनि कर्मको सफलताले यशस्वी हुनुहुनेछ । तपाईंहरूलाई यदि मन लाग्छ भने चाण्डालीबाट पुण्यदान गराउने काम सम्पन्न गर्नुहोस् ।।३६।। राजदूतका यी कुरा सुनेर देवदूतहरूले भने - भगवान् श्रीगणेशले यिनलाई अन्यत्र पुण्यप्रदान गर्ने आज्ञा दिनुभएको छैन । यसो भनेर देवदूतहरूले चाण्डालीलाई उठाएर विमानमा राखे । चाण्डाली विमानमा सवार हुनासाथ दिव्य वस्त्र र गहनाले सम्पन्न अत्यन्त सुन्दर नारीको रूपमा परिणत भइन् ।।३७-३८।। देवलोकमा बजाइने बाजा-गाजाका साथ देवदूतहरूले यिनलाई श्रीगणेशको धाममा पुऱ्याए । राजाका दूतहरू भने निराश भएर फर्किए । तिनले शूरसेन राजाका समीपमा गएर सबै वृत्तान्त बताए । दूतहरूले कुरा गर्दागर्दै शूरसेन आदि त्यहाँ बसेका सबैले चाण्डाली सवार भएको विमान आफूहरूमाथि चारैतिर प्रकाश छर्दै आइरहेको देखे । त्यसमा बसेकी चाण्डालीको दृष्टि

विमानवायुसंस्पर्शाद् विमानमूर्ध्वमाययौ ।
पश्यत्सु सर्वलोकेषु विस्मितेषु सुरर्षिषु ।।४२।।

स्वं स्वं स्थानं ययुः सर्वे शक्रे यातेऽमरावतीम् ।
साऽपि वैनायकं धाम सम्प्राप्ता दिव्यदेहभाक् ।।४३।।

पापं हित्वा तु सङ्कष्टचतुर्थीव्रतपुण्यतः ।
इदं यः शृणुयात् सम्यक् श्रावयेद् वा प्रयत्नतः ।।४४।।

प्राप्नुयात् सकलान् कामान् सङ्कष्टनाशनं नरः ।।४५।।

इन्द्रमहाराजको दुर्घटनाग्रस्त विमानमा पऱ्यो ।।३९-४१।। चाण्डाली बसेको विमानको हावाले इन्द्रको विमानलाई स्पर्श गर्दा त्यहाँ रहेका सबै मानिस, देवता र ऋषिहरूले चकित भई हेर्दाहेर्दै त्यो विमान भुईं छोडी उड्दै माथि पुग्यो ।।४२।। यसरी देवराज इन्द्र अमरावतीतर्फ लागेपछि त्यहाँ सबै मानिसहरू आ-आफ्ना घरतर्फ गए ।।४३।। सङ्कष्टचतुर्थीको व्रत गरेका कारण पापशून्य बन्न पुगेकी चाण्डाली पनि दिव्य देह धारण गरी श्रीगणेशधाममा पुगिन् । श्रीगणेश भगवान्को सङ्कष्टचतुर्थी व्रतको महिमा बताउने यस कथालाई जसले राम्ररी सुन्दछ र सुनाउँदछ । त्यसले आफ्ना सबै कष्ट नाश गर्दै सम्पूर्ण कामनाहरूको फल प्राप्त गर्दछ ।।४४-४५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे चाण्डाल्युपाख्यानं नाम चतुःसप्ततितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थी व्रतको महत्त्वनिरूपणको क्रममा चाण्डालीको उपाख्यान' शीर्षकान्वित चौहत्तरौं अध्याय पूर्ण भयो ।।

ॐ

## पञ्चसप्तितमोऽध्यायः { ७५ अध्याय }

क उवाच

श्रुत्वा दृष्ट्वा शूरसेनो महिमानं व्रतोद्भवम् ।
स्वयं कर्तुमनाः प्राह वसिष्ठं मुनिपुङ्गवम् ।।१।।

राजोवाच

मुहूर्त्तं वद सङ्कष्टचतुर्थीव्रतहेतवे ।
व्रतं कर्तुमिहेच्छामि सद्यःप्रत्ययकारकम् ।।२।।

वसिष्ठ उवाच

माघे कृष्णे भौमवारे कुरुष्व व्रतमुत्तमम् ।
सर्वसिद्धिकरं सर्वकामदं राजसत्तम ।।३।।

ब्रह्मोवाच

राजा सम्भृतसम्भारः सपत्नीकोऽतिभक्तिमान् ।
अचिरेणैव सम्प्राप्ते वसिष्ठोक्तदिने शुभे ।।४।।
प्रारीप्समानः सङ्कष्टचतुर्थीव्रतमुत्तमम् ।
प्रातःस्नानं विधायाथ नित्यकर्म समाप्य च ।।५।।
गणेशं पूजयित्वैव स्वस्तिवाच्यद्विजर्षभान् ।
पूजयित्वा वसिष्ठं स ततोऽनुज्ञां समाप्य च ।।६।।
गणेशे मन आधाय तन्नामजपतत्परः ।
एकाङ्गुष्ठस्थितस्तावद् यावदस्तमियाद् रविः ।।७।।
पुनः स्नानं चकाराशु सायंसन्ध्यामुपास्य च ।
प्रारभत् पूजनं सम्यग्वसिष्ठेन समन्वितः ।।८।।
महामण्डपिकां कृत्वा कदलीस्तम्भमण्डिताम् ।
नानालङ्कारवस्त्राढ्यां छत्रचामरशोभिताम् ।।९।।
आदर्शपङ्क्तिरुचिरां पुष्पमालाविभूषिताम् ।
नानामणिप्रभायुक्तां दीपमालाविराजिताम् ।।१०।।
तन्मध्ये स्वर्णकलशे स्थापयित्वा गजाननीम् ।
सौवर्णीं प्रतिमां चारुसर्वावयवसुन्दराम् ।।११।।
नानालङ्काररुचिरां नानारत्नविभूषिताम् ।
पठत्सु द्विजमुख्येषु गायत्सु गायकेषु च ।।१२।।
नदत्सु सर्वतूर्येषु नृत्यत्सु नर्तकेषु च ।
वैदिकैश्चैव पौराणैस्तां मूर्तिं समपूजयत् ।।१३।।

**ब्रह्माजीले भन्नुभयो** – सङ्कष्टचतुर्थीको महिमा बुझेर शूरसेन राजालाई आफै पनि यो व्रत गर्न मन लाग्यो र तिनले उत्तम ऋषि वसिष्ठसँग भने ।।१।।

**राजाले भने** – हे गुरुदेव ! हजुरले सङ्कष्टचतुर्थी व्रत गर्न उपयुक्त उत्तम मुहूर्त बताउनुहोस् । म छिटै फल प्रदान गर्ने यो व्रत गर्न चाहन्छु ।।२।।

**वसिष्ठले भन्नुभयो** – हे राजन् ! माघमासको कृष्णपक्षको मङ्गलवारका दिन सबै कामना पूरा गराउने र सबै प्रकारका सिद्धि प्रदान गर्ने यो उत्तम व्रत आरम्भ गर्नुहोस्।।३।।

**ब्रह्माजीले भन्नुभयो** – राजा शूरसेनले सबै सामग्री जुटाएर आफ्ना पत्नीका साथमा रही वसिष्ठले बताएको मुहूर्त आएपछि सङ्कष्टचतुर्थीको व्रत प्रारम्भ गर्ने उद्देश्यले प्रातःकालमा स्नान गरी नित्यकर्म समाप्त गरेर श्रीगणेशको पूजा गरे । स्वस्तिवाचन गरी आफ्ना गुरु वसिष्ठ र अन्य ब्राह्मणहरूको पनि पूजा सम्पन्न गरे । वसिष्ठले आज्ञा दिएपछि श्रीगणेशमा मन लगाई खुट्टाको बूढी औंलाले टेकेर उनले सूर्य नअस्ताउँदासम्म श्रीगणेशको नामजप गरिरहे ।।४-७।। सूर्य अस्ताएपछि स्नान गरे । त्यसपछि तिनले सायँकालको सन्ध्या सकेर वसिष्ठ मुनिलाई डाकी श्रीगणेशको पूजा आरम्भ गरे ।।८।। केराका थामहरूले सिंगारिएको, अनेक थरि अलङ्कार र वस्त्रहरूले ढाकिएको, छाता र चमरले सुहाएको, ठाउँठाउँमा गल्ली बनाइएको, फूलमालाले सिंगारिएको, रत्न र मणिका किरणले जाज्वल्यमान र पुष्पमालाहरूद्वारा रमणीय विशाल मण्डप तयार गरी त्यसको माझमा सुवर्णको कलशमा अत्यन्त सुन्दर र अनेक रत्नले विभूषित र स्वर्णनिर्मित श्रीगणेशको प्रतिमा स्थापित गरे । त्यस बेला ब्राह्मणहरू पाठ गरिरहेका थिए, गायकहरू श्रीगणेशको गीत गाइरहेका थिए, अनेक मङ्गलवाद्य बजिरहेका थिए र नर्तकहरू नाचिरहेका थिए । राजा शूरसेनले वैदिक मन्त्र र पौराणिक मन्त्रहरूबाट षोडशोपचारले श्रीगणेशको मूर्तिमा पूजा गरे ।।९-१३।। पूजा गर्दा पञ्चामृत,

उपचारैः षोडशभिः पञ्चामृतपुरःसरम् ।
मोदकापूपलड्डूकपायसान्नं सशर्करम् ।।१४।।

नानाव्यञ्जनशोभाढ्यं पञ्चामृतसमन्वितम् ।
नैवेद्यं पुरतः स्थाप्य जलञ्च चारुगन्धयुक् ।।१५।।

समर्पयामास नृपो गजाननसुतुष्टये ।
फलानि पूगताम्बूलं दक्षिणां रत्नकाञ्चनीम् ।।१६।।

दूर्वा नीराजनं मन्त्रपुष्पाञ्जलीननेकधा ।
तिथये गणनाथाय चन्द्रायार्घ्यं ददावथ ।।१७।।

ब्राह्मणान् पूजयामास सादरं चाप्यबूभुजत् ।
अयुतं गा ददौ तेभ्यो वस्त्रालङ्कारदक्षिणाः ।।१८।।

ततः सुहृद्बन्धुयुतः स्वयञ्च बुभुजे नृपः ।
रात्रौ जागरणं चक्रे गीतवाद्यकथादिभिः ।।१९।।

प्रभाते विमले स्नात्वा पुनः सम्पूज्य पूर्ववत् ।
मूर्तिं तां गणनाथस्य वसिष्ठाय सदक्षिणाम् ।।२०।।

सोपस्करां ददौ राजा ततस्तुष्टो गजाननः ।
विमानं प्रेषयामास सर्वसम्पद्विराजितम् ।।२१।।

तद्दूतैः स्थापितस्तत्र गजाननस्वरूपवान् ।
पश्यतां सर्वलोकानां मन आनन्दयन् मुहुः ।।२२।।

चलितो देवलोकाय राजा पुण्यप्रभावतः ।
तमूचुर्देवदूतास्ते गजाननस्वरूपिणः ।।२३।।

नानालङ्कारशोभाढ्या मुकुटाक्रान्तमस्तकाः ।
विनायकेन तुष्टेन विमानं प्रेषितं तव ।।२४।।

त्वद्दर्शनौत्सुक्यवता ततो वयमुपागताः ।
इति तद्वचनं श्रुत्वा मुमोचाश्रूणि भूमिपः ।।२५।।

जगाद गद्गदगिरा रोमाञ्चाञ्चितविग्रहः ।
तानुवाच ततो राजा शूरसेनः स्मयन्निव ।।२६।।

अव्यक्तस्याप्रमेयस्य नित्यस्य जगदीशितुः ।
वाङ्मनोऽगोचरस्यापि न हेतुर्मम दर्शने ।।२७।।

लड्डू, चिनी, मालपुवा, मोहनभोग, खीर र अनेक थरि व्यञ्जनसहित अनेक थरिका नैवेद्य भगवान् श्रीगणेशका अगाडि अर्पण गरी सुगन्धित जल पनि टक्र्याएका थिए।।१४-१५।। तिनले श्रीगणेशको सन्तुष्टिका लागि विविध फूल, पत्र, पान, सुपारी, रत्न र सुवर्णको दक्षिणा, दूबो, आरती र मन्त्रपुष्पाञ्जली पनि अनेक पटक समर्पण गरे । यसरी तिनले चतुर्थी तिथिमा चन्द्रमा, तिथि र श्रीगणेशलाई छुट्टाछुट्टै अर्घ्य समर्पण गरे ।।१६-१७।। त्यसपछि ब्राह्मणको पूजा गरी ब्राह्मणभोजन गराए। ब्राह्मण-भोजनपछि ती ब्राह्मणहरूलाई दश हजार गाई, वस्त्र, अलङ्कार र दक्षिणा पनि प्रदान गरे ।।१८।। यी सबै कर्म सकिएपछि तिनले आफ्ना बन्धु-बान्धवका साथ भोजन गरे। फेरि त्यो दिन नाच, गान, वाद्यवादन, कथाश्रवण आदि मङ्गलकार्य गर्दै रातभर जागा रहे ।।१९।। निर्मल प्रातःकाल भएपछि नुहाएर अघिल्लो दिन गरेजस्तै भगवान् श्रीगणेशको मूर्तिमा पूजा गरे। पूजा सकिएपछि वसिष्ठलाई शय्या, दक्षिणा र अन्य सामग्रीसहित श्रीगणेश प्रतिमा पनि प्रदान गरे । राजा शूरसेनले गरेको सङ्कष्टचतुर्थीको व्रतबाट प्रसन्न हुनुभएका श्रीगणेशले शूरसेनका निमित्त ऐश्वर्यसम्पन्न विमान पठाउनुभयो ।।२०-२१।। श्रीगणेशका दूतहरूद्वारा विमानमा प्रवेश गराइएका राजा शूरसेन श्रीगणेशकै रूपमा परिणत भए। तिनलाई श्रीगणेशका रूपमा परिणत भएको देखेर त्यहाँका सारा मानिसहरू आनन्दित भएका थिए। त्यसपछि राजा शूरसेन देवलोकका लागि प्रस्थान गर्न लागे । श्रीगणेशकै स्वरूप धारण गरेका, विविध मूल्यवान् अलङ्कारले शोभायमान, शिरमा सुन्दर मुकुट धारण गर्ने देवदूतहरूले राजा शूरसेनलाई भने - तपाईंको व्रतबाट खुसी हुनुभएका भगवान् श्रीगणेशले तपाईंका लागि यो विमान पठाउनुभएको हो।।२२-२४।। भगवान् श्रीगणेश तपाईंलाई हेर्न उत्सुक हुनुहुन्छ । उहाँले आज्ञा गरेअनुसार हामी तपाईंलाई लिन आएका हौं । देवदूतका कुरा सुनेर शूरसेन राजाका आँखाबाट बर्बर्ती आँसु खसे ।।२५।। त्यसपछि रोमाञ्चित भएका राजाले चकित हुँदै गद्गद वाणीद्वारा दूतहरूलाई भने- अव्यक्त, अप्रमेय, विद्या, वाणी र मनद्वारा अगोचर, जगत्का स्वामी गजाननका निमित्त म आवश्यक छैन, वेद र शास्त्रले जसको राम्ररी वर्णन गर्न सक्दैनन्, ब्रह्मा,

न समर्थाश्च यं वेदाः शास्त्राणि च निरूपितुम् ।
यञ्च स्मरन्ति सततं केशाद्या देवतागणाः ।।२८।।

तेनाहं चेत् स्मृतो दूतास्तर्हि भाग्यं महन्मम ।
इत्याकर्ण्य तु तद्वाक्यं दूता ऊचुः पुनर्नृपम् ।।२९।।

महिमानं न जानीमो भक्तानां नृपते ! वयम् ।
निर्गुणं यन्निराकारं येन साकारतामियात् ।।३०।।

विष्णु, शिव आदि देवताहरूले जसको निरन्तर ध्यान गर्दछन्, त्यस्ता जगदीश्वर भगवान् श्रीगणेशले मलाई संझनुभयो । हे दूतहरू हो ! त्यसो हो भने मेरो ठूलो भाग्य रहेछ । शूरसेनका यी कुरा सुनेर दूतहरूले फेरि राजालाई भने - हे राजा ! हामी भक्तहरूको महिमा जान्न सक्दैनौं। कसरी निर्गुण र निराकार स्वरूपका भगवान् पनि साकार भएर दर्शन दिनुहुन्छ, त्यो हाम्रो ज्ञानको विषय होइन ।।२८-३०।।

### राजोवाच

एका मे महती वाञ्छा तुष्टे देवे भवत्सु च ।
तुष्टेषु नगरीं हित्वा कथं यायां गजाननम् ।।३१।।

न भक्षितं विनाऽप्येतैर्मया हालाहलं क्वचित् ।
स कथं परमानन्दं भोक्ष्य एतैर्विनाऽनघाः ।।३२।।

पुनरूचुश्च तं दूतास्त्वदिच्छा परिपूर्यताम् ।
न चेद् गजाननः क्रोधात् ताडयिष्यति नोऽखिलान्।।३३।।

**राजाले भने** - हे देवदूत हो ! भगवान् श्रीगणेश प्रसन्न हुनुभएको छ, तपाईँहरू पनि प्रसन्न हुनुहुन्छ, त्यस कारण म मेरो इच्छाबारे एउटा निवेदन गर्दछु । यहाँका नर-नारीहरूलाई छोडेर म एक्लै कसरी भगवान्को दर्शन गर्न जाऊँ ? मैले यी नगरवासीहरूसँग छुट्टिएर एक्लै विष पनि खाएको छैन । हे निष्पाप देवदूतहरू ! यिनलाई यहाँ छाडेर मैले एक्लै परम आनन्दको भोग कसरी गरूँ ? दूतहरूले भने - हे राजा ! तपाईँको इच्छा पूरा गर्नुहोस् । तपाईँजस्ता प्यारा भक्तको इच्छा पूरा भएन भने भगवान् श्रीगणेशले हामीसँग क्रुद्ध भएर दण्ड दिनुहुनेछ ।।३१-३३।।

### ब्रह्मोवाच

ततः सर्वं जनं नेतुं विमाने निदधुः क्षणात् ।
चतुराकरजा ब्रह्मन् ! निक्षिप्ताः सर्वजन्तवः ।।३४।।

सर्वे दिव्याम्बरा दिव्यवस्त्रालङ्कारशोभिनः ।
ऊचुः परस्परं सर्वे किमेतदद्भुतं महत् ।।३५।।

अस्माभिर्न कृतं पुण्यं विमानं कथमीदृशम् ।
अपरे चाब्रुवंस्तत्र राजपुण्यबलादिदम् ।।३६।।

यथा निधिबलाद् धातुमात्रस्य हाटकं भवेत् ।
अतिपापो यथा साधुवचसा सिद्धिमाप्नुयात् ।।३७।।

तथैव राजपुण्येन वयं सर्वे समुद्धृताः ।
ततो वैनायका दूता गतिमूर्ध्वामकल्पयन् ।।३८।।

जडीभूतं विमानं तन्नोदतिष्ठन् महीतलात् ।
ततः संशयितं सर्वं कथमेतद् दिवं व्रजेत् ।।३९।।

**ब्रह्माजीले भन्नुभयो** - त्यसपछि देवदूतहरूले त्यस नगरका सबै प्राणीहरूलाई विमान राखिदिए । त्यस विमानमा त्यस नगरका अण्डज, जरायुज, उद्भिज र स्वेदज सबै वर्गका प्राणीहरू रहेका थिए ।।३४।। सबै दिव्य वस्त्र र दिव्य अलङ्कारले सुहाए । विमानमा विराजमान ती सबै प्राणीहरूले आपसमा भन्न थाले - यो गजबको कुरा भयो, हामीले केही पुण्य गरेका छैनौं, तर हाम्रा लागि विमान कसरी आइपुग्यो ? केही अरू मानिसले भने - राजाले गरेका पुण्य-प्रतापले हामीले पनि विमानमा आरोहण गर्ने अवसर पायौं ।।३५-३६।। जस्तै पारसमणिको स्पर्श पाएर सामान्य धातु पनि स्वर्णमा बदलिन्छ अथवा जस्तै अत्यन्त पापी मानिस पनि ठूला सज्जनको सङ्गत पाएर सिद्धि प्राप्त गर्दछ, त्यस्तै राजाका पुण्यको प्रतापबाट हाम्रो उद्धार भएको छ। त्यसपछि श्रीगणेश भगवान्का दूतहरूले विमानलाई उडाउन थाले ।।३७-३८।। कैयन प्रयास गर्दा पनि त्यो विमान पृथिवीतलबाट अलिकति पनि माथि उठेन। यो देखेर विमानभित्र बसेका मानिसहरू - यस्तो विमान कसरी स्वर्ग पुग्न सक्छ ? भन्दै संशय गर्न लागे ।।३९।। फेरि केही

ऊचुः परस्परं लोका निर्दैवस्य निधिः कुतः ।
आरुरुक्षेत् कथं भिक्षापात्रं शिक्यं महत्तरम् ।।४०।।

ददृशुः सर्वतः केचित् कुष्ठी दृष्टिपथं गतः ।
उवाच कश्चिद्राजानं कुष्ठिनं त्वमिमं त्यज ।।४१।।

अस्मिन्नधो गते यानमूर्ध्वमेतद् भविष्यति ।
शूरसेन उवाचैतान् दूताँस्तं त्यक्तुमिच्छतः ।।४२।।

अहं पापसमाचारस्त्याज्यो नेय इमेऽखिलाः ।
अथवा कथ्यतामस्य पूर्वपापं च जन्म च ।।४३।।

मत्स्नेहात् सर्ववेत्तृत्वादुपायं कृपयाऽपि च ।

दूता ऊचुः

न कार्या नृपते ! चिन्ता वदिष्यामो वयं तव ।।४४।।

जन्म पापमुपायञ्च कुष्ठिनो दुष्टकर्म च ।।४५।।

मानिसहरूले अभागीले खजाना कहाँबाट पाउँछ ? के भिक्षा थाप्ने भाँडोले शिकामा बस्न पाउँछ ? यसरी तर्कपूर्ण कुरा गरिरहेका मानिसहरूले विमानको चारैतिर हेरे, तिनका सामु एउटा कुष्ठरोगी मानिस देखापर्‍यो । ती दूतहरूमध्ये एउटा दूतले राजालाई भने - हे राजन् ! यो कुष्ठरोगी मानिस विमानभित्र रहेका कारण विमान चलेन । यसलाई बाहिर निकालिदिनुहोस्। यो मानिस बाहिर ओर्लियो भने विमान माथि उड्नेछ । त्यो कुष्ठरोगी मानिसलाई बाहिर पठाउन चाहने दूतलाई शूरसेनले भने - म नै पापी छु, मलाई बाहिर निकालिदिनुहोस् । यहाँ भएका सबै मानिसहरूलाई तपाईँले श्रीगणेशको धाममा लिएर जानुहोस् अथवा तपाईँहरूले यी कुष्ठरोगीको पूर्वजन्म र त्यहाँ यिनले गरेका पापको विषयमा मलाई बताउनुहोस् । त्यसपछि ममाथि कृपा गरेर तपाईँहरूले यो मानिसको उद्धार गर्ने उपाय बताउनुहोस् । किनकि तपाईँहरू सर्वज्ञ हुनुहुन्छ ।

देवदूतले भने- हे राजा! तपाईँले कुनै चिन्ता नगर्नुहोस्। हामी तपाईँलाई यी कुष्ठरोगीको पूर्वजन्म, दुष्टकर्म र पापसमेत बताएर यिनको उद्धार गर्ने उपाय पनि बताउनेछौँ ।।४०-४५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे शूरसेनकृतचतुर्थीव्रतफलनिरूपणं नाम पञ्चसप्ततितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'शूरसेनद्वारा चतुर्थीव्रतको अनुष्ठान र फलप्राप्ति' शीर्षकान्वित पचहत्तरौँ अध्याय पूर्ण भयो ।।७५।।

ॐ

## षट्सप्ततितमोऽध्यायः　　{ ७६ अध्याय }

दूता ऊचुः

गौडे तु विषये गौडनगरेऽभूत् पुरा द्विजः ।
तपस्वी ज्ञानवान् प्राज्ञो देवब्राह्मणपूजकः ।
तस्य पुत्रोऽयमजनि जननी चास्य शाकिनी ।।१।।

तस्य पत्नी तु सावित्री सावित्रीव पतिव्रता ।
एकपुत्रस्नेहवशादलङ्कारैरलङ्कृतः ।।२।।

अत्यन्तसुन्दरतरो रतिभर्तेव शोभते ।
तन्मातापितरौ तस्य वियोगं नेच्छतः क्षणम् ।।३।।

स तु यौवनमापन्नो निजभार्यां विहाय ताम् ।
परदाररतो नित्यं परनिन्दापरायणः ।।४।।

अभवत् पापनिष्ठश्च पितृवाक्यावमर्दनः ।
एकदा नगरे तस्मिन् वेश्या नरविमोहिनी ।।५।।

आगता तद्गतमना यच्चक्रेऽसौ शृणुष्व तत् ।
स्वालङ्कारान् पेटिकायां निष्कास्याऽस्थापयद् बलात् ।।६।।

मातापित्रोः समक्षञ्च पश्चाच्चौर्यं पुनश्च तान् ।
वेश्यायै प्रतिपाद्यैतांश्चिक्रीड सुभृशं तया ।।७।।

हित्वेन्द्रियार्थान् सकलान् सुगन्धद्रव्यसंयुतः ।
तदेकनिष्ठः सञ्जातो योगी ब्रह्मपरो यथा ।।८।।

कामाग्निविह्वलश्चासीत् क्षीवो मद्यबलाद् यथा ।
पिता तु खेदसम्पन्नः क्षुत्तृड्भ्यां परिवर्जितः ।।९।।

विलोकयामास सुतं नगरे प्रतिमन्दिरम् ।
अलब्धदर्शनस्तस्य श्वासोच्छ्वासपरायणः ।।१०।।

**देवदूतहरूले भने -** कुनै समयमा गौड देशको गौड नगरमा तपस्वी, ज्ञानी, विद्वान्, देवता एवं ब्राह्मणका आराधक एउटा ब्राह्मण थिए ।।१।। यी कुष्ठरोगी मानिस तिनै ब्राह्मणका पुत्र हुन् । यिनकी आमाको नाम शाकिनी र श्रीमतीको नाम सावित्री थियो । सावित्री वास्तवमा सावित्रीसमान पतिव्रता थिइन् । सन्तानको नाममा एउटा छोरामात्र भएकाले यी छोरा सधैं वस्त्र र गहनाले ढाँटिएर रहन्थे ।।२।। हेर्दा यी कामदेवसमान अत्यन्त सुन्दर देखिन्थे । आमा-बाबु यी छोराको विरह अलिकति पनि खप्न सक्दैनथे । यी जवान भए । विवाह गरेर ल्याएकी पतिव्रता पत्नीलाई छाडी परस्त्रीहरूसँग रमण गर्ने, परनिन्दा गर्ने, पापकर्म गर्ने र बाबु एवं आमाको आज्ञा नमान्ने जस्ता कर्म गरिरहँदा यी अत्यन्त दुष्ट मानिसका रूपमा चिनिए । एक दिन त्यस नगरमा एउटी दर्शक युवाहरूलाई मुग्ध तुल्याउने अत्यन्त सुन्दरी वेश्या आइपुगी ।।३-५।। ब्राह्मणका पुत्र यी बुध वेश्याको विचित्र सौन्दर्य देखेर मुग्ध भए । यिनले आफ्ना आमा-बाबुका सामु वेश्यामा आसक्त भएर आफूले धारण गरेका गहना उतारी एउटा बाकसमा राखे। कोही नभएको मौका पारेर त्यो बाकस पनि चोरेर बाहिर लगे । ती सबै गहना त्यो सुन्दरी वेश्यालाई सुम्पेर त्यसका साथ पटक-पटक भोगविलास गरे ।।६-७।। सुगन्धित शृङ्गारसामग्रीका साथ नित्य वेश्यारमण गर्ने यिनले अरू पारिवारिक कर्तव्य र खान-पानसमेतको पनि बेवास्ता गरी त्यसै वेश्याको चिन्तन र सहवास आदि क्रियाकलापबाट वेश्यामय बनेर समय बिताए । जसरी ब्रह्मानन्दमा रमाउने योगीहरू जगत्का पदार्थहरूलाई छाडेर ब्रह्ममा नै रमाउँछन्, त्यस्तै यी ब्राह्मणपुत्र बुध पनि वेश्याको चिन्तनमा रमाउँदा उन्मत्त र कामव्याकुल बनेका थिए । छोरालाई घरमा नदेखेर तिनका बाबु-आमा भोक र प्यासको पनि वास्ता नगरी चिन्ता गरिरहन्थे ।।८-९।। हाम्रो छोरा यतिबेला कहाँ होला ? भनी तर्क गर्दै नगरका घर-घरमा छोराको खोजीमा डुल्दथे । छोराको दर्शन र खबरसमेत नपाउँदा निरन्तर लामो सास तानेर चिन्ता गरिरहन्थे ।।१०।।

निशीथे स्वप्रियां प्राह बुध: पुत्रो गत: क्व नु ।
विना तेन वृथा गेहं विना दीपं यथा निशा ।।११।।

विना जलं वृथा वापी विनापत्यं यथाऽवला ।
कदा नु दर्शनं तस्य भविता प्राणरक्षकम् ।।१२।।

शाकिन्युवाच

क्षुधा तृषा परिश्रान्ता चिन्ताशोकसमन्विता ।
तिष्ठामि नाथ ! नो जाने क्व गत: प्रियबालक: ।।१३।।

यदि मे दर्शनं तस्य स्याज्जीवामि न चान्यथा ।
पुनश्चचाल दूर्व: स यष्टिमादाय मुष्टिना ।।१४।।

यं यं पश्यति मार्गेऽस्मिँस्तं तं पृच्छति चात्मजम् ।
यदा श्रान्त: क्षुधाक्रान्तस्तदा भ्रान्तश्च सोऽभवत् ।।१५।।

अतिवृद्धो महाभीमो नाम्ना भीमोऽन्त्यवर्णज: ।
स तेन पृष्टस्तनयं तेनाप्युक्तं परं स्फुटम् ।।१६।।

भीम उवाच

वेश्यागृहे ते तनयो बुधोऽसौ
बुध: सुखं क्रीडति कामसक्त: ।
कस्यात्मजो वा जननी पिता वा
वृथैव खेदं कुरुषे द्विजेन्द्र ।।१७।।

दूर्व उवाच

कथं मम सुतो जातो वेश्यायां निरतो बुध: ।
तस्या गृहं जगामाशु दृष्टवाँस्तत्र तं सुतम् ।।१८।।

उन्मत्तं मदिरारक्तनयनं मदविह्वलम् ।
पिता दधार तं हस्ते रुषाऽशिक्षापयत् सुतम् ।।१९।।

त्वत्त: कण्टकवृक्षोऽयं पाषाणो वा मतोऽधिक: ।
कथं न त्यजसे प्राणान् किं स्यात्तैर्जीवितं खलु ।।२०।।

ब्रह्मोवाच

पितृवाक्यं समाकर्ण्य रोषाविष्टो बुध: सुत: ।
तलप्रहारं तुण्डेऽस्य दत्तवान् पितुरेव स: ।।२१।।

एक दिन ब्राह्मणले रातको समयमा आफ्नी ब्राह्मणीलाई भने- हे प्रिया! विना पानीको तलाउ व्यर्थ छ, विना सन्तानको नारीजीवन निरर्थक छ, विना पुत्रदर्शन हाम्रो जीवन व्यर्थ छ, हामी कहिले र कहाँ छोरालाई भेट्ने मौका पाउनेछौं । कहिले त्यसको दर्शन पाएर आफ्नो प्राणको प्यास शान्त गराउनेछौं ।।११-१२।।

**शाकिनीले भनिन्** - हे नाथ ! म भोक र प्यासले गलेकी छु, चिन्ता र शोकले डढेकी छु, हाम्रो प्यारो छोरा कहाँ गयो ? थाहा पाउन सकिएन ।।१३।। छोराको अनुहार हेर्न नपाए म अब धेरै बाँच्न सक्दिनँ । पत्नीको व्याकुलता देखेर ती दूर्व नाम गरेका ब्राह्मण हातमा दण्डधारण गरी घरबाट फेरि हिंडे ।।१४।। बाटामा जुन जुन मानिस भेटिन्थे, तीसँग तपाईंले मेरो छोरा देख्नुभयो कि ? भनी सोधिरहन्थे । जब ती वृद्ध धेरै थाके, भोक प्यासले गलित भए र दुर्बलताले रिंगटा लागेर थचक्क बसे, त्यस बेला तिनले अत्यन्त डरलाग्दो आकारका भीम नामक वृद्ध शूद्रलाई देखे। दूर्वले तीसँग पनि छोराकै विषयमा सोधेपछि शूद्रले स्पष्टसँग भने ।।१५-१६।।

**भीमले भने** - हे ब्राह्मण ! तपाईंको छोरा यतिबेला वेश्याको घरमा बसिरहेको छ । त्यो मूर्ख वेश्यासँग कामक्रीडामा लम्पट भइसकेको छ । संसारमा को कसकी आमा ? को कसको बाबु ? को कसको छोरा ? यी नाता सम्बन्ध क्षणिक हुन्, नाशवान् हुन्, व्यर्थमा किन खेद गर्दछौ?।।१७।।

**दूर्वले भने** - 'मेरो छोरा बुध कसरी वेश्यामा आसक्त भयो ?' त्यसपछि ती वेश्याका घरमा पुगे । त्यहाँ तिनले आफ्नो छोरालाई देखे । त्यस बेला मदिरापानका कारण बुध मदविह्वल थियो । त्यसको शरीर धडाधडाइरहेको थियो र आँखा राता थिए । त्यसलाई हातमा समातेर पिताले उपदेशको मुद्रामा भने - हे दुष्ट पुत्र ! हे अधम! तँ मेरो कुलमा चन्द्रमामा कलङ्क झैं भएर किन पैदा भइस् ? तँभन्दा ढुङ्गा बेस छ र काँडादार रूख पनि धेरै बेस छ । तेरो जीवन व्यर्थ छ । तँ किन मर्दैनस् ? तँ बाँचेर के लाभ छ ? ।।१८-२०।।

**ब्रह्माजीले भन्नुभयो** - आफ्ना पिताको वचन सुनेर क्रोधावेशमा आएको त्यो छोरा बुधले पिताको गालामा थप्पड हान्यो ।।२१।। त्यसपछि भन्यो - 'हे नराधम पिता ! कीरा-

उक्तवान् कृमिकीटादिसाधारणसुखे कथम् ।
कृतवानसि मे विघ्नं क्रीडाकाले नराधम ।।२२।।

अकस्मात् काकस्य शकृत् पतितं मयि वा कथम् ।
पुनर्लत्ताप्रहारेण प्राणाँस्तस्य गृहीतवान् ।।२३।।

पित्रा प्राणेषु त्यक्तेषु हरेश्वरेति सोऽवदत् ।
ननन्द स सुतः पादे बद्ध्वा तं दूरतोऽक्षिपत् ।।२४।।

मधु पीत्वा पुना रेमे वेश्यया स यथेच्छकम् ।
प्रातर्जगाम स्वगृहं ददर्श जननी च तम् ।।२५।।

आलिलिङ्ग सुतं हर्षात् स्नेहस्नुतपयोधरा ।
बभाण क्व गतश्चाऽसि क्व स्थितः किं कृतं त्वया ।।२६।।

वद मे विस्तराद् वत्स ! पिता ते दुःखितो भृशम् ।
अहं चापि निराहारा निर्जला निशि जाग्रती ।।२७।।

प्रतीक्षमाणा वत्स ! त्वां पिताऽन्वेष्टुं गतश्चिरात् ।
गच्छ त्वं पितरं द्रष्टुमित्युवाच पुनः पुनः ।।२८।।

तयाज्ञप्तमिति क्रोधाच्छुष्ककाष्ठेन तां सुतः ।
ताडयामास शिरसि पतिता सा धरातले ।।२९।।

निश्चेतनां परिज्ञाय बद्ध्वा पादेऽक्षिपद् बहिः ।
स्वयं वेश्यागृहं गत्वा चिक्रीड भृशहर्षितः ।।३०।।

ददहुस्ते जनाः सन्तो दम्पती स्वस्वकाष्ठतः ।
न शास्ति राजा दण्ड्यं तं ब्राह्मणत्वाद् द्विजाधमम् ।।३१।।

पुनर्गृहागतं तं तु पत्नी वाक्यं शनैर्जगौ ।

सावित्र्युवाच

प्राणनाथ वदाम्येकं तद् शृणुष्व महामते ।।३२।।

कृमिले पनि विषयभोग गर्दछन् । त्यस्तो आनन्ददायक विषयभोग गरिरहेको समयमा आएर तिमीले ठूलो विघ्न गर्‍यौ ।।२२।। तिम्रो यस विघ्नका कारण मेरो ज्यानमा अचानक कौवाको विष्ठा परेझैं भएको छ ।' यति भनेर त्यसले लातै लातले प्रहार गरेर आफ्ना बाबुको प्राण लियो।।२३।। पिताले प्राणत्याग गरेपछि त्यसले हे हर! हे ईश्वर ! भन्यो । त्यसपछि प्रसन्न भई त्यसले लाशलाई खुट्टामा बाँधेर टाढा पुऱ्याई फ्याँकिदियो ।।२४।। फर्केर आएपछि फेरि मदिरापान गरी वेश्यासँग रमण गर्न लाग्यो । रातमा यथेष्ट रमण गरेपछि बिहान त्यो आफ्नो घर गयो । त्यहाँ त्यसकी आमाले त्यसलाई देखिन् ।।२५।। छोरामा स्नेहका कारण स्तनबाट दूधका धारा बगाइरहेकी आमाले त्यसलाई हर्षपूर्वक आलिङ्गन गर्दै भनिन् – 'बाबु ! तिमी कहाँ गएका थियौ ? कहाँ बसेका थियौ ? तिमीले के काम गर्‍यौ ? मलाई सबै विस्तारपूर्वक बताऊ । तिम्रा पिता पनि तिमीलाई नदेखेर साह्रै दुःखित भई तिमीलाई खोज्न जानुभएको छ । मैले पनि केही खाए-पिएकी छैन । तिम्रै पीरले रातभर जागा रहेकी छु ।।२६-२७।। तिम्रै प्रतीक्षामा बसिरहेकी छु । तिम्रा पिता जानुभएको पनि धेरै बेर भइसक्यो । बाबु ! जाऊ र उहाँलाई खोजेर ल्याऊ ।' यसरी तिनले आफ्ना मनका वेदना पोखेर छोरालाई पटक पटक बाबुको खोजी गर्न अह्राइन् ।।२८।। आमाले मलाई पटक पटक काम गर्न लगाइन् भन्ने रीसले त्यो छोराले ती आमाको टाउकामा सुकेको काठले हिर्कायो। बिचरा ती आमा भुईंमा लडिन् ।।२९।। त्यसपछि त्यो छोराले ती आमालाई मरेकी जानेर खुट्टामा बाँधी तिनको लाशलाई टाढा लगेर फ्याँकिदियो। त्यसपछि आफू प्रसन्न भई वेश्याका घरमा गएर भोगविलास गर्न लाग्यो ।।३०।। त्यहाँका सम्पन्न मानिसहरूले काठ जम्मा गरेर ती दुबै मरेका वृद्ध-वृद्धाको दाहसंस्कार गरे । त्यतिका अपराध गर्दा दण्डनीय भएता पनि त्यो अधमलाई ब्राह्मण भएको नाताले त्यस बेलाका राजाले कुनै दण्ड दिएनन् ।।३१।। त्यो फेरि वेश्याको घरबाट आफ्नो घरमा आयो । त्यसलाई आएको देखेर त्यसकी पत्नी सावित्रीले सुस्तरी कुरा गरिन् ।

सावित्रीले भनिन् – हे मेरा बुद्धिमान् प्राणनाथ ! म हजुरसँग एउटा निवेदन गर्न चाहन्छु, हजुरले सुन्नुहोस् । हजुरको

अतिख्यातेऽतिविमले वर्णे जन्म भवादृशाम् ।
आचारश्चान्यथा दुष्टस्त्यक्तव्य: स विवेकत: ।।३३।।

इह लोके तु तत् कार्यं येन सौख्यं परे भवेत् ।
पूर्वे वयसि तत्कार्यं येन शं वार्धके भवेत् ।।३४।।

अष्टमासेषु तत्कुर्याद् येन वर्षासु शं भवेत् ।
दिवसे कर्म तत्कार्यं येन रात्रौ सुखं भवेत् ।।३५।।

पितु: प्रियत्वाद् राजाऽपि ब्राह्मणत्वात् क्षमत्यसौ ।
सर्वावयवसम्पूर्णां सुन्दरीमनुसारिणीम् ।।३६।।

त्यक्त्वा मां धर्मपत्नीं त्वं वेश्यायां निरत: कथम् ।
लोको निन्दति सर्वत्र भयात् त्वां न वदत्यसौ ।।३७।।

स मां जन: प्रतिब्रूते पतिस्ते कीदृश: शुभे ! ।
लज्जयाऽधोमुखी प्राणाँस्त्यक्तुमीहे तदैव च ।।३८।।

यथेष्टं चेन्मया सार्धं रमसेऽहर्निशं पते !।
न कोऽपि किञ्चिद् ब्रूयात् त्वां दोषो वा न भवेन्महान्।।३९।।

हितं चेत् कुरु मद्वाक्यं त्यक्त्वा तां स्वविवेकत: ।
अज्ञानाद् वा प्रमादाद् वा कृतं कर्म त्यजेद् बुध:।।४०।।

इदं कृतं ममैव स्यादिष्टं नैव कृतं यदि ।
अनिष्टं सर्वथा मे स्यात् तन्न कार्यं विनिश्चयात् ।।४१।।

अन्यथा कुर्वत: पुंस इहलोको न वा पर: ।
इति स्त्रिया वाक्यबाणैर्बुधो विद्धो हि मर्मसु ।।४२।।

रोषाविष्टो महाक्रूरो जगाद प्रज्वलन्निव ।

जन्म अत्यन्त प्रसिद्ध कुल र निर्मल ब्राह्मण जातिमा भयो । तर हजुरको चाल-चलन भने कुल र जाति अनुकूलको भएन। तपाइँले आफ्ना दुष्ट क्रियाकलापलाई विवेकपूर्वक छाड्नु पर्दछ।।३२-३३।। मानिसले यस लोकमा त्यो काम गर्नुपर्दछ, जुन गर्नाले परलोकमा सुख प्राप्त हुनसक्दछ । यौवन अवस्थामा त्यो काम गर्नुपर्दछ जुन काम गर्नाले वृद्धावस्थामा सुख प्राप्त हुनसक्दछ ।।३४।। एक वर्षका आठ महिनाहरूमा त्यो काम गर्नुपर्दछ, जुन काम गर्नाले वर्षाऋतुमा सुख प्राप्त हुन सक्दछ। मानिसले दिनमा त्यो काम गर्नुपर्दछ जुन काम गर्नले रातको समयमा सुख प्राप्त हुनसक्छ ।।३५।। तपाइँ पिताका प्यारा भएकाले र तपाइँ ब्राह्मणकुलमा पैदा हुनुभएका कारणले पनि यो देशका राजाले दया गरेका छन् । सर्वाङ्ग सुन्दर स्वरूप भएकी, तपाइँको आज्ञापालन गर्ने र तपाइँलाई असाध्यै माया गर्ने मजस्ती विवाहित पत्नीलाई छाडेर तपाइँ किन वेश्यासँग भुल्नुभएको छ ? चारैतिरका मानिसले तपाइँको यो कर्म देखेर निन्दा गरिरहेका छन् । तपाइँका सामु आएर डरले केही पनि भन्न सक्दैनन् ।।३६-३७।। यी मानिसले मसँग आएर 'हे कल्याणी ! तिम्रा पति कति दुर्जन भए भन्दछन्।' त्यो सुन्दा मलाई नराम्रो लाग्दछ, लाजले टाउको निहुऱ्याउँछु र त्यसै बेला मलाई प्राण त्याग्न मन लाग्दछ ।।३८।। हे पतिदेव ! दिनदिनै तपाइँ मसँग रमाएर आहार-विहार गर्नुहुन्छ भने कसैले पनि तपाइँलाई केही भन्ने मौका पाउने थिएन र ठूलो दोष पनि लाग्ने थिएन ।।३९।। तपाइँलाई यो कुरा हितकारी लाग्दछ भने आफ्नो विवेक प्रयोग गरी वेश्यालाई छाडेर मेरो भनाइलाई मान्नुहोस् । अज्ञानले अथवा उपेक्षाले आफूले शुरू गरेको नराम्रो कामलाई बुद्धिमान् मानिसले त्याग्नुपर्दछ।।४०।। यो काम गर्दा यसको फल मैले नै भोग्ने हो, राम्रो र नराम्रोको परिणाम भोक्ता पनि म नै हुँ भन्ने ठानेर नराम्रा काम गर्न हुँदैन।।४१।। यसको प्रतिकूल विवेकको प्रयोग नगरी मनपरी कर्म गर्ने मानिसको यो लोक पनि सप्रिंदैन र परलोक पनि। आफ्नी पत्नीका यस्ता वचनले मर्ममा घाउ लागेको त्यो बुध अत्यन्त कठोर भयो र अत्यन्त क्रुद्ध पनि। मुखबाट अग्निका ज्वाला निकाल्दै भन्न थाल्यो ।

बुध उवाच

निर्लज्जे ! निष्ठुरे! प्रौढे ! दुष्टे ! रुष्टे मयि स्फुटम्।।४३।।
गमिष्यसि गतिं तां त्वं यथा तौ पितरौ गतौ ।

सावित्र्युवाच

येन पित्रोर्न मर्यादा शिक्षित्रोश्च स्वतन्त्रयो: ।।४४।।

रक्षिता तद्विपरीतां स मां त्राता कथं भवेत् ।
भर्तृहस्तान्मृति: श्रेय: परत्रेह च सत्स्त्रिया: ।।४५।।

ब्रह्मोवाच

एवं ब्रुवन्त्यां पत्न्यां स धम्मिल्लं सहसाऽग्रहीत् ।
काष्ठैर्लोष्ठैर्मुष्टिभिश्च पाषाणैस्तामताडयत् ।।४६।।

सा रामं भर्तृरूपेण संस्मार पूर्वपुण्यत: ।
प्राणाँस्तत्याज सहसा भिन्ना मर्मसु तेन ह ।।४७।।

स्वर्गं गत्वा दित्यदेहा बुभुजे परमं सुखम् ।
आकृष्य चरणे तां स चिक्षेप दूरतो निशि ।।४८।।

निरङ्कुशो हर्षयुतो रेमे वेश्यासमन्वित: ।
त्वदर्थं नाशिता सर्वे बुधस्तामिति सोऽब्रवीत् ।।४९।।

ततो बहुगते काले बुधोऽगात् कालभेर्गृहम् ।
तस्मिन् स्नातुं गते दुष्टो भार्यां तस्याऽग्रहीत् कचे।।५०।।

अत्यन्तं सुन्दरतरामालिलिङ्ग चुचुम्ब च ।
नि:शकं शयनं नीत्वा ममर्द कुचमण्डलीम् ।।५१।।

रेमे तया यथेष्टं स तत: सा तं शशाप ह ।

सुलभोवाच

कथं नाम कृतं दुष्टं पितृभ्यां सुलभेति मे ।।५२।।

अहं ते सुलभा जाता दुष्टबुद्धे नराधम ! ।
स्नातुं गते भर्तरि मे कालभौ मुनिपुङ्गवे ।।५३।।

**बुधले भन्यो -** ए निर्लज्ज नारी ! निष्ठुर हृदय भएकी दुष्ट पत्नी ! म रिसाएँ भने तँ पक्कै पनि त्यो हालतमा पुग्नेछस्, जुन हालतमा मेरा आमा-बाबु पुगिसके ।

**सावित्रीले भनिन् -** जसले स्वतन्त्र र उत्तम शिक्षा प्रदान गर्ने आफ्ना बाबु-आमाको मर्यादा गर्न जानेन, त्यसले आफ्नो विपरीत कुरा गर्ने मजस्ती पत्नीको रक्षा गर्न सक्दैन । उत्तम नारीका लागि आफ्ना पतिका हातबाट मर्नु यो लोक र परलोकमा कल्याणकारी हुन्छ ।।४२-४५।।

**ब्रह्माजीले भन्नुभयो -** आफ्नी पत्नी सावित्रीले यस्ता कुरा गरेपछि बुधले अचानक तिनको चुल्ठो समात्यो । त्यसपछि काठ, ढेला, ढुङ्गा र मुड्की प्रहार गरी तिनलाई पिट्यो ।।४६।। तिनले पनि पिटाइखाइरहेको बेला पूर्वजन्मका पुण्यसंस्कारले भगवान् रामलाई पतिका रूपमा याद गरिन् । आफ्ना पतिद्वारा शरीरका मर्ममा प्रहार गरिएकी ती सावित्रीले प्राण परित्याग गरिन् ।।४७।। प्राणत्यागपछि तिनको शरीर दिव्य भयो र स्वर्गमा गई परमसुखकी अधिकारिणी बनिन् । त्यो बुधले रातको समयमा आफ्नी पत्नी सावित्रीको लाशलाई समाएर खुट्टाले घिसार्दै टाढा लगी फ्याँकिदियो ।।४८।। त्यसपछि स्वतन्त्र भएको त्यो बुध वेश्यारमणमा लीन भयो। त्यस बेला बुधले वेश्यालाई भन्यो - 'हे सुन्दरी ! मैले तिम्रै निमित्त मेरा परिवारका सबै मानिसलाई मारिदिएँ ।' यो घटना भएको धेरै समय बितेपछि त्यो बुध कालभि नामक गृहस्थका घरमा गयो । ती कालभि नुहाउन बाहिर गएपछि त्यो दुष्टले तिनकी पत्नीको कपालमा समात्यो ।।४९-५०।। अति सुन्दरी ती गृहस्थरमणीलाई आलिङ्गन र चुम्बन गर्‍यो । निर्धक्कसँग बिस्तरामा पुर्‍याई तिनका कुचहरूको मर्दन गर्‍यो । त्यसपछि त्यसले इच्छाअनुसार भोगविहार गर्‍यो ।।५१।। त्यसको बलप्रयोगबाट उम्कन नसकेकी र सतीत्व गुमाउन विवश ती कालभिकी पत्नी सुलभाले त्यस दुष्टलाई सराप दिइन्।

**सुलभाले भनिन् -** मेरा माता-पिताले 'सुलभा' भनी किन मेरो नाम राख्नुभएछ ? ।।५२।। नराम्रो बुद्धि भएका हे अधम मानिस ! आज म मेरो नाम सुलभा भएजस्तै तेरा लागि पनि सुलभा हुन पुगें । मुनिहरूमा श्रेष्ठ मेरा पति कालभि

बलात्कारो मयि कृतो दुष्ट ! कुष्ठी भविष्यसि ।
जन्मान्तरे ते नामापि न गृह्णीयाज्जनः क्वचित् ।।५४।।

ब्रह्मोवाच

ततो भीतो ययौ वेश्यागृहमेव बुधः पुनः ।
रेमे तया सुरां पीत्वा न किञ्चिदपि चिन्तयन् ।।५५।।

एवं दुष्टानि कर्माणि वक्तव्यानि कथं मया ।
पुण्यक्षयो भवेत्तस्य परदोषं य ईरयेत् ।।५६।।

स कालान्निधनं प्राप्तो दूतैर्नीतो यमालयम् ।
यमेनोक्तं किमानीतो नीयतां नरकेष्वयम् ।।५७।।

यमवाक्यं समाकर्ण्य दूता निन्युस्तदैव तम् ।
चिक्षिपुर्नरके तावद् यावदाभूतसंप्लवम् ।।५८।।

भुक्तभोगः स वैश्यस्य गृहे जन्म समाप्तवान् ।
ऋषिपत्न्याः स शापेन कुष्ठी जातो भृशं तदा ।।५९।।

पितृहा मातृहा स्त्रीहा मद्यपो गुरुतल्पगः ।
तस्य संस्पर्शनादेव सचैलं स्नानमाचरेत् ।।६०।।

नामाप्येतस्य न ग्राह्यं महादोषकरं यतः ।
एतादृशोऽयं दुष्टात्मा यदा त्यक्त इतस्तदा ।।६१।।

विमानं यास्यते चोर्ध्वं नूनं नास्त्यत्र संशयः ।।६२।।

ब्रह्मोवाच

श्रुत्वेत्थं वचनं तेषां दूतानां भृशकम्पितः ।।६३।।

शूरसेन उवाचैतान्न मयाऽज्ञायि दुष्कृतम् ।
पुनरुत्थाय राजाऽसौ प्रणनाम भृशातुरः ।।६४।।

प्राह तान् देवदूतान् स कृपां कृत्वा वदन्तु मे ।
उपायमस्य दुष्टस्य सर्वदोषापनुत्तये ।।६५।।

दूता ऊचुः

उत्तिष्ठोत्तिष्ठ नृपते ! ब्रूमो दोषापनुत्तये ।
उपायं राजशार्दूल! शृणुष्वैकमना भव ।।६६।।

नुहाउन जानुभएपछि तैँले ममाथि बलात्कार गरिस् । त्यस कारण हे दुष्ट! तँ कुष्ठरोगी हुनेछस् र अर्को जन्ममा पनि तेरो नाम कसैले लिने छैनन् ।।५३-५४।।

**ब्रह्माजीले भन्नुभयो** - सुलभाले सराप दिएपछि डराएको त्यो बुध फेरि वेश्याको घरमा गयो । त्यहाँ गएपछि मदिरापान गरी ती वेश्यासँग भोगविलास गऱ्यो । त्यसले आफूले गरेका अपराधको कत्ति पनि वास्ता गरेन ।।५५।। त्यसले गरेका यस्ता दुष्टकर्महरू मैले कसरी बताऊँ ? । जसले अरूका अपराधको चर्चा गर्दछ त्यसका पुण्यको पनि नाश हुन्छ ।।५६।। त्यो बुध समय आएपछि मऱ्यो । त्यसलाई यमका दूतहरूले यमको दरबारमा पुऱ्याए । यमले त्यसलाई देखेर भने - हे दूत हो ! यसलाई किन यहाँ लिएर आयौ ? यसलाई अविलम्ब नरकमा लैजाने काम गर ।।५७।। यमराजको आज्ञा पाएर दूतहरूले बुधलाई त्यसै बेला नरकमा पुऱ्याए । सम्पूर्ण संसारको प्रलय नहुँदासम्म नरकयातना भोग गरी त्यो दुष्ट बुध नरकमा नै रह्यो। सम्पूर्ण नारकीय वेदना भोग गरेपछि एउटा बनियाको घरमा त्यसले जन्म लियो । ऋषिपत्नीको सरापका कारण त्यो कुष्ठरोगी भयो।।५८-५९।। देवहरूले भने - बाबु मार्ने, आमा मार्ने, पत्नी मार्ने, ऋषिकी पत्नीमाथि बलात्कार गर्ने र मदिरा पान गर्ने यो महापापी दुष्ट हो । यसले स्पर्शमात्र गर्दा मानिसले नुहाउनु पर्दछ । यस्ता पापीको मानिसले नाम पनि लिन हुँदैन । किनकि त्यसबाट ठूलो दोष लाग्दछ । यस्तो दुष्टात्मा अहिले हाम्रो विमानभित्र पसेछ । यसलाई यहाँबाट बाहिर फ्याँकियो भनेमात्र यो विमान उडेर माथि जानेछ । यसमा कुनै सन्देह छैन ।।६०-६२।।

**ब्रह्माजीले भन्नुभयो** - ती दूतहरूका यस्ता कुरा सुनेर कम्पायमान भएका शूरसेन राजाले देवदूतहरूलाई भने - 'मैले यस मानिसको पाप थाहा पाएको थिइनँ ।' यति भनेर शूरसेनले आत्तिँदै देवदूतलाई नमस्कार गरी प्रार्थना गरे - 'तपाईंहरूले कृपा गरेर यो पापी मानिसका सबै दोषहरूको नाश गर्ने उपाय बताउनुहोस्' ।।६३-६५।।

दूतहरूले भने - हे राजन् ! तपाईं उठ्नुहोस्, हामी यो पापीको पापनाश गर्ने उपाय बताउँछौं, सावधान भएर

गणेशस्य भवेन्नाम यत् ख्यातं चतुरक्षरम् ।
जप तत् कर्णरन्ध्रेऽस्य सर्वदोषक्षयो भवेत् ।।६७।।

उदये दिननाथस्य यथा सर्वतमःक्षयः ।
नान्योपायेऽधिकारोऽस्य यतो नामैव जप्यताम् ।।६८।।

ब्रह्मोवाच

शूरसेनो दूतवाक्याज्जयपूर्वं जजाप ह ।
त्रिवारं वैश्यकर्णे तु नाम यच्चतुरक्षरम् ।।६९।।

गजाननेति श्रुत्वैव दिव्यदेहोऽभवच्च सः ।
भासयँस्तेजसा सर्वमरुणो भुवनं यथा ।।७०।।

सर्वपापक्षये जाते नामश्रवणमात्रतः ।
दीपयन् सर्वदिग्देशान् विमानं चाध्यरोहत ।।७१।।

तद्विमानं क्षणाद् दूतैः सर्वलोकसमन्वितम् ।
नीतं वैनायकं धाम विघ्नराजस्य शासनात् ।।७२।।

इति सर्वं समाख्यातं यद् यत् पृष्टं त्वयाऽनघ ।।७३।।

महापुण्यञ्च सङ्कष्टचतुर्थीव्रतमुत्तमम् ।
धर्म्यं यशस्यमायुष्यं श्रवणात् सर्वसिद्धिदम् ।।७४।।

सर्वपीडाप्रशमनं सर्वविघ्नविनाशनम् ।
दूर्वानामप्रभावश्च किमन्यच्छ्रोतुमिच्छसि ।।७५।।

सुन्नुहोस् ।।६६।। भगवान् श्रीगणेशको चार अक्षरको नाम प्रसिद्ध छ । त्यो नाम यसको कानमा जप्नुहोस् । त्यसबाट यसका सबै दोष र पापहरूको नाश हुनेछ ।।६७।। सूर्य उदाउँदा जसरी अन्धकारको नाश हुन्छ त्यसैगरी श्रीगणेशको नाममन्त्र जप गर्दा पापीहरूको पाप नाश हुन्छ । यो नामजपबाहेक पापनाशक अरू उपाय छैन ।।६८।।

**ब्रह्माजीले भन्नुभयो** – राजा शूरसेनले दूतहरूको कुरा सुनेर कुष्ठरोगी बनियाँको कानमा तीन पटकसम्म श्रीगणेशको नाममा जय थपेर उच्चारण गरे । जय गजानन ! जय गजानन! जय गजानन ! । यस्तो मन्त्र सुन्नासाथ त्यो कुष्ठरोगी बनियाँको शरीर दिव्य भयो । जसरी सूर्यले पृथिवीमा प्रकाश फैलाउँछन् त्यसैगरी बनियाँले पनि आफ्नो तेजको प्रकाश फैलाइरहेको थियो ।।६९-७०।। गजाननको नाम सुनेर मात्र सबै पापहरूको नाश भएपछि दिशाहरू र देशहरूलाई आफ्नो प्रकाशबाट प्रकाशित बनाउँदै त्यस बनियाँले विमानमा आरोहण गऱ्यो ।।७१।। सबै मानिसहरूले भरिएको त्यो विमानलाई श्रीगणेश भगवान्का दूतहरूले श्रीगणेशको आज्ञाअनुसार श्रीगणेशधाममा पुऱ्याए ।।७२।। हे निष्पाप सज्जन ! तपाईंले जे-जे सोध्नुभएको थियो, ती सबैको उत्तर मैले दिएँ ।।७३।। सङ्कष्टचतुर्थीको व्रत उत्तम, फलदायक, सुखदायक, कीर्तिदायक र आयुष्यदायक पुण्यव्रत हो । यसबाट सबै प्रकारका सिद्धि प्राप्त हुन्छन् र पीडा शान्त हुन्छन्। यसको अनुष्ठानबाट सबै प्रकारका विघ्न नाश हुन्छन् । मैले सङ्कष्टचतुर्थीको महिमा बताएँ र दूबोको प्रभाव बताएँ । अब के सुन्न चाहनुहुन्छ ? ।।७४-७५।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे सङ्कष्टचतुर्थीमाहात्म्यकथनं नाम षट्सप्ततितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'सङ्कष्टचतुर्थी व्रतको महत्त्वनिरूपणका साथै दूर्वाङ्कुरको महिमाकथन' शीर्षकान्वित छैहत्तरौँ अध्याय पूर्ण भयो ।।७६।।

ॐ

## अथ सप्तसप्ततितमोऽध्याय:　　{ ७७ अध्याय }

**व्यास उवाच**

अन्येनाकारि केनेदं वद तत् कौतुकं महत् ।

**ब्रह्मोवाच**

जामदग्न्येन रामेण व्रतमेतत् पुरा कृतम् ।।१।।
सोऽपि कीर्तिं जयं ज्ञानमायुर्दीर्घञ्च लब्धवान् ।

**व्यास उवाच**

राम: कथं समुत्पन्न: कस्मात् कस्यां पितामह ।।२।।
एतत् सर्वं सुविस्तार्य ब्रूहि त्वं मम पृच्छत: ।

**ब्रह्मोवाच**

श्वेतद्वीपेऽतिविख्यातो जमदग्निर्महामुनि: ।।३।।

मनसा सृष्टिसंहारान् निग्रहानुग्रहानपि ।
य: करोति त्रिकालज्ञस्ततो देवाश्चकम्पिरे ।।४।।

यस्यासीत् पत्न्यपि तथा रेणुका नाम नामत: ।
यस्या लावण्यगुञ्जापि पत्न्या: कामस्य नाभवत् ।।५।।

रतिरित्येव लोकेषु विख्याताऽभूत् ततस्तु सा ।
यया सम्मोह्यते सर्वं क्षमस्तद्वर्णने तु क: ।।६।।

यन्नेत्रशोभासम्प्राप्त्यै चकोरा जलवासिन: ।
हरिणाश्च तपश्चेरुर्वने छन्दतृणाशिन: ।।७।।

यदास्यशोभासम्प्राप्त्यै सेवते चन्द्र ईश्वरम् ।
अनादिनिधना देवी मूलप्रकृतिरीश्वरी ।।८।।

यस्यामजनि रामोऽसौ विष्णुर्योगेश्वरो यथा ।
जमदग्नेर्महाभागात् साक्षादीश्वररूपिण: ।।९।।

अतिसुन्दरगात्रोऽसौ साक्षान्मन्मथमन्मथ: ।
मातापितृवच:कर्ता विख्यातबलपौरुष: ।।१०।।

देवद्विजगुरुप्राज्ञगोबोधिपूजने रत: ।
वेदवेदाङ्गशास्त्राणां स्मृतीनामपि पाठक: ।।११।।

**व्यासले भन्नुभयो** - हे ब्रह्माजी ! यो सङ्कष्टचतुर्थीको व्रत अरू क-कसले गरे ? त्यो जान्न मलाई ठूलो उत्कण्ठा छ, कृपया बताउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - हे व्यास ! जमदग्निका छोरा परशुरामले यो व्रत गर्नुभएको थियो । उहाँले यस व्रतबाट कीर्ति, विजय, ज्ञान र दीर्घायु प्राप्त गर्नुभएको थियो ।

**व्यासले भन्नुभयो** - हे पितामह ! परशुराम कसरी उत्पन्न हुनुभयो ? उहाँका बाबु-आमा को हुनुहुन्थ्यो ? यी प्रश्नहरूको उत्तर विस्तारपूर्वक बताउनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - श्वेतद्वीपमा अत्यन्त प्रसिद्ध जमदग्नि महामुनि आफ्नो मनबाट नै सृष्टि, संहार, निग्रह र अनुग्रह गर्न पनि समर्थ थिए र त्रिकालदर्शी पनि । तिनको प्रताप देखेर देवताहरू कम्पायमान भए ।।१-४।। जमदग्निकी पत्नी रेणुका पनि उहाँजस्तै तेजस्विनी थिइन् । कामदेवकी पत्नी रतिमा रेणुकाको एक रत्तिबराबर पनि सौन्दर्यको दाना नभएकाले कामपत्नी रतिनामले प्रसिद्ध भइन्।।५।। तिनको दर्शन पाउँदा संसार नै मोहित हुन्थ्यो। तिनको सौन्दर्यवर्णन गर्न कुनै पनि कवि र कलाकार समर्थ थिएनन् ।।६।। रेणुकाको नयनको शोभा पाउन चखेवाहरूले पानीमा बसेर तपस्या गरेका थिए र मृगहरूले वनका घाँस-पात खाएर तपस्या गरेका थिए ।।७।। रेणुकाको अनुहारको सौन्दर्य प्राप्त गर्न चन्द्रमा पनि शिवजीको आराधनामा नित्य निरत भएका छन् । अनन्त सौन्दर्यकी धनी रेणुका अनादि-अनन्तस्वरूप मूल प्रकृति ईश्वरी नै हुन् ।।८।। उनकै कोखबाट विष्णुका अंशावतार योगेश्वर भगवान् परशुरामको जन्म भयो । परशुरामका पिता जमदग्नि साँच्चिकै ईश्वरलाई छोराको रूपमा पाएर संसारमा भाग्यशाली भए ।।९।। भगवान् परशुराम कामदेवलाई पनि पगाल्न सक्ने सर्वाङ्गसुन्दर स्वरूप र व्यक्तित्वका धनी हुनुहुन्थ्यो। उहाँ माता-पिताका आज्ञापालक, बल र पुरुषार्थबाट प्रसिद्ध देवता, ब्राह्मण, गुरु, विद्वान्, गाई र पीपलको अर्चना एवं आराधनामा संलग्न तथा वेद-वेदाङ्ग एवं धर्मशास्त्रका ज्ञाता र अध्येता पनि हुनुहुन्थ्यो ।।१०-११।।

वाक्ये बृहस्पतिसमः क्षमया पृथिवीसमः ।
गाम्भीर्येऽब्धिसमो यस्तु पित्रोर्वाक्यपरायणः ।।१२।।

पित्रोराज्ञां गृहीत्वा स निमेषारण्यमाययौ ।
अनेकविद्याभ्यसने मतिं कृत्वा परां स्थिराम् ।।१३।।

तस्मिन् गते तदा राजा कार्तवीर्यो महाबलः ।
यस्य प्रतापादभवद् वश्यं भूमण्डलं सदा ।।१४।।

यस्मिँल्लक्ष्मीः स्थिरा विष्णोरंशभूतेऽखिलार्थदे ।
आजौ पञ्चशतं बाणान् सृजते रिपुघातकान् ।।१५।।

इन्द्रादिवृन्दसेव्योऽसौ विख्यातबलपौरुषः ।
असङ्ख्याता गजा यस्य रथवाजिपदातयः ।।१६।।

तस्य निर्गमने सैन्याश्छादयन्ति महीतलम् ।
वर्षाकाले यथा मेघा धाराभिर्व्योममण्डलम् ।।१७।।

यस्य कम्बुस्वनं श्रुत्वा द्विषो यान्ति दिशो दश ।
यथा सिंहरवं श्रुत्वा मत्तमातङ्गकोटयः ।।१८।।

यदा तालीपञ्चशतं स्वेच्छया कुरुते नृपः ।
तदा सनादं ब्रह्माण्डं कम्पते मुनिसत्तम ।।१९।।

असौ यदृच्छया यत्तश्चतुरङ्गबलान्वितः ।
नीलवस्त्रधरो नीलच्छत्रस्तादृशसैनिकः ।।२०।।

वनानि सरितो दुर्गान् पर्वतांश्च विलोडयन् ।
नानामृगगणान् वीक्ष्य विनिघ्नन्नपि कांश्चन ।।२१।।

ततः सह्याद्रिशिखरेऽपश्यदाश्रममुत्तमम् ।
यथा कैलासशिखरे गिरिशालयमुत्तमम् ।।२२।।

अपृच्छत् सेवकान् राजा कस्येदमुत्तमं स्थलम् ।।२३।।

उहाँ विद्यामा बृहस्पतिसमान, क्षमागुणमा पृथिवीसमान, गम्भीरतामा सागरसमान हुनुहुन्थ्यो। माता-पिताको आज्ञापालनमा सधैं दत्तचित्त रहने परशुराम एक दिन अनेक थरि विद्याको अभ्यास गर्ने सङ्कल्प गरेर माता-पिताको आज्ञा प्राप्त गरी नैमिषारण्य जानुभयो।।१२-१३।। परशुराम त्यहाँ जानुभएपछि अत्यन्त बलशाली राजा कार्तवीर्य जमदग्निको आश्रममा आएका थिए। राजा कार्तवीर्यको प्रतापबाट सारा पृथिवीमण्डल वशवर्ती थियो।।१४।। विष्णुका अंशावतार, सबै प्रकारका कामना पूरा गर्न सक्ने शक्ति भएका राजा कार्तवीर्यका दरबारमा लक्ष्मी स्थिररूपमा रहेकी थिइन्। युद्धमा एउटा बाण प्रहार गर्दा त्यो बाण उनको शक्तिबाट पाँच सय बाणको रूपमा परिणत भई शत्रुसेनाको संहार गर्न सफल हुन्थ्यो ।।१५।। बल र पुरुषार्थका कारण संसारमा प्रख्यात ती कार्तवीर्य इन्द्र आदि देवताहरूद्वारा पनि सेवनीय महापुरुषका रूपमा संसारमा चर्चित थिए । कार्तवीर्यको सेनामा असङ्ख्य हात्ती, रथ, घोडा र पैदल सेनाका जवानहरू थिए ।।१६।। कार्तवीर्यको युद्धयात्रा हुँदा वर्षाकालमा जसरी बादलले जलधाराबाट आकाशमण्डल ढाकिदिन्छ, त्यसरी तिनका सैनिकहरूले पृथिवी नै ढाक्दथे ।।१७।। सिंहगर्जन सुनेर मत्त हात्तीको समूह भागेझैं कार्तवीर्यको शङ्खध्वनि सुनेर शत्रुहरू दसैदिशामा पलायन गर्दथे ।।१८।। जुन बेला कार्तवीर्यले आफ्नो इच्छाअनुसार एकैचोटिमा एक हजार हातबाट पाँच सय ताली बजाउँथे त्यस बेला घोर गर्जनसहित ब्रह्माण्ड काँप्दथ्यो ।।१९।। ती कार्तवीर्य आफू स्वच्छन्द इच्छाको अधीनमा थिए । गजसेना, रथसेना, अश्वसेना र पैदलसेनाका साथ नीला वस्त्र धारण गरी, नीलो छाता ओढेर ती आफ्ना सैनिकहरूलाई अगाडि लगाई वन, नदी, दुर्ग र पर्वतहरू थर्काउँदै, अनेक थरि मृगहरूको दर्शन गर्दै र केही मृगहरूलाई मार्दै युद्धमा अगाडि बढिरहेका थिए।।२०-२१।। एक दिन यसरी युद्धयात्रा गरिरहेको बेला कार्तवीर्यले कैलासपर्वतको शिखरमा शिवजीको आश्रम रहेझैं सह्याचलको शिखरमा पनि अर्को आश्रम देखे। राजा कार्तवीर्यले आफ्ना सेवकहरूसँग यो कसको आश्रम हो भनी सोधे।।२२-२३।।

भृत्य उवाच

जमदग्निरिति ख्यातः साक्षात् सूर्य इवापरः ।
मुनिरास्ते महाभागः शापानुग्रहकारकः ।।२४।।

यस्य दर्शनतः पापकोटयो यान्ति संक्षयम् ।
इच्छा चेत् तत्र गन्तव्यं दर्शनं ते भविष्यति ।।२५।।
तव प्रसादात् सर्वेषामुपकारो भविष्यति ।

ब्रह्मोवाच

इति तद्वचनं श्रुत्वा गमनायोद्यतो नृपः ।।२६।।
न्यषेधयत् सर्वबलं श्रेष्ठानादाय तत्क्षणात् ।
ययौ तं मुनिशार्दूलं जमदग्निं तपोनिधिम् ।।२७।।
ददर्श तं कुशासीनं ज्वलन्तमिव पावकम् ।
प्रणनाम स साष्टाङ्गं ते सर्वे सहयायिनः ।।२८।।
नानाविशालशालासु कुञ्जवृक्षावलीषु च ।
निषेदुः सैनिकास्ते तु राजा तस्थौ मुनेः पुरः ।।२९।।
आसने मुनिनादिष्टे चतुर्भिः परिवारितः ।
निषसाद तदा राजा कृतवीर्यसुतो बली ।।३०।।
अपूजयत् तान् सर्वान् पाद्यार्घ्यविष्टरादिभिः ।
समुनिः प्रददौ गाश्च शिष्यैः सर्वानपूजयत् ।।३१।।
नानासरोवरजले निर्मले चारुशीतले ।
अमज्जन्त तदा सर्वे सैनिका मृगयार्दिताः ।।३२।।
शृण्वन् वेदनिनादांश्च शास्त्रशब्दांश्च पुष्कलान् ।
अभितो वादशब्दांश्च तच्छिष्यैः समुदीरितान् ।।३३।।
अब्रवीन्मुनिमुख्यं तं राजा राजीवलोचनः ।
अद्य मे पितरौ धन्यौ जन्म ज्ञानं तथा तपः ।।३४।।
पुण्यवृक्षोऽद्य फलितो यज्जातं तव दर्शनम् ।
अद्य मे सम्पदो धन्याः कुलं धन्यं यशोऽपि मे ।।३५।।

**सेवकले भने** - हे महाराज ! साक्षात् दोस्रा सूर्यझैं तेजस्वी, सराप र वरदान दिन समर्थ महर्षि जमदग्नि संसारमा विख्यात हुनुहुन्छ ।।२४।। उहाँको दर्शनमात्र पाउँदा दर्शकका करोडौं पाप समाप्त हुन्छन् । यदि हजुरलाई जमदग्निको दर्शन गर्ने इच्छा छ भने त्यहाँ पाल्नुहोस् । ऋषिदर्शनको सौभाग्य प्राप्त हुनेछ ।।२५।। त्यसपछि हजुरको कृपाबाट मुनिदर्शन पाउँदा हामी सबैको उपकार पनि हुनेछ ।

**ब्रह्माजीले भन्नुभयो** - सेवकका वचन सुनेर राजा कार्तवीर्य मुनिदर्शनका लागि तयार भए । सबै सेना लिएर त्यहाँ जान हुँदैन भनी निषेध गरी केही माथिल्लो स्तरका सैनिकहरूका साथ तत्काल ती मुनिसिंह तपोनिधि जमदग्निको आश्रममा गए ।।२६-२७।। त्यहाँ उनले बलिरहेको अग्निझैं तेजोमय, तपोनिधि जमदग्नि ऋषिको दर्शन गरी दण्डवत् प्रणाम गरे ।।२८।। राजाले प्रणाम गरेपछि साथमा आएका सैनिकहरूले पनि ऋषिलाई प्रणाम गरे । राजाका प्रमुख सैनिकहरू मुनिको आश्रममा रहेका ठूला-ठूला पर्णशाला र वृक्षका छायामा बसे र भने महाबली राजा कार्तवीर्य चार जना आफ्ना अङ्गरक्षक साथमा लिएर मुनिको समक्ष गई उहाँले दिनुभएको आसनमा विराजमान भए ।।२८-३०।। मुनि जमदग्निले शिष्यहरूलाई आफ्नो आश्रममा अतिथिका रूपमा आएका राजा र तिनका सैनिकहरूको पाद्य, अर्घ्य, आसन आदि टक्र्याएर सम्मान गर्न लगाए र राजालाई गाईहरू पनि टक्र्याए ।।३१।। शिकार खेल्दा थाकेका कार्तवीर्यका सैनिकहरू आश्रममा रहेका अनेक सरोवरहरूको निर्मल जलमा नुहाउन थाले । कमलजस्ता सुन्दर नयन भएका राजा कार्तवीर्यले जमदग्निका शिष्यहरूले उच्चारण गरेको वेदघोष, शास्त्रको शब्दपुञ्ज र शास्त्रार्थका पूर्वपक्ष र उत्तरपक्ष सुनेर करबद्ध बिन्ती गरे - हे महर्षि जमदग्नि ! आज मेरा माता-पिता धन्य हुनुभएको छ, मेरो जन्म धन्य छ, मेरो ज्ञान धन्य भएको छ, तपस्या सफल भएको छ, पुण्यको वृक्ष फलेको छ, किनकि मैले आज हजुरको पुण्यमय दर्शन पाएको छु । आज मेरो ऐश्वर्य धन्य भएको छ, कुल धन्य भएको छ र कीर्ति पनि धन्य भएको छ ।।३२-३५।। जुन तत्त्वलाई परब्रह्म

परब्रह्मेति यत् प्रोक्तं तदेव त्वं न संशयः ।
आतिथ्यं तव दृष्ट्वैव परितुष्टं मनो मम ।।३६।।

इति श्रुत्वा तु तद्ब्राह्मीं स्मयन्निव प्रसन्नधीः ।
कोऽसि कस्यासि किं नाम किं कार्यं तव वर्तते ।।३७।।

इति तं परिपप्रच्छ जानन्नपि मुनिस्तदा ।

राजोवाच

राज्ञां स्वकार्यकर्तृणां भवादृशनिरीक्षणात् ।।३८।।

नान्यत् प्रयोजनमुरुश्रेयसाऽजनि तत् स्फुटम् ।
कृतवीर्यसुतोऽहञ्च कार्तवीर्य इति श्रुतः ।।३९।।

अनुज्ञातो गमिष्यामि ततोऽहं नगरं प्रति ।

मुनिरुवाच

मयाऽश्रावि महाकीर्तिस्तत राजन्यसत्तम ।।४०।।

आसीत् त्वद्दर्शनाकाङ्क्षा जाता पुण्येन सत्फला ।
देह आत्मा तपो ज्ञानमाश्रमो मम साम्प्रतम् ।।४१।।

अभूत् त्वदागमाद् राजन् ! सार्थकाः सर्वसम्पदः ।
अकृत्वा भोजनं किञ्चित् कथं त्वं गन्तुमर्हसि ।।४२।।

मम श्लाघा भवेल्लोके न्यूनं किं तव विद्यते ।
किञ्चिद् भुक्त्वा व्रज विभो! सनाथं कुरु मां प्रभो ।।४३।।

राजोवाच

सत्यं भोजनकालोऽस्ति भोक्तव्यञ्च तवाज्ञया ।
अन्नाभावे श्रोत्रियाणां जलं याच्य पिबेदपि ।।४४।।

तथाऽप्येतान् विहायाहं सैनिकान् गणनातिगान् ।
जलं पातुं न शक्नोमि कथं भोक्तुं समुत्सहे ।।४५।।

जानेऽहं मनसा ब्रह्मन् ! न शक्तिः सर्वभोजने ।
भवद्दर्शनमात्रेण कृतकृत्यो व्रजेऽधुना ।।४६।।

भनिन्छ, त्यो तत्त्व हजुर नै हो, यसमा कुनै सन्देह छैन । हजुरले गर्नुभएको पाहुनाहरूको सत्कार देखेर मेरो मन ज्यादै प्रसन्न र सन्तुष्ट भएको छ ।।३६।। कार्तवीर्यका वचन सुनेर प्रसन्न र चकित हुनुभएका मुनिले सर्वज्ञ हुनाको कारण सबै कुरा थाहा पाउनुभएता पनि शिष्टाचार अँगाली तपाइँ को हुनुहुन्छ ? कसका सुपुत्र हुनुहुन्छ? तपाइँको शुभ नाम के हो? कुन उद्देश्यले यहाँ पाल्नुभएको छ ? इत्यादि प्रश्न गरे ।

**राजाले भने** – हे मुनिवर ! आफ्नो शासनकार्यमा जुटिरहेका हामीजस्ता राजाहरूले हजुरजस्ता ठूला तपस्वीहरूको दर्शन पाउनुबाहेक ठूलो अरू कुन प्रयोजन हुनसक्छ ? पूर्वजन्मका पुण्यका प्रतापले आज मैले हजुरको दर्शन गर्ने अवसर पाएको छु । म राजा कृतवीर्यको छोरा हुँ र कार्तवीर्यको नामबाट प्रसिद्ध छु ।।३७-३९।। अब हजुरको आज्ञा पाएँ भने नगरतर्फ फर्किने छु ।

**जमदग्निले भन्नुभयो** – हे उत्तम राजा ! मैले तपाइँको कीर्ति सुनेको छु, तपाइँसँग भेटघाट गर्ने मेरो पनि ठूलो इच्छा थियो । पुण्यले गर्दा आज त्यो इच्छा पूरा भएको छ । आज तपाइँ यहाँ आउनुभएको हुनाले मेरा शरीर, आत्मा, तपस्या, ज्ञान, आश्रम र आश्रमका वैभव सार्थक भएका छन् । केही भोजन नगरी तपाइँ कसरी जान चाहनुहुन्छ ? तपाइँसँग कुनै कुराको कमी छैन, तर राजा कार्तवीर्य र उनका सैनिकलाई भोजन गराउन पाउँदा मेरो लोकमा नाम चल्नेछ । हे राजन् ! केही भोजन ग्रहण गरी मलाई कृतकृत्य तुल्याएर मात्र फर्कनुहुनेछ ।।४०-४३।।

**राजाले भने** – हे मुनिवर ! अहिले भोजनको बेला भएको छ । यो साँचो कुरा हो । हजुरको आज्ञा पाएपछि मैले भोजन गर्नुपर्दछ । वेदका ज्ञाता, विद्वान्हरूका घरमा जाँदा अन्न रहेनछ भने पानी मागेर भए पनि पिउनु पर्दछ भन्ने शास्त्रको आज्ञा छ । यसो भए तापनि म अहिले मेरा साथमा आएका अनगिन्ती सेनालाई छाडेर एक्लै पानी खान पनि असमर्थ छु भने भोजन गर्ने उत्साह कसरी गरूँ ? । हे ब्रह्मर्षि ! म मनबाट नै जान्दछु कि हजुरसँग मेरा सैनिकहरूलाई तृप्त गराउने भोजन सामग्री छैन । त्यस कारण दर्शनले म कृतकृत्य भएको छु, मलाई जाने आज्ञा दिनुहोस् ।।४४-४६।।

मुनिरुवाच

चिन्तां मा कुरु राजर्षे ! भोजयिष्ये ससैनिकम् ।
चतुर्विधेन चान्नेन किमसाध्यं तपस्विनाम् ।।४७।।

गृहे ते वाहिनी या स्यात् तामप्याकारय प्रभो ! ।
क्षणं विश्राम्यतां तीरे नद्याश्चारुतरे शुभे ।।४८।।

यावत् सिद्धं भवेदन्नं पश्चाद् द्रक्ष्यसि कौतुकम् ।

क उवाच

अन्तः स विस्मयाविष्टो जगाम कृतवीर्यजः ।।४९।।

वाक्यमाकर्ण्य तु मुनेर्नदीतीरं सुशोभनम् ।
मुनिः पत्नीं समाहूय वृत्तान्तं तं जगाद ताम् ।।५०।।

आहूय कामधेनुं तौ पुपूजतुः क्षणेन ताम् ।
प्रार्थयामासतुरुभौ लज्जां नौ रक्ष धेनुके ।।५१।।

असङ्ख्यातबलो राजा भोजनाय निमन्त्रितः ।
यथारुचि भवेत्तस्य ससैन्यस्य भुजिः शुभे ।।५२।।

तथा कुरु क्षणेन त्वं नो चेत् सत्यं लयं व्रजेत् ।
अकीर्तिश्च भवेल्लोके यथेच्छसि तथा कुरु ।।५३।।

एवं सम्प्रार्थिता ताभ्यां कामधेनुर्महापुरम् ।
निर्माय स्वप्रभावेण नानामन्दिरसुन्दरम् ।।५४।।

नानारत्नमयस्तम्भशोभि नानासभागृहम् ।
नानापुष्पलताचारु वाटिकाराममण्डितम् ।।५५।।

नानाध्वजपताकाढ्यं नानावादित्रनिस्वनम् ।
अष्टापदानां भाण्डानां नानापङ्क्तिविराजितम् ।।५६।।

चतुर्विधान्नसम्पन्नं नानाभोजनपङ्क्तिमत् ।
महातोरणशोभाढ्यं परिखावलयाङ्कितम् ।।५७।।

**जमदग्निले भन्नुभयो** - हे राजर्षि ! तपाइँले भोजनको विषयमा चिन्ता गर्नुपर्दैन । म तपाइँका पूरा सैनिकसहित तपाइँलाई भक्ष्य, भोज्य, लेह्य र चोष्य यी चार प्रकारका भोजन प्रदान गरेर तृप्त गराउनेछु । हामीजस्ता तपस्वीहरूले गर्न नसक्ने कुनै कुरा हुँदैन ।।४७।। हे राजन् ! मेरो आश्रममा आएका र वनमा रहेका सैनिकहरूबाहेक तपाइँको राजधानीमा र देशमा जति सैनिकहरू छन्, तिनलाई पनि बोलाउनुहोस् । म सबैलाई भोजन गराएर तृप्त गराउँछु । जबसम्म भोजन तयार हुँदैन, तबसम्म तपाइँहरू नदीको सुन्दर र पवित्र तीरमा विश्राम गर्नुहोस्।।४८।। त्यसपछि तपाइँले कौतूहलमय दृश्य देख्नुहुनेछ।

**ब्रह्माजीले भन्नुभयो** - मुनिको वचन सुनेर कार्तवीर्य राजा मनैदेखि विस्मित भई नदीको सुन्दर तटमा गए ।।४९।। त्यसपछि मुनि जमदग्निले आफ्नी पत्नी रेणुकालाई बोलाएर राजासँग भएको सम्पूर्ण वृत्तान्त सुनाए । तत्काल ती दुबै दम्पतीले कामधेनुलाई बोलाई पूजा गरी प्रार्थना गर्दै भने - हे कामधेनु! तपाइँले हाम्रो लाज र सम्मान राखिदिनुहोस् । असङ्ख्य सेनाले सम्पन्न राजा कार्तवीर्यलाई हामीले भोजन गर्न निम्त्याएका छौं। हे कल्याणी ! सैनिकसहित ती राजाको रुचिअनुसारको भोजनक्रिया सम्पन्न गराउन तपाइँले प्रबन्ध गर्नुहोस् अन्यथा मेरो सत्य समाप्त हुनेछ र संसारमा अपयश फैलिने छ । हे देवी कामधेनु ! तपाइँ मलाई कस्तो देख्न चाहनुहुन्छ त्यसै गर्नुहोस् ।।५०-५३।। यसरी ऋषि दम्पतीद्वारा प्रार्थना गरिएकी कामधेनुले आफ्नो प्रभावबाट विशाल नगरको निर्माण गरिन् ।।५४।। त्यो महानगर अनेक मन्दिरले शोभायमान थियो, अनेक थरि रत्नजडित खम्बाहरू रहनाले आकर्षक थियो र विशाल सभागारहरूले परिपूर्ण थियो । त्यहाँ अनेक थरि फूल र लताहरूका कारण नयनाभिराम लाग्ने फूलबारी र उपवनहरू सुहाएका थिए । धेरै किसिमका ध्वजा-पताकाले सम्पन्न र अनेक किसिमका बाजागाजाले नादमय थियो । त्यहाँ सुनले बनेका भाँडाहरू पङ्क्तिबद्ध थिए । भोज्य, भक्ष्य, लेह्य र चोष्य गरी चार प्रकारका भोजन र भोजनपात्रहरूको पङ्क्ति रहनाले त्यो नगर हृदयाभिराम थियो । अनेक थरि द्वारहरूको शोभाले सम्पन्न थियो, गोलाकार पर्खालले घेरिएको र प्रत्येक मण्डपमा अनेक सेवक र सेविकाको उपस्थितिका कारण

अनेकदासदासीभिर्विलसच्चारुवेदिकम् ।
निवारयन्ति लोकाश्च यत्र तत्र स्थिता नराः ।।५८।।

पुरो गन्तुं न चाज्ञाऽस्ति जमदग्निमुनेरिति ।
परिविष्टेषु पात्रेषु सङ्ख्यातीतेषु सर्वतः ।।५९।।

दीपप्रभाभासुरेषु नानाव्यञ्जनशालिषु ।
सूपपायसपक्वान्नपञ्चामृतयुतेषु च ।।६०।।

सखाद्यलेह्यचोष्यादिपेयपङ्क्तिविराजिषु ।
सामुद्रपक्वनिम्ब्वाम्रामृतबिल्वादिशालिषु ।।६१।।

सिद्धेषु पात्रेषु मुनिस्तदाऽसा-
वाकारयच्छिष्यगणं तदानीम् ।
श्रीकामधेनोः परिपूर्णतोषाद्
भोक्तुं ससैन्यं कृतवीर्यपुत्रम् ।।६२।।

त्यो नगर अत्यन्त रमणीय थियो । त्यस महानगरका विभिन्न द्वारहरूमा बसेका मानिसहरूले नगरभित्र पस्न महामुनि जमदग्निको आज्ञा नभएको कुरा बताउँदै सामान्य मानिसहरूलाई प्रवेशबाट निषेध गरिरहेका थिए ।।५५-५८।। बत्तीको प्रकाश पर्दा ज्योतिर्मय देखिने अनेक थरि व्यञ्जनले भरिभराउ दाल, भात, खीर, मीठा पक्वान्न र पञ्चामृतले सम्पन्न त्यस भोजनागारमा भक्ष्य, भोज्य, लेह्य र चोष्य यी चार प्रकारका भोजन राखिएका थिए । त्यहाँ नरीवल, नीमका पाकेका फल, आँप, घ्यू, दूध, दही, बेल आदि वस्तु राखिएका थिए । साथै त्यहाँ कपूर, अलैंची, मरिच, हिङ र महले भरिएका छुट्टाछुट्टै पात्रहरू थिए । त्यहाँ अनेक थरि भोजनका पात्रहरूमा भोजनहरू सजाइएका थिए र ती सजाएका भोजनका थालीहरूलाई लहर मिलाएर राखिएको थियो । भोजनागारमा भोजन तयार भएपछि जमदग्निले आफ्ना शिष्यहरूलाई कामधेनुको पूर्ण प्रसन्नताका कारण भोजन तयार भएको छ अब राजालाई सैनिकसहित गङ्गातटबाट भोजनागारमा ल्याउने प्रबन्ध मिलाऊ भनी आदेश दिए ।।५९-६२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे जमदग्निमहिमवर्णनं नाम सप्तसप्ततितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनुदित श्रीगणेशपुराण उपासनाखण्डको 'कृतवीर्यपुत्र सहस्रार्जुनको जमदग्निआश्रममा प्रवेश र जमदग्निमहिमाको निरूपण' शीर्षकान्वित सतहत्तरौं अध्याय पूर्ण भयो ।।७७।।

ॐ

# अष्टसप्ततितमोऽध्यायः { ७८ अध्याय }

क उवाच

ततो मुनिः शिष्यगणमुवाच त्वरया व्रज ।
आकारयितुं नृपतिं नदीतीरनिवासिनम् ।।१।।

ते शिष्यास्तं नृपं गत्वा गृह्य तत्प्रणतिं पुरा ।
दत्वाऽऽशीर्वचनं तस्मै मुनेराज्ञां तथाऽब्रुवन् ।।२।।

चल राजन्नवहितो भोजनाय ससैनिकः ।
पात्राणि परिविष्टानि सङ्ख्यातीतानि षड्रसैः ।।३।।

क उवाच

तत उत्थाय राजाऽसौ समाहूय स्वसैनिकान् ।
सुस्नातः सर्वसैन्येन कार्तवीर्यो नृपो ययौ ।।४।।

मुनिवेश्म ततोऽपश्यत्र दृष्टं न च वै श्रुतम् ।
एतादृशं त्रिलोकेषु गृहतोरणमाप सः ।।५।।

स निषिद्धो वेत्रधरैर्मुनिसङ्केतकामुकैः ।
ते निषिद्धाः शिष्यगणैस्ततोऽगाद् भोजनालयम् ।।६।।

स्थित्वा मध्ये पश्यति स्म राजाऽसौ सम्पदं मुनेः ।
अमन्यत तदा स्वान्ते नेदृशी श्रीर्हरौ हरे ।।७।।

पालकेऽपालके स्रष्टर्यपि ब्रह्मणि नेदृशी ।
ततो मुनिः पुरो भूत्वा प्रतिपात्रे न्यवेशयत् ।।८।।

राजानुमतिमाज्ञाय पङ्क्तौ पङ्क्तौ ससैनिकान् ।
दापयामास पात्राणि ये बहिर्भोजिनश्च तान् ।।९।।

उपविष्टेषु सर्वेषु राजानमुपवेशयत् ।
बुभुजुस्ते तदा वाद्ये वादिते सर्व एव हि ।।१०।।

**ब्रह्माजीले भन्नुभयो** - मुनिको आज्ञाले गङ्गातटमा विश्राम गरिरहेका राजा कृतवीर्यलाई भोजनका निमित्त बोलाउन शिष्यहरू त्यहाँ गए । कार्तवीर्य राजाले मुनिशिष्यहरूलाई प्रणाम गरे । तिनले प्रणाम स्वीकार गरी आशीर्वाद दिएर राजालाई मुनिको आज्ञा सुनाए ।।१-२।। शिष्यहरूले भने - 'हे राजन् ! सैनिकहरूसहित तपाइँ महर्षि जमदग्निको भोजनागारमा भोजनका लागि प्रस्थान गर्नुहोस् । तपाइँहरूका निमित्त ६ प्रकारका रसहरूले सम्पन्न असङ्ख्य भोजनका थाली तयार गरिएका छन्' ।।३।।

**ब्रह्माजीले भन्नुभयो** - मुनिशिष्यहरूले भोजनका लागि निवेदन गरेपछि गङ्गामा नुहाएर विश्राम गरिरहेका राजा कार्तवीर्य उठे र तिनले सबै सैनिकहरूलाई पनि बोलाए । त्यसपछि भोजनागारमा जान भनी प्रस्थान गरे । त्यहाँ पुगेपछि त्यो दिव्य भवनको दर्शन गरे । त्यसपछि भने - यस्तो दिव्य भवन स्वर्ग, मर्त्य र पातालमा कतै देखिएको छैन र सुनिएको छैन । त्यसपछि भान्छाघरको ढोकामा पुगेका राजालाई हातमा बेतको छडी लिएका र जमदग्निको सङ्केतको प्रतीक्षा गरिरहेका सेवकहरूले एकछिन रोके । शिष्यहरूले आएर ती सेवकहरूलाई नरोक्न भनी आज्ञा दिएपछि राजाले भोजनागारमा प्रवेश गरे ।।४-६।। त्यहाँ राजाले जमदग्नि ऋषिको वैभवलाई चकित भएर हेर्न थाले । कार्तवीर्यले मनमनै विचार गरे - 'यस्तो श्रीसम्पत्ति त संसारका पालक भगवान् नारायणसँग, संसारका संहारक सदाशिवजीसँग र संसारका सृष्टिकर्ता ब्रह्माजीसँग पनि छैन ।' त्यसपछि ऋषि जमदग्निले अगाडि आएर राजासँग परामर्श गरेपछि सबैलाई भोजन टक्र्याउने व्यवस्था मिलाए । प्रत्येक पङ्क्तिमा बसेका सैनिकहरूलाई भोजनका थाली पुऱ्याउने प्रबन्ध मिलाए र जुन मानिसहरू भोजनागारभन्दा बाहिर थिए तिनका निमित्त पनि भोजनको व्यवस्था गरे ।।७-९।। सबै सैनिकहरू पङ्क्तिमा बसेपछि राजा कार्तवीर्य पनि सैनिकहरूको बीचमा विराजमान भए । त्यसपछि दिव्य बाजा बजे र ती सबैले कहिल्यै नदेखेका भोजन र स्वादिष्ट कन्दमूलसहितको दिव्य भोजन अत्यन्त

अदृष्टपूर्वाण्यन्नानि स्वादुमूलफलानि च ।
परस्परञ्च पप्रच्छुः किमिदं किमिदं त्विति ।।११।।

आश्चर्यं मेनिरे सर्वे यामेनेत्थं कथं कृतम्
यथेष्टं भुञ्जते सर्वे तृप्ताश्चान्नानि तत्यजुः ।।१२।।

ते प्रक्षालनपात्राणि प्रतिपात्रं न्यवेदयन् ।
मुनिशिष्याश्जलञ्चापि शलाका अपि चारवः ।।१३।।

गजाश्ववृषवृन्देभ्यः शिष्याः शेषान्नमर्पयन् ।
ततोऽन्यस्मिन् गृहे सर्वे विस्तीर्णे कृतसंस्तरे ।।१४।।

इक्षुद्राक्षाम्रपनसदाडिमानि बभक्षिरे ।
एलालवङ्गकर्पूरचूर्णखादिरपूगकान् ।।१५।।

जगृहुर्मुनिदत्तांस्ते नागवल्लीदलैर्युतान् ।
ततो ददावलङ्कारान् वासांसि च मुदा मुनिः ।।१६।।

तेभ्यो यथार्हं सर्वेभ्यो राज्ञेऽनर्घ्येतराणि च ।

मुनिरुवाच

किं मया भोजनं देयं मुनिना वन्यवृत्तिना ।।१७।।

अवाप्तसर्वकामाय राज्ञे ते विष्णुरूपिणे ।
यशोऽकारि त्रिलोके मे त्वया मद्वाक्यकारिणा ।।१८।।

जमदग्नेर्गृहे राज्ञा ससैन्येन भुजिः कृता ।
अतिपुण्यवतो लोके साधुशब्दः प्रयुज्यते ।।१९।।

महान् क्षुद्रस्य वाक्यं चेत् कुरुते सोऽपि साधुताम् ।
प्राप्नोति सर्वलोकेषु कीर्तिं स्फीतां समुत्कटाम् ।।२०।।

मद्वाक्यकरणे तेऽपि दूरेऽरिष्टं गतं महत् ।

प्रेमका साथ ग्रहण गरे । ती सैनिकहरू आपसमा यो के हो ? यो के हो? भन्दै हरेक वस्तुको विषयमा आश्चर्यपूर्वक जानकारी मागिरहेका थिए ।।१०-११।। त्यसपछि कुरा गर्न थाले - एक प्रहरको बीचमा यति उत्तम भोजन कसरी तयार भयो ? यथेष्ट भोजन गरी तृप्त भएका ती सैनिकहरूले आफूलाई टक्र्याएको पूरा भोजन सिध्याउन सकेनन् ।।१२।। मुनिशिष्यहरूले प्रत्येक भोजनका थालीसामु हात धुने पात्र राखेका थिए । भोजन गर्ने पाहुनाहरूको दाँत सफा गर्न कलात्मक सिन्का टक्र्याएका थिए ।।१३।। मुनिशिष्यहरूले सैनिकहरूले नसिध्याएको भोजन जम्मा गरी हात्ती, घोडा र गोरुहरूलाई टक्र्याए । भोजनालय नजिकै रहेको भव्य महललाई बहुमूल्य कपडा बिछ्याएर सजाइएको थियो। त्यहाँ गएर कार्तवीर्य र तिनका सैनिकहरूले ऊँखुका टुक्रा, दाख, कटहर, दाडिमजस्ता फलहरू ग्रहण गरेपछि अलैंची, ल्वाङ, कपूरको धूलो र खयरको धूलो, सुपारीसमेत रहेका मीठा पान ग्रहण गरे ।-जमदग्नि मुनिले ती सबैलाई बिदा हुने बेला यथायोग्य अलङ्कार र वस्त्र पनि प्रदान गरे ।।१२-१६।। मुनिले सैनिकहरूलाई स्तरअनुरूप उपहार प्रदान गरे भने राजा कार्तवीर्यलाई अत्यन्त दुर्लभ रत्न र सुवर्णद्वारा तयार गरिएका गहना र सुन्दर वस्त्र टक्र्याए ।

**मुनिले भने** - हे राजा कार्तवीर्य ! वनमा बस्ने मजस्तो ऋषिले सम्पूर्ण कामनाका फल प्राप्त गर्न हुने विष्णुरूप राजालाई के भोजन गराउनुथियो र ? तर तपाईंले मेरो अनुरोध स्वीकार गरी भोजन ग्रहण गरिदिएर त्रिलोकीमा जमदग्निको आश्रममा आई सैनिकसहित राजा कार्तवीर्यले भोजन गरे भन्ने मेरो नाम चलाइदिनुभएको छ ।।१७-१८।। अत्यन्त धेरै पुण्य भएका मानिसहरूका लागि संसारमा साधुवाद टक्र्याउने चलन छ अथवा त्यस्ता मानिसलाई साधु एवं सज्जन भनिन्छ। ठूला मानिसले साना मानिसको वचनलाई पनि महत्त्व प्रदान गर्दछन्। ठूलाको सम्पर्कबाट सानो मानिस पनि संसारमा यशस्वी बन्दछ। मेरो प्रार्थना स्वीकार गरेर तपाईंले पनि मेरो अभीष्टलाई अनुकूल बनाइदिनुभएको छ र तपाईंको अरिष्ट पनि समाप्त भएको छ।

**ब्रह्मोवाच**

इति वाणीं समाकर्ण्य जमदग्निसमीरिताम् ।।२१।।
पप्रच्छ राजा तं तत्र विस्मयाविष्टमानस: ।

**राजोवाच**

नादर्शि प्रथमं किञ्चिदिदं किं मायया कृतम् ।।२२।।
तप:प्रभावाद् वाऽकारि सत्यं मे वद सुव्रत ! ।

**मुनिरुवाच**

अनृतं नोक्तपूर्वं मे परिहासेऽपि वा नृप ।।२३।।
अत: सत्यं ब्रवीमि त्वां कामधेन्वाऽखिलं कृतम् ।

**ब्रह्मोवाच**

कुमतिस्तस्य भवति यस्य दैवमदक्षिणम् ।।२४।।
अनिष्टं बलवद् भावि दुष्टग्रहकृतं मुने ।
भुक्त्वा तृप्तोऽपि राजाऽसौ सम्यक् स बलवाहन: ।।२५।।
आदाने कामधेनो: स मतिं चक्रेऽब्रवीदिदम् ।

**राजोवाच**

मुनीनां शान्तचित्तानां कन्दमूलफलाशिनाम् ।।२६।।
मनसा सृष्टिसंहारकर्तॄणामस्पृहावताम् ।
जितेन्द्रियाणां विज्ञानां नेक्षे धेन्वा प्रयोजनम् ।।२७।।
वन्यमारुतभक्ष्याणां मोक्षसाधनकारिणाम् ।
वेदाभ्यसनशीलानां सम्पदा किं प्रयोजनम् ।।२८।।
शास्त्रपठनशीलानां धर्मशास्त्रार्थवेदिनाम् ।
योगाभ्यासरतानां न कामधेनो: प्रयोजनम् ।।२९।।
कार्याय महते स्यात्तु महद् वस्तु महद्गतम् ।
अरण्यवासिने तुभ्यं महद् रत्नञ्च नोचितम् ।।३०।।
तस्माद् देया कामधेनुर्मम ब्रह्मन् ! मुदा त्वया ।
मयि स्थिता तवैवास्ति चेतसि त्विति धार्यताम् ।।३१।।

**ब्रह्माजीले भन्नुभयो** - जमदग्नि ऋषिले भन्नुभएको वाणी सुनेर आश्चर्यचकित कार्तवीर्यले मुनिसँग जिज्ञासा प्रकट गरे ।

**कार्तवीर्यले भने**- हे मुनिवर ! तपाईँको यस्तो बन्दोवस्त रहेछ, मैले यस्तो भव्य बन्दोवस्त कहीं कसैको देखेको छैन। के यो बन्दोवस्त मायिक शक्तिबाट भएको हो ?।।१९-२२।। हे मुनि ! यो बन्दोवस्त तपस्याबाट भएको हो अथवा आफ्नै शक्तिबाट तपाईँले मिलाउनुभयो यसबारे मलाई बताउनुहोस्।

**मुनिले भने** - हे राजन् ! म ठट्टा गर्दा पनि झुट्टा बोल्ने गर्दिनँ । साँचो कुरा बताउँछु । तपाईँले यहाँ जस्तो बन्दोवस्त देख्नुभयो त्यो मेरो क्षमताबाट भएको होइन अपितु सबै बन्दोवस्त कामधेनुकै प्रतापबाट भएको हो ।

**ब्रह्माजीले भन्नुभयो** - जसको दैव विपरीत हुनलागेको छ त्यसको मनमा कुमतिको उदय हुन्छ, त्यसै भयो।।२३-२४।। राजा कार्तवीर्य पनि दुष्ट ग्रहद्वारा सङ्केत गरिने हुने-हुनामीका कारण कुमतिको उदयले ग्रस्त भए । जमदग्निको पाहुना बनेर भोजन गरी तृप्त भएतापनि ती राजाले कामधेनुलाई जसरी पनि प्राप्त गर्ने मन:स्थिति बनाएर भने ।

**राजाले भने** - शान्त चित्त, कन्दमूल भोजन गर्ने, मनबाट नै सृष्टि र संहार गर्न सक्ने, कुनै वस्तुको पनि इच्छा नगर्ने, इन्द्रियविजयी र ज्ञानी तपाईँ जस्ता मुनिहरूलाई कामधेनुको आवश्यकता र उपयोगिता म देख्दिनँ ।।२५-२८।। वनको मन्द पवन सेवन गर्दै तपस्यामा र मोक्षको साधनामा निरन्तर लागिरहने मुनिहरूलाई सम्पत्तिको कुनै प्रयोजन हुँदैन। शास्त्रको अध्ययनमा लागिरहेका, योगाभ्यासमा दत्तचित्त र धर्मशास्त्रको अर्थ राम्ररी जान्ने तपाईँजस्ता मुनिलाई कामधेनुको कुनै प्रयोजन हुँदैन । ठूला मानिसका हातमा रहेका महत्त्वपूर्ण वस्तुबाट संसारका महान् कार्य सिद्ध हुन्छन् । तपाईँजस्तो वनवासीका लागि कामधेनुजस्तो रत्न सुहाउँदैन ।।२९-३०।। हे मुनिवर! तपाईँले हर्षपूर्वक यी कामधेनु मलाई दिनुहोस् । राजाका घरमा रहेकी यी कामधेनु मेरै घरमा रहेकी हुन् भन्ने विचार बनाउनुहोस्। हे उत्तम ब्राह्मण ! मर्यादाको रक्षा गर्नुहोस्, मैले जे भन्नुपर्ने तपाईँका सामुमा नै भनें अन्यथा सम्पूर्ण लोकमा

**मर्यादां रक्ष तां ब्रह्मन्नुक्तमेव पुरस्तव ।**
**नो चेद् राज्ञां किमग्राह्यं लोकेषु बलशालिनाम् ।।३२।।**

**स्वराष्ट्रे परराष्ट्रे वा चतुरङ्गबलैः सह ।**

**ब्रह्मोवाच**

**श्रुत्वैवं वचनं तस्य कार्तवीर्यस्य दुर्मतेः ।।३३।।**

**प्रतिजज्वाल रोषेण जमदग्निर्महामुनिः ।**
**सर्पिषा बहुलेनैव जातवेदा यथा द्विजः ।।३४।।**

**उवाचारक्तनयनः शिक्षयन्निव भूमिपम् ।**

**मुनिरुवाच**

**साधुः शुद्धो महान् राजा प्रार्थितो भोजनाय हि ।।३५।।**

**कौटिल्यं तव न ज्ञातं बकस्येव हृदि स्थितम् ।**
**यथा वा कोकिला काकबालं पुष्णाति मायया ।।३६।।**

**अन्ते तत्काकभावेन भक्ष्याभक्ष्यरतिं व्रजेत् ।**
**अहमेवाभवं भ्रान्तो य इमां राजमित्रताम् ।।३७।।**

**न दृष्टां न श्रुतां लोके नानुभूताञ्च केनचित् ।।३८।।**

पराक्रमी राजाका रूपमा प्रसिद्ध मजस्ता शक्तिशाली राजाका लागि आफ्नो सामु होस् अथवा परराष्ट्रमा होस् अग्राह्य केही पनि हुँदैन ।

**ब्रह्माजीले भन्नुभयो** – हे वेदव्यास ! दुर्बुद्धिले ग्रस्त कार्तवीर्य राजाको कुरा सुनेर जमदग्नि ऋषि घ्यू पर्दा अग्निको ज्वाला दन्केझैं क्रोधले जाज्वल्यमान भए ।।३१-३४।। त्यसपछि राता राता आँखा गराएका जमदग्निले राजालाई उपदेशको मुद्रामा भने ।

**मुनिले भने** – मैले सज्जन र पवित्र हृदय भएका राजा भनी तपाईँलाई भोजनका निमित्त निम्ता गरें, त्यस बेला तपाईँको मनमा रहेको कुटिलता र पाप मैले थाहा पाइन। जस्तै तलाउको किनारमा रहेर माछाको प्रतीक्षा गर्ने बकुल्लाको कुटिलता थाहा हुँदैन । जसरी कोइलीले कौवाको बच्चा स्नेहले हुर्काउँछे, तर उड्न थालेपछि त्यो कौवाको बच्चा आफ्नो जातीय संस्कार अँगाली खाने र नखाने कुराको विचार गर्न समर्थ हुँदैन । म नै भ्रममा परेछु, मैले राजमित्रता होस् भन्ने कुरा ठानें तर तपाईँले जे गर्नुभयो त्यो कुरा नदेखिएको थियो न सुनिएको थियो र न त कसैबाट अनुभव गरिएको थियो ।।३५-३८।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे कार्तवीर्योपाख्यानं नामाष्टसप्ततितमोऽध्यायः**

प्रा. डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कार्तवीर्यद्वारा जमदग्निको गोठमा रहेकी कामधेनुको याचना र जमदग्निको अस्वीकृतिपछि कामधेनुहरणको प्रसङ्ग' शीर्षकान्वित अठहत्तरौं अध्याय पूर्ण भयो ।।७८।।

ॐ

# एकोनाशीतितमोऽध्यायः { ७९ अध्याय }

मुनिरुवाच

उपकारस्त्वयाऽऽरम्भि साधुवृत्तानुसारिणा ।
आत्मघातं पुरस्कृत्य कामधेनुं त्वमिच्छसि ।।१।।

भ्रान्तोऽसि नृप ! सत्यं त्वमप्राप्यं योऽभिवाञ्छसि ।
त्रैलोक्यनाशजं पापं तव मूर्ध्नि पतिष्यति ।।२।।

ब्रह्मोवाच

इति वाक्शरविद्धोऽसौ प्रलयानलसन्निभः ।
राजा बभूव रोषेण मुखादनलमुद्वमन् ।।३।।

उवाच परमक्रुद्धो जमदग्निं मुनिं तदा ।

राजोवाच

न मया दुष्टवचनं कस्यापि श्रूयते शठ ।।४।।
किं करोमि द्विजोऽसि त्वमिति क्षान्तं वचः कटु ।

क उवाच

तत उत्थाय राजाऽसौ दूतानाज्ञाप्य सत्वरम् ।।५।।

मुक्त्वा कीलात् कामधेनुं शीघ्रं यान्तु ममान्तिकम् ।
आवेष्टयँस्तदा दूताः कामधेनुं तदाज्ञया ।।६।।

फूत्कारेणैव तस्यास्ते त्यक्त्वा प्राणान् दिवं ययुः ।
अन्यान् क्रोधानलेनासौ राजदूतान् ददाह च ।।७।।

श्वासमारुतवेगेन व्योम्नि वीराः परेऽभ्रमन् ।
आच्छाद्य मण्डलं भानोर्न प्राज्ञायत किञ्चन ।।८।।

दिशः सतिमिरा जाता व्योमापि न च भासते ।
धराकम्पः समभवद् वृक्षाः पेतुः प्रकम्पिताः ।।९।।

सैनिकाश्च ततो भीता यान्ति सर्वे दिशो दश ।
केनचित्ताडिता सा गौः कशाघातेन दूरतः ।।१०।।

उड्डीयोड्डीय सा धेनुरधावत् सैन्यमेव तत् ।
गजवृन्दं यथा सिंहो गरुत्मानुरगानिव ।।११।।

**मुनिले भने** - सज्जनहरूको चरित्रको अनुसरण गर्दै तपाईंले ठूलो उपकारको काम शुरु गर्नुभयो । आत्मनाशलाई अगाडि राखेर कामधेनुको इच्छा गर्नुभयो । हे राजा ! तपाईं साँच्चिकै भ्रममा पर्नुभएको छ । अप्राप्य अथवा दुर्लभ वस्तुको कामना गर्नु र आफ्नो हैसियत नहेर्नु यो तपाईंको ठूलो दोष हो । यसो गर्दा तपाईंको शिरमा त्रिलोकीलाई नाश गरेको ठूलो पाप आइलाग्नेछ ।।१-२।।

**ब्रह्माजीले भन्नुभयो** - जमदग्नि ऋषिको वचनबाणबाट घाइते भएका राजा कार्तवीर्य रीसले मुखबाट आगो उकेल्दै प्रलयकालको अग्निसमान देखिए । जमदग्निलाई राता आँखाले हेर्दै तिनले कुरा गरे ।

**कार्तवीर्यले भने**- हे दुर्जन ऋषि ! मैले आजसम्म पनि कसैको कठोर वचन सुनेको छैन । आज तपाईं ब्राह्मण भएकाले तपाईंका मुखबाट मैले कठोर वचन सुनेर पनि सहनु पर्‍यो ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी चिन्ता व्यक्त गरेर राजा कार्तवीर्यले आफ्ना दूतहरूलाई आदेश दिँदै भने - हे दूतहरू ! तिमीहरूले तुरुन्तै कामधेनु गाईलाई गोठको कीलाबाट फुकाएर मेरासामु ल्याउने काम गर । त्यसपछि राजाको आज्ञा प्राप्त गरेका दूतहरूले गोठमा गई कामधेनुलाई घेरेर फुकाउन खोजे।।३-६।। तर ती सारा दूतहरू कामधेनु गाईको हुँकारले प्राणत्याग गरी भुइँमा ढले)(नजिकमा रहेका अरु दूतहरूलाई पनि कामधेनुले रीसको अग्निद्वारा डढाइन् ।।७।। केही वीरहरू कामधेनुको श्वासप्रश्वासको हावाबाट उडे र धेरै पर गएर भुईमा खसे । कामधेनु गाईको श्वासबाट उडाइएका वीरहरू फैलिंदा सूर्यमण्डल ढाकियो, चारै दिशामा अन्धकार छायो, आकाश ढाकियो, पृथिवीमा भूकम्प भयो र हल्लिरहेका रूखहरू भुइँमा लडे ।।८-९।। कामधेनु गाईको रीसबाट भयभीत सैनिकहरू दसै दिशातिर भाग्न थाले । त्यस अवस्थामा कार्तवीर्यको कुनै सैनिकले टाढैबाट लौरो प्रहार गरी कामधेनु गाईलाई पिट्यो । त्यसबाट रिसाएकी कामधेनुले जसरी सिंहले हात्तीको बच्चालाई धपाउँछ र जसरी गरुडले सर्पलाई धपाउँछ, त्यसैगरी कार्तवीर्य राजाका सिपाहीहरूलाई धपाइरहेकी थिइन्।

हाहाकारो महानासीद् वीराणां तत्र धावताम् ।
तानुवाच न भीः कार्या कार्तवीर्यो महाबली ।।१२।।

मया ध्माते मुदा शङ्खे भीता यास्यति मन्दिरम् ।
कामधेनुः कियच्चास्ति पश्यन्तु कौतुकं मम ।।१३।।

ततो दध्मौ महाशङ्खं त्रैलोक्यं पूरयन् रवैः ।
नाऽबिभ्यत् कामधेनुस्तां ताडयामासुरोजसा ।।१४।।

यष्टिभिर्लोहनिचयैः सर्वे ते राजसेवकाः ।
यत्र यत्र प्रहारोऽस्याः शरीरे जायते ततः ।।१५।।

सन्नद्धाः सर्वशस्त्राढ्या नानावीरा विनिःसृताः ।
शकाश्च बर्बरा आसँस्तस्याः केशसमुद्भवाः ।।१६।।

पाटच्चराः पाददेशादेवं सर्वे प्रजज्ञिरे ।
नानायवनजातीया नानावीरास्तथाऽपरे ।।१७।।

वाजिवारणसङ्घाश्च रथिनो बलवत्तराः ।
ते चैव युयुधुस्तत्र कार्तवीर्यस्य सैनिकैः ।।१८।।

न्यपतन् कार्तवीर्यस्य सैनिकैस्तैः प्रहारिताः ।
अपरे मिलितास्तत्र निशि वृक्षे पतङ्गवत् ।।१९।।

परस्पराघातहता निपेतुः शतशो नराः ।
भङ्क्त्वा शस्त्रैश्च शस्त्राणि मल्लयुद्धं प्रचक्रिरे ।।२०।।

एवं सुतुमुले जन्ये शस्त्रेषु निपतत्सु च ।
स्वीयो वा परकीयो वा न प्राज्ञायत किञ्चन ।।२१।।

रजसाच्छादिते सूर्ये जघ्नुरेव परस्परम् ।
कोलाहलो महानासीद् हन्यतां हन्यतामिति ।।२२।।

हेषितैर्बृंहितैः क्ष्वेडैर्निबिडो रथनेमिभिः ।
मृदङ्गतालवेणूनां भेरीणां निनदैरपि ।।२३।।

डरले भागिरहेका वीरहरूले ठूलो हाहाकार गरे । सैनिकहरूको त्यो अवस्था देखेर पराक्रमी कार्तवीर्यले तिनीहरू रोकी नडराउन आश्वासन दिँदै भने ।।१०-१२।। हे वीर हो ! तिमीहरू नभाग। मैले आनन्दपूर्वक शङ्ख बजाउँदा यो कामधेनु गाई डराएर आफै मेरो घर जानेछिन् । तिमीहरू कामधेनुलाई कति शक्तिसम्पन्न मान्दछौ, तो ता मेरा लागि केही पनि होइनन्। अब तिमीहरूले मेरो अनौठो पुरुषार्थ देख्नेछौ ।।१३।। यसो भनेर कार्तवीर्यले तीनै लोकलाई नै कम्पायमान तुल्याउँदै महाशङ्ख बजाए तर कामधेनु कत्ति पनि डराइनन् । महाशङ्खको घोष चारैतिर व्याप्त भएपछि ती सैनिकहरूले लौरैलौरा र फलामका डण्डीले कामधेनुलाई पिट्न थाले । सेनाहरूले कामधेनु गाईको जुन जुन अङ्गमा प्रहार गरे, त्यहाँबाट अनेक प्रकारका शस्त्र-अस्त्रले सम्पन्न वीरहरू पैदा भए । कामधेनुका रौंहरूबाट शक, बर्बर जातिका वीरहरू पैदा भए । त्यस्तै उनका खुट्टाबाट चोरी गर्ने सिपालु यवन जातिका अनेक थरि वीर पैदा भए । त्यति मात्र होइन हात्ती, घोडा र रथमा सवार वीरहरू पनि पैदा भए । कामधेनुका अङ्गप्रत्यङ्गबाट पैदा भएका वीरहरू कार्तवीर्यका सैनिकहरूसँग युद्ध गर्न थाले ।।१४-१८।। कामधेनुबाट पैदा भएका ती वीरहरू कार्तवीर्यका सैनिकहरूको प्रहारबाट भुइँमा लड्न थाले । आत्तिएका केही सैनिकहरू शत्रुसेनामा शरणार्थी भएर गए । जसरी रातको समयमा एउटा रूखमा चराहरू मिलेर बस्छन्, त्यसैगरी ती शरणार्थी सैनिकहरू कार्तवीर्यका सैनिकहरूसँग मिलेर रहेका थिए। युद्धमा आपसी प्रहारले घाइते भएका सयौं वीर भुइँमा ढलेका थिए। वीरहरूले शस्त्रद्वारा शस्त्र काट्दै युद्ध गरेपछि मल्लयुद्ध पनि गरेका थिए।।१९-२०।। यस प्रकारको भयङ्कर युद्धमा शस्त्रको प्रहार भइरहँदा युद्धको मैदानबाट उडेको धूलाले आकाश ढाकिएपछि लडिरहेका वीरहरूले को आफ्नो हो र को पराइ हो भन्ने कुरा पनि थाहा पाउन धौ धौ भयो ।।२१।। आकाश र सूर्य धूलै-धूलाले ढाकिएका थिए । त्यस्तो अन्धकारमय अवस्थामा पनि दुवैतर्फका वीरहरू निर्भय भएर लडिरहेका देखिन्थे । त्यहाँ काट, मार, छेक, थुन जस्ता शब्दहरूको कोलाहलमात्र सुनिन्थ्यो ।।२२।। घोडाहरूको हिं-हिं आवाज, हात्तीहरूको चिङ्घाड, रथका पाङ्ग्राहरूको ध्वनि, वीरहरूको हुँकार र सिंहनाद, युद्धका अनेक थरि बाजा – मृदङ्ग, ताल, बाँसुरी र दमाहाका शब्दले

एवं गव्यै: कार्तवीर्यै रथ्यश्वगजपत्तिभि: ।
अभवत् सुमहद् युद्धं भूतराक्षसभीतिदम् ।।२४।।

पक्षिजम्बूकसुखदं वीरपत्नीभयप्रदम् ।
केषाञ्चिज्जानुनी भग्ने केषाञ्चिच्च शिरांसि च ।।२५।।

खड्गखेटकभल्लानां शराणां धनुषामपि ।
भग्नानां न च सङ्ख्याऽस्ति वीराणां रथिनामपि ।।२६।।

प्रपेतु: कार्तवीर्यस्य शेषा ये सैनिकास्तदा ।
पृष्ठलग्ना ययुर्गव्या हसन्तो न च जघ्निरे ।।२७।।

निनिन्दुर्मुनिना किं वोऽनिष्टं कृतमितीह ते ।
पूर्वदोषप्रसङ्गेन राज्ञो जाता सुदुर्मति: ।।२८।।

एवं प्रभग्ने सैन्ये स उत्तस्थौ कृतवीर्यज: ।
हस्तयोर्जगृहे पञ्च शतं बाणान् धनूंषि च ।।२९।।

दत्त्वा भूमौ वामजानु धनूंष्याकृष्य वेगवान् ।
चिक्षेप शरजालं स गव्ये सैन्ये महाभुज: ।।३०।।

फलहीनमभूत्तस्य शरजालं नृपस्य तत् ।
अनीतेश्चरितं तद्वद् बन्ध्याया: सुरतं यथा ।।३१।।

पुन: पुनर्जहौ बाणाँस्तावतो राजसत्तम: ।
कामधेनोर्न चैकोऽपि वीरो भग्नोऽभवत्तदा ।।३२।।

शरजाले वृथा याते सन्तप्तोऽभून्नृपस्तदा ।
क्व गतं मम सामर्थ्यमिति चिन्तातुरोऽभवत् ।।३३।।

व्याकुले न प्रहर्तव्यमिति सर्वे ययुर्दिवम् ।
कामधेनुर्मुदा युक्ता किं युद्धं लघुना सह ।।३४।।

त्यो कोलाहल अझ घनीभूत भएको थियो ।।२३।। ठूला-ठूला रथ, घोडा, हात्ती, गोरु, पैदल सेनाले भरिभराउ सङ्ग्राम भूमिमा कार्तवीर्य र कामधेनुका सेनाहरूको बीचमा सम्पूर्ण प्राणी, देवता र राक्षसहरूलाई पनि भयभीत गराउने विचित्रको युद्ध भयो ।।२४।। त्यस युद्धमा वीरहरू मरिरहेको कारण गिद्ध र स्याल ज्यादै रमाएका थिए । तर शरीरको माया मारेर पराक्रम गर्ने वीरहरूका पत्नीहरूका निमित्त भने त्यो सङ्ग्राम प्रलयकालजस्तै भयदायक बन्यो । ती लड्ने वीरहरूमध्ये कसैका घुँडा भाँच्चिएका थिए र कसैका शिर टुक्रिएका थिए। त्यहाँ वीरहरूको परस्पर युद्ध हुँदा टुक्रिएका तरवार, ढाल, भाला, बाण र धनुहरू कति थिए भन्ने कुरा गणना गरी साध्य छैन । त्यसैगरी ढाइते भएका वीरहरूको पनि गणना गर्न सम्भव थिएन ।।२५-२६।। त्यस युद्धमा कार्तवीर्यका बाँकी रहेका सैनिक पनि घाइते भएर भुइँमा सोत्तर भएका थिए । कार्तवीर्यका सैनिकहरूलाई धपाइरहेका कामधेनुका सैनिकहरूले कार्तवीर्यका सैनिकहरूको उपहास गरे । तर तिनलाई मार्ने काम गरेनन् । जमदग्नि ऋषिले के अपराध गर्नुभएको थियो ? तिमीहरूले यस्तो जघन्य अपराध गर्‍यौ ? प्राक्तन पापका कारण कार्तवीर्य राजा दुर्गतिग्रस्त भए । आफ्ना सैनिकहरू भागेपछि कार्तवीर्यले उभिएर एक हजार हातहरूमा पाँचसय धनु र पाँचसय बाण धारण गरे ।।२७-२९।। बायाँ घुँडाले भुइँमा टेकेर वेगपूर्वक धनुको ताँदो आँखासम्म तानी महाबाहु कार्तवीर्यले कामधेनुको सेनामा निरन्तर प्रहार गर्न थाले । तर कामधेनुको प्रतापका कारण तिनले प्रहार गरेका बाणहरूको जाल निष्फल भयो । जसरी अन्यायपूर्वक गरिएको कार्य निष्फल हुन्छ र बाँझी आइमाईसँग गरेको सहवास निष्फल हुन्छ त्यसैगरी ती बाण पनि निष्फल भए । कार्तवीर्यले पटक-पटक गरी हजारौं बाण प्रहार गरे तर कामधेनुपक्षका कुनै पनि वीरलाई घाउ लागेन ।।३०-३२।। आफूले प्रहार गरेका सम्पूर्ण बाण निष्फल भएपछि कार्तवीर्य ठूलो सन्तापमा परे । तिनले मनमनै भने- मेरो त्यो शक्ति कहाँ गयो ? यसरी तर्क गर्दै कार्तवीर्य चिन्तित र व्याकुल भए । कामधेनुका सैनिकहरू चिन्तामग्न राजामाथि प्रहार गर्न हुँदैन भनेर युद्ध बन्द गरी स्वर्ग गए। आफ्ना वीरहरूले देखाएको पराक्रमबाट प्रसन्न भएकी कामधेनु पनि सानो पुरुषार्थ गर्ने योद्धासँग के युद्ध गर्नु भनेर फर्किइन् ।।३३-३४।। कामधेनु

गतायां कामधेनौ स कार्तवीर्यो मुनिं ययौ ।
रोषेणोवाच ते ब्रह्मन् ! कापट्यं विदितं मया ।।३५।।

न स विप्रोऽभिमन्तव्यो यस्य स्यात् कपटं हृदि ।
इत्येकं बाणमादाय विव्याध द्विजपुङ्गवम् ।।३६।।

लग्ने हृदि महाबाणे प्राणत्यागं चकार सः ।
रेणुका तं नृपं प्राह ब्रह्महत्या वृथा कृता ।।३७।।

स ऊचे रक्तनयनः क्रोधाविष्टो नृपस्तु ताम् ।
तूष्णीं तिष्ठ न चेद् हन्मि त्वामपीह मुनिप्रिये ।।३८।।

एकविंशतिबाणैस्तां दुष्टो राजाऽहनद् रुषा ।
सस्मार मनसा साऽपि जमदग्निमुनिं तदा ।।३९।।

पश्चादुवाच नृपतिं दुष्ट! चाण्डाल! किं कृतम् ।
अपराधं विना कस्मादावां निहतवानसि ।।४०।।

तवापि भविता नाशो भुजानां नात्र संशयः ।
श्रुत्वेत्थं वचनं तस्यास्ततो यातो नृपस्तदा ।।४१।।

अल्पावशिष्टसैन्येन चिन्ताक्रान्तो ययौ पुरीम् ।
विनिन्दन् हृदि चात्मानं शोचँश्च मृतसैनिकान् ।।४२।।

निरुत्साहो निरुद्योगो विवेश निजमन्दिरम् ।।४३।।

फर्केपछि राजा कार्तवीर्य जमदग्नि ऋषिका नजिकमा गए । क्रोधले उन्मत्त भएर तिनले भने- 'हे जमदग्नि ऋषि ! तपाईँको कपट मैले थाहा पाएँ ।।३५।। शास्त्रमा त्यस ब्राह्मणलाई ब्राह्मण भन्न हुँदैन, जसका हृदयमा कपट रहेको हुन्छ भनिएको छ । त्यस कारण तपाईँमाथि प्रहार गर्दा मलाई पाप लाग्दैन' भनेर एउटा बाण हातमा लिई तिनले जमदग्नि ऋषिमाथि प्रहार गरे ।।३६।। त्यो महाबाण ऋषिको मुटुमा लाग्यो र ती ऋषिले सहसा प्राणत्याग गरे । जमदग्निको शरीर निष्प्राण भएपछि तिनकी पत्नी रेणुकाले आएर कार्तवीर्यलाई भनिन्- 'हे दुष्ट! तिमीले व्यर्थमा ब्रह्महत्या गर्‍यौ' ।।३७।। रेणुकाका ती कुरा सुनेर अत्यन्त क्रुद्ध भएका राजा कार्तवीर्यले आँखा राता गराउँदै मुनिकी पत्नी रेणुकालाई भने - 'हे मुनिपत्नी ! तिमी चुप लागेर बस । अन्यथा म तिमीलाई पनि मारिदिनेछु।' उनी चुप लागिनन्। नलागेपछि राजा कार्तवीर्यले रीसले अन्धो भएर मुनिकी पत्नी रेणुकामाथि एक्काइसवटा बाणले एकैचोटि प्रहार गरे । बाण प्रहारपछि घाइते भई भुइँमा पछारिएकी र प्राणत्यागन तत्पर रेणुकाले मनबाट आफ्ना पति जमदग्निको संझना गरिन् ।।३८-३९।। त्यसपछि तिनले कार्तवीर्यलाई भनिन्- 'हे दुष्ट ! तैँले के गरिस् ? । तैँले बिनाअपराध हामी दम्पतीलाई किन मारिस् ? तेरा एक हजार हातको पनि त्यसैगरी नाश हुनेछ, यसमा कुनै सन्देह छैन ।' प्राणत्याग गर्न लागेकी रेणुकाका यस्ता वचन सुनेर कार्तवीर्य फर्के ।।४०-४१।। त्यसपछि आफ्ना बाँकी रहेका केही सेनालाई लिएर चिन्तित मुद्रामा आफ्नो नगरतर्फ गए । उनी नगरतर्फ जाँदा मनबाट आफ्नै निन्दा गरिरहेका थिए र आफ्ना निमित्त युद्धको मैदानमा प्राणत्याग गरेका लाखौं सेनाको विषयमा विचार गरेका थिए। त्यसकारण उत्साहहीन र उद्योगहीन ती राजा कार्तवीर्य चिन्तित मुद्रा लिएर दरबारभित्र पसे ।।४२-४३।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे कार्तवीर्योपाख्याने जमदग्निप्राणत्यागो नाम एकोनाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कामधेनुबाट प्रादुर्भूत सेनासँग युद्धमा पराजित सहस्रार्जुनद्वारा जमदग्निको वध' शीर्षकान्वित उनासीऔँ अध्याय पूर्ण भयो ।।७९।।

ॐ

# अशीतितमोऽध्यायः { ८० अध्याय }

क उवाच

रेणुका तु गते तस्मिन् शुशोच भृशविह्वला ।
क्व गता मम पुत्रास्ते संहारेऽस्मिन्नुपस्थिते ।।१।।
मृते भर्तरि किं कुर्यां वाणजालसमावृता ।
क्व गतोऽसौ महाक्रोधी रामो मे प्रियबालकः ।।२।।
तस्मिन् दृष्टे मम प्राणा गमिष्यन्ति सुरालयम् ।
स्मृतमात्रस्तया रामो ययौ मातुस्तदाऽन्तिकम् ।।३।।
वाणजालचितां ताञ्च पितरं मृतमैक्षत ।
कार्तवीर्येण दुष्टेन दृढबाणहतं हृदि ।।४।।
पपात मूर्च्छया भूमौ वातभग्न इव द्रुमः ।
पितरं मातरञ्चैव रुरोद भृशदुःखितः ।।५।।

राम उवाच

अद्यान्धकारः सर्वत्र चाद्य शून्या दिशो दश ।
मेरुहीना यथा पृथ्वी शक्रहीनाऽमरावती ।।६।।
नाश्रमः शोभते तद्वत् पित्रा हीनोऽयमद्य मे ।
त्रिलोकी गङ्गया हीना तद्वदाश्रममण्डली ।।७।।
न शोभते रेणुकया हीनाऽप्याश्रममण्डली ।
गतं भयं तु देवानां मुनयोऽद्य निरीश्वराः ।
यदासीत् तपसा चास्य किमयं वा ग्रहीष्यति ।।८।।
एवं वहुविधाकारं चक्र आक्रन्दनं तु सः ।
अचेष्टत भृशं रामो मत्स्यो नीरं विना यथा ।।९।।
ततः पुनर्मातरं स रुदन्नेव समाययौ ।
निष्कासयामास शरानङ्के कृत्वा शिरोधराम् ।।१०।।
चक्रन्द च पुना रामो मातृदुःखेन दुःखितः ।
त्रैलोक्यं भस्मसात् कर्तुं या क्षमा जननी मम ।।११।।

**ब्रह्माजीले भन्नुभयो -** कार्तवीर्य आफ्नो नगरतर्फ लागेपछि मरणासन्न भएकी रेणुका ठूलो चिन्तामा परिन् । तिनले मनमनै भनिन्, अचानक यहाँ प्रलयकाल उपस्थित भयो । मेरा ती वीर छोराहरू कहाँ गए ? मेरा पतिको देहावसान भएपछि एक्काइसवटा बाण लागेर मरणासन्न भएकी म अब के गरूँ? मेरा प्यारा पुत्र महाक्रोधी परशुराम कहाँ गए ? तिनको दर्शन गरेपछि मात्र मेरा प्राण देवलोकमा जानेछन् । यसरी संझिँदा संझिँदै रेणुकाका सामु परशुराम आइपुगे ।।१-३।। बाणका जालले छाइते भएकी आमा र दिवङ्गत पिताका शरीरको दर्शन गरे । दुष्ट कार्तवीर्यले मुटुमा बाण हानेर दिवङ्गत हुनुभएका आफ्नो पिताको लाश देखेर हावाले हल्लाएको रूख ढलेझैं भुइँमा पछारिए । त्यसपछि अत्यन्त दुःखी भई परशुराम माता-पितालाई संझेर रुँदै विलाप गर्न लागे ।

**परशुरामले भने -** आज संसारमा मेरो कोही छैन । चारैतिर अन्धकारमात्र छ । आज दसै दिशा शून्य छन्। आज म सुमेरु पर्वत नभएको पृथिवीसमान र इन्द्र नभएको अमरावतीसमान भएको छु । आज मेरा पिताले रहित यो आश्रम शोभारहित भएको छ । जसरी गङ्गा नदी नहुँदा स्वर्ग, मर्त्य र पाताल तीनै लोकको शोभा हुँदैन त्यसरी नै महर्षि जमदग्निकी पतिव्रता पत्नी रेणुका नहुँदा आश्रमको शोभा छैन । देवताहरूको डर लुप्त भएको छ । मुनिका ईश्वर लुप्त भएका छन् । किनकि देवताहरू यिनले हाम्रा पद खोजिदिने हुन् कि भनी जमदग्निको तपस्याबाट डराउँथे । अब उहाँ दिवङ्गत हुनुभयो । त्यस कारण देवता निर्भय भए। यसरी धेरै प्रकारबाट परशुरामले विलाप गरे । त्यसछि पानीबिनाको माछा झैं तड्पिन थाले ।।४-९।। केही बेरपछि परशुरामले आफ्नी आमा रेणुकाको सामु आई तिनको शिरलाई आफ्नो काखमा राखेर कार्तवीर्यले प्रहार गरेका बाण क्रमैसँग झिक्न थाले ।।१०।। आमाका दुःखले साह्रै दुःखित परशुरामले विलाप गर्दै भने - 'तीन लोकलाई आफ्नो तेजबाट खरानी बनाउन सक्नुहुने मेरी आमा, कार्तवीर्यको बाण लागेर किन

सा कथं पतिता भूमौ दुष्टबाणप्रपीडिता ।
न विस्मरसि मां नित्यं क्षणं क्रीडागतं पुरा ।।१२।।

त्यक्त्वा मां कथमद्य त्वं कुत्र वा गन्तुमुद्यता ।
ददासि मे पयो भूरि वस्त्राण्यन्नानि शोभने ।।१३।।

फलमूलानि चारूणि याति त्यक्त्वा कथं नु सा ।
मातापितृभ्यां हीनस्य धिङ् मे जीवितमद्य मे ।।१४।।

ब्रह्मोवाच

इति पुत्रवचः श्रुत्वा रेणुका भृशदुःखिता ।
प्रमृज्याश्रूणि पुत्रस्य जगाद भृशविह्वला ।।१५।।

अहं ते निकटे स्थास्ये न शोकं कर्तुमर्हसि ।
शृणु वार्तां पुरा वृत्तां राजाऽसौ कृतवीर्यजः ।।१६।।

मध्याह्ने सह सैन्येन प्राप्त आश्रममण्डलम् ।
पित्रा ते मानितः सम्यग् भोजितो बलसंयुतः ।।१७।।

कामधेनोः प्रसादेन भुक्त्वाऽयाचत धेनुकाम् ।
तूष्णीम्भूते मुनौ कोपात् कामधेनुं मुमोच सः ।।१८।।

स्पृष्टमात्रा च सा धेनुः ससर्ज बलमुत्कटम् ।
चतुरङ्गं ततो युद्धमभवद् राजसैनिकैः ।।१९।।

भग्नास्तेऽप्यपलन् सर्वे राजा युद्धमथाकरोत् ।
स च पञ्चशतं बाणान् वारं वारमथासृजत् ।।२०।।

सोऽपि भग्नो गृहं यातः कामधेनुर्दिवङ्गता ।
पुनरागत्य दुष्टोऽसौ बाणेनैकेन वक्षसि ।।२१।।

जघान पितरं कोपादेकविंशतिसायकैः ।
अपराधं विना माञ्च ताडयित्वा खलो गतः ।।२२।।

भुईंमा ढल्नुभयो ? हे आमा ! म बालक अवस्थामा खेल्न जाँदा कहाँ गयो भनेर चिन्ता गर्नुहुन्थ्यो । आज मलाई छाडेर कहाँ जान लाग्नुभएको छ ? हे आमा ! मलाई भोक लाग्दा तपाईंले धेरै दुध पियाउनु हुन्थ्यो । लुगा फाट्दा नयाँ नयाँ लुगा दिनुहुन्थ्यो । खान मन लाग्दा अनेक प्रकारका भोजन तयार गर्नुहुन्थ्यो। यहाँ हजुरले रुचाउने राम्रा कन्दमूलहरू छन्, ती सबै छाडेर कहाँ जाँदै हुनुहुन्छ ? आमाबाबुको टुहुरो भएर म कसरी बाँचू ? मेरो जीवन धिक्कार गर्न योग्य छ ।।११-१४।।'

**ब्रह्माजीले भन्नुभयो** - मर्न लागेकी रेणुकाले आफ्ना छोरा परशुरामका वचन सुनेर दुःखी भई बल्लबल्ल हातले छोराका गाला मुसारेर आँसु पुछिन् । त्यसपछि सासैसासले भनिन् - बाबु ! म गए पनि सधैं तिम्रै नजिकमा हुनेछु । तिमीले शोक नगर । तिमी नभएको बेलामा आश्रममा भयङ्कर घटना घट्यो । त्यो म सुनाउन चाहन्छु । बाबु ! एक दिनको कुरा हो, राजा कार्तवीर्य मध्याह्नको समयमा अनेकौं सेनाका साथ आश्रममा आइपुगे । तिम्रा पिताले राजा हुन् भनेर सम्मान गर्नुभयो । लाखौं सेनासहित ती कार्तवीर्यलाई राम्रोसँग भोजन गराउनुभयो ।।१५-१७।। सम्पूर्ण भोजनको व्यवस्था कामधेनु गाईले गरेकी थिइन् । कामधेनुको कृपाबाट भोजन गरेपछि राजा कार्तवीर्यले तिम्रा पितासँग कामधेनु मागे । तर तिम्रा पिता केही बोल्नुभएन । केही पनि उत्तर नदिँदा रिसाएका कार्तवीर्यले हाम्रो गोठबाट कामधेनु गाई फुकाउन खोजे ।।१८।। कार्तवीर्यका सैनिकहरूले स्पर्श गर्नासाथ कामधेनु आफैले करोडौं सेना पैदा गरिन् । त्यसपछि कामधेनुका सेना र राजाका सेनाका बीचमा घनघोर सङ्ग्राम भयो ।।१९।। कामधेनुको सेनाबाट छिन्न-भिन्न भएका कार्तवीर्यका सैनिकहरू चारैतिर भागे । त्यसपछि राजा कार्तवीर्यले आफै युद्ध गरे । तिनले एकैचोटिमा पाँचसय बाण प्रहार गर्दै युद्ध गरे तर ती पनि परास्त र घाइते भएर घर फर्के । कामधेनु स्वर्गमा गइन् । त्यसको अर्को दिन आएर कार्तवीर्यले रीसले चूर भई एउटा बाणले तिम्रा पिता जमदग्निको मुटुमा प्रहार गरी प्राण लिए । त्यसपछि दुष्ट स्वभाव भएका तिनले कुनै अपराध नहुँदा पनि मेरो शरीरमा २१ वटा बाण प्रहार गरेर फर्के।।२०-२२।।

तस्मात् त्वयाऽद्य दुष्टस्य नाशः शीघ्रं विधीयताम् ।
एकविंशतिवारञ्च कुरु निःक्षत्रियां धराम् ।।२३।।

एकविंशतिबाणा मे देहे तेन यतोऽर्पिताः ।
अन्यदेकं वदे पुत्र ! तत्कुरुष्व वचो मम ।।२४।।

संस्कारं कुरु नौ तत्र यत्र कोऽपि न दाहितः ।
दत्तात्रेयं मुनिवरमाकार्य सर्ववेदिनम् ।।२५।।

कुरु कर्मान्तरं नौ त्वं त्रयोदशदिनावधि ।
तदैव गतिमाप्स्यावो नान्यो वक्ताऽस्ति तादृशः ।।२६।।

इत्युक्त्वा रेणुका देहं त्यक्त्वा धामाप दुर्गमम् ।
रामस्तत् सर्वमकरोत् तयादिष्टं महामनाः ।।२७।।

त्यस कारण हे छोरा ! तिमीले अब छिट्टै दुष्ट कार्तवीर्यसँग युद्ध गरी तिनको नाश गर । २१ पटकसम्म पृथिवीमा घुमेर शासनमा बस्ने क्षत्रियहरूको नाश गर्दै पृथिवीलाई क्षत्रियहीन बनाऊ। मेरो ज्यानमा २१ वटा बाण प्रहार गरेको फल त्यही हुनेछ ।।२३-२४।। अर्को एउटा कुरा भन्छु- हे छोरा ! त्यसलाई तिमीले पालन गर्नुपर्छ । त्यो कुरा के हो भने, तिमीले शास्त्रज्ञ महामुनि दत्तात्रेयलाई बोलाएर त्यो ठाउँमा हाम्रो अन्तिम संस्कार गर, जहाँ आजसम्म कसैको पनि दाहसंस्कार भएको छैन ।।२५।। यसरी हामी दुबैको अन्तिम संस्कार गरेपछि तिमीले तेह्र दिनसम्मका सबै कर्महरू सम्पन्न गर्नुपर्नेछ । त्यसपछि मात्र हामी दुबैले उत्तम गति प्राप्त गर्नेछौं । पृथिवीमा दत्तात्रेयसमान अर्को विद्वान् कुनै पनि छैन ।।२६।। आफ्ना छोरालाई यी सबै कुरा भनेर रेणुकाले देहत्याग गरिन्। पतिव्रताधर्मका कारण तिनले दुर्लभ धाम प्राप्त गरिन् । उदार मन भएका परशुरामले पनि आफ्नी आमाले आज्ञा गरेअनुसार सम्पूर्ण कर्म सम्पन्न गरे।।२७।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे रामोपाख्याने और्ध्वदैहिकसंस्कारोपदेशो नामाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'रेणुकाद्वारा परशुरामलाई और्ध्वदैहिक संस्कार सम्पन्न गर्न उपदेश' शीर्षकान्वित असीऔं अध्याय पूर्ण भयो ।।८०।।

ॐ

# एकाशीतितमोऽध्यायः { ८१ अध्याय }

क उवाच

रामस्तु वपनं कृत्वा स्नात्वा सम्यग् विधानतः ।
उत्थानश्राद्धमकरोद् ब्राह्मणैः कथितं यथा ॥१॥

विश्रान्तिस्थानमारभ्य मन्त्राग्निमुभयोरदात् ।
तदैव प्रययौ तं तु दत्तात्रेयं मुनिं प्रति ॥२॥

कुवेषं शिष्यसहितं श्वहस्तं मलिनं कृशम् ।
ध्यानेनालोक्य तं रामो ननाम मुनिपुङ्गवम् ॥३॥

बद्धाञ्जलिपुटोऽतिष्ठद् यामार्धं तत्पुरो द्विजः ।
दत्तात्रेयोऽपि सर्वज्ञो ज्ञात्वा तस्याशयं मुनिः ॥४॥

उवाच राममामन्त्र्य ज्ञातं तव प्रयोजनम् ।
अथापि पृच्छे विज्ञातुं किमर्थं त्वमिहागतः ॥५॥

क उवाच

स उवाच ततो रामो वृत्तान्तमादितः स्फुटम् ।

राम उवाच

कृतवीर्यात्मजो राजा पितुराश्रममागतः ॥६॥

भोजितः परमान्नेन नानापक्वान्नशालिना ।
भुक्तः स सेनया सार्धं कामधेनुमयाचत ॥७॥

यदा न दत्ता पित्रा मे बलान्नेतुं मनो दधे ।
सा ताडिताऽथ सुषुवे सैनिकानां गणान् बहून् ॥८॥

तैर्भग्नो बलिभी राजा ससैन्योऽगान्निजालयम् ।
कामधेनुर्गता स्वर्गं ततो राजा रुषान्वितः ॥९॥

जमदग्नेर्हृदि शरमहनद् दृढमोजसा ।
एकविंशतिकान् बाणान् मातुरङ्गेऽहनद् रुषा ॥१०॥

**ब्रह्माजीले भन्नुभयो** – परशुरामले क्षौर कर्म गरी विधानपूर्वक स्नान गरेर ब्राह्मणहरुले बताएअनुसार उत्थानश्राद्ध गरे ॥१॥ विश्रान्ति श्राद्धदेखि आरम्भ गरेर सबै कर्म गरी मातापिताको शरीरमा मन्त्र जप्दै दागबत्ती दिए । त्यस बेला परशुराम बाँकी संस्कार सम्पन्न गर्नका लागि निमन्त्रणा गर्न दत्तात्रेय मुनिका समीपमा गए ॥२॥ नराम्रो भेष धारण गरेका, हातले कुकुर डोऱ्याएका, मलिन एवं दुर्बल अवस्थामा रहेका व्यक्तिलाई ध्यान दृष्टिले हेरी दत्तात्रेय नै हुनुहुन्छ भनी ठम्याएर परशुरामले नमस्कार गरे ॥३॥ परशुराम हात जोडेर आधा प्रहरसम्म दत्तात्रेयका सामु उभिए । ऋषि दत्तात्रेयले पनि परशुरामको आशय बुझेर तिनलाई नजिकैमा डाकी भने – हे परशुराम ! मैले तपाईँको आउने प्रयोजन थाहा पाएँ । त्यसो हो तापनि शिष्टाचारवश म तपाईसँग प्रश्न गर्दैछु – तपाई के कति कामले यहाँ पाल्नुभयो ? ॥४-५॥

**ब्रह्माजीले भन्नुभयो** – दत्तात्रेयका प्रश्न सुनेपछि परशुरामले शुरुदेखिका सबै वृत्तान्त स्पष्टरूपमा सुनाउँदै कुराकानी गरे ।

**परशुरामले भने** – कुनै दिन राजा कार्तवीर्य मेरा पिता जमदग्निको आश्रममा आएका थिए। मेरा पिताले अनेक पकवानसहित अत्यन्त तृप्तिदायक भोजन टक्र्याएर राजाको सम्मान गर्नुभयो । सेनाका साथमा भोजन गरेपछि कार्तवीर्यले मेरा पितासँग कामधेनु मागे ॥६-७॥ पिताश्री केही बोल्नुभएन। केही नबोल्दा रिसाएका कार्तवीर्यले बलपूर्वक कामधेनु फुकाएर लैजाने विचार गरे । जब कार्तवीर्यका सेनाले कामधेनु फुकाउन आँट गरी कामधेनुमाथि दण्डप्रहार गरे । त्यसपछि रिसाएकी कामधेनुले आफ्नो शक्तिबाट असङ्ख्य सैनिकगण पैदा गरिन् ॥८॥ कामधेनुका सैनिकहरुद्वारा कार्तवीर्यका सैनिक परास्त भएपछि स्वयं कार्तवीर्य पनि परास्त भएर घर फर्के । कामधेनु स्वर्ग गइन् । त्यसपछि कार्तवीर्यले रिसाएर मेरा पिता जमदग्निको छातीमा बलपूर्वक बाणप्रहार गरे । बाणप्रहारबाट पिता दिवङ्गत हुनुभयो । त्यसपछि माता रेणुकाको शरीरमा २१ वटा बाणप्रहार गरे । तदन्तर मेरी माता रेणुका पनि घाइते

नाहं तत्र स्थितो ब्रह्मन् ! पश्चादागत्य दृष्टवान् ।
मन्त्राग्निना तु दग्धौ तौ मातुर्वाक्यादिहागत: ।।११।।

दत्तात्रेयं विना नान्यो वक्ता कार्योऽत्र कर्मणि ।
कृते कर्मणि सर्वस्मिँस्त्रयोदशदिनावधि ।।१२।।

पश्चाद्राजा निहन्तव्य: कृतवीर्यात्मजो बली ।
एकविंशतिवारञ्च कार्या नि:क्षत्रिया मही ।।१३।।

इत्थमाज्ञापयन्मह्यं जननी रेणुका मम ।
इत्यर्थमिह सम्प्राप्तस्तस्मात् कुरु कृपां मयि ।।१४।।

ब्रह्मोवाच

इति रामवच: श्रुत्वा रेणुकाया: सखा मुनि: ।
शोकसंविग्नहृदयो राममूच इदं वच: ।।१५।।

दत्तात्रेय उवाच

यद्गृहे भुक्तमत्यन्तं तेन नेष्टा विरोधिता ।
यदि दुष्टेन साऽकारि द्रष्टा तत्फलमन्तकात् ।।१६।।

इदानीं तु तयो: सम्यगौर्ध्वदैहिकमाचर ।

ब्रह्मोवाच

तत आश्रममागत्य दत्तात्रेययुतस्तु स: ।।१७।।

रामश्चकार भक्त्यैव पित्रोरुत्तरकर्म तत् ।
दत्तात्रेयोक्तमन्त्रै: स द्वितीयदिवसावधि ।।१८।।

समाप्ते कर्मणि मुनिर्गन्तुं कोह्लापुरं मन: ।
चक्रे तदाऽब्रवीद् राम: कदा यासि भवान् पुन: ।।१९।।

मुनि: प्रोचे यदा त्वं मे स्मरणं वै करिष्यसि ।
एहि दत्तात्रेय इति तदा मां द्रक्ष्यसेऽनघ ।।२०।।

कृत्वा कर्म व्रजत्येव भिक्षितुं स दिने दिने ।
आशौचिनो न भोक्तव्यमन्नमित्यभिचिन्तयन् ।।२१।।

पञ्चमे दिवसे कर्म समाप्य मुनिपुङ्गव: ।
कृत्वाऽऽज्ञां गतो यावत् तावद् व्याघ्र: समाययौ।।२२।।

हुनुभयो । हे मुनिवर! त्यस बेला म त्यहाँ उपस्थित थिइनँ । पछिबाट आएर मैले मरणासन्न आमालाई भेटें । उहाँले प्राणत्याग गर्नुभयो । मैले अभिमन्त्रित अग्निद्वारा मातापिताको दाहसंस्कार सम्पन्न गरें । तेह्र दिनसम्मको काम सम्पन्न गर्न दत्तात्रेय मुनिलाई बोलाउनु भन्ने माता रेणुकाको आज्ञा भएकाले म अहिले हजुरको समीपमा आएको छु । तेह्र दिनसम्मका सम्पूर्ण कर्म सम्पन्न गरेपछि बलवान् राजा कार्तवीर्यलाई मैले मार्नुपर्नेछ र एक्काइस-पटकसम्म पृथिवीमा घुमेर यो धर्तीलाई क्षत्रियशून्य तुल्याउनु पर्नेछ । यो मेरी माताको आज्ञा हो । यसैका लागि म हजुरसमक्ष आएको छु। हजुरले ममाथि कृपा गरी त्यहाँ गएर मेरा मातापिताको उद्धारका लागि आवश्यक कर्म सम्पादन गरिदिनुहोस्।।९-१४।।

**ब्रह्माजीले भन्नुभयो-** मुनि दत्तात्रेय रेणुकाका बालसखा थिए । यो घटना सुनेर ती शोकसन्तप्त भए । त्यसपछि परशुरामसँग आफ्नो शोक यसरी व्यक्त गरे ।।१५।।

**दत्तात्रेयले भन्नुभयो-** जुन घरमा भोजन गरिन्छ, त्यस घरसँग विरोध गर्नु राम्रो हुँदैन । यदि कार्तवीर्यले त्यसो गरे भने त्यसको फल यमराजबाट चाख्नेछन्। अहिले भने तपाईँले आफ्ना माता-पिताको उद्धारका लागि काजक्रिया सम्पन्न गर्नुपर्दछ ।

**ब्रह्माजीले भन्नुभयो-** दत्तात्रेयले त्यसो भनेपछि परशुराम दत्तात्रेयलाई लिएर आफ्नो आश्रममा आइपुगे ।।१६-१७।। परशुरामले भक्तिपूर्वक दत्तात्रेयले उच्चारण गरेका मन्त्रहरुद्वारा दोस्रो दिनदेखि लिएर तेह्र दिनसम्मका अन्त्यकर्म सम्पन्न गरे।।१८।। पाँचौं दिनको किरिया सकिएपछि दत्तात्रेयले कोल्हापुर जाने मन बनाए । त्यस बेला परशुरामले भने - हजुर फेरि कहिले आउनुहुन्छ ? दत्तात्रेयले उत्तर दिए- हे निष्पाप परशुराम! जब तपाईँले आउनुहोस् भन्नुहुन्छ, त्यस बेला म निश्चय नै आउनेछु र तपाईँले मेरो दर्शन गर्नुहुनेछ ।।१९-२०।। अन्त्येष्टि कर्मको क्रममा दत्तात्रेय ऋषि कर्म गराउँथे तर त्यहाँ भोजन गर्दैनथे । आशौच परेका घरको अन्न खानुहुँदैन भन्ने विचार गरेर ती दिनदिनै गाउँ-गाउँमा भिक्षा माग्न जान्थे ।।२१।। पाँचौं दिनको कुरा हो- कर्म समाप्त गरेपछि दत्तात्रेय परशुरामसँग आज्ञा लिएर भिक्षा माग्न गए। त्यतिबेला क्रियापुत्री बसेको ठाउँमा बाघ आइपुग्यो।।२२।। परशुरामले त्यस बाघसँग डराएर आमा ! आमा ! म कहाँ जाऊँ भनी क्रन्दन गरे । तिनले आमा भनेर सम्बोधन गर्नासाथ पुत्रस्नेहमा परेकी माता रेणुका पाँचौं दिनको पिण्डबाट आधा

मातर्मातः क्व याम्यद्येत्येवं चुक्रोश तद्भयात् ।
आविरभूत्तदा माता रेणुका रामवाक्यतः ।।२३।।

असम्पूर्णशिरोमात्रा पुत्रस्नेहवशेन हि ।
यदि द्वादशरात्रात् साऽऽहूता स्याद् भार्गवेण तु ।।२४।।

आगता स्यात् सा सम्पूर्णा सर्वावयवशोभिनी ।
उवाच तं किमाहूता वद बाल ! प्रयोजनम् ।।२५।।

आलिलिङ्ग तदा स्नेहाद् रामं स्नुतपयोधरा ।
दत्तात्रेयः पुनरगात् षष्ठेऽथ दिवसे मुनिः ।।२६।।

अपश्यद् रेणुकां तत्र तादृशीं राममब्रवीत् ।
मध्य एव किमाहूता न्यूनदेहा समागता ।।२७।।

सपिण्डीकरणादूर्ध्वं यद्याहूता तदाऽखिला ।
आगता स्याद् रेणुकेयं तव स्नेहाद् द्विजर्षभ।।२८।।

राम उवाच

बालभावाद् भयाद् ब्रह्मन् ! स्वभावान्मातरित्यहम् ।
उक्तवान् मुनिशार्दूल! दृष्टवानीदृशीमिमाम् ।।२९।।

वृषोत्सर्गञ्च कृतवानेकादशदिने द्विजः ।
सपिण्डीकरणं चैव द्वादशे कृतवान् द्वयोः ।।३०।।

ततः परेऽह्नि पाथेयं श्राद्धं पुण्याहवाचनम् ।
ददौ दानान्यनेकानि ब्राह्मणेभ्यो यथार्हतः ।।३१।।

जमदग्निर्दिव्यदेहो ब्रह्मलोकमथागमत् ।
तस्थौ सा रेणुका भूमौ स्थाने स्थाने च तादृशी ।।३२।।

पूरयत्यखिलान् कामान् जनानां भक्तिकारिणाम् ।
माहात्म्यं विस्तृतं तस्याः स्कान्दे प्रोक्तं विशेषतः ।।३३।।

अतिविस्तारभीत्याऽत्र न प्रोक्तं मुनिसत्तम ।।३४।।

मात्र तयार भएको शिरसमेतको शरीर लिएर प्रकट भइन् । बाह्रौं दिनपछि परशुरामले यसै गरी आमा भनेर बोलाएको भए बाह्रदिनसम्मका पिण्डहरूबाट पूर्ण भएको सुन्दर स्वरूपको दर्शन पाउने थिए, तर त्यसो भएन। पाँचै दिनका दिन परशुरामले आमालाई बोलाउँदा रेणुकाको शरीर सर्वाङ्गपूर्ण हुन पाएन । छोराको आह्वान सुनेर आएकी रेणुकाले भनिन् – बाबु ! तिमीले मलाई किन बोलायौ भन ? यसो भनेर तिनले स्नेहपूर्वक स्तनबाट दुधका धारा बगाउँदै परशुरामलाई आलिङ्गन गरिन्। दत्तात्रेय ऋषिले छैठौं दिनमा पनि भिक्षाटन गर्न गएर फर्कँदा क्रियापुत्री बसेको ठाउँमा आधा अङ्ग भएकी रेणुकालाई बसेको देखेर परशुरामसँग सोधे – हे परशुराम ! तपाईँले अन्त्येष्टि क्रिया सम्पन्न नहुँदै बीचैमा किन आमालाई बोलाउनुभयो ? हेर्नुहोस् त तपाईँको मायाले गर्दा उहाँ आधा अङ्ग लिएर आउनुभएको छ । सपिण्डीकरण गरेपछि बोलाउनुभएको भए उहाँ सम्पूर्ण अङ्ग–अङ्गमा सौन्दर्य भरेर पूर्ण स्वरूप लिएर तपाईंप्रति स्नेह प्रदर्शन गर्दै आउनुहुने थियो ।।२३–२८।।

**परशुरामले भन्नुभयो** – 'हे दत्तात्रेय मुनि ! बालकस्वभावका कारण मैले आमा भनें। मेरो आवाज सुनेर उहाँ तुरुन्तै यस रूपमा आउनुभयो र मैले उहाँको दर्शन पाएँ।' ब्रह्माजीले भन्नुभयो– परशुरामले एघारौं दिनमा बाबु–आमाको निमित्त वृषोत्सर्ग गरे र बाह्रौं दिनमा सपिण्डीकरण गरे । तेह्रौं दिनमा पाथेयश्राद्ध र पुण्याहवाचन गरेपछि ब्राह्मणहरूलाई योग्यता–अनुसार दान दिए ।।२९–३१।। त्यसपछि दिव्य देह धारण गरी ऋषि जमदग्नि ब्रह्मलोक गए। रेणुका भने त्यस रूपमा नै ठाउँ–ठाउँमा भ्रमण गर्दै पृथिवीमा घुमिरहिन्। तिनले आफ्नो शक्तिद्वारा भक्त र उपासकहरूका कामना पूरा गर्दथिन्। हे व्यास! रेणुकाको महिमा स्कन्दपुराणमा विस्तृतरूपमा बताइएको छ। धेरै विस्तारको भयले तिनको कथा यहाँ नै टुङ्ग्याइन्छ ।।३२–३४।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे रामोपाख्याने और्ध्वदैहिकसंस्कारसम्पादनं नामैकाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'परशुरामद्वारा माता–पिताको और्ध्वदैहिक संस्कार' शीर्षकान्वित एकासीऔं अध्याय पूर्ण भयो ।।८१।।

ॐ

## अथ द्व्यशीतितमोऽध्याय: { ८२ अध्याय }

व्यास उवाच

कथं रामो बाल एव कृतवीर्यसुतेन ह ।
एकाकी बहुसैन्येन सहस्रभुजशालिना ।।१।।

अजयत् तं महावीरं तन्मे कथय विस्तरात् ।

क उवाच

एकस्मिन् दिवसे रामो मातरं परिपृष्टवान् ।।२।।

राम उवाच

यस्मादिन्द्रादयो देवा बिभ्यति त्रासकम्पिता: ।
अनन्तं यस्य सैन्यं तच्चतुरङ्गसमन्वितम् ।।३।।

कथं विजेष्ये तं मातरुपायं मेऽखिलं वद ।
एकविंशतिवारञ्च कथं नि:क्षत्रियां धराम् ।।४।।

करिष्ये वद तत्सर्वं त्वत्प्रसादाज्जयो भवेत् ।
अतुला मम कीर्तिश्च सर्वलोकेषु विश्रुता ।।५।।

मातोवाच

विजयस्ते भवेत्पुत्र ! शङ्कराराधनं कुरु ।
तुष्टे तस्मिन् महादेवे सर्वं सेत्स्यति वाञ्छितम् ।।६।।

इति तद्वचनं श्रुत्वा राम: कैलासमाययौ ।
प्रणम्य मातृचरणावाशिषं प्रतिगृह्य च ।।७।।

तत्रापश्यन् महादेवं रत्नसिंहासने स्थितम् ।
बद्धाञ्जलिपुटो रामो नत्वा तुष्टाव तं तदा ।।८।।

राम उवाच

नमो देवदेवेश ! गौरीश ! शम्भो !
नमो विश्वकर्त्रे नमो विश्वभर्त्रे ।
नमो विश्वहर्त्रे नमो विश्वमूर्ते !
नमो विश्वधाम्ने नमश्चन्द्रधाम्ने ।।९।।

**व्यासले भन्नुभयो-** बालक परशुरामले एक्लै सहस्रबाहु लाखौं सेनाले सम्पन्न कार्तवीर्यका विरुद्ध कसरी युद्ध गरे र तिनलाई जिते ? यो कुरा मलाई विस्तारपूर्वक भन्नुहोस् ।

**ब्रह्माजीले भन्नुभयो -** एकदिन परशुरामले आफ्नी माता रेणुकासँग सोधनी गरे ।।१-२।।

**परशुरामले भने -** हे आमा! जुन वीरबाट हुने त्रासले काँप्दै इन्द्र आदि देवताहरू काँप्तछन्, जोसँग असङ्ख्य हात्ती, रथ, घोडा र पैदल सेना छन्, ती कार्तवीर्यलाई मैले कसरी जितूँ, त्यसको उपाय मलाई बताउनुहोस्। मैले २१ पटकसम्म पृथिवीमा घुमेर पृथिवीलाई क्षत्रियरहित कसरी बनाऊँ? त्यो उपाय पनि मलाई बताउनुहोस्। यसका साथै हजुरको कृपाबाट मलाई विजय प्राप्त होस् । सबै लोकमा म प्रख्यात हुन पाऊँ । सम्पूर्ण लोकहरूमा मेरो अनुपम कीर्ति फैलियोस्। यी सबै कुरा सम्पन्न गर्न के उपाय हुन सक्छ ? ।।३-५।।

**रेणुकाले भनिन्-** बाबु ! तिम्रो विजय हुनेछ । यसमा कुनै सन्देह छैन । तर युद्धमा जानुभन्दा पहिले तिमीले भगवान् शङ्करको आराधना गर। उहाँ प्रसन्न हुनुभएमा तिम्रा सबै इच्छा पूरा हुनेछन् ।।६।। आमाका ती कुरा सुनेर उहाँको पाउमा प्रणाम गरी आशीर्वाद लिएर परशुराम कैलासतर्फ गए।।७।। त्यहाँ तिनले रत्नको सिंहासनमा विराजमान भगवान् शङ्करको दर्शन पाएपछि करबद्ध प्रार्थना गरे ।।८।।

**परशुरामले भने -** हे देवताका पनि देवता ! गौरीपति शङ्कर ! हजुरलाई प्रणाम गर्दछु । विश्वको रचना गर्नुहुने हे शिवजी! हजुरलाई प्रणाम गर्दछु । विश्वको पालन गर्नुहुने हे शिवजी ! हजुरलाई प्रणाम गर्दछु । विश्वको संहार गर्नुहुने हे शिवजी! म हजुरलाई प्रणाम गर्दछु । हे विश्वमूर्ति भगवान् शिवजी! हजुरलाई प्रणाम गर्दछु । हे विश्वधाम भगवान् शिवजी! हजुरलाई नमस्कार गर्दछु । चन्द्रमालाई शिरमा धारण गर्नुहुने हे सदाशिव! हजुरलाई प्रणाम गर्दछु ।।९।। निर्मल ज्ञानका आधार, निर्गुण स्वरूप हे शिवजी ! हजुरलाई प्रणाम गर्दछु । निराकार र साकार दुबै स्वरूपमा विराजमान हुनुहुने नित्यस्वरूप हे

नमो निर्गुणायामलज्ञानहेतो !
निराकार ! साकार ! नित्याय तेऽस्तु ।
नमो वेदवेदान्तशास्त्रातिगाय
नमोऽव्यक्तव्यक्तात्मने सत्स्वरूप ।।१०।।
गुणत्रयप्रबोधाय गुणातीताय ते नमः ।
नमः प्रपञ्चविदुषे प्रपञ्चरहिताय ते ।।११।।

क उवाच

इति स्तोत्रं समाकर्ण्य परितुष्टो महेश्वरः ।
उवाच राममामन्त्र्य तृप्तो वाक्यामृतेन ते ।।१२।।
वरं वृणीष्व मत्तस्त्वं यं यं कामयसे हृदि ।
जानामि जामदग्न्यं त्वां रेणुकातनयं द्विज ।।१३।।

राम उवाच

कार्तवीर्येण दुष्टेन कामधेनुमपेक्षता ।
जमदग्निर्हतो रोषादपराधं विना प्रभो ।।१४।।
रेणुका ताडिता बाणैः समन्ताज्जननी मम ।
एकविंशतिसङ्ख्याकैर्भुक्त्वाऽपि सेनया सह ।।१५।।
जहि तं दुष्टनृपतिमिति मात्रा नियोजितः ।
त्वामहं शरणं यात उपायं वद तद्वधे ।।१६।।
त्रिःसप्तवारं तेनैव कुर्यां निःक्षत्रियां महीम् ।

क उवाच

एवं विदिततत्त्वार्थो महादेवो जगाद तम् ।।१७।।
आलोक्य प्रणिधानेन जयोपायं सुखावहम् ।
षडक्षरं महामन्त्रं द्विरदाननतोषकम् ।।१८।।
कथयामास रामाय जपं कुरु प्रयत्नतः ।
लक्षमात्रञ्च होमञ्च दशांशेन समाचार ।।१९।।
तर्पणं तद्दशांशेन तद्दशांशेन भोजनम् ।
ब्राह्मणानां महाभक्त्या प्रसन्नो भविता भुवि ।।२०।।
गजाननो देवदेवः सर्वकार्यं करिष्यति ।
इति तद्वचनं श्रुत्वा प्रणम्य भवमादरात् ।।२१।।

शिवजी ! हजुरलाई प्रणाम गर्दछु। वेद र वेदान्त शास्त्रभन्दा पनि पर रहनुभएका हे शिवजी ! हजुरलाई प्रणाम गर्दछु । सत्स्वरूप, व्यक्तस्वरूप र अव्यक्तस्वरूपमा रहनुहुने हे शिवजी ! हजुरलाई प्रणाम गर्दछु।।१०।। सत्त्व, रज र तमो गुणलाई जगाउने हुने तर आफू गुणदेखि पर रहनुभएका हे शिवजी ! हजुरलाई प्रणाम गर्दछु । सम्पूर्ण प्रपञ्चलाई जान्नुहुने तर स्वयं प्रपञ्चदेखि पर रहनुभएका हे शिवजी ! हजुरलाई प्रणाम गर्दछु ।।११।।

**ब्रह्माजीले भन्नुभयो-** परशुरामद्वारा गरिएको यो स्तुति सुनेर प्रसन्न हुनुभएका भगवान् शिवजीले परशुरामलाई भन्नुभयो- हे बाबु ! म तिम्रो वचनामृत पिएर तृप्त भएको छु ।।१२।। तिमीले आफ्नो मनमा जे कुरा चिताएका छौ, तिनको पूर्णताका लागि म वरदान दिनेछु, तिमीले माग । हे उत्तम ब्राह्मण ! रेणुका र जमदग्निका छोरा भएकाले तिमीलाई म राम्ररी चिन्छु ।।१३।।

**परशुरामले भने -** हे शिवजी ! कामधेनुको चाहना गर्ने दुष्ट कार्तवीर्यले मेरा पिता जमदग्निको आश्रममा आई सेनासहित भोजन गरी आतिथ्य स्वीकार गरे पनि ती सबै कुरा बिर्सेर विना अपराध मेरा पिता जमदग्निको हत्या गरे । त्यसपछि तिनले मेरी निरपराध आमा रेणुकाका सर्वाङ्गमा एक्काइस बाण प्रहार गरे । मरणासन्न हुनुभएकी मेरी आमा रेणुकाले ती दुष्ट राजा कार्तवीर्यको बध गर भनी आज्ञा दिनुभएअनुसार म अहिले दुष्ट राजा कार्तवीर्यको बधको उपाय पत्तालगाउन हजुरको शरणमा आएको छु । हजुरले मलाई त्यो उपाय बताइदिनुहोस् ।।१४-१६।। हजुरबाट प्राप्त उपायकै आधारमा मैले एक्काइसपटक पृथिवीमा घुमीघुमी पृथिवीलाई क्षत्रियरहित तुल्याउने छु ।

**ब्रह्माजीले भन्नुभयो -** परशुरामको प्रार्थनाबाट समस्याको यथार्थ जानकारी पाउनुभएका भगवान् शिवजीले ध्यानदृष्टिबाट सुखदायक विजयको उपाय पत्ता लगाउनु भएपछि श्रीगणेशलाई सन्तुष्ट तुल्याउने ६ अक्षर भएको महामन्त्रको उपदेश गर्दै भन्नुभयो।।१७-१८।। हे परशुराम ! तिमीले ठूलो भक्तिका साथ यस मन्त्रको एक लाख जप गर। त्यसको दशांश हवन गर । हवनको दशांश ब्राह्मण भोजन गराऊ । तिम्रो उक्त कार्यबाट भगवान् गजानन प्रसन्न हुनुहुनेछ र तिम्रा सबै कार्यलाई सफल तुल्याउनु हुनेछ । सदाशिवजीका

आज्ञां गृहीत्वा रामोऽसावचलायां भ्रमन् भ्रमन् ।
कृष्णाया उत्तरे देशेऽपश्यत् स्थानमनुत्तमम् ।।२२।।

नानावृक्षलताजालैरभिरामं सुसिद्धिदम् ।
तत्राऽकरोदनुष्ठानं यथोक्तं तेन शम्भुना ।।२३।।

इन्द्रियाणाञ्च मनसो वृत्तिं स्थाप्य गजानने ।
आवर्तयन् महामन्त्रमेकाङ्गुष्ठस्थितो द्विज: ।।२४।।

जुहाव तर्पयामास भोजयामास वै द्विजान् ।
दशांशेन दशांशेन दशांशेन यथाक्रमम् ।।२५।।

तत: प्रसन्नो भगवानाविरासीद् गजानन: ।
चतुर्भुजो महाकायो महामायोऽतिसुन्दर: ।।२६।।

नागयज्ञोपवीती च नानालङ्कारशोभित: ।
मुकुटी कुण्डली भ्राजच्चारुगण्डो लसन्मुख: ।।२७।।

मुक्ताप्रवालमालाभिर्भ्राजद्वक्षा महाभुज: ।
परशुं कमलं दन्तं मोदकाँश्च दधद् भुजै: ।।२८।।

पुष्करं पुष्करे धृत्वा भ्रामयन् स्वेच्छया विभु: ।
प्रभया भासयन् सर्वा दिशो विदिश एव च ।।२९।।

ददर्श रामोऽकस्मात् तं न्यमीलयत चाक्षिणी ।
तत्तेजसा प्रतिहते ततस्तुष्टाव तं द्विज: ।।३०।।

राम उवाच

सहस्रादित्यसङ्काश ! नमस्ते जगदीश्वर! ।
नमस्ते सर्वविद्येश ! सर्वसिद्धिप्रदायक ! ।।३१।।

विघ्नानां पतये तुभ्यं नमो विघ्ननिवारण ! ।
सर्वान्तर्यामिणे तुभ्यं नम: सर्वप्रियङ्कर! ।।३२।।

भक्तप्रियाय देवाय नमो ज्ञानस्वरूपिणे ।
नमो विश्वस्य कर्त्रे ते नमस्तत्पालकाय च ।।३३।।

निवारय महाविघ्नं तपोनाशकरं मम ।

वचन सुनेर उहाँलाई आदरपूर्वक प्रणाम गरी आज्ञासमेत लिएर पृथिवीमा घुम्दै जाँदा परशुरामले कृष्णा नदीको उत्तर भागमा एउटा उत्तम स्थान देखे ।।१९-२२।। त्यो ठाउँ अनेक थरि वृक्ष र लताको समूहले सुन्दर र सिद्धिदायक थियो । परशुरामले त्यहाँ रहेर भगवान् शिवजीले बताउनुभएको विधिअनुसार इन्द्रिय र मनका वृत्ति भगवान् श्रीगणेशमा लगाई खुट्टाको बूढी औंलाले टेकी उभिएर महामन्त्रको आवृत्ति गर्दै जपानुष्ठान गरिरहे । जपको दशांश हवन गरे, हवनको दशांश तर्पण गरे र तर्पणको दशांश ब्राह्मणभोजन गराए ।।२३-२५।। त्यसपछि परशुरामको अनुष्ठानबाट प्रसन्न हुनुभएका भगवान् गजानन प्रकट हुनुभयो। चतुर्बाहु, विशालकाय, महामायाका स्वामी, अति सुन्दर स्वरूपले सुहाउनुभएका, नागरूप यज्ञोपवीत धारण गर्नुहुने, नाना अलङ्कारद्वारा अलङ्कृत, सुन्दर मुकुटधारी, आकर्षक कुण्डलद्वारा सुशोभित, मनोहर एवं चम्किला गण्डस्थलले सुहाउनुहुने, आकर्षक मुखमण्डलले सुहाउनुभएका, मोती र मुगाको मालाद्वारा प्रकाशमान, दीर्घबाहु, भुजाहरूमा परशु, कमल, एकदन्त र लड्डू धारण गर्नुहुने, आफ्नो सुन्दर सूँढमा अत्यन्त राम्रो कमलको फूल धारण गरी त्यसलाई इच्छाअनुसार घुमाइरहनुभएका, सबैका घट-घटमा विराजमान हुनुहुने भगवान् श्रीगणेश आफ्नो दिव्यकान्तिबाट दिशा र विदिशालाई आभासित गर्दै उपस्थित हुनुहुन्थ्यो । परशुरामले ज्योतिर्मय भगवान्को दर्शन गरे तर तेज सहन नसकी अकस्मात् दुवै आँखा चिम्लिए। त्यसपछि तिनले भगवान् श्रीगणेशको स्तुति गरे ।।२६-३०।।

**परशुरामले भने** - सहस्र सूर्यको प्रभासमान प्रभाधारण गर्नुहुने हे जगदीश्वर ! हजुरलाई प्रणाम गर्दछु । सबै विद्याका स्वामी, सबै प्रकारका सिद्धिदाता हे श्रीगणेश! हजुरलाई प्रणाम गर्दछु।।३१।। हे विघ्ननाथ! सबै विघ्नहरूमाथि नियन्त्रण कायम गर्नुहुने हजुरलाई प्रणाम गर्दछु । सबैका घट-घटमा विराजमान हुनुहुने र सबैका लागि प्रिय कार्य सम्पादन गर्नुहुने हे भगवन् श्रीगणेश ! हजुरलाई प्रणाम गर्दछु ।।३२।। भक्तहरूका प्यारा र भक्तहरूलाई प्यारो गर्ने ज्ञानरूपधारी दिव्य गुणसम्पन्न श्रीगणेशलाई प्रणाम गर्दछु । संसारका रचयिता र पालक श्रीगणेशलाई प्रणाम गर्दछु ।।३३।। हे प्रभो ! मेरो तपस्या नाश गर्ने महाविघ्नलाई निवारण गरिदिनुहोस् ।

क उवाच

इति स्तुतिं समाकर्ण्य सौम्यतेजा गजाननः ।।३४।।
उवाच रामं सम्भ्रान्तं स्वस्यैव तिग्मतेजसा ।

गणेश उवाच

यं ध्यायसि दिवारात्रौ मन्त्रं जप्त्वा षडक्षरम् ।।३५।।
वरं दातुं समायातः सोऽहं राम ! तवाधुना ।
वरं वृणीष्व मत्तस्त्वं यद् यद् वाञ्छसि चेतसा ।।३६।।
ब्रह्माण्डानामनेकानां स्त्रष्टा पाताऽपहारकः ।
नैव जानन्ति मे रूपं ब्रह्माद्या मुनयोऽपि च ।।३७।।
राजर्षयश्च सर्वेऽपि सोऽहं ते दर्शनङ्गतः ।

राम उवाच

योऽप्रमेयोऽखिलाधारः सृष्टिसंहारकारकः ।।३८।।
यो न वेदैर्न तपसा न यज्ञैर्व्रतसञ्चयैः ।
न दानैर्नैव योगैश्च जनानां दृष्टिगोचरः ।।३९।।
सोऽयं त्वं हि मया दृष्टोऽनुग्रहात् तव विघ्नप !।
किमन्यद् वरये देव ! भक्तिं देहि निजां दृढाम् ।।४०।।

गणेश उवाच

भविता मम भक्तिस्ते दृढा राम ! द्विजोत्तम ! ।
प्रलोभितस्यापि वरैर्न ते बुद्धिः सुविह्वला ।।४१।।
परशुं मे गृहाण त्वं सर्वशत्रुनिबर्हणम् ।
नाम ते पर्शुरामेति त्र्यैलोक्ये ख्यातिमेष्यति ।।४२।।

क उवाच

एवं तस्मै वरं दत्त्वा परशुञ्च गजाननः ।
पश्यतां सर्वलोकानामन्तर्धानं ययौ तदा ।।४३।।
रामोऽपि स्थापयामास महागणपतिं तदा ।
ब्राह्मणैर्वेदवेदाङ्गशास्त्रविद्भिः समं मुदा ।
ब्राह्मणान् भोजयामास दत्त्वा दानान्यनेकशः ।।४४।।
प्रासादं कारयामास रत्नस्तम्भयुतं दृढम् ।
सम्पूज्य तं परिक्रम्य प्रणिपत्य गजाननम् ।।४५।।
रामः प्रसन्नमनसा प्रययौ निजमन्दिरम् ।
ततो रामो जुहावोच्चैः कार्तवीर्यधरापतिम् ।।४६।।

**ब्रह्माजीले भन्नुभयो** - परशुरामका स्तुतिवचन सुनेर सौम्यकान्ति धारण गर्नुहुने भगवान् गजाननले आफ्नो प्रचण्ड तेजबाट आत्तिएका परशुरामलाई भन्नुभयो ।

**श्रीगणेशले भन्नुभयो** - हे परशुराम ! तिमीले निरन्तर अहोरात्र ६ अक्षर भएको महामन्त्र जप्दै जुन पुरुषको ध्यान गरिरहेका छौ, त्यो पुरुष म तिमीलाई वर प्रदान गर्न अहिले तिम्रा सामु प्रकट भएको छु । तिमीले आफ्नो मनद्वारा जुन जुन कामना चिताएका छौ, ती सबै बताऊ र मैले दिएका वर स्वीकार गर ।।३४-३६।। अनेक ब्रह्माण्डहरूका स्रष्टा, पालक र संहारक ब्रह्मा, विष्णु, शिव तथा ऋषि एवं राजर्षिहरूले पनि जसको स्वरूप जान्न सक्दैनन्, त्यो म श्रीगणेश तिम्रा सामु उपस्थित भएको छु ।

**परशुरामले भने** - सबैका आधार, प्रमाद्वारा अप्रमेय, सृष्टि र संहारका कारक जुन भगवान् श्रीगणेश वेद, तपस्या, यज्ञ, व्रतसमूह, दान र योगबाट पनि मानिसहरूका दृष्टिपथमा आउनुहुन्न, त्यस्ता भगवान् आज मेरो आँखासामु आउनुभएको छ। हे प्रभो! मैले हजुरसँग के याचना गरूँ ? मलाई दृढभक्ति प्रदान गर्नुहोस्।।३७-४०।।

**श्रीगणेशले भन्नुभयो**- हे परशुराम ! तिम्रो ममा सुदृढ भक्ति हुनेछ । वरदानद्वारा लोभ्याउँदा पनि तिम्रो बुद्धि विचलित भएन्। म तिमीलाई सबै शत्रुहरूको संहार गर्नसक्ने परशु (बञ्चरो) दिन्छु, तिमीले ग्रहण गर । यसलाई ग्रहण गरेपछि संसारमा तिमी परशुरामका नामबाट विख्यात हुनेछौ ।।४१-४२।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी परशुरामलाई वरदान र परशुसमेत प्रदान गरी सबैले हेर्दाहेर्दै भगवान् गजानन अन्तर्धान हुनुभयो ।।४३।। परशुरामले पनि हर्षपूर्वक वेद-वेदाङ्गका ज्ञाता ब्राह्मणहरूलाई साथमा लिएर महागणपतिको मूर्तिप्रतिष्ठा गरे। त्यसपछि तिनले ब्राह्मण भोजन गराई अनेक थरि दान पनि दिए । तत्कालै रत्नहरूका स्तम्भले शोभायमान, बलियो र राम्रो श्रीगणेशको मन्दिर तयार गरी स्थापित मूर्तिको पूजा गरेर परिक्रमा पनि गरी प्रसन्न मनका साथ परशुराम आफ्नो घर फर्के । घर पुगेपछि परशुरामले राजा कार्तवीर्यलाई युद्ध गर्न आह्वान गरे ।।४४-४६।। युद्धमा तिनले आफ्नो

युद्धे तु शातयामास राज्ञो बाहुसहस्रकम् ।
निःक्षत्रियाञ्च पृथिवीं चक्रे त्रिसप्तवारत: ।।४७।।

ब्राह्मणेभ्यो ददौ पृथ्वीं यज्ञं कृत्वा सदक्षिणम् ।
पुपूजुस्तं तदा लोका ज्ञात्वा विष्णुं तमीश्वरम् ।।४८।।

दृष्ट्वा पराक्रमं तस्य सर्वदेवातिगं दृढम् ।
एवं नानाविधो ब्रह्मन् ! महिमा ते निरूपित: ।।४९।।

गजाननस्य देवस्य संक्षेपेण मया सुत ! ।
निखिलेन न शेषोऽपि क्षमो वक्तुं मुनीश्वर ।।५०।।

उपासनाखण्डमिदं शृणुयान्मानवो भुवि ।
सर्वान् कामानवाप्नोति गाणेशं धाम चाप्नुयात् ।।५१।।
यथेष्टं रमते तत्र यावदाभूतसम्प्लवम् ।।५२।।

बञ्चरोद्वारा सहस्रबाहु कार्तवीर्यका एक हजार हात काटिदिए। एक्काइस पटकसम्म पृथिवी घुमेर पृथिवीलाई क्षत्रियविहीन बनाए । यज्ञयाग गरी ब्राह्मणहरूलाई दक्षिणासहित पृथिवी दान गरे । त्यसपछि संसारका मानिसहरूले देवताहरूको भन्दा पनि महत्त्वपूर्ण, दृढ एवं अलौकिक परशुरामको पराक्रम देखेर तिनलाई भगवान् विष्णुका अवतार जानी पूजा गर्न थाले । हे वेदव्यास! यसरी मैले तपाईँलाई अनेकरूपबाट दृष्टान्त दिएर श्रीगणेशको महिमा बताएँ । समग्र महिमा बताउन हजार मुख भएका शेषनाग पनि असमर्थ छन् ।।४७-५०।। जुन मानिसले श्रीगणेशपुराणको यो उपासना खण्ड सुन्दछ, त्यो सम्पूर्ण कामना पूरा गरी अन्तमा भगवान् श्रीगणेशको दिव्यधाममा प्राप्त हुनेछ। जबसम्म महाप्रलय हुँदैन, तबसम्म त्यो पुण्यवान् भक्त श्रीगणेशधाममा आनन्दपूर्वक विराजमान हुनेछ ।।५१-५२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे रामवरदानं नाम द्व्यशीतितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'मयूरेशक्षेत्रमा श्रीगणेशको आराधना गरिरहेका परशुरामलाई श्रीगणेशको दर्शन र वरप्राप्ति' शीर्षकान्वित बयासीऔँ अध्याय पूर्ण भयो ।।८२।।

ॐ

## त्र्यशीतितमोऽध्याय:　{ ८३ अध्याय }

मुनिरुवाच

कस्मिन् स्थाने तपोऽकारि रामेण परमाद्भुतम् ।
तन्मे कथय लोकेश ! तृप्तिर्मे नास्ति शृण्वत: ।।१।।

क उवाच

मयूरेश्वरनाम्ना यत् क्षेत्रं ख्यातं चतुर्युगे ।
यत्रावतीर्णो देवेशो मयूरारूढ एव स: ।।२।।

कमलासुरनामानमहनद् दैत्यपुङ्गवम् ।
यस्मान्मयूरमारूढो मयूरेश इति स्फुटम् ।।३।।

संस्तुतो देवमुनिभिर्लोके तां ख्यातिमागमत् ।
तत्रानुष्ठानमकरोदवाप परशुं तत: ।।४।।

स्वयं परशुरामोऽभून्नाम्ना ख्यातस्त्रिविष्टपे ।
इतिहासं प्रवक्ष्यामि शृणु तं मुनिसत्तम ।।५।।

तारको नाम दैत्योऽभून्महाबलपराक्रम: ।
दिव्यवर्षसहस्रं स तपस्तेपे सुदारुणम् ।।६।।

तत: प्रसन्नो ब्रह्माऽस्मै ददौ सर्वाभयं द्विज ! ।
देवर्षियक्षगन्धर्वोरगराक्षसहस्तत: ।।७।।

तच्छस्त्रास्त्रगणान् मृत्युर्न ते क्वापि भवेदिति ।
उत्पत्स्यते यदा स्कन्दस्ततस्ते मरणं भवेत् ।।८।।

इति तद्वाक्यमाकर्ण्य बलगर्वसमायुत: ।
तारकोऽपीडयल्लोकाँस्त्रैलोक्ये वसतो मुने ।।९।।

वेदाध्ययननिष्ठाँश्च तपोऽनुष्ठानकारिण: ।
अग्निहोत्ररतानन्यान् कारागारेऽक्षिपद् द्विजान् ।।१०।।

सर्वान् राज्ञोऽथ नागाँश्च वशे कृत्वा दिवं ययौ ।
इन्द्रादयस्तदा देवा हिमाचलगुहां गता: ।।११।।

**व्यासले भन्नुभयो** - लोकका स्वामी हे भगवन् ! परशुरामले कुन स्थानमा रहेर आश्चर्यजनक तपस्या गर्नुभयो? त्यो विषयमा मलाई आज्ञा गर्नुहोस् । श्रीगणेशसम्बन्धी यी उत्तम कथापान गरेर मेरो मन तृप्त हुँदैन ।।१।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! चारै युगमा जुन क्षेत्र मयूरेश्वर क्षेत्रको नामबाट प्रसिद्ध छ, जहाँ मयूरमा सवार हुनुभएका भगवान् श्रीगणेशले मयूरेशका रूपमा अवतार लिनुभएको थियो । जहाँ भगवान् श्रीगणेशले मयूरमा सवार भएर कमलासुरनामक दैत्यको वध गर्नुभएको थियो र जहाँ देवता र ऋषिहरूले भगवान् श्रीगणेशको मयूरेश्वरका नामबाट विशिष्ट स्तुति गरेका थिए । त्यस क्षेत्रमा गरिएका विलक्षण लीलाहरूले गर्दा भगवान् श्रीगणेश मयूरेशका रूपमा जगत्मा विख्यात हुनुभयो । त्यसै पवित्रक्षेत्रमा तपस्या गरी परशुरामले भगवान् श्रीगणेशबाट परशुलाभ पनि गर्नुभयो। त्यस परशुका कारण नै उहाँ संसारमा परशुरामका नामबाट प्रसिद्ध हुनुभयो। हे वेदव्यास ! म तपाईँलाई एउटा इतिहास सुनाउँछु, तपाईँ सुन्नुहोस् ।।२-५।। अपरिमित बल र पराक्रमले सम्पन्न तारकनामक दैत्य थियो। त्यसले दिव्य एक हजार वर्षसम्म कठोर तप गरेको थियो । त्यसको तपबाट प्रसन्न हुनुभएका ब्रह्माजीले 'तिमीलाई कसैबाट भय हुने छैन, देवता, ऋषि, गन्धर्व, सर्प र राक्षसको हातबाट पनि तिम्रो मृत्यु हुनेछैन, तिनका ती शस्त्र-अस्त्रबाट पनि तिम्रो मृत्यु हुने छैन, परन्तु जब धर्तीमा शिवपुत्रका रूपमा स्कन्दको उत्पत्ति हुनेछ ती शिवपुत्रबाट नै तिम्रो मृत्यु हुनेछ' भन्ने वरदान दिनुभयो।।६-८।। ब्रह्माजीबाट वरदान पाएर बल र अभिमानले मत्त तारकासुरले त्रिलोकीका सबै प्राणीलाई कष्ट दिँदै वेदाध्ययनशील, तपस्या एवं अनुष्ठान गर्ने र अग्निहोत्रमा लागिरहने ब्राह्मणहरूलाई कारागारमा लगेर थुन्ने काम गर्‍यो ।।९-१०।। पृथिवीका सबै राजा र पातालका नागहरूलाई आफ्नो अधीनमा तुल्याएर देवलोकमा पुग्यो । त्यस बेला तारकासुरसँग भयभीत इन्द्र आदि देवताहरू हिमालयका गुफामा लुक्न गए ।।११।। तारकासुरको डरले

तद्भयात्राभवत् क्वापि यजनं पूजनं तथा ।
अहमेवेश्वरो देवो ब्राह्मणः कुलदेवता ।।१२।।

अहं नमस्यः पूज्यश्च नान्यो जगति वर्तते ।
यश्चान्यान् प्रणमेत् क्वापि पूजयेद् वा कदाचन।।१३।।

स दण्ड्यस्ताडनीयः स्याद् गच्छेद् वा यमसादनम् ।
एवं सर्वेषु लोकेषु ख्यापयामास दूततः ।।१४।।

ततः सर्वे जना रिक्ता जाताः सज्जनवर्जिताः।
निःस्वाध्यायवषट्कारा यज्ञदानविवर्जिताः।।१५।।

उच्छिन्नकुलधर्माश्च स्वाचाररहिताः खलाः ।
मुनयः साधवः सर्वे गिरिगह्वरमाश्रिताः ।।१६।।

देवं ते प्रार्थयामासुः कथं दैत्यो विवर्द्धितः ।
विना त्वां शरणं शम्भो ! यामः कं जगदीश्वरम् ।।१७।।

निर्माता रक्षिता धाता संहर्ता जगतां विभो ! ।
दावानलो वनमिव दहतेऽस्मान् स दर्पतः ।।१८।।

यदि ते संजिहीर्षा स्यात् संहरस्व स्वयं जगत् ।
नो चेत् संहर दैत्यं त्वं तारकं सर्वपीडकम् ।।१९।।

एवं सम्प्रार्थ्य तेपुस्ते दुष्करं तप उत्तमम् ।
पत्रभक्ष्या वायुभक्ष्या निराहारा जलाशिनः ।।२०।।

एवं स्थितेषु मुनिषु तेनाज्ञातेषु दैत्यराट् ।
ऐन्द्रं पदं समास्थाय ब्रह्माणं समताडयत् ।।२१।।

विष्णुस्ततोऽगमत् क्षीरसागरं निद्रितुं मुने ! ।
त्यक्त्वा कैलासमगमच्छङ्करोऽपि गुहान्तरम् ।।२२।।

दिक्पाला दिग्गजाश्चापि नानागह्वरमाश्रिताः ।
तेषां स्थानेऽस्थापयत् स दैत्यानन्याँश्च दैत्यराट् ।।२३।।

अचलामचलस्तिष्ठन् पालयामास वै प्रजाः ।
गर्जने स्वस्वभावेन कम्पतेऽथ त्रिपिष्टपम् ।।२४।।

संसारमा कहीं पनि यज्ञ र पूजा भएनन् । 'म नै ईश्वर र देवता हुँ, म नै ब्राह्मण र कुलदेवता हुँ, नमस्कार र पूजाको योग्यपात्र पनि म नै हुँ, संसारमा मभन्दा बाहेक अरू कुनै पनि वन्दनीय र पूजनीय छैन, जसले अरूलाई प्रणाम गर्दछ र अरूको पूजा गर्दछ, त्यो प्राणी दण्डनीय हुनेछ, त्यो ताडनीय हुनेछ र त्यसले यमलोकको बाटो तताउनुपर्नेछ ।' यो सन्देश तारकासुरले सबैमा पुऱ्यायो ।।१२-१४।। त्यसपछि पूजा-आजा र अनुष्ठान गर्न नपाएका मानिसहरू दुःखित भए र केही नभएजस्ता रित्ता पनि भए । समाजमा कुनै सज्जन रहेनन् । स्वाध्याय, वषट्कार, यज्ञ र दानबाट वर्जित, कुलधर्मरहित, आचारहीन र सत्यहीन दुर्जनहरूको मात्र समाजमा बिगबिगी भयो । सबै सज्जन र मुनिहरू पर्वतका गुफामा आश्रय लिएर बस्न थाले।।१५-१६।। पर्वत र कन्दरामा आश्रित ऋषि, मुनि र साधुहरूले भगवान् शङ्करसँग प्रार्थना गरे- हे प्रभो ! यो तारकासुर कसरी बढ्यो र किन बढ्यो ? उसको अत्याचारले गर्दा कसैलाई पनि बसिसक्नु भएन । हे शङ्कर ! हजुरलाई छाडी हामी कसका शरणमा जाऔँ? हजुर नै संसारका निर्माता, पालक र संहारक हुनुहुन्छ । तारकासुरले गर्वपूर्वक हामीहरूलाई वनको आगोले झैं चारैतिरबाट पोलिरहेको छ ।।१७-१८।। यदि हजुरको संहार गर्ने इच्छा छ भने छिट्टै जगत्को संहार गर्नुहोस्, होइन भने सबैलाई पीडा दिने तारकासुरको वध गर्नुहोस्। यसरी प्रार्थना गर्दै कसैले पात, पानी र हावा खाएर, कसैले केही पनि नखाएर दुष्कर एवं उत्तम तपस्या गरे ।।१९-२०।। तारकासुरदेखि डराई लुकेका ती मुनि र सज्जनहरूले यसरी कठोर तप गरिरहेको बेला तारकासुरले इन्द्रको पदमा कब्जा गरी ब्रह्माजीलाई पनि ताडना गऱ्यो ।।२१।। यो थाहा पाएर भगवान् विष्णु क्षीरसागरमा शयन गर्न जानुभयो र शिवजी पनि कैलास छाडेर कुनै गुफामा गई लुक्नु भयो ।।२२।। दिग्गज र दिक्पालहरू अनेक गुफाहरूमा गई लुकेर रहन लागे । ती दिक्पाल र दिग्गजहरूको ठाउँमा तारकासुरले आफ्ना दैत्यवीरहरूलाई नियुक्त गऱ्यो ।।२३।। पृथिवीमा अचल भएर रहेको त्यस दैत्यले प्रजाहरूमाथि कठोर शासन गऱ्यो । जुन बेला त्यो दैत्य आफ्नो स्वभावअनुसार गर्जन गर्दथ्यो त्यस बेला स्वर्ग पनि कम्पायमान हुन्थ्यो ।।२४।। त्यसपछि

तत इन्द्रादयो देवास्तुष्टुवुर्गिरिगह्वरे ।
गिरिशं गिरिजानाथं गिरा गम्भीरया मुदा ।।२५।।

देवा ऊचुः

देवाधिभूमिगगनेनशशिस्वरूप !
वाय्वग्निरूपयजमानजलस्वरूप ! ।
त्वं स्थावरानथ चरान् सृजसेऽवसीश !
त्वं सर्वमेव हरसे निजयेच्छयेश ! ।।२६।।

तत्रोचितं त्वयि परे परदुःखहारिन्
स्वीयं यशः परगतं बहुधाऽद्य कर्तुम् ।
तन्नाशयैनमव तान् सकलान् मुनींश्च
देवान् द्वयोश्च भजने परिविष्टचित्तान् ।।२७।।

कं वा व्रजेम शरणं त्वदृते गिरीश !
कं वा भजेम भगवँस्त्वदृते महेश ! ।
कं वा वदेम वृजिनार्दन पार्वतीश !
को वाऽवितुं प्रभवति त्वदृतेऽखिलेश ! ।।२८।।

क उवाच

एवं ते तुष्टुवुर्यावच्छुश्रुवुस्तावदेव हि
नभोवाणीं सर्वदेवा हरपुत्रो यदा भवेत् ।।२९।।

तदाऽस्य नाशो भविता यत्नं कुरुत तत्र वै ।
नभोवाणीं समाकर्ण्य सर्वे हर्षसमन्विताः ।।३०।।

कैलासं देवनिलयमापुरिन्द्रादयः सुराः ।
नापश्यन् शङ्करं तत्र ददृशुः पुरतोऽमराः ।।३१।।

मूलप्रकृतिरूपां तामुमां सर्वे विजिज्ञपुः ।
तारके तारकज्ञानप्रदे तारय तारकात् ।।३२।।

हिमालयमा लुकेका इन्द्र आदि देवताहरूले पार्वतीपति शङ्करको गम्भीर वाणीद्वारा स्तुति गरे।।२५।।

**देवताहरूले भने -** अधिष्ठात्री देवता, पृथिवी, आकाश, सूर्य र चन्द्रमाका स्वरूप हे शिवजी ! वायु र अग्निका स्वरूप हे महादेव ! यजमान र जलस्वरूप हे शङ्कर ! हजुरले स्थावर र जङ्गम सबै दृश्यमान जगत्का व्यक्ति र अभिव्यक्तिहरूको, प्राणी र पदार्थहरूको सृष्टि गर्नुहुन्छ । हे ईश्वर ! हजुरले ती सबैको पालन पनि गर्नुहुन्छ । हे प्रभो ! आफ्नो इच्छा हुँदा ती सबैको संहार पनि गर्नुहुन्छ ।।२६।। हे दुःखसंहारक प्रभो ! सर्वशक्तिमान् परब्रह्म, परमात्मा, ईश्वर हजुर हुनुहुँदा पनि तारकासुरको हत्याका कारण प्राप्त हुने उज्यालो कीर्ति हजुरको हातमा आउन सकेको छैन । यो उचित भएन । प्राप्तव्य कीर्तिलाई अरूका हातमा जान दिनु हुँदैन । हे प्रभो ! त्यस कारण तारकासुरलाई छिटो मार्नुहोस्। हजुरको र पार्वतीको भजनमा नित्य मन लगाउने ती सम्पूर्ण मुनि र देवताहरूको रक्षा गर्नुहोस् ।।२७।। हे पापनाशक महादेव ! हजुरबाहेक हाम्रो अरू कुनै शरण छैन । हजुरलाई छाडी हामीले कसको भजन गरौं ? हे पापनाशक पार्वतीपति जगदीश्वर! हामीले आफ्ना दुःख कसलाई भनौं ? यस संसारमा हजुरबाहेक हाम्रो रक्षक अरू हुनै सक्दैन ।।२८।।

**ब्रह्माजीले भन्नुभयो -** यसरी देवताहरूले स्तुति गरेपछि तिनले आकाशवाणी सुने । आकाशवाणीको भनाइ थियो - 'हे देवगण ! जुन बेला भगवान् शङ्करका पुत्र जन्मने छन्, त्यस बेला तारकासुरको नाश हुनेछ । भगवान् शङ्करलाई पुत्र पैदा गराउन तपाईंहरू सबैले प्रयास गर्नुहोस् ।' यस प्रकारको आकाशवाणी सुनेर सबै देवताहरू हर्षित भए ।।२९-३०।। त्यसपछि ती देवता भगवान् शङ्करको दर्शन गर्न कैलासमा पुगे। त्यहाँ शङ्करको दर्शन पाएनन् तर मूलप्रकृतिरूप भगवती पार्वतीको दर्शन पाए । तिनले पार्वतीलाई आफ्नो आगमनको रहस्य खुलाउँदै भने - 'हे जगन्माता ! हजुर संसारलाई दुःखबाट उतार्ने तारिका हुनुहुन्छ । आफ्ना भक्तलाई संसारबाट तार्ने उत्तम ज्ञान प्रदान गर्नुहुन्छ । अहिले हामी तारकासुरबाट पीडित छौं । तारकासुरबाट हाम्रो उद्धार गर्नुहोस् ।।३१-३२।। स्वर्ग,

त्रैलोक्यपीडकाद् दुष्टात् पदभ्रष्टान् मुनीन् सुरान् ।
त्वया विचिन्त्यतां मातस्तस्य नाशो भवेद् यथा ।।३३।।

मातस्त्वां प्रणमाम देवजननीं त्रैलोक्यरक्षाकरे,
गीर्वाणि! त्रिपुरे ! परात्परकले ! ब्रह्मादिभिः संस्तुते !
त्वं वेदैरनिरूपिते ! कुरु जगत्कल्याणमीशप्रिये
स्वेच्छोपात्तसुविग्रहेऽसुरहरे विश्वादिभूतेऽनघे ।।३४।।

क उवाच

एवं सम्प्रार्थिता देवी विश्वमाता जगाद तान् ।
नभोवाणी मया ज्ञाता शङ्करः शं करिष्यति ।।३५।।

यत्रैव यान्तु सर्वेऽपि मया यत्र स शङ्करः ।
परं नियममास्थाय कुरुते परमं तपः ।।३६।।

इत्युक्त्वा सर्वदेवान् सा भिल्लीवेशमधारयत् ।
यां दृष्ट्वा परमो योगी कामबाणार्दितो भवेत् ।।३७।।

देवा अपि तदा केचिज्जाता मदनविह्वलाः ।
उर्वशी मेनका रम्भा पूर्वचिती रतिस्तथा ।।३८।।

लज्जितास्तां निरीक्ष्यैव सर्वावयवसुन्दराम् ।
ते देवाः सा च गिरिजा प्राप्ता ब्रह्मन्! शिवान्तिकम्।।३९।।

स्थाणुं तं स्थाणुभूतञ्च ध्याननिश्चललोचनम् ।
ध्यायन्तं मनसा ब्रह्म जपन्तं निष्परिग्रहम् ।।४०।।

ददृशुः सर्वदेवास्ते भिल्लनी चापि त्रिलोचनम् ।
सा ऊचेऽखिलान् देवानुमोपायं सुखावहम् ।।४१।।

मर्त्य र पाताललाई वेदनामा पुऱ्याउने तारकासुरबाट हामी पदच्युत भएका छौं । हामी देवता र ऋषिहरूको उद्धार गर्नुहोस्। हे जगदम्बा ! हजुरले त्यस्तो चिन्तन गर्नुहोस् जसको अनुसरण गर्नाले तारकासुरको वध हुन सक्छ । हे देवताहरूकी आमा! हामी हजुरलाई प्रणाम गर्दछौं। त्रिलोकीको रक्षा गर्ने हे जगदम्बा! हे त्रिपुरसुन्दरी ! हे परब्रह्मकी कला ! हे ब्रह्मादि संस्तुत परमेश्वरी ! हजुरलाई हामी बारबार प्रणाम गर्दछौं । हे भगवन् शङ्करकी प्रिया ! हे निष्पाप आत्मा भएकी देवी ! आफ्नो इच्छाले शरीर धारण गर्दै जगत्को रक्षा गर्ने हे जगदम्बा! हे असुरनाशिनी ! हजुरलाई वेदहरूले पनि यस्तो स्वरूपकी हुनुहुन्छ भनेर बताउन सक्दैनन्, हजुर संसारकी आदितत्त्वका रूपमा विराजमान हुनुहुन्छ । त्यस कारण आज हामीलगायत सबै संसारका प्राणीहरूको कल्याण गर्नुहोस् ।।३३-३४।।

**ब्रह्माजीले भन्नुभयो** – देवताहरूद्वारा यसरी प्रार्थना गरिएकी जगन्माता पार्वतीले भन्नुभयो- 'हे देवगण ! तपाईंहरूले आकाशवाणी सुनेको कुरा थाहा पाएँ । भगवान् शङ्करले तपाईंहरूको अवश्य नै कल्याण गर्नुहुनेछ)।।३५।।( अहिले तपाईंहरू मेरा साथ भगवान् शङ्कर विराजमान हुनुभएको ठाउँमा जाने उद्देश्यले प्रस्थान गर्नुहोस्। जहाँ यति बेला भगवान् शङ्कर नियम र यममा बसेर परमतपस्यामा लीन हुनुहुन्छ' ।।३६।। यसरी देवताहरूलाई भन्नुभएपछि भगवती पार्वतीले सुन्दरी किरातिनीको रूप धारण गर्नुभयो । जुन किरातिनी युवतीलाई देखेर महायोगी पनि कामबाणले पीडित हुनसक्थे ।।३७।। त्यस बेला केही देवताहरू किरातिनी भगवतीको रूप देखेर कामसन्तप्त भए। उर्वशी, मेनका, रम्भा, पूर्वचिति र रतिजस्ता विश्वसुन्दरीहरू पनि सर्वाङ्गसुन्दरी, जगन्मोहिनी, किरातिनीको रूप देखेर लज्जित भएका थिए । ती देवता र ती किरातिनी भगवती भगवान् शङ्कर तपस्यामा विराजमान हुनुभएको दिव्य स्थानमा पुगे ।।३८-३९।। त्यहाँ गएर ती देवता र किरातिनीले अत्यन्त पवित्र स्थानमा निश्चल भएर स्थाणुरूप धारण गरी मनबाट परब्रह्मको ध्यान गर्दै तपस्या गरिरहनुभएका, ॐकारको नाद लगाउनुभएका र कुनै प्रकारको साधन र सम्पत्तिरहित त्रिनयन भगवान् शङ्करको दर्शन गरे। त्यस बेला ती देवताहरूलाई किरातिनीरूप भगवतीले एउटा सुखदायक उपाय बताउँदै भनिन् – 'हे देवगण! भगवान् सदाशिवजी आफ्नो शरीरलाई

देहातीत इवास्तेऽसौ तपोनिष्ठः सदाशिवः ।
एतस्य देहभावार्थं कामं विज्ञापयन्तु च ।।४२।।

तेनेषुणा यदा विद्ध एकनिष्ठः सदाशिवः ।
यास्यते देहभावं स तदा कार्यं भविष्यति ।।४३।।

ततो देवाः सर्व एव कामं सस्मरुरुत्कटम् ।
समागतं तमूचुस्ते स्वकार्यं कृतनिश्चयाः ।।४४।।

प्रार्थयामासुरपरे स्वकार्याय मनोभवम् ।
विभुस्त्वमसि लोकानां चरेषु स्थावरेषु च ।।४५।।

त्वयैव जायते सृष्टिस्त्वया व्याप्तमिदं जगत् ।
अबलाः कामिनः सर्वे त्वयैव बलवत्तराः ।।४६।।

त्वया विना वृथा सर्वं जगत् स्थावरजङ्गमम् ।
अतस्त्वयैव कर्तव्यं सर्वेषां कार्यमुत्कटम् ।।४७।।

काम उवाच

यद्यप्यहं विसामग्रिस्तथा युष्मत्प्रसादतः ।
करिष्यामि वचः कार्यमादेहपतनावधि ।।४८।।

सुमं धनुर्मराला ज्येषुः कटाक्षोऽथ योषितः ।
विजेष्येऽथापि सकलानमरान् शङ्करावधि ।।४९।।

वसन्तं प्रतिलभ्यैव सहायं सकलं सुराः ।

क उवाच

एवमुक्त्वा गतः कामो यत्रास्तेऽसौ सदाशिवः ।।५०।।

मोहितुं शङ्करं देवं देवानां कार्यसिद्धये ।।५१।।

पनि बिर्सेर तपस्यामा लीन हुनुभएको छ । तपाइँहरूले शिवजीको मनमा देहभाव जगाउन कामदेवलाई आज्ञा दिनुहोस् ।।४०-४२।। जब कामदेवले तपस्वी शिवजीमाथि एउटा बाण प्रहार गर्नेछन्, त्यो बाण शिवजीमा लाग्नेछ । त्यसपछि उहाँ ब्रह्मभाव छाडेर देहभावमा फर्किनुहुनेछ । त्यस बेलामात्र हाम्रो कार्य सफल हुनेछ ।।४३।। त्यसपछि किरातिनीको आज्ञा पाएर देवताहरूले विशिष्टशक्तिसम्पन्न कामदेवको संझना गरे । कामदेव आएपछि आफ्नो कार्यसिद्धिका लागि निश्चय गरेका देवताहरूले उनको प्रार्थना गर्दै भने – हे कामदेव ! तपाइँ संसारका सम्पूर्ण चर-अचर पदार्थहरूमा व्यापक हुनुहुन्छ ।।४४-४५।। तपाइँकै आश्रयबाट संसारमा सृष्टि हुने गर्दछ । तपाइँले आफ्नो शक्तिबाट सम्पूर्ण जगत्लाई व्याप्त गर्नुभएको छ । सुन्दरी युवती र सुन्दर युवाहरू तपाइँकै कारणबाट संसारका आकर्षणका पात्र बन्दछन्। हे कामदेव ! तपाइँबिना चर र अचर दुवै तत्त्वबाट बनेको यो संसार व्यर्थ छ । त्यस कारण तपाइँले नै हामी देवताहरूको उपकारका लागि ठूलो काम गर्नुपर्ने भएको छ ।।४६-४७।।

**कामदेवले भने** – हे देवगण ! यद्यपि मसँग अहिले कुनै साधन र सामग्री छैन, तापनि तपाइँहरूको कृपाबाट आदेश पालन गर्न अग्रसर हुनेछु । जबसम्म मेरो शरीर रहन्छ, तबसम्म तपाइँहरूको कार्य गर्नेछु ।।४८।। मेरो धनु फूलले बनेको छ, हंसहरू ताँदोका रूपमा रहेका छन् र नारीका कटाक्ष बाणका रूपमा छन् । यस्ता सस्ता साधनको आधारमा मैले भगवान् शङ्करलगायत सबै देवताहरूलाई जित्ने अठोट गरेको छु ।।४९।। हे देवगण ! मैले युद्ध गर्दा वसन्त ऋतु मेरा सहयोगी हुने गर्दछन् ।

**ब्रह्माजीले भन्नुभयो** – यस्ता कुरा गरेर कामदेव पनि भगवान् शङ्कर विराजमान हुनुभएको धाममा उहाँलाई मोहित गर्न र देवताहरूको कार्यसिद्धि गर्न अग्रसर भए ।।५०-५१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे तारकोपाख्यानं नाम त्र्यशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'परशुरामको उत्कर्ष, तारकासुरको आतङ्क र शङ्करको तपोभङ्ग गर्न कामदेवको नियुक्ति' शीर्षकान्वित त्रियासीऔँ अध्याय पूर्ण भयो ।।८३।।

ॐ

# चतुरशीतितमोऽध्यायः { ८४ अध्याय }

क उवाच
एवमुक्त्वा गतः कामः सुरकार्यार्थसिद्धये ।
अपश्यच्छाङ्करं स्थानं वृक्षवल्लीसमाकुलम् ।।१।।

सिंहशार्दूलजुष्टञ्च पक्षिश्वापदसंयुतम् ।
स्वयञ्च निर्ममे मायावाटिकां तत्क्षणेन सः ।।२।।

सरोवराणि भूरीणि सुधारूपजलानि च ।
अनेककुसुमान् वृक्षानागव्यूति सुगन्धिनः ।।३।।

जम्ब्वाम्रवदरीवृक्षान् सुपक्वफलशालिनः ।
तथैव रम्भापनसौ नारिकेली: सखर्जुरी: ।।४।।

एलालवंगमारीचवृक्षानन्याननेकशः ।
अगृह्यमाणो गन्धोऽसौ हरनासापुटं ययौ ।।५।।

उषःकाले हरोऽपश्यज्ज्योत्स्नाजलमनोहरम् ।
अनेकफलपुष्पाढ्यं कामकाननमद्भुतम् ।।६।।

तदैव भेदयामास मानसं शूलिनस्तु सः ।
स्वीयामशोकवनिकां धिक्चक्रे मनसा शिवः ।।७।।

देहभावं गतो देवश्चिन्तयामास कारणम् ।
कृतं केन तपोविघ्नं कृतमेतद् वनं शुभम् ।।८।।

अकस्माद् रचितं केन दुष्टेनेदं गतायुषा ।
आवद्धय भ्रुकुटीं रोषादारक्तनयनोदरः ।।९।।

कामस्तु भयसन्त्रस्तो लीनः क्वापि न गृह्यते ।
इन्द्रादीनां स संस्मार स्मृतास्तेनात्र ते ययुः ।।१०।।

विमानानि समारूढाः कार्यसिद्धीच्छया सुराः ।
शिवेन ददृशे तावन् मदनोऽतिलघुः कृशः ।।११।।

दग्धुं मनोभवं नेत्रं तृतीयमुदघाटयत् ।
चकम्पे पृथिवी सर्वा स्वर्गः पातालमेव च ।।१२।।

**ब्रह्माजीले भन्नुभयो-** देवताहरूसँग वाचा गरेर कार्यसिद्धिका लागि कामदेव शङ्कर विराजमान हुनुभएको धाममा प्राप्त भए। वृक्ष र लताले परिवेष्टित, सिंह र बाघद्वारा सेवित र चराचुरुङ्गी र जङ्गली जनावरहरूद्वारा परिपूर्ण भगवान् शङ्करको तपस्यास्थलमा कामदेव पुगे । त्यहाँ गएर कामदेवले आफ्नो माया प्रयोग गरी सुन्दर उद्यानको निर्माण गरे । अमृतमय जलले सुहाएका अनेक सरोवर बनाए । चार कोशसम्म सुगन्ध फैलाउने फूलैफूलले भरिएका वृक्षपङ्क्तिको निर्माण गरे ।।१-३।। त्यसैगरी पाकेका फलले शोभायमान जामुना, आँप र बयरका वृक्षहरू तयार गरे । यसरी केरा, कटहर, नरीवल, खजूर, अलैंची, ल्वाङ र मरीचका वृक्षहरू बनाए । यी सबै वृक्षहरूमा रहेका फलफूलको सुगन्ध थाहै नपाईकन शिवजीको नाकको टुप्पालाई छुन पुग्यो।।४-५।। प्रातःकालमा भगवान् शङ्करले जुनेलीजस्तो सेतो जलले सुहाएको अनेक फलफूलले सम्पन्न कामदेवको अद्भुत बगैंचा हेर्नुभयो ।।६।। त्यसैबेला कामदेवले शिवजीको मनमा प्रवेश गरी कामाङ्कुर सञ्चार गराए। कामदेवको बगैंचा देखेर शिवजीले मनबाट आफ्नो अशोकवनलाई पनि धिक्कार गर्नुभयो ।।७।। यस्तै परिस्थितिमा शिव ब्रह्मभावबाट देहभावमा पनि फर्किनुभयो र देहका इच्छाहरू सलबलाउन लागे। शिवजीले म कसरी देहभावमा आएँ भनेर कारणको अन्वेषण गर्न थाल्नुभयो। कसले आएर मेरो तपस्यामा विघ्न गर्‍यो ? कसले यहाँ यति राम्रो बगैंचा बनायो ? कुन आयु सकिएको दुष्टले यी सारा दृश्यको रचना गर्‍यो ? यस्ता जिज्ञासा गरेपछि शिवजीले रीसले राता-राता आँखा बनाएर आँखीभौं कस्नुभयो। लुकेर रहेका कामदेव शिवजीको त्यो स्वरूप देखेर डराए र अझ पर-पर गएर लुक्न थाले । शिवजीले कहीं पनि केही देख्नुभएन। डराएका कामदेवले इन्द्र आदि देवताहरूको संझना गरे । कामदेवद्वारा संझिएका देवताहरू विमानमा सवार भएर कार्यसिद्धि गर्ने आशयले त्यो धाममा पुगे ।।८-१०।। त्यसैबेला शिवजीले पनि दुर्बलरूपमा रहेका कामदेवलाई देख्नुभयो। त्यसपछि उहाँले तेस्रो आँखा खोल्नुहुँदा त्यसबाट उत्पन्न भएको अग्निज्वालाबाट कामदेवलाई डढाउन थाल्नुभयो । कामदाह हुन थालेपछि पृथिवी काँपिन्, स्वर्ग र पाताल पनि कम्पायमान भए ।।११-१२।।

मा जहीत्यब्रुवन् देवा यावत् तावत् स नेत्रजः ।
चकार भस्मसात् कामं भस्ममात्रावशेषितम् ।।१३।।

ततो भिल्ली महेशानं प्रार्थयामास सादरम् ।
नमस्कृत्वाऽञ्जलिं बद्ध्वा त्रैलोक्यहितकाम्यया ।।१४।।

त्रैलोक्यदाहकं वह्निमुपसंहर शङ्कर ! ।
ब्रह्मलब्धवरो दैत्यस्तारकोऽतिमहाबली ।।१५।।

आक्रान्तं तेन त्रैलोक्यं निःस्वाध्यायं निराहुति ।
स्थानच्युताः सुराः सर्वे त्वां दृष्ट्वा तपसि स्थितम् ।।१६।

त्वरया काममामन्त्र्य देहभावाय तेऽनघ ।
अप्रेषयन् स वै भस्म जातः श्रेष्ठापराधतः ।।१७।।

इदानीं देव रक्षास्माँस्त्वामेव शरणं गतान् ।
विख्यातस्त्रिषु लोकेषु शरणागतपालकः ।।१८।।

क्षमस्व कृपणानां त्वं देवानां शरणैषिणाम् ।
अपराधं महादेव ! करुणाकर! शङ्कर! ।।१९।।

क उवाच

इति तस्या वचः श्रुत्वा स्वाङ्घ्रिस्थशिरसो मुने ! ।
जगाद हास्यवदनो वह्निं संहृत्य शङ्करः ।।२०।।

उत्तिष्ठोत्तिष्ठ देवानां रक्षणं कृतमद्य मे ।
पादयोः पतितायास्ते वचसा प्रणयेन च ।।२१।।

तत आलिङ्ग्य सहसा भिल्लीमङ्कमथानयत् ।
वृषमारुह्य च तया सार्द्धं कैलासमागमत् ।।२२।।

देवताहरूले भगवान्सँग प्रार्थना गर्दै भने - हे शङ्कर ! कामदेवको वध नगर्नुहोस् ! तर शिवजीले ती कुराहरूको वास्ता गर्नुभएन । देवताहरूले हेर्दाहेर्दै शिवजीको आँखाको अग्निज्वालाबाट कामदेव खरानी भए ।।१३।। त्यस बेला किरातिनीको वेशमा रहेकी भगवती पार्वतीले हात जोडेर नमस्कार गर्दै त्रिलोकीको हितको इच्छाले आदरपूर्वक भगवान् शङ्करसँग प्रार्थना गर्नुभयो- हे भगवन् ! हजुरले त्रिलोकीलाई नै डढाउने यो अग्निज्वाला शान्त गर्नुहोस् । ब्रह्माजीबाट वरदान पाएको तारकासुरले आफ्नो अत्याचारबाट ब्रह्माण्डलाई नै पीडामा पुऱ्याएको छ । त्यसले स्वर्ग, मर्त्य र पातालमा आफ्नो अधिकार कायम गरेको छ । अहिले त्रिलोकीमा स्वाध्याय हुँदैन, आहुति प्रदान गरिँदैन, देवताहरू स्थानभ्रष्ट भएका छन् । ती देवताले हजुरलाई तपस्या गरिरहेको देखेर हजुरलाई देहभावमा ल्याउनका लागि कामदेवको आह्वान गरेका हुन् । हजुर देहभावमा आउनुभएमा संसारको कल्याण हुने चिताएर देवताहरूले कामदेवको उपयोग गरेका हुन् । तर उत्तम पुरुषमा गरिएको अपराधका कारण आज हजुरबाट कामदेव खरानी हुन पुगे ।।१४-१७।। हे देव! हामीहरूको रक्षा गर्नुहोस्, हामी हजुरकै शरणमा आएका छौं। हजुरमात्र त्रिलोकीमा शरणागत रक्षक देवताका रूपमा प्रसिद्ध हुनुहुन्छ । हे महादेव ! हे दयालु शङ्कर ! शरणमा आएका दुःखी देवताहरूको अपराध क्षमा गर्नुहोस् ।।१८-१९।।

**ब्रह्माजीले भन्नुभयो-** आफ्ना दुई पाउको बीचमा शिर राखेर प्रार्थना गरिरहेकी किरातिनी रूप पार्वतीका कुरा सुनेर भगवान् शङ्करले आँखाको ज्वाला निभाई मन्द मुस्काउँदै भन्नुभयो- हे किरातिनी ! तिमी उठ । आज तिमीले देवताहरूको रक्षा गऱ्यौ। मेरा पाउमा आफ्नो शिर राखेर लम्पसार भएकी तिम्रो वचन र प्रेमलाई ख्याल गरेर मैले यी देवताहरूको रक्षा गरें ।।२०-२१।। यति भन्नुभएपछि भगवान् शङ्करले किरातिनीको रूपमा रहेकी पार्वतीलाई स्नेहपूर्वक आलिङ्गन गरी आफ्नो काखमा राख्नुभयो। त्यसपछि साँढेमा सवार भई ती किरातिनीका साथ कैलास जान प्रस्थान गर्नुभयो ।।२२।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे कामदहनं नाम चतुरशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'तपोनिरत शिवजीद्वारा तपस्यामा विघ्न पैदा गर्ने कामदेवको दहन' शीर्षकान्वित चौरासीऔं अध्याय पूर्ण भयो ।।८४।।

ॐ

# पञ्चाशीतितमोऽध्यायः { ८५ अध्याय }

क उवाच

शिवस्यालिङ्गनाद् भिल्ली मदनानलदीपिता ।
नाप क्वापि सुखं देवी निर्जले शफरी यथा ।।१।।

पतिता जलमध्ये सा शीतलोशीरशालिनी ।
न शर्म लेभे तत्रापि स्थले निद्रां न चालभत् ।।२।।

कर्पूरचन्दनं तस्या अधिकं तापमादधे ।
न शीतलपदार्थोऽस्याः कोऽपि सन्तोषमादधे ।।३।।

एवं वहुतिथे काले साऽस्थिचर्मावशेषिता ।
ततो गिरिशमागम्य गिरिजा गिरमब्रवीत् ।।४।।

न त्वं मृशसि मां देव! कामवस्थां गताऽस्मि ह ।
दग्धोऽपि मदनो मह्यमत्यन्तं पीडयत्यहो ।।५।।

नानोपायाः कृतास्तस्य शान्तये न च साऽभवत् ।
येनोपायेन शान्तिः स्यात् स तं कुरु मम प्रभो ।।६।।

इति वाक्यं समाकर्ण्य प्रियायाः प्रियकृद्धरः ।
रहस्येतां करे कृत्वा पर्यङ्के पर्यवेशयत् ।।७।।

रेमे तया यथेष्टं स मदनेन वशीकृतः ।
मृतेनापि कृतं तेन महत्कार्यं सुरेरितम् ।।८।।

अनङ्गेन समो नैव धन्वीति यश आप्तवान् ।
तयोस्तु क्रीडतोर्याताः षष्टिसाहस्रवत्सराः ।।९।।

भ्रष्टस्थाना मुनिसुराः श्रुत्वा मदनचेष्टितम् ।
कैलासं पुनरायातास्तत्र क्रीडारतं हरम् ।।१०।।

ज्ञात्वा तूष्णीं स्थितास्तत्र चिन्ताव्याकुलचेतसः ।
तारकासुरभीतास्ते पुनर्गह्वरमागताः ।।११।।

कदा वधो भवेदस्य कदा स्थानानि याम च ।
करिष्यति कदा शम्भुरस्माकं दुःखनाशनम् ।।१२।।

**ब्रह्माजीले भन्नुभयो** - सदाशिवले आलिङ्गन गर्नुभएका कारण पार्वतीरूप किरातिनी कामदेवको सन्तापबाट सन्तप्त भइन् । जल नभएको ठाउँमा माछा तड्पिएझैं तिनले कहीं गएर पनि सुख र शान्ति पाउन सकिनन् ।।१।। शरीरमा शीतल उशीरको लेपन गरेकी ती किरातिनी कामसन्ताप नाश गर्न पानीमा गएर डुबिन् । त्यहाँ पनि सुख पाउन सकिनन् । स्थलमा आउँदा पनि निद्रा पटक्कै लागेन, कपूर र चन्दनको लेपनले पनि सन्तापमात्र बढ्यो र कुनै पनि ठण्डा पदार्थले यिनलाई सन्तोष र तृप्ति दिन सकेन ।।२-३।। यसरी ती किरातिनी धेरै समयसम्म हाड र छालामात्र थामेर बाँचिन् । त्यसपछि तिनले पार्वतीका रूपमा प्रकट भएर शिवजीसँग निवेदन गरिन् - हे देव ! के तपाईँले मलाई क्षमा दिनुहुन्छ ? हेर्नुहोस् त म कुन हालतमा पुगेकी छु । अहो ! डढेको कामदेवले पनि मलाई कति सताइरहेको छ ? मैले कामदेवको पीडाबाट मुक्ति पाउन अनेक उपाय गरें तर ती उपायबाट कामवेदना शान्त हुन सकेन । हे प्रभो ! कुन उपायबाट मेरो कामवेदना शान्त हुन्छ र मलाई शान्ति प्राप्त हुन्छ ? त्यो उपाय गर्नुहोस् ।।४-६।। पार्वतीका वचन सुनेर आफ्नी प्रियाका लागि प्यारो कार्य गर्न चाहने शिवजीले एकान्तमा पार्वतीलाई हातले समातेर पलङ्गमा शयन गराउनुभयो ।।७।। कामदेवका वशमा परेर शिवजीले ती पार्वतीका साथ इच्छाअनुसार दीर्घकालसम्म रमण गर्नुभयो । मरेका कामदेवले पनि शिवजी र पार्वतीलाई उत्तेजित गराई देवताको कार्यमा सघाउ पुऱ्याए ।।८।। कामदेवसमान ठूला धनुर्धारी संसारमा कुनै छैनन् भन्ने नाम पनि कमाए । शिवजी र पार्वतीको कामक्रीडाका साठी हजार वर्ष बितेपछि मुनि र देवताहरू कामदेवको पराक्रममय चरित्र सुनेर कैलास आए। त्यहाँ तिनीहरूले शिवजीलाई कामक्रीडामा रत रहनुभएको थाहा पाएर चिन्ताले चित्तलाई व्याकुल बनाउँदै मौन भएर बसिरहे । त्यसैबेला तारकासुरको भयले सन्त्रस्त भएर ती सबै हिमालयको गुफामा फर्के।।९-११।। कहिले तारकासुरको वध हुन्छ ? कहिले हामी आ-आफ्ना ठाउँमा पुग्नेछौं ? र कहिले भगवान् शिवजीले हाम्रा दुःख नाश गर्नुहुन्छ?

इति चिन्तार्णवे मग्ना यावद् ब्रह्मादयः सुराः ।
तावदूचे सुराचार्यो वाक्यं मे शृणुतानघाः ।।१३।।

प्रेषयन्त्वखिला वह्निं रूपान्तरधरं हरम् ।
स हरं बोधयित्वाऽऽशु भवत्कार्यं भविष्यति ।।१४।।

ततस्ते वह्निमाकार्य तुष्टुवुर्विविधैः स्तवैः ।

देवा ऊचुः

त्वत्तो यज्ञक्रिया ब्रह्मन् ! संस्काराः सर्व एव हि ।।१५।।

अपां त्वमसि हेतुश्च देवानां मुखमेव च ।
अग्निहोत्रप्रणेता त्वं गार्हपत्यादिनामभिः ।।१६।।

त्वमेव पिबसीशाब्धिवारि नित्यं महत्तरम् ।
त्वमेव पचसे नृणां जठरे षड्रसानपि ।।१७।।

त्वमेव सर्वजन्तूनां सन्धौ सन्धौ विचेष्टसे ।
त्वया त्यक्तं प्रेतसंज्ञां लभते दह्यते त्वया ।।१८।।

हेतुस्त्वमसि देवेश ! जन्तूनां प्राणधारणे ।
त्वयाद्भिश्च विना नान्नं पक्तुं शक्यं न च क्वचित् ।
त्वमेव ब्रह्मा रुद्रश्च सूर्यश्चानेकरूपधृक् ।।१९।।

त्वमेव जायसे मूलं क्रोधस्य जगदीश्वर ! ।
यत्र तत्र भवेत् तेजस्तत् तद् रूपं तवैव च ।।२०।।

अतस्त्वां प्रार्थयामोऽद्य त्रिलोक्या उपकारक ! ।
त्रैलोक्याक्रमणं तेन तारकेण कृतं विभोः ।।२१।।

जानासि तत्रभोवाणीं कामस्यापि च तां गतिम् ।
पार्वतीहरयोर्बोधं चिरक्रीडानिमग्नयोः ।।२२।।

कुरु गत्वाऽन्यरूपेण भिक्षां याचस्व तत्र वै ।
एवं कृते जगत्कार्यमस्माकञ्च भविष्यति ।।२३।।

यस्ता चिन्तामा डुबेका ब्रह्मा आदि देवतालाई देवगुरु बृहस्पतिले भने - हे निष्पाप देवताहरू ! सुन्नुहोस्, तपाईंहरू सबै मिलेर अग्निलाई आफ्नो रूप परिवर्तन गरी शिवजीका समक्ष जान अह्राउनुहोस् । तिनले शङ्करलाई जगाउने छन् । उहाँ जाग्नुभएपछि छिटै तपाईंहरूको कार्य सिद्ध हुनेछ।।१२-१४।। त्यसपछि देवताहरूले पनि अग्निको आह्वान गरी अनेक किसिमका स्तुतिवाक्यहरूबाट स्तवन गरे।

**देवताहरूले भने -** हे अग्निदेव ! तपाईंबाट नै यज्ञ र संस्कारहरू सम्पन्न हुन्छन् ।।१५।। तपाईं जलतत्त्वका कारण हुनुहुन्छ र देवताहरूलाई सुखसिद्धि गराउने साधन पनि हुनुहुन्छ। गार्हस्पत्य, आहवनीय र दक्षिण अग्निका नामबाट अग्निहोत्रका प्रणेता पनि तपाईं नै हुनुहुन्छ ।।१६।। तपाईंले महासागरमा वडवानल बनेर सागरको जलपान गर्नुहुन्छ । तपाईं नै मानिस आदि प्राणीका पेटमा जठराग्निका नामबाट रहेर ती प्राणीले खाएका ६ प्रकारका रस पचाउने काम गर्नुहुन्छ ।।१७।। तपाईं सबै प्राणीहरूका प्रत्येक अङ्ग सन्धिमा रहेर चेष्टाका कारण बन्नुहुन्छ । तपाईंले त्याग गर्नुभएपछि प्राणी प्रेत बन्दछ र त्यसका शरीरको दाहका कारण पनि तपाईं नै हुनुहुन्छ ।।१८।। तपाईंले नै प्राणीहरूको प्राणधारणमा सघाउ पुऱ्याउनुहुन्छ । अग्निरूप तपाईं र जल नहुने हो भने फल र अन्नको पाक पनि सम्भव हुँदैन । तपाईंले ब्रह्मा, रुद्र, सूर्य आदि अनेक रूप धारण गर्नुहुन्छ। हे जगदीश्वर अग्नि ! तपाईं नै क्रोधतत्त्वका कारण हुनुहुन्छ । जहाँ जहाँ तेजतत्त्व छ त्यहाँ त्यहाँ तेजतत्त्वका अन्तर्वस्तु बनेर तपाईं विराजमान हुनुहुन्छ ।।१९-२०।। त्रिलोकीका उपकारक हे अग्नि देवता ! आज हामी तपाईंको प्रार्थना गर्दछौं । तारकासुरले त्रिलोकीमाथि नै आक्रमण गरी सबैलाई आफ्नो वशमा राखेको छ । तपाईंले आकाशवाणीले भनेका कुरा पनि सुन्नुभएको छ र कामदेवको दुर्दशा पनि देखिसक्नुभएको छ । चिरकालदेखि कामक्रीडामा निरत हुनुभएका शिव-पार्वतीलाई जगाउने काम तपाईंबाट मात्र हुनसक्छ । त्यस कारण त्यो काम गर्नुहोस् । तपाईं अर्कै रूप लिएर शिव-पार्वतीका समक्षमा गई भिक्षा याचन गर्नुहोस् । तपाईंले भिक्षायाचना गर्दा संसार र हामी सबैका कार्य परिपूर्ण हुनेछन् ।।२१-२३।।

ब्रह्मोवाच

इति देववचः श्रुत्वा काषायवसनो द्विजः ।
भूत्वा शुष्मा ययौ तत्र यत्रास्तां पार्वतीश्वरौ ।।२४।।

क्रीडासक्तौ वहिः स्थित्वा भिक्षां देहीत्युवाच सः ।
त्रिवारं प्लुतशब्देन द्वाभ्यामपि श्रुतः स्वनः ।।२५।।

ऊचतुर्विस्मितौ तौ तु परस्परमुभौ वचः ।
परिधत्तांशुके स्वे स्वे कुतोऽत्रायं समागतः ।।२६।।

किमस्मै च प्रदातव्यमिति चिन्तां च चक्रतुः ।
उमाञ्जलावधाद् वीर्यमक्षमा तस्य धारणे ।।२७।।

जानती भाविनं चार्थं ददौ सा भिक्षुकाय तत् ।
भूमौ त्यक्तं दहेदेतत् त्रैलोक्यं सचराचरम् ।।२८।।

हरवीर्यमित्यपिवद् वह्निः शापभयात् तयोः ।
गर्भवाननलो जातो लज्जावानपि तापवान् ।।२९।।

यत्र यत्र ययौ वह्निः शर्म लेभे न तत्र वै ।
उषस्युत्थाय गङ्गायां तुलासंस्थे दिवाकरे ।।३०।।

स्नातुं यावत् स शौचादि कुरुते तावदेव ह ।
आगताः षट् स्त्रियस्तत्र स्नातुमूर्जे समाहिताः ।।३१।।

अग्निना यत् समुत्सृष्टं गङ्गेयञ्च हरप्रिया ।
धारयिष्यति शक्ता चेज्जलरूपा सुशीतला ।।३२।।

शिववीर्यञ्च तत् ताभिः प्राशितं षड्विभागतः ।
तस्मिन्नेव क्षणे सोऽग्निरन्तर्द्धि समपद्यत ।।३३।।

अङ्कुरानि च यातानि दूरदेशं गतेऽनले ।
परिधाय स्ववस्त्रं तास्ततो याता निजं गृहम् ।।३४।।

**ब्रह्माजीले भन्नुभयो -** देवताहरूका उक्त प्रार्थना वचन सुनेर अग्नि पहेंलो वस्त्र धारण गर्ने ब्राह्मणको रूप लिई शिव-पार्वतीले विहार गर्नुभएको ठाउँमा पुगे ।।२४।। तिनले बाहिर उभिएर भिक्षा दिनुहोस्! भन्ने अर्थमा **भिक्षां देहि! भिक्षां देहि!! भिक्षां देहि !!!** भनेर प्लुत स्वरमा उक्त वाक्यलाई तीन पटक दोहोऱ्याए । उच्चारण गर्नासाथ शिव र पार्वतीले ती वाक्य सुन्नुभयो । शिव र पार्वती त्यो स्वर सुनेर चकित भई आ-आफ्ना लुगा लगाएर परस्परमा कुरा गर्नुभयो। हामी यसरी विहार गरिरहेको बेला यो भिक्षुक कहाँबाट यहाँ आइपुग्यो ? यस्तो अवस्थामा हामीसँग भिक्षा दिने पदार्थ के छ ? के दिने हो? भन्ने चिन्ता पनि व्यक्त गर्नुभयो । त्यस बेला अरू उपाय नदेखेर शिवजीले आफ्नो वीर्य पार्वतीका हातमा राखिदिनुभयो र भिक्षा देऊ भन्नुभयो । त्यो वीर्यलाई धारण गर्न असमर्थ पार्वतीले आगामी प्रयोजनसमेत आत्मसात् गरी हातमा थापेको त्यो वीर्य भिक्षुकलाई प्रदान गर्नुभयो । भिक्षुकका रूपमा आएका अग्निले 'शिवजीको यो वीर्यले तीनै लोक खरानी बनाउन सक्छ र शिव-पार्वतीले सराप पनि दिनसक्नु हुन्छ, त्यस कारण मैले भुईंमा फ्याँक्न हुँदैन' भनी त्यो वीर्य आफै पान गरे । वीर्यपान पछि अग्निदेवलाई गर्भधारण गर्न विवश हुनुपऱ्यो । लाज पनि भयो र सन्ताप पनि ।।२५-२९।। अग्निदेव जहाँ जहाँ गए, त्यहाँ त्यहाँ उनले सुख-शान्ति पाएनन् । कार्तिक महिना थियो, सूर्य तुला राशिमा थिए, त्यो महिनाको कुनै दिन अग्नि बिहानै उठे र नुहाउनुभन्दा पहिले शौच आदि कार्य गर्न बाहिर गए । त्यस बेला ६ वटी ऋषि पत्नीहरू गङ्गामा कार्तिकस्नान गर्ने उद्देश्यले त्यतातर्फ आए। अग्निले पनि 'यी शिवजीकी प्यारी गङ्गाले यो वीर्य धारण गर्न छिन् किनकि यी गङ्गा जलरूप र शीतल पनि छन्' भन्ने विचार गरे। उनले गङ्गामा आफूले धारण गरेको शिववीर्य प्रवाहित गरे । गङ्गा स्नान गर्न लागेका ६ वटी ऋषि-पत्नीहरूले गङ्गामा चम्किएको त्यो शिवजीको वीर्यलाई भाग लगाए खाए। त्यस बेला त्यो वीर्यको आगोले ऋषि पत्नीहरूको गर्भमा पोल्न थाल्यो। अत्यन्त तापका कारण ती ऋषिपत्नीहरूले शरीरका कपडाहरू फ्याँकि। स्नानपछि ती सबै ऋषिपत्नीहरू आ-आफ्ना वस्त्रधारण गरी घरतर्फ गए ।।३०-३४।। त्यहाँ तिनका पतिहरूले आफ्ना

दद‍ृशुः पतयस्तासां मुखान्यत्युज्ज्वलानि च ।
गर्भिण्य इति ते ज्ञात्वा ज्ञानदृष्ट्या मुनीश्वराः ।।३५।।
बहिश्चक्रुर्गृहात् सर्वा न प्रदर्श्य मुखं त्विदम् ।
ताः समेत्य पुनर्गङ्गां तीरे शरसुशोभिते ।।३६।।
मुमुचुः स्वस्वगर्भं ताः शुद्धाः स्नाता गृहान् ययुः ।
षट्सु तासु प्रयातासु स्वं स्वं गर्भं विमुच्य वै ।।३७।।
षण्मुखो द्वादशभुजो बालस्तत्र व्यजायत ।
तस्य हुङ्कारमात्रेण निपेतुर्भानि खाद् भुवि ।।३८।।
चकम्पे धरणी सर्वा शेषः पातालमेव च ।
द्रुमा उन्मूलिताः सूर्यो नीहाराच्छादितोऽभवत् ।।३९।।
एतस्मिन्नन्तरे तत्र नारदो दिव्यदर्शनः ।
कैलासं गिरिशं द्रष्टुं गच्छन् मार्गे ददर्श तम् ।।४०।।
अतिदीप्ततरं बालं दुर्दर्श बलवत्तरम् ।
प्रणिधानेन तं ज्ञात्वा तूष्णीं कैलासमाययौ ।।४१।।
उवाच पार्वतीं शम्भुं वृत्तान्तं सर्वमेव च ।
जहर्ष पृथिवी सर्वा ज्ञात्वा तं गिरिशात्मजम् ।।४२।।
देवदुन्दुभयो नेदुर्गन्धर्वा जगुरद्भुतम् ।

नारद उवाच

आगच्छता मया दृष्टो गौरि! मार्गे तवात्मजः ।।४३।।
षण्मुखो द्वादशभुजो सूर्यकोटिसमप्रभः ।
गङ्गातीरे निपतितस्त्यक्तस्ते षण्मुखो नु किम् ।।४४।।
कोटिकन्दर्पशोभाढ्यो गर्जितक्षोभिताखिलः ।
कथं निष्ठुरताऽकारि गौरि ! सुन्दरबालके ।।४५।।

क उवाच

इत्युक्त्वाऽन्तर्हिते तस्मिन् गौरी बालकमभ्यगात् ।।४६।।

पत्नीहरूको तेजोमय अनुहार देखेर यी गर्भिणी भएकी छन् भन्ने ज्ञानदृष्टिबाट थाहा पाए। त्यसपछि ऋषिहरूले आ-आफ्ना पत्नीहरूलाई तिमीले मुख नदेखाऊ भनी घरबाट निकालिदिए। गङ्गातीरमा आएका ती ऋषिपत्नीहरूले शरनामक झार भएको ठाउँमा आ-आफ्ना गर्भ परित्याग गरे । त्यसपछि स्नान गरी घर-घरमा गए । ती ६ वटी ऋषिपत्नीहरू फर्किएपछि गर्भपात गरेको ठाउँमा ६ मुख र १२ हात भएका बालक उत्पन्न भए । बालकले हुँकार गर्दा नक्षत्रहरू आकाशबाट भुईंमा खसेका थिए । पृथिवी, शेषनाग र पाताल पनि कम्पायमान भए । रूखहरू जरैबाट ढल्न थाले। सूर्य तुवाँलोले ढाकिए । त्यस बेला त्यहाँ दिव्य शरीरधारी देवर्षि नारदजी आइपुगे । शिवजीको दर्शन गर्न कैलास जाने प्रसङ्गमा बाटामा अत्यन्त चहकिलो र पराक्रमी बालकलाई देखेर ध्यानदृष्टिबाट सबै कुरा थाहा पाएका ती नारदजी त्यसपछि कैलास गए ।।३५-४१।। त्यहाँ तिनले पार्वती र परमेश्वरलाई हात जोडेर आफूले देखेको घटना बताए। शिवजीलाई छोरा जन्मेको थाहा पाएर सारा पृथिवीमण्डल आनन्दमग्न भयो । देवताका बाजा बजे, र गन्धर्वले गाना गाए। त्यसपछि नारदजीले पार्वतीलाई भन्नुभयो- 'हे आमा पार्वती ! मैले बाटामा आउँदा ६ मुख र १२ हात भएको सूर्यसमान उज्ज्वल तपाईंको बालकलाई देखेको थिएँ। अग्निले गङ्गातीरमा फ्याँकिको वीर्यलाई ऋषिपत्नीहरूले पान गरेका थिए। फेरि तिनले पनि असह्य भएर त्यो गर्भ फ्याँकिदिए। फ्याँकिएको गर्भ नै तपाईंका छोरा षण्मुखका रूपमा देखापरेको हो कि?।।४२-४४।। ती बालक करोडौं कामदेवभन्दा पनि राम्रा छन् । गर्जनबाट तिनले सारा त्रिलोकीलाई कम्पायमान तुल्याएका थिए। हे भगवती गौरी! तपाईं ती सुन्दर बालकलाई जन्मेको थाहा पाएर पनि यहीं बसिरहनुभएको छ । किन यति निष्ठुर हुनुभयो ?' ।।४५।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी पार्वतीसँग कुरा गरेपछि नारदजी अन्तर्धान भए र पार्वती पनि बालकका समीपमा जानुभयो ।।४६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे स्कन्दावतरणं नाम पञ्चाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'स्कन्दको अवतरण' शीर्षकान्वित पचासीऔं अध्याय पूर्ण भयो ।।८५।।

ॐ

## षडशीतितमोऽध्याय: { ८६ अध्याय }

क उवाच
दृष्ट्वा सा तादृशं बालं स्नेहस्नुतपयोधरा ।
आलिलिङ्ग मुदा बालं तद्धस्तद्धृदया सती ।।१।।

तामूचे मम बालोऽयं गङ्गा गम्भीरनिस्वना ।
ममायमिति तां प्राह वह्निर्बालो गिरेः सुताम् ।।२।।

कृत्तिकाद्याश्च तां प्राहुरस्मज्जातोऽयमर्भकः ।
अस्माकमेव बालोऽयमिति चुक्रुशुरातुराः ।।३।।

एवं विवदमानास्ता याता वह्निपुरोगमाः ।
कैलासे देवनिलये गिरिशं चन्द्रशेखरम् ।।४।।

गौरी विवेश प्रथमं कटिन्यस्तस्वबालका ।
शिवो गृहीत्वा तं स्वाङ्के शिरस्याघ्राय मन्त्रतः ।।५।।

रमयामास परया मुदा देवस्त्रिलोचनः ।
गङ्गा वह्निः षट्स्त्रियस्ता गृहं जग्मुर्यथागतम् ।।६।।

तत्रामकरणार्थाय ब्रह्माणञ्च बृहस्पतिम् ।
आहूय शिव ऊचे तौ नामास्य क्रियतामिति ।।७।।

ब्रह्मबृहस्पती ऊचतुः
कार्तिके मासि जातोऽयं कार्तिकेय इति स्फुटम् ।
नामास्य प्रथमं देव ! पार्वतीनन्दनोऽपि च ।।८।।

शरद्वीपेऽयमुत्पन्नः शरजन्मा ततोऽपि च ।
कृत्तिकाभ्योऽपि जातत्वात् कार्तिकेय इति स्मृतः।।९।।

यतोऽस्य मातरः षट् ताः स षाण्मातुर इत्यपि ।
अयं पुत्रस्तारकजित् तारकञ्च विजेष्यति ।।१०।।

देवसेनापतिर्भावी सेनानीरिति शब्दितः ।
तत एव महासेनः षण्मुखत्वात् षडाननः ।।११।।

**ब्रह्माजीले भन्नुभयो -** ६ वटा मुख र १२ वटा हातले शोभायमान बालकलाई देखेर स्नेहले स्तनबाट दूधका धारा बगाइरहेकी भगवती गौरीले ती बालकमा आफ्नो हृदयको माया समर्पित गर्दै सहर्ष आलिङ्गन गर्नुभयो ।।१।। त्यसैबेला गम्भीर स्वरले निनाद गर्नुहुने भगवती गङ्गाले पनि पार्वतीलाई देखेर हे पार्वती ! यो तपाईँको होइन, मेरो छोरा हो भन्नुभयो । अग्निदेवले पार्वतीलाई यो तपाईँको होइन, मेरो छोरा हो भने ।।२।। कृत्तिका आदि ६ वटी ऋषिपत्नीहरूले पनि यो बालक हाम्रो गर्भबाट उत्पन्न भएको हुँदा यो हाम्रो हो भनी आतुरभावले आत्मीयता प्रकट गरे ।।३।। यसरी विवाद गरिरहेका ती सबै अग्निदेवलाई अगाडि लगाएर कैलासमा विराजमान चन्द्रशेखर शिवजीको समीपमा गए ।।४।। कम्मरमा बालकलाई बोकिरहेकी पार्वती सर्वप्रथम शिवजीका सामु पुग्नुभयो । शिवजीले पार्वतीको काखबाट बालकलाई तानी मन्त्र उच्चारण गर्दै शिरमा सुँघेर आफ्नो काखमा राख्नुभयो।।५।। परम हर्षका साथ उहाँले बालकलाई खेलाउनुभयो । निराश भएका गङ्गा, अग्नि र कृत्तिका आदि ऋषिपत्नीहरू आफू आएको बाटोबाट फर्के ।।६।। सदाशिवजीले नामकरणका लागि ब्रह्मा र बृहस्पतिलाई बोलाई 'बालकको नामकरण गर्नुहोस्' भन्नुभयो।।७।।

**ब्रह्माजी र बृहस्पतिले भन्नुभयो -** हे सदाशिव ! यी बालक कार्तिक महिनामा उत्पन्न भएका कारण यिनको पहिलो नाम **कार्तिकेय** हुनेछ । यी जन्मदा पार्वतीलाई परम आनन्दको अनुभूति भएकाले यी **पार्वतीनन्दन**का नामबाट पनि प्रसिद्ध हुनेछन् ।।८।। शरद्वीपमा उत्पन्न भएका कारण यिनको अर्को नाम **शरजन्मा** रहनेछ । कृत्तिका आदि ऋषि पत्नीहरूको गर्भबाट उत्पन्न भएकाले पनि यिनलाई **कार्तिकेय** भन्नुपर्दछ।।९।। यिनलाई ६ वटी माताहरूले गर्भमा धारण गरेका कारण यी बालक **षाण्मातुर**का नामबाट पनि चिनिने छन् । यी बालक पराक्रमी हुनेछन् र पछि गएर यिनले तारकासुरमाथि विजय प्राप्त गर्नेछन्। त्यस कारण यिनलाई **तारकजित्** पनि भनिनेछ।।१०।। तारकासुरमाथि विजय गर्दा सेनापतिको रूपमा ठूलो सेना लिएर जाने हुनाले यिनलाई **सेनानी** भनिनेछ। यी देवताहरूका सेनापति हुनेछन् । त्यस कारण यिनलाई **महासेन** नामबाट

स्कन्नं त्रिवारं रेतो यत् तेन स्कन्दोऽयमुच्यते ।
तयोस्तु वदतोरेवं शक्राद्या आययुः सुराः ।।१२।।

आनन्दुश्च नेमुस्तं पुपूजुस्तुष्टुवुर्जगुः ।
व्यानशे रोदसी दिव्यवाद्यशब्दो रसातलम् ।।१३।।

ततस्ते प्रार्थयामासुः सेनान्यं प्रणिपत्य च ।
त्रैलोक्यकण्टकं देव ! जहि त्वं तारकासुरम् ।।१४।।

नानाभिषेकसम्भारैः सेनापत्येऽभिषिच्य तम् ।
वैदिकैस्तान्त्रिकैर्मन्त्रैर्नानामुनिसमीरितैः ।।१५।।

ततोऽनुज्ञां गृहीत्वा ते देवाः स्वस्थानमागमन् ।
ऋषयोऽपि निरुद्योगास्तपस्तेपुर्यथा पुरा ।।१६।।

सेनान्यां विद्यमाने नो न भयं विद्यते क्वचित् ।
स बालो ववृधेऽत्यन्तं शुक्लपक्षे यथा शशी ।।१७।।

एकदा बालभावात् स उड्डीय शशिनं ययौ ।
ग्रहीतुं ब्रह्मणाऽवारि नेदृशं साहसं कुरु ।।१८।।

बुद्ध्या बृहस्पतिं शक्त्या जिगायेन्द्रञ्च सोऽर्भकः ।
एकदा सुखमासीनं पार्वत्या सहितं शिवम् ।।१९।।

प्रणम्य परिपप्रच्छ सर्वकामार्थसिद्धये ।

स्कन्द उवाच

पितर्मयाऽश्रावि महाकथा नानाविधाः शुभाः ।।२०।।

सर्वसिद्धिकरं देव ! पुत्रसम्पत्प्रवर्धनम् ।
सर्वपापहरं चैव धर्मार्थकाममोक्षदम् ।।२१।।

त्रैलोक्यस्य गुरोस्त्वत्तस्तृप्तिर्नास्ति तथापि मे ।
वद मे सर्वशत्रूणां जयकारि व्रतं शुभम् ।।२२।।

पनि पुकारिने छ। ६ वटा मुख धारण गर्नाले यी **षडानन** अथवा **षणमुखका** नामबाट प्रसिद्ध हुनेछन्।।११।। यिनको उत्पत्ति हुने प्रसङ्गमा तीन पटकसम्म वीर्यपात भएकाले यिनलाई **स्कन्द** भनिनेछ । ब्रह्माजी र बृहस्पतिले यसरी नामकरणसम्बन्धी चर्चा गरिरहनुभएको बेला त्यहाँ इन्द्र आदि देवताहरू आइपुगे ।।१२।। ती देवताहरूले भगवान् शिवजी एवं भगवती पार्वतीलाई पुत्रजन्म भएको थाहा पाएर आनन्द मनाए, बालकको पूजा गरे, स्तुति गरे र हर्षपूर्वक मङ्गलगीत पनि गाए। देवताहरूले बजाएका दिव्य बाजाहरूको ध्वनि स्वर्ग, मर्त्य र पातालमा व्याप्त भयो ।।१३।। ती देवताहरूले पार्वतीपुत्र स्कन्दलाई प्रणाम गरेर 'तपाईंले त्रिलोकीको कण्टक तारकासुरलाई मार्नुहोस्' भनी प्रार्थना गरे ।।१४।। तिनीहरूले अभिषेकका अनेक सामग्री जम्मा गरी मुनिहरूको समूहद्वारा उच्चारण गरिएका वैदिक एवं तान्त्रिक मन्त्रघोषका साथ कार्तिकेयलाई सेनापति पदमा अभिषिक्त गरे । त्यसपछि ती देवताहरू आफ्ना सेनापति स्कन्दसँग आज्ञा लिएर आ-आफ्ना स्थानमा फर्के । आ-आफ्ना स्थानमा गएपछि यज्ञ आदि कर्मबाट वञ्चित ऋषिहरू पनि 'अब शिवपुत्र पैदा हुनुभयो, हामीलाई डर छैन' भनी तपस्यामा लागे । कैलासमा गौरी-शङ्करका पुत्र स्कन्द शुक्लपक्षका चन्द्रमाझैं बढ्न लागे ।।१५-१७।। एक दिन बालक स्वभावका कारण स्कन्द म चन्द्रमालाई समाउँछु भनेर चन्द्रमाका समीपमा पुगेका थिए । त्यस बेला यस्तो साहस गर्न हुँदैन भनी **ब्रह्माजीले** तिनलाई त्यसो गर्नबाट रोक्नुभयो ।।१८।। बालक स्कन्दले बुद्धिद्वारा बृहस्पति र शक्तिद्वारा इन्द्रलाई पनि तल पारेका थिए । एक दिन स्कन्दले पार्वतीका साथ सुखपूर्वक आसनमा विराजमान हुनुभएका शिवजीलाई प्रणाम गरी आफ्ना सबै कामनाहरूको सिद्धिका लागि प्रार्थना गरे ।

**स्कन्दले भन्नुभयो** - हे पिता ! मैले हजुरबाट अनेक प्रकारका कथाहरू सुन्ने मौका पाएको छु । त्रिलोकीका स्वामी हजुरबाट जति ज्ञान-गुन सुने पनि मलाई तृप्ति हुँदैन । अहिले मलाई सबै प्रकारका सिद्धि प्रदान गर्ने, पुत्र र सम्पत्ति बढाउने, सबै पाप नाश गर्ने, धर्म-अर्थ-काम एवं मोक्ष प्रदान गर्ने तथा सबै शत्रुहरूमाथि विजय दिलाउने उत्तम व्रतको विषयमा उपदेश गर्नुहोस् ।।१९-२२।।

### ईश्वर उवाच

सम्यक् पृष्टं त्वया स्कन्द! सर्वलोकोपकारकम् ।
व्रतं तेऽहं प्रवक्ष्यामि सर्वसिद्धिकरं नृणाम् ।।२३।।

सर्वपापक्षयकरं धर्मार्थकाममोक्षदम् ।
सर्वशत्रुक्षयकरं पुत्रसम्पत्प्रवर्धनम् ।।२४।।

अलक्ष्मीसङ्कटहरं गणनाथस्य तोषकृत् ।
यः करोति नरो भक्त्या सम्पूज्यस्त्रिदशैरपि।।२५।।

इच्छाविहारी भवति सृष्टिस्थित्यन्तकृच्च सः ।
दर्शनात् तस्य चान्येषां महापापं लयं व्रजेत् ।।२६।।

नास्त्येषां स्कन्द ! वरदचतुर्थीव्रततुल्यता ।
एवमाकर्ण्य वचनं सेनानीः शङ्करेरितम् ।।२७।।

पुनः पप्रच्छ पितरं महिमानं व्रतस्य सः ।

### स्कन्द उवाच

विस्तरेण मम ब्रूहि माहात्म्यं व्रतसम्भवम् ।।२८।।

कस्मिन् मासि दिने चास्य प्रारम्भः क्रियते हर ! ।
को विधिः किं फलं चास्य कस्याभूत् प्रत्ययोऽस्य च ।।२९।।

एतन्मे सकलं ब्रूहि यदि तुष्टोऽसि शङ्कर ! ।
सर्वलोकोपकाराय व्रतस्यास्य प्रसिद्धये ।।३०।।

**शिवजीले भन्नुभयो** - हे स्कन्द! तिमीले राम्रो विषयमा मलाई अनुरोध गर्‍यौ । म तिमीलाई सबै लोकको उपकार गर्ने, सबै प्रकारका सिद्धि प्रदान गर्ने, सबै पाप नाश गर्ने, पुत्र र सम्पत्ति बढाउने, धर्म-अर्थ-काम र मोक्ष दिने, अलक्ष्मी नाश गर्ने, सबै शत्रुहरूको संहार गर्ने र भगवान् श्रीगणेशलाई सन्तोष प्रदान गर्ने उत्तम व्रतको उपदेश गर्नेछु । जुन मानिसले भक्तिपूर्वक त्यो व्रतको अनुष्ठान गर्नेछ, त्यो देवताहरूको पनि वन्दनीय हुनेछ र इच्छाअनुसार जहाँसुकै विचरण गर्न सक्नेछ । सृष्टि, स्थिति र संहारकर्ममा पनि कुशल हुनेछ । त्यस व्रतको अनुष्ठान गर्ने भक्तको दर्शन गर्नाले महापाप पनि विलीन भएर जानेछन् ।।२३-२६।। हे स्कन्द ! अरू व्रतहरूले उक्त महिमा भएको वरदचतुर्थी व्रतको समानता गर्न सक्दैनन्। स्कन्दले भगवान् शङ्करका वचन सुनेर वरदचतुर्थी व्रतको महिमा राम्ररी जान्ने प्रयोजनबाट फेरि प्रश्न गरे।

**स्कन्दले भन्नुभयो** - हे भगवन् शिवजी ! मलाई विस्तारपूर्वक वरदचतुर्थीको व्रतबाट हुने फलको विषयमा र उक्त चतुर्थीको महिमाको विषयमा बताउनुहोस् ।।२७-२८।। हे शिवजी ! यो व्रत कुन महिनामा प्रारम्भ गरिन्छ ? यस व्रतको विधि कस्तो छ? यसबाट के-के फल प्राप्त हुन्छन् ? कसले यो व्रत गरे र चिताए अनुसारका फल प्राप्त गरे ? हे शङ्कर ! हजुर प्रसन्न हुनुहुन्छ भने सबैको उपकार गर्न र वरदचतुर्थी व्रतलाई संसारमा प्रसिद्ध गराउन पनि मलाई यस व्रतको विषयमा उपदेश गर्नुहोस्। फेरि यस व्रतलाई अहिलेसम्म क-कसले सम्पन्न गरे ? र कस्ता फल प्राप्त गरे ? यी विषयमा पनि मलाई उपदेश गर्नुहोस् ।।२९-३०।।

ॐ

**इति श्रीगणेशपुराणे उपासनाखण्डे स्कन्दोपाख्याने शिवस्कन्दसंवादो नाम षडशीतितमोऽध्यायः**

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'शिवजीद्वारा स्कन्दका निमित्त वरदचतुर्थीव्रतको महत्त्व- प्रकाशन' शीर्षकान्वित छयासीऔं अध्याय पूर्ण भयो ।।८६।।

ॐ

## अथ सप्ताशीतितमोऽध्यायः { ८७ अध्याय }

शङ्कर उवाच

अहं ते कथयिष्यामि व्रतस्यास्य विधिं परम् ।
श्रावणे तु सिते पक्षे चतुर्थ्यामारभेद् व्रतम् ।।१।।

तिलामलककल्केन प्रातःस्नानं विधाय च ।
नित्यनैमित्तिकं सर्वं समाप्य क्रोधवर्जितः ।।२।।

शुचौ मण्डपिकां कृत्वा कदलीस्तम्भमण्डिताम् ।
इक्षुचामरपुष्पाढ्यामादर्शावलिशोभिताम् ।।३।।

तन्मध्ये कलशं स्थाप्य वस्त्रयुग्मेन वेष्टितम् ।
तत्र चाष्टदलं पद्मं कारयेच्चन्दनेन तु ।।४।।

गुरोराज्ञां गृहीत्वा च पूजाद्रव्याणि प्रोक्षयेत् ।
उपचारैः षोडशभिः पूजयेद् गणनायकम् ।।५।।

काञ्चनं राजतं वापि स्वस्वशक्त्या विनिर्मितम् ।
एकविंशतिपक्वान्नैरेकविंशतिसङ्ख्यकैः ।।६।।

गजाननाय देवाय नैवेद्यं परिकल्पयेत् ।
एकविंशतिमुद्रास्तु दक्षिणार्थं निवेदयेत् ।।७।।

सौवर्णी राजतीर्वापि वित्तशाठ्यविवर्जितः ।
एकविंशतिदूर्वाश्च श्वेता वा हरिता अपि ।।८।।

अर्पयेद् देवदेवाय मन्त्रपुष्पाञ्जलिं तथा ।
ब्राह्मणान् वेदविदुषः पूजयेदेकविंशतिम् ।।९।।

भोजयेत् तादृशान्नेन तावद् दानानि दापयेत् ।
नमेत् क्षमापयेत् पश्चादच्छिद्रमिति वाचयेत् ।।१०।।

पार्थिवस्य गणेशस्य विधानं कथितं पुरा ।
पूजाप्रकारः सोऽप्यत्र सर्व एव उदाहृतः ।।११।।

कथां तामेव शृणुयात् पश्चाद् बन्धुयुतः स्वयम् ।
ध्यायन् गणेशं भुञ्जीत मौनेनोपवसेत वा ।।१२।।

शङ्करले भन्नुभयो– हे स्कन्द ! म तिमीलाई वरदचतुर्थीव्रत सम्पादन गर्ने उत्तम विधि बताउँछु । श्रावण महिनाको शुक्लपक्षको चतुर्थी तिथिका दिन वरदचतुर्थी व्रतको आरम्भ गर्नुपर्दछ ।।१।। प्रातःकालमा तिलको पिना र अमलाको धूलोले स्नान गरेर नित्य-नैमित्तिक सबै कर्म समाप्त गरी क्रोधरहित एवं प्रसन्न भएर रहनुपर्दछ ।।२।। त्यसपछि पवित्र स्थानमा उँखु, चमर र फूलले युक्त ऐनाहरू टाँगिएको, केराका स्तम्भहरूले सुहाएको एउटा राम्रो मण्डप बनाउनुपर्दछ ।।३।। मण्डपको माझमा २ वटा कपडाले ढाकिएको एउटा कलशमाथि थाली राखेर त्यसमाथि चन्दनले अष्टदल कमलको चिह्न बनाउनुपर्दछ ।।४।। गुरुको आज्ञा लिएर पूजा आरम्भ गरी त्यहाँ प्रयोग गरिने पदार्थहरूलाई शुद्ध जलले सिञ्चन गरेर पवित्र तुल्याउनुपर्दछ त्यसपछि षोडशोपचारबाट सुन अथवा चाँदीबाट बनेको प्रतिमामा श्रीगणेशको पूजा गर्नुपर्दछ । पूजा गर्दा एक्काइस प्रकारका पक्वान्न तयार गरी तिनबाट एक्काइस-एक्काइसको सङ्ख्यामा भगवान् श्रीगणेशलाई नैवेद्य टक्र्याउनु-पर्दछ । पूजापछि दक्षिणा गर्दा पनि एक्काइस–एक्काइस रूपैयाँ दिनुपर्दछ ।।५–७।। सुनको मुद्रा होस् अथवा चाँदीको मुद्रा छुच्याइँ नगरीकन दक्षिणा दिनुपर्दछ । सेता अथवा हरिया एक्काइस- एक्काइस दूर्वाङ्कुर श्रीगणेशलाई अर्पण गर्नुपर्दछ। यसैगरी एक्काइस पटक मन्त्रपुष्पाञ्जलि प्रदान गरी एक्काइस जना वेदका ज्ञाता ब्राह्मणहरूको पूजा गर्नुपर्दछ। ती ब्राह्मणहरूलाई पनि एक्काइस प्रकारका अन्नका भोजन टक्र्याएर तृप्त गराउनुपर्दछ । अन्तमा तिनलाई एक्काइस प्रकारका दानहरू दिनुपर्दछ । यसरी दान दिएपछि प्रणाम गरी क्षमायाचना गर्दै ती ब्राह्मणहरूबाट मैले गरेका व्रतको प्रभावले मेरा कामना सिद्ध होऊन् भनी अच्छिद्रवाचन गराउनुपर्दछ ।।८–१०।। श्रीगणेशको पार्थिव पूजनको विधि पहिले बताइसकिएको छ र वरदचतुर्थीमा पूजा गर्दा पनि उक्त विधिबाट नै पूजा सम्पन्न गर्नुपर्दछ ।।११।। पूजा सकेपछि बन्धु–बान्धवसहित कथा सुन्नुपर्दछ । श्रीगणेशको ध्यान गर्दै भोजन गर्नुपर्दछ अथवा मौन रही उपवास बस्नुपर्दछ ।।१२।। यसरी आरम्भ

एवं मासव्रतं कुर्याद् यावद् भाद्रचतुर्थिका ।
तस्यां महोत्सवः कार्यो यथाविभवमादरात् ।।१३।।

पूर्वोक्तेन विधानेन पूजयेद् गणनायकम् ।
रात्रौ जागरणं कार्यं गीतवादित्रनिःस्वनैः ।।१४।।

पुराणश्रवणैरन्यैर्नानाख्यानवरैरपि ।
सहस्रनाममन्त्रेण स्तुवीत द्विरदाननम् ।
प्रभाते विमलं स्नात्वा पूजयेद् द्विरदाननम् ।।१५।।

ब्राह्मणान् भोजयेद् भक्त्या शतं चैवैकविंशितम् ।
गोभूकाञ्चनवस्त्राणि भूषणानि धनानि च ।।१६।।

तेभ्यो दद्याद् यथाशक्ति दीनान्धकृपणेषु च ।
अशक्तौ भोजयेदेकविंशत्येकं तु वाडवान् ।।१७।।

ब्राह्मणाय प्रदातव्या मूर्तिश्चेद्धातुनिर्मिता ।
अन्यथा परमोत्साहैर्जलमध्ये विसर्जयेत् ।।१८।।

दिव्यवादित्रनिर्घोषैर्नरयानस्थितां च ताम् ।
छत्रध्वजपताकाभिर्वेदगीतादिनिःस्वनैः ।।१९।।

वालानां दण्डयुद्धैश्च तां विसृज्य गृहं व्रजेत् ।
व्रतमेवं तु यः कुर्यादेकवारं षडानन! ।।२०।।

सर्वान् कामानवाप्यैव गाणेशं पदमाप्नुयात् ।
ब्रह्मणाऽकारि सृष्ट्यर्थमेकार्णं जपता मनुम् ।
प्रत्यक्षो विकटस्तस्य सामर्थ्यं विविधं ददौ ।।२१।।

विष्णुनाऽप्रापि शक्तिश्च पालने कुर्वता व्रतम् ।
षडक्षरं महामन्त्रं जपता परमाद्भुतम् ।।२२।।

स्वेच्छावतारसामर्थ्यं ततः प्राप्तं षडानन ! ।
मयाऽप्यकारि पुत्रैतज्जपताऽष्टाक्षरं मनुम् ।।२३।।

वृत्रं च शम्बरं दैत्यं शक्रेण मदनेन च ।
जिघांसताऽकारि व्रतं तौ तौ जेतुञ्च शेकतुः ।।२४।।

गरेपछि भाद्र शुक्लपक्षको चतुर्थी तिथिसम्म मासव्रत सम्पन्न गर्नुपर्दछ। भाद्रशुक्लचतुर्थीका दिन आफ्नो शक्तिअनुसार श्रीगणेश महोत्सव मनाउनुपर्दछ ।।१३।। त्यस दिन पनि पहिले बताइएको विधानले श्रीगणेशपूजा गरी रातमा नृत्य, गीत र वाद्यवादन गरी जाग्राम बस्नुपर्दछ ।।१४।। पुराणश्रवणका साथै अनेक थरि कथाहरूको श्रवण गरेर श्रीगणेशसहस्रनामका नाममन्त्रहरूबाट भगवान् श्रीगणेशको स्तुति गर्नुपर्दछ । अर्को दिन निर्मल प्रातः भएपछि स्नान गरेर श्रीगणेशको पूजा गर्नुपर्दछ ।।१५।। एक सय एक्काइस जना ब्राह्मणहरूलाई भोजन गराएपछि तिनलाई गाई, भूमि, सुवर्ण, वस्त्र, गहना र धन टक्र्याउनुपर्दछ। यसैगरी यथाशक्ति दीन-दुःखी, अन्धाहरूलाई पनि वस्त्र आदि वितरण गर्नुपर्दछ। आफ्नो शक्ति नभएमा एक्काइस जना ब्राह्मणलाई मात्र भोजन गराए पनि हुन्छ। त्यति पनि नसक्ने मानिसले एक जना ब्राह्मणलाई भोजन गराए हुन्छ ।।१६-१७।। धातुबाट बनेको श्रीगणेशको प्रतिमा छ भने त्यो प्रतिमा ब्राह्मणलाई टक्र्याउनुपर्दछ । प्रतिमा पार्थिव वस्तुबाट तयार भएको छ भने त्यसलाई परम उत्साहका साथ जलको प्रवाहमा विसर्जन गर्नुपर्दछ ।।१८।। प्रतिमा विसर्जन गर्दा त्यसलाई नरयानमा राखेर बाजा-गाजासहित छाता-ध्वजा-पताकाले सजाएर, वेद र गीता आदि पवित्र ग्रन्थको पाठ गर्दै दण्डयुद्ध गर्ने बालकहरूलाई अगाडि लगाएर जल भएको ठाउँमा पुगी विसर्जन गरी घर फर्कनुपर्दछ । हे कार्तिकेय ! जसले यसरी एक पटकमात्र भए पनि यो व्रत गर्दछ, त्यसले आफ्ना सबै कामनाहरूका फल प्राप्त गरी श्रीगणेशको धाम पनि प्राप्त गर्दछ । ब्रह्माजीले सृष्टि गर्ने शक्ति प्राप्त गर्न श्रीगणेशको एकाक्षरी मन्त्र जप्दै यो व्रत सम्पन्न गर्नुभएको थियो । यस व्रतबाट भगवान् श्रीगणेश प्रसन्न हुनुभयो र उहाँले ब्रह्माजीलाई सृष्टि गर्न आवश्यक शक्ति प्रदान गर्नुभयो ।।१९-२१।। विष्णु भगवान्ले पनि संसारको पालन गर्ने आवश्यक शक्ति प्राप्त गर्नका लागि ६ अक्षरको श्रीगणेशको महामन्त्र जप्दै यस अत्यन्त अद्भुत वरदचतुर्थी व्रतको अनुष्ठान गर्नुभएको थियो । तदनुसार उहाँले इच्छापूर्वक अवतार लिने शक्तिसमेत प्राप्त गर्नुभयो । मैले पनि इन्द्रद्वारा वृत्रासुरको हत्या गराउने र कामदेवद्वारा शम्बरासुरको हत्या गराउने इच्छा राखेर ८ अक्षरको श्रीगणेशको मन्त्र जप्दै व्रत गरेको थिएँ । उक्त व्रतको प्रभावबाट इन्द्रले

नानासामर्थ्यवानस्मि संहरामि जगत्त्रयम् ।
यक्षगन्धर्वमुनिभिः किन्नरोरगराक्षसैः ।
अकारि स्वेष्टसिद्ध्यर्थं सिद्धचारणमानवैः ।।२५।।

एतत् त्वं स्कन्द ! वरदचतुर्थीव्रतमाचर ।
भविष्यसि रणेऽजेयो विख्यातो भुवनत्रये ।।२६।।

षडक्षरञ्च मन्त्रं ते ददामि वरदस्य ह ।

ब्रह्मोवाच

सुमुहूर्ते ददौ तस्मै शिवो दीक्षां षडक्षरीम् ।।२७।।

तदैव स ययौ स्कन्दस्तपस्तप्तुं द्विजोत्तम ! ।
सुनिर्मलतरे देशे वृक्षवल्लीसमाकुले ।।२८।।

बहुमूलफले रम्ये सरोवापीसुशोभिते ।
एकपादस्थितः स्कन्दस्तपस्तेपे सुदारुणम् ।।२९।।

व्रतं चकार विधिवद् यथोक्तं शम्भुना पुरा ।
अनुष्ठानाच्च मन्त्रस्य व्रतस्यास्य प्रभावतः ।।३०।।

प्रसन्नोऽभूत् तदैवास्य परमात्मा गजाननः ।
दर्शयामास सेनान्ये योगिध्येयमनुत्तमम् ।।३१।।

निजं रूपं महातेजाश्चतुर्भुजविराजितम् ।
महामुकुटसंशोभि कुण्डलाङ्गदशोभितम् ।।३२।।

एकदन्तं भालचन्द्रं शुण्डादण्डविराजितम् ।
पाशाङ्कुशकरं मालादन्तहस्तं सुशोभनम् ।।३३।।

मुक्तामणिगणोपेतं सर्पराजयुतोदरम् ।
दिव्यवस्त्रपरीधानं दिव्यगन्धानुलेपनम् ।।३४।।

अनेकसूर्यसङ्काशं तेजोज्वालासुदीपितम् ।
ददर्श षण्मुखस्तत्र विस्मयोत्फुल्ललोचनः ।।३५।।

वृत्रासुर र कामदेवले शम्बरासुरको वध गरेका हुन् ।।२२-२४।। यसै व्रतबाट म (शङ्कर) अनेक थरि शक्तिले सम्पन्न भई संहार गर्ने शक्ति प्राप्त गरेको हुँ । यक्ष, गन्धर्व, मुनि, किन्नर, सर्प, राक्षस, सिद्ध, चारण र मानिसहरूले पनि आफ्नो इष्ट सिद्धिका लागि वरदचतुर्थीको व्रत गरी सिद्धि प्राप्त गरेका हुन् ।।२५।। यस कारण हे स्कन्द ! तिमीले पनि वरदचतुर्थीको व्रत गर । यो व्रत सम्पन्न गर्दा तिमी युद्धमा अजेय हुनेछौ र तीनै भुवनमा विख्यात हुनेछौ । म तिमीलाई वरद श्रीगणेशको ६ अक्षरको मन्त्र उपदेश गर्दछु ।

**ब्रह्माजीले भन्नुभयो-** त्यसै बेला उत्तम मुहूर्तमा शिवजीले कार्तिकेयलाई ६ अक्षरको श्रीगणेश मन्त्रको दीक्षा दिनुभयो।।२६-२७।। भगवान् शङ्करबाट दीक्षाप्राप्त गरेपछि ती कार्तिकेय तपस्या गर्ने उद्देश्यले घरबाट निस्के । अनेक थरि वृक्षलता हुनाले रमणीय, कन्द, मूल, फलहरूद्वारा शोभायमान, तलाउ र पोखरीले भरिभराउ, उत्तम स्थानमा गएर एउटा खुट्टाले टेकेर तिनले घोर तपस्या गरे ।।२८-२९।। भगवान् शङ्करले बताएअनुसार वरदचतुर्थीको व्रत पनि सम्पन्न गरे । मन्त्रको जप र व्रतको प्रभावले देवताका पनि देवता परमात्मा गजानन छिटै प्रसन्न हुनुभयो । त्यसपछि स्कन्दलाई तेजोमय स्वरूपका र योगिध्येय श्रीगणेशले दर्शन दिनुभयो ।।३०-३१।। त्यस बेला भगवान् श्रीगणेश चार भुजाहरूले शोभायमान हुनुहुन्थ्यो । शिरमा महामुकुट सुहाएको थियो । कानमा कुण्डलहरू चम्किएका थिए । भुजाहरूमा केयूर सुहाएको थियो। एकदन्तका कारण अनुहार रमणीय देखिन्थ्यो । निधारमा चन्द्रमा सुहाएका थिए । लामो सुँढसहित हातमा पाश, अङ्कुश, माला र एकदन्त धारण गर्नुभएका उहाँ अत्यन्त आकर्षक मोती र मणिका मालाहरूले सुहाउनुभएको थियो। उहाँको नाभिमा शेषनाग बेरिएका थिए । दिव्य वस्त्र र अलङ्कार धारण गर्नुहुने उहाँको शरीरमा दिव्यगन्धको लेपन गरिएको थियो । उहाँ हजारौं सूर्यसमान तेजस्वी देखिनुहुन्थ्यो। तेजका ज्वालाहरूबाट प्रकाशमान चार-भुजाले सुहाएको उहाँको उत्तम स्वरूप अत्यन्त रमणीय थियो । स्कन्दले आश्चर्यले आँखा फैलाउँदै भगवान् श्रीगणेशको दिव्य स्वरूपको दर्शन गरे ।।३२-३५।। तेजोमय स्वरूपको दर्शन

व्याकुलीभूतचित्तोऽसौ किमेतदित्यचिन्तयत् ।
मया यच्चिन्त्यतेऽन्यद् वा तद् वा विन्द्यां न चाप्यहम्।।३६।।
ततः पप्रच्छ तूष्णीं स को भवान् किञ्च नाम ते ।

गजानन उवाच

चिन्त्यते यो दिवारात्रौ त्वयैकाग्रेण चेतसा ।।३७।।
सोऽहं प्राप्तो वरं दातुं वद ते हृदि वाञ्छितम् ।
ददामि तुष्टस्तपसा षडानन ! गजाननः ।।३८।।

स्कन्द उवाच

विदुर्न देवा न च शास्त्रकारा
ब्रह्मादयः शेषमुखाश्च नागाः ।
तव स्वरूपं जगदीश ! सम्यग्,
अदर्शि तन्मे द्विरदाननाद्य ।।३९।।
तेनैव जातः परिपूर्णकामः
तथापि याचे तव देववाक्यात् ।
पराजयो मे न कदापि भूयात्
प्रत्यक्षतामेहि विचिन्त्यमानः ।।४०।।
अविस्मृतिः स्यात् तव पादपद्मे
सर्वेषु देवेषु वरिष्ठता च ।।४१।।
अलक्ष्यो लक्षतां यातः ततो लक्षविनायकः ।
नाम्ना ख्यातो भवात्र त्वं भक्तकामसुरद्रुमः ।

गणेश उवाच

सर्वं तद् भविता स्कन्द ! यद्यत् प्रार्थितमद्य मे ।।४२।।
अविस्मृतिश्च सान्निध्यं चिन्त्यमानस्य मे भवेत् ।
पराजयो रिपूणां ते देवश्रेष्ठ्यं भविष्यति ।।४३।।

ब्रह्मोवाच

एवं वरान् ददौ देवो मयूरं निजवाहनम् ।
ददौ स्कन्दाय सुप्रीतो विनयाच्च तपोबलात् ।।४४।।
मयूरध्वज इत्येवं नाम ख्यातं ततोऽभवत् ।

गर्दा सहन नसकी व्याकुल भएका स्कन्दले यस्तो के विचित्र दृश्य देखें ? भनी विचार गर्न लागे । मनमनै मैले जुन स्वरूपको चिन्तन गरिरहेको छु, त्यही स्वरूप हो अथवा होइन, म केही जान्न सकिनँ भने। त्यसपछि धैर्य लिएर स्कन्दले दिव्य-स्वरूपसँग सोधे- तपाईँ को हुनुहुन्छ? तपाईँको नाम के हो?

**श्रीगणेशले भन्नुभयो** - हे स्कन्द ! अहोरात्र एकाग्रचित्त भएर तिमीले जसको चिन्तन गरिरहेका छौ, त्यही म हुँ । तिमीलाई वरदान दिन म यहाँ आएको छु । आफूलाई मनमा लागेका कुराहरू बताऊ । म तिम्रो तपस्याबाट प्रसन्न छु । मेरो नाम गजानन हो ।।३६-३८।।

**स्कन्दले भन्नुभयो** - हे गजानन ! आज हजुरले ममाथि ठूलो कृपा गर्नुभएको छ । जुन रूपलाई देवता, शास्त्रकार, ब्रह्मा आदि ठूला देवता र शेष आदि नागहरूले पनि राम्ररी जान्न पाउँदैनन् । यस्तो हजुरको दिव्यस्वरूपको दर्शन गर्ने सौभाग्य मैले प्राप्त गरें ।।३९।। आज हजुरको दिव्य दर्शन पाएर मेरा सबै कामना पूर्ण भएका छन् । हे प्रभो ! यसो हो तापनि हजुरबाट मनमा लागेका कुरा भन भन्ने आज्ञा पाएकाले म केही याचना गर्दैछु । हे श्रीगणेश प्रभो ! कहिल्यै पनि युद्धहरूमा मेरो पराजय नहोस् । मैले हे श्रीगणेश प्रभु ! भनेर हजुरको संझना गर्दा दर्शन पाउन सकूँ ।।४०।। हजुरका चरणकमलको संझना गर्ने सामर्थ्य प्राप्त गर्न सकूँ । सबै देवताहरूमा उत्तम देवताका रूपमा रहन पाऊँ । मैले आज नचिताएको दर्शन पाएँ। मेरो लक्ष्य पूरा भयो। त्यस कारण हजुर भक्तका कामना पूरा गर्ने कल्पवृक्ष बनेर संसारमा लक्ष्यविनायकका नामबाट प्रसिद्ध हुनुहोस् ।

**श्रीगणेशले भन्नुभयो**- हे कार्तिकेय ! तिमीले कामना गरेका सम्पूर्ण फलहरू प्राप्त गर्नेछौ। तिमीले मलाई कहिले पनि बिर्सने छैनौ । श्रीगणेशको दर्शन पाऊँ भनेर प्रार्थना गर्नासाथ तिमीले मलाई आफ्नो नजिकमा पाउनेछौ । तिम्रा शत्रुहरू परास्त हुनेछन्। तिमी देवताहरूमा उत्तम देवता भनेर चिनिनेछौ ।।४१-४३।।

**ब्रह्माजीले भन्नुभयो** - भगवान् श्रीगणेशले स्कन्दलाई यसरी वरदान दिनुका साथै आफ्नो वाहन मयूर पनि दिनुभयो। स्कन्दको नम्रता र तपोबलबाट प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले स्कन्दलाई मयूरध्वज भन्ने नाम पनि दिनुभयो । त्यसपछि स्कन्द संसारमा मयूरध्वज नामबाट प्रख्यात भए । अन्तमा उहाँले स्कन्दलाई सम्बोधन गर्नुभयो ।

गजानन उवाच

मृतिं यास्यन्ति हस्तात् ते तारकाद्या महासुराः ।।४५।।

लक्षविनायक इति नाम्नाऽहं भक्तवत्सलः ।
भविष्यामि चिरादत्र क्षेत्रे त्वद्वाक्यतोऽनघ ।।४६।।

ब्रह्मोवाच

एवमुक्त्वा तु विकटस्तत्रैवान्तर्हितोऽभवत् ।
ततः स्कन्दो महामूर्तिं कृत्वा स्थाप्य द्विजैः सह ।।४७।।

लक्षविनायक इति नाम चक्रे शुभं तदा ।
मोदकैर्लक्षसङ्ख्याकैः पुष्पैर्दूर्वाङ्कुरैरपि ।।४८।।

पूजयामास तां मूर्तिमन्यैर्द्रव्यैस्तथाविधैः ।
ब्राह्मणान् भोजयामास तावत्सङ्ख्यायुतान् शुभान् ।।४९।।

स्तुत्वा नत्वा ययौ स्कन्दः शङ्करं लोकशङ्करम् ।
मयूरमारुह्य ततः सर्वञ्चाकथयच्च तम् ।।५०।।

मयूरध्वज इति च नाम देवकृतं जगौ ।
तारकासुरनाशाय ययौ स्कन्दः शिवाज्ञया ।।५१।।

स्मृत्वा गजाननं देवं परिगृह्य शिवाशिषः ।
देवसेनापतित्वेऽसावभिषिक्तः सुरर्षिभिः ।।५२।।

सेनानीस्तारकं दृष्ट्वा युद्धं चक्रे महाबलः ।
लक्षवर्षान्तरे तं स मारयामास शक्तितः ।।५३।।

युद्धं तद् वर्णितुं शक्तिः शेषस्यापि न वै भवेत् ।
तारके निहते दैत्ये ननन्दुः सर्वदेवताः ।।५४।।

मुनयो लोकपालाश्च नागाश्च मानवास्तथा ।
मुमुचुः पुष्पवर्षाणि स्कन्दस्योपरि निर्वृताः ।।५५।।

सर्वदेवाश्च लोकाश्च स्वं स्वं स्थानं ययुस्तदा ।
स्वाहास्वधावषट्कारान् यथापूर्वञ्च चक्रिरे ।।५६।।

ब्रह्मोवाच

एवंप्रभावो देवोऽसौ कथितस्ते गजाननः ।
व्रतप्रभावोऽपि मया यथावत् ते निरूपितः ।।५७।।

**श्रीगणेशले भन्नुभयो** - हे स्कन्द ! तिम्रा हातबाट तारकासुर आदि ठूला दैत्य मर्नेछन् । म तिमीले तपस्या गरेको यस ठाउँमा तिम्रो प्रार्थना स्वीकार गरी लक्ष्यविनायकको नामबाट प्रसिद्ध भई भक्तवत्सल बनेर रहनेछु ।।४४-४६।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी भगवान् श्रीगणेश स्कन्दलाई आशीर्वाद दिएर अन्तर्धान हुनुभयो । त्यसपछि स्कन्दले भगवान् श्रीगणेशको विशाल मूर्ति तयार गरी ब्राह्मणहरूद्वारा लक्ष्यविनायक भनी नामकरण गराए । एक लाखको सङ्ख्यामा लड्डू, फूल, दूर्वाङ्कुर र अन्य पदार्थहरू टक्र्याई भगवान् लक्ष्यविनायकको पूजा गरे। पूजापछि एक लाख ब्राह्मणहरूलाई निम्ता गरेर भोजन गराए । अन्तमा भगवान् श्रीगणेशको स्तुति र नमस्कार गरे । त्यसपछि स्कन्द संसारका कल्याणकारी देवता शङ्करलाई भेट्न श्रीगणेशले दिनुभएको मयूरमा चढेर कैलासतर्फ गए। त्यहाँ गएर तिनले भगवान् शङ्करलाई सबै कुरा निवेदन गरे ।।४७-५०।। स्कन्दले 'मलाई भगवान् श्रीगणेशले वाहनको रूपमा मयूर दिनुभएको छ र मयूरध्वज नाम पनि दिनुभएको छ' भन्ने कुरा पनि बताए। त्यसपछि स्कन्द भगवान् शिवजीबाट आज्ञा पाएर भगवान् श्रीगणेशको स्मरण गर्दै शिव-पार्वतीसँग आशीर्वाद मागी तारकासुरको वध गर्न प्रस्थान गरे । देवता र मुनिहरूद्वारा देवसेनापतिको पदमा अभिषिक्त भएका सेनापति स्कन्दले तारकासुरसँग ठूलो युद्ध गरे । त्यो युद्ध एक लाख वर्षसम्म चल्यो। त्यसपछि मात्र आफ्नो शक्तिबाट स्कन्दले तारकासुरको वध गरेका थिए ।।५१-५३।। तारकासुर र स्कन्दका बीच भएको युद्धको वर्णन गर्न शेषनाग पनि पूर्ण रूपमा समर्थ छैनन् । तारकासुर मरेपछि सबै देवता, मुनिगण, लोकपाल, नाग र मानवहरू पनि आनन्दित भएका थिए। आनन्दको सागरमा डुबुल्की मारिरहेका सबै देवता र मानिसहरू स्कन्दमाथि फूल वर्षाएर जय जयकार गर्दै आ-आफ्ना घरतर्फ गए। तारकासुरको वध भएकाले सबै मानिसहरू पहिलेजस्तै यज्ञ, याग, मन्त्रानुष्ठान, देवकार्य र पितृकार्य गर्न लागे ।।५४-५६।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! यस्ता विशिष्ट शक्ति भएका परमदेवता भगवान् गजाननको महिमा बताएँ । उहाँको व्रत गर्नाले प्राप्त हुने फलको विषयमा पनि बताएँ ।।५७।।

त्रयस्त्रिंशत्कोटिसुरैरवध्योऽसौ महासुर: ।
स्कन्देन निहत: सङ्ख्ये देवव्रतप्रभावत: ।।५८।।
इन्द्रादिदेवतावृन्दै: पूजनीयोऽभवच्च स: ।

व्यास उवाच

अनुष्ठानं कृतं तेन कस्मिन् स्थाने समाधिना ।।५९।।
परमेण विशाखेन तन्मे ब्रूहि प्रजापते ।

ब्रह्मोवाच

अनुष्ठानं कृतं तेन यत्रास्ते घुसृणेश्वर: ।।६०।।
प्रसिद्धो वर्तते नाम्ना आसील्लक्षविनायक: ।
ऐलोऽभूत्तत्र नगरे पश्चाद् राजाऽभिविश्रुत: ।
तन्नाम्ना नगरं ख्यातं ततस्तदभवन्मुने ।।६१।।

तेत्तीस कोटि देवताहरूद्वारा पनि अवध्य मानिएको महादानव तारकासुरलाई युद्धमा स्कन्दले वरदचतुर्थी व्रतको प्रभावबाट वध गर्न सकेका हुन् ।।५८।। यस कारण स्कन्द, इन्द्र आदि देवताहरूका पनि पूजनीय बनेर रहे ।

**व्यासले भन्नुभयो** - हे ब्रह्माजी ! स्कन्दले कुन ठाउँमा समाधि लगाएर वरदचतुर्थी व्रतको अनुष्ठान गरेका हुन् ? यस प्रश्नको उत्तर दिनुहोस् ।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! जहाँ भगवान् शिवजीको घुसृणेश्वर ज्योतिर्लिङ्ग छ, त्यहीं नै स्कन्दले उक्त मन्त्रानुष्ठान गरेका हुन् ।।५९-६०।। लक्ष्यविनायकको स्थापना पनि त्यहीं नै भएको हो। पछि त्यस नगरमा ऐल नाम गरेका राजा प्रसिद्ध भए । कालान्तरमा त्यो ठाउँ ऐलनगरका नामबाट प्रसिद्ध भयो ।।६१।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे तारकवधो नाम सप्ताशीतितमोऽध्याय:

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'वरदचतुर्थी व्रतको प्रभावबाट शिवपुत्र स्कन्दद्वारा तारकासुरको वध' शीर्षकान्वित सतासीऔं अध्याय पूर्ण भयो ।।८७।।

ॐ

# अथ अष्टाशीतितमोऽध्यायः { ८८ अध्याय }

मुनिरुवाच

श्रुतमाख्यानकं ब्रह्मन् ! गजाननव्रताश्रयम् ।
दग्धश्चेन्मदनस्तेन शङ्करेण रुषाग्निना ।।१।।
दृश्यते सर्वलोकेषु मदनोऽद्यापि तत् कथम् ।
एतत् कथय मे सर्वं विस्तराच्चतुरानन ।।२।।

ब्रह्मोवाच

तृतीयं तु तदा नेत्रं रुषोद्घाटितवान् हरः ।
अपराधं तु विज्ञाय मदनस्य रतिस्तदा ।।३।।
आक्रन्दती मृतं कामं हरान्तिकमुपागमत् ।
साष्टाङ्गं प्रणिपत्यैनं तुष्टाव च यथामति ।।४।।

रतिरुवाच

नमामि देवं गिरिजासहायं
वृषध्वजं भालविलोचनञ्च।
यः पाति लोकान् खलु सत्त्वयुक्तो
निर्माति लोकान् रजसा गुणेन ।।५।।
यः स्वेच्छया संहरतेऽखिलेशो
जगत् तमोविष्टतनुर्महेशः ।
यो नुः कपालं वहते जनानां
भिक्षाशनः पूरयतेऽखिलार्थान् ।।६।।
दीनानुकम्पी भगवान् महेशो
गतप्रियायाः शरणं ममास्ताम् ।
कर्तुं तथाऽकर्तुमदीनसत्त्वः
शक्तोऽन्यथा कर्तुमपीह देवः ।।७।।
स मे विधत्तां शरणं गतायाः
सौभाग्यमुच्चैर्मृतजीवनेन ।
नो चेदहं प्राणविसर्जनेन
यशः करिष्ये विपरीतमीश ।।८।।

ब्रह्मोवाच

एवं तया स्तुतः शम्भुः प्रसन्नस्तामथाब्रवीत् ।

**व्यासले भन्नुभयो** – हे भगवन् कमलासन ! भगवान् गजाननको व्रतसँग सम्बद्ध आख्यान मैले सुनें । भगवान् शङ्करले क्रोधको आगोद्वारा कामदेवलाई भस्म गराउनुभयो भन्ने कथा पनि सुनें। तर आज पनि सबै प्राणीहरूमा कामदेवको अस्तित्व देखिन्छ । यस्तो कसरी भयो ? यस विषयमा मलाई बताउनुहोस्।।१-२।।

**ब्रह्माजीले भन्नुभयो** – जुन बेला भगवान् शिवजीले क्रोधबाट तेस्रो आँखा खोल्नुभयो र कामदेव भस्म भए, त्यस बेला रति कामदेवको अपराध थाहा पाएर विलाप गर्दै भगवान् शङ्करका समीपमा गइन् । तिनले साष्टाङ्ग प्रणाम गरेर आफ्नो बुद्धिअनुसार भगवान् शङ्करको स्तुति गरिन् ।।३-४।।

**रतिले भनिन्**– हे वृषध्वज! हे त्रिनयन! हे गिरिजापति! भगवान् शङ्कर ! हजुरलाई प्रणाम गर्दछु । जुन भगवान्ले सत्त्व गुणको आश्रय लिएर जगत्को रक्षा गर्नुहुन्छ र रजोगुणको आश्रय लिएर जगत्को निर्माण गर्नुहुन्छ।।५।। जसले तमोगुणको आश्रय लिएर आफ्नो इच्छाले सम्पूर्ण जगत्को संहार गर्नुहुन्छ। जसले आफ्नो घाँटीमा नरमुण्डको माला धारण गर्नुहुन्छ, जसले भिक्षावृत्ति गरी भोजन गर्नुहुन्छ तापनि आराधकहरूका सम्पूर्ण कामना परिपूर्ण तुल्याउनुहुन्छ ।।६।। दीन-दुःखीहरूका लागि परम दयालु हे भगवन् महेश! आफ्ना प्रियको असामयिक मृत्युबाट व्याकुल र शोकाकुल मजस्ती नारीको शरण बन्नुहुनेछ। जुन ठूला देवता शिवजीले जे पनि गर्न सक्नु हुन्छ, केही नगर्न पनि सक्नु हुन्छ र हुने कुरालाई नहुने र नहुने कुरालाई हुने बनाउन पनि सक्नु हुन्छ।।७।। यस्ता शिवजीले शरणमा आएकी मजस्ती नारीका मृत पतिलाई जीवन प्रदान गरेर ठूलो सौभाग्य प्रदान गर्नुहुनेछ भन्ने आशा गरेकी छु । त्यसो गर्नुभएन भने मैले प्राणत्याग गर्नेछु । मेरो प्राणत्यागबाट हजुरको कीर्तिमा दाग लाग्नेछ ।।८।।

**ब्रह्माजीले भन्नुभयो** – रतिद्वारा यसरी स्तुतिवचनद्वारा प्रार्थना गरिनुभएका भगवान् शङ्करले प्रसन्न मुद्रामा कुरा गर्नुभयो।

### शम्भुरुवाच

वरं वृणु महाभागे कामपत्नि ! शुभानने ।।९।।

ददामि तुष्टः स्तोत्रेण सर्वान् कामान् हृदि स्थितान् ।
इत्थं शिववचः श्रुत्वा रतिर्हृष्टा प्रणम्य तम् ।।१०।।

सौभाग्यकामा तं देवं निजगाद भृशातुरा ।

### रतिरुवाच

स्वामिन् ! यदि प्रसन्नश्चेच्छृणु मे परमं वचः ।।११।।

रसायां दिवि भूमौ वा कान्ताः स्युः कामिनीगुणाः ।
मम लावण्यलेशो न तेषु क्वाऽपि त्रिलोचन! ।।१२।।

मां दृष्ट्वा मुमुचुः शक्रमुख्या वीर्यमपत्रपाः ।
ततो मे महती लज्जा जाता मे तामपाकुरु ।।१३।।

लावण्यं च वृथा जातं विना कामेन शङ्कर ।
अयशो दहते मह्यं रतिः सा विधवेति च ।।१४।।

भर्तृदानेन देवेश! मां जीवय दयानिधे !।
एवं तया प्रार्थितोऽसौ शङ्करो लोकशङ्करः ।।१५।।

उवाच श्लक्ष्णया वाचा हर्षयन् कामयोषितम् ।

### शिव उवाच

चिन्तां मा कुरु कल्याणि! न लज्जां कर्तुमर्हसि ।।१६।।

स्मृतमात्रस्त्वया बाले कामः स्याद् दृष्टिगोचरः ।
मनसा चिन्तितो वापि मनोभूरिति संज्ञितः ।।१७।।

पूरयिष्यति ते कामान् मान्या त्वञ्च भविष्यसि ।
विष्णोः सकाशादुत्पत्तिं रमायां प्राप्स्यते यदा ।।१८।।

भर्ता तव जने ख्यातो नाम्ना प्रद्युम्नसंज्ञितः ।
भविष्यति महाभागे ! गच्छेदानीं निजालयम् ।।१९।।

साऽऽगता शिववाक्येन मन्दिरं भृशसुन्दरम् ।
सस्मार तं पतिं सा तु पुरोऽनङ्गः समाययौ ।।२०।।

**शिवजीले भन्नुभयो** - हे भाग्यवती सुन्दरमुखी ! कामदेवकी पत्नी रति ! तिमीले वर माग । म तिम्रो स्तुतिबाट प्रसन्न छु र तिम्रा मनमा रहेका सबै कामनालाई पूरा गर्दछु । शिवजीका यी कुरा सुनेर आफ्नो सौभाग्यको कामना गरिरहेकी रतिले प्रसन्न भई भगवान्‌लाई प्रणाम गरिन् र अत्यन्त आर्त भएर बिन्ती गरिन् ।

**रतिले भनिन्** - हे जगत्‌का स्वामी शङ्कर ! हजुर प्रसन्न हुनुहन्छ भने मेरो सत्य वचन सुन्नुहोस् ।।९-११।। पाताल, मर्त्य र दिव्यलोकहरूमा जति पनि उत्तम गुणले सम्पन्न सुन्दरीहरू छन्, तिनमा मेरो सौन्दर्यको एउटा लेशमात्र पनि पाउन सकिंदैन। हे त्रिनयन ! इन्द्र आदि देवताहरूले मलाई देखेर निर्लज्ज भई वीर्यपात गरेका थिए, त्यसपछि मलाई धेरै लज्जाको अनुभूति भयो। मेरो त्यो लज्जाभावलाई हटाइदिनुहोस् ।।१२-१३।। हे शङ्कर ! मेरा पति कामदेवको देहत्यागपछि मेरो सौन्दर्य खेर गयो । विश्वकी सुन्दरी रति पनि विधवा भई भन्ने ठूलो अपकीर्ति फैलियो । यो संझिदा मेरो मुटु पोल्छ ।।१४।। हे दयालु महादेव! मेरा पतिलाई जीवित गराएर मलाई जीवनदान दिनुहोस् । यसरी रतिद्वारा प्रार्थना गरिएपछि लोककल्याणकारी भगवान् शङ्करले मधुरवाणीबाट रतिलाई खुसी गराउँदै उपदेश दिनुभयो।

**शिवजीले भन्नुभयो** - हे कल्याणी रति ! तिमीले चिन्ता नगर, लज्जा छ भने त्यसको परित्याग गर । हे सुन्दरी तिमीले संझनामात्र गर्दा तिम्रा पति कामदेव तिम्रा आँखासामु आउनेछन्। मनबाट चिन्तन गर्दा मनोभवको नामबाट प्रकट भई तिम्रा इच्छा पूरा गर्नेछन् ।।१५-१७।। तिमी जगत्‌मा मान्य हुनेछौ । हे भाग्यवती रति ! तिम्रा पति कामदेव द्वापरयुगमा विष्णुका अवतार कृष्णका पुत्रका रूपमा लक्ष्मीरूप रुक्मिणीबाट उत्पन्न भएपछि प्रद्युम्नका नामबाट संसारमा प्रख्यात हुनेछन् । अहिले तिमी निश्चिन्त भएर आफ्नो घर जाऊ ।।१८-१९।। शिवजीबाट यस्तो वरदान प्राप्त गरी रति आफ्नो सुन्दर निवासमा गइन् । उनले त्यहाँ गएपछि प्यारा पति कामदेवको संझना गरिन् । संझनासाथ कामदेव पनि प्रकट भए र ईश्वरको इच्छाअनुसार रतिका सामु प्रत्यक्षरूपमा

ईश्वरेच्छावशात् तस्याः प्रत्यक्षं समजायत ।
इतिश्चाश्चर्ययुक्ता सा जहृषे पतिना सह ।।२१।।

ततोऽनङ्गो ययौ शम्भुं प्रणम्याभिदधे वचः ।

अनङ्ग उवाच

विनाऽपराधं देवेश! गमितोऽनङ्गतां कथम् ।।२२।।

इन्द्रादिदेवतावृन्दैस्तारकासुरपीडितैः ।
मुनिभिश्च विशाखस्य त्वत्त उत्पत्तिवेदिभिः ।।२३।।

प्रार्थितस्तव निष्ठाया भङ्गं कर्तुमहं विभो ।
उपकाराय सर्वेषामकार्षं कर्म तादृशम् ।।२४।।

उपकारसमं पुण्यं न चास्ति भुवनत्रये ।
विपरीतं तु तज्जातं मम दैवात् सुरेश्वर ।।२५।।

त्रयस्त्रिंशत्कोटिदेवेष्वहं चारुतरः पुरा ।
उपमा चारुपुरुषे ममैव दीयतेऽखिलैः ।।२६।।

कथं तिष्ठामि देवेश ! स्वाङ्गहीनः परेतवत् ।
अतो मयि महादेव ! कृपयाऽनुग्रहं कुरु ।।२७।।

ब्रह्मोवाच

तत एकाक्षरं मन्त्रं गणेशस्य ददौ शिवः ।
अनङ्गाय प्रणमतेऽनुष्ठानं चादिशच्च तम् ।।२८।।

ततोऽनङ्गो ययौ रम्यं जनस्थानं सुसिद्धिदम् ।
तत्रानुष्ठानमकरोदनङ्गः शङ्कराज्ञया ।।२९।।

संवत्सरशतं पूर्णं ततापं स तपो महत् ।
एकाक्षरं जपन् मन्त्रं गणेशध्यानतत्परः ।।३०।।

वायुमात्राशनो नित्यं सदा रतिसहायवान् ।
ततः प्रसन्नो भगवान् देवदेवो गजाननः ।।३१।।

आविरासीद् दशभुजो महामुकुटशोभितः ।
ज्वलद्रत्नप्रभाचारुकुण्डलाङ्गदमण्डितः ।।३२।।

देखिए । आश्चर्यचकित रति आफ्ना पतिका साथमा रहन पाउँदा अत्यन्त हर्षित भइन् ।।२०-२१।। त्यसपछि कामदेव भगवान् शङ्करका समीपमा गए र प्रणाम गर्दै निवेदन गरे ।

**कामदेवले भने -** हे महादेव ! अपराध नै नभईकन किन मलाई अङ्गहीन बनाउनुभयो ? तारकासुरद्वारा पीडित भएका इन्द्र आदि देवताहरूले र स्कन्दको उत्पत्तिको रहस्य जान्ने तत्त्ववेत्ता मुनिहरूले हजुरको तपोभङ्ग गर्न मलाई अनुरोध गरेका थिए । सबैको उपकारका लागि मैले त्यस्तो काम गरें। तीनै लोकमा उपकार समान अरू कुनै पुण्य छैन । हे भगवन्! मैले भने दैव प्रतिकूल भएर उपकारको सट्टा अपकाररूप फल पाएको छु ।।२२-२५।। म पहिले तेँत्तीस कोटि देवताहरूमा सबभन्दा राम्रो देवता मानिन्थें । मानिसहरूले राम्रो पुरुषको बयान गर्दा कामदेवजस्तो भनेर मेरो उपमा दिने गर्दथे । तर अहिले हजुरबाट म खरानीमा परिणत भएँ । मेरो ज्यान छैन । विना ज्यान कसरी व्यवहार गरूँ । म प्रेतजस्तो भएको छु । यस कारण हे महादेव ! ममाथि कृपा गर्नुहोस् ।।२६-२७।।

**ब्रह्माजीले भन्नुभयो -** कामदेवको प्रार्थना सुनेर भगवान् शिवजीले कामदेवलाई एक अक्षर भएको श्रीगणेशको मन्त्र उपदेश गर्नुभयो र जपको विधि पनि सिकाउनुभयो ।।२८।। त्यसपछि कामदेव अत्यन्त रमणीय र सिद्धिदायक जनस्थानमा गए । त्यहाँ भगवान् शङ्करको आज्ञाले एकाक्षरी मन्त्रको जप गर्न थाले ।।२९।। तिनले सय वर्षसम्म ठूलो तपस्या गरे । श्रीगणेशको मन्त्रजप गर्दै श्रीगणेशकै ध्यानमा लीन भए ।।३०।। तिनले वायुपान गरेर बसिरहेका थिए । तिनका नजिकमा तिनकी पत्नी रति बस्ने गर्दथिन् । तिनको तपस्याबाट देवताहरूका पनि देवता भगवान् श्रीगणेश प्रसन्न भई प्रकट हुनुभयो ।।३१।। त्यस बेला भगवान् श्रीगणेशले दश भुजा धारण गर्नुभएको थियो, ठूलो मुकुटले सुहाउनुभएको थियो र रत्नहरूको कान्तिले अत्यन्त सुन्दर देखिनुहुन्थ्यो । उहाँले कुण्डल एवं केयूर धारण गर्नुभएको थियो र करोडौं सूर्यको कान्तिले सुहाउनुभएको थियो । उहाँ कण्ठमा मोतीको हार धारण गरी अत्यन्त आकर्षक मुद्रामा देखिनुभएको थियो । उहाँले दिव्यमाला र वस्त्र धारण गर्नुभएको थियो । सुन्दर

कोटिसूर्यप्रतीकाशो मुक्तामालाविभूषित: ।
दिव्यमाल्याम्बरधरो दिव्यगन्धानुलेपन: ।।३३।।

सिन्दूरारुणशुण्डास्यो दशायुधलसत्कर: ।
शेषालङ्कृतनाभिश्च नानालङ्कारराजित: ।।३४।।

सिंहस्कन्धो महाश्रीमाँश्शीत्कारत्रासिताखिल: ।
इन्द्रादयोऽपि मुनय आविर्भूते गजानने ।।३५।।

आययुरप्सरोभिश्च यक्षगन्धर्वकिन्नरै: ।
दिव्यवादित्रनिर्घोषै: पुपूजुस्ते गजाननम् ।।३६।।

उपचारै: षोडशभिर्भक्त्या देवं पृथक् पृथक् ।
कामोऽपि तत उत्थाय प्रणिपत्याखिलान् सुरान् ।।३७।।

ववन्दे देवचरणौ पूर्वं नत्वा मुनीनपि ।
प्रशशंस तदा देवं विकटं करुणाकरम् ।।३८।।

काम उवाच

धन्यस्त्वमसि देवेषु परब्रह्मस्वरूपवान् ।
निराकारोऽपि साकारो जातोऽसि भक्तवत्सल ।।३९।।

अद्य धन्यं मम जनुस्तपो धन्यतरञ्च मे ।
यत् तवाङ्घ्रियुगं दृष्टं सर्वदु:खविमोचनम् ।।४०।।

कारणं सर्वसिद्धीनां धर्मार्थकाममोक्षदम् ।
धन्ये नेत्रयुगे मेऽद्य याभ्यां दृष्ट: पर: पुमान् ।।४१।।

यं न जानन्ति वेदान्ता: साङ्ख्या: पातञ्जलादय: ।
नेति नेति वदन् तूष्णीं वेदोऽपि यत्र कुण्ठित: ।।४२।।

अनन्तकोटिब्रह्माण्डरोमकूपोऽखिलेश्वर: ।
येन मन्त्रेण सोऽदर्शि मन्त्रो धन्यतरोऽपि स: ।।४३।।

गणेश उवाच

सम्यगुक्तं रतिपते ! न मां ब्रह्मादयो विदु: ।
यदा साकारतां यामि तेऽपि जानन्ति मां तदा ।।४४।।

वासना आउने सुगन्धित पदार्थ लेपन गर्नुभएको थियो । सिन्दूरझैं रातो सूँढलाई मुखमा धारण गर्नुभएको थियो । दशवटा भुजाले सुहाउनुभएको थियो । शेषनागलाई यज्ञोपवीत बनाएर कम्मरमा बेर्नुभएको थियो । अनेक थरि गहनाले झकिझकाउ देखिनुभएका सिंहारूढ भगवान् श्रीगणेश अत्यन्त शोभासम्पन्न देखिनुहुन्थ्यो। त्यस बेला उहाँले ठूलो स्वरले गर्जन गर्नुभयो। त्यस गर्जनबाट सम्पूर्ण संसार व्याकुल भयो । इन्द्र आदि देवता र ऋषिहरू भगवान् श्रीगणेश प्रकट हुनुभएको थाहा पाएपछि दिव्य बाजा बजाउँदै अप्सरा, यक्ष, गन्धर्व र किन्नरका साथ श्रीगणेशको दर्शन गर्न आए । तिनीहरूले सोह्र प्रकारका उपचारहरूबाट भक्तिपूर्वक भगवान् श्रीगणेशको छुट्टाछुट्टै पूजा गरे । कामदेवले पनि उठेर शिर झुकाई सम्पूर्ण देवताहरूलाई र भगवान् श्रीगणेशलाई प्रणाम गरे र ऋषि-मुनिहरूलाई पनि नमस्कार गरे । त्यसपछि कामदेवले दयालु भगवान् श्रीगणेशको स्तुति गरे ।।३२-३८।।

**कामदेवले भने -** हे भक्तका प्यारा भगवान् श्रीगणेश ! देवताहरूका पनि देवता हजुर धन्य हुनुहुन्छ । हजुर परब्रह्मस्वरूप हुनुहुन्छ र निराकार हुनुहुन्छ तापनि मजस्तो भक्तमाथि कृपा गरी साकाररूपमा आएर दर्शन दिई मलाई कृतार्थ बनाउनुभएको छ ।।३९।। आज मेरो जन्म धन्य भएको छ र तपस्या धन्य भएको छ । किनकि आज मैले सबै प्रकारका दु:खबाट मुक्त गराउने, सबै प्रकारका सिद्धि प्रदान गर्नुहुने, धर्म-अर्थ-काम र मोक्षजस्ता पुरुषार्थ प्रदान गर्नुहुने हजुरका चरणकमलको दर्शन पाएको छु । आज मेरा दुबै आँखा धन्य छन् । किनकि यिनै आँखाले आज मैले हजुरको स्वरूपलाई निर्धक्कसँग दर्शन गर्न पाएँ ।।४०-४१।। वेदान्त, साङ्ख्य र योगदर्शनले पनि जुन हजुरको स्वरूपबोध गर्न सक्दैनन्, वेदले नेति-नेति भनेर स्वरूप बताउन सक्दैनन् र कुण्ठित बन्दछन्, जसका रौं-रौंका प्वालहरूमा अनन्तकोटि ब्रह्माण्ड घुमिरहन्छन् ती सबैका स्वामी परमात्मा श्रीगणेशलाई जुन मन्त्रले दर्शन गराउने काम गऱ्यो त्यो पनि धन्य भएको छ ।।४२-४३।।

**श्रीगणेशले भन्नुभयो -** हे कामदेव ! तिमीले अत्यन्त उत्तम प्रार्थना गरेका छौ । तिम्रो भनाइ सत्य हो । ब्रह्मा आदि देवताहरूले पनि मलाई राम्ररी जान्दैनन् । जुन बेला म अवतार

ममैवानुग्रहात् काम! दृष्टवानसि मां तदा ।
यतोऽहं परितुष्टस्ते तपसा मनुना तथा ।।४५।।

वृणु यत्तेऽखिलान् कामान् काम! कामं ददामि ते ।

**ब्रह्मोवाच**

इति देववचः श्रुत्वा पुनरूचे मनोभवः ।।४६।।

आनुपूर्व्येण सकलं वृत्तान्तं शिवकारितम् ।
तस्मै चाकथयत् कामः प्रसन्नार्थप्रदायिने ।।४७।।

अनङ्गतां स्वस्य रतेराक्रन्दं मनुमेव च ।
अनुष्ठानं चिरकृतं शिवदत्तं वरं तथा ।।४८।।

वृणोति स्म वरं तस्मात् सुप्रसन्नाद् गजाननात् ।

**काम उवाच**

यदि प्रसन्नो भगवाँस्तन्मे देहि सदेहताम् ।।४९।।

मान्यतां सर्वदेवेषु प्राग्वल्लावण्यमेव च ।
भक्तिं दृढां त्वच्चरणे त्रैलोक्यविजयं तथा ।।५०।।

लिएर दर्शन दिन्छु, त्यस बेलामात्र तिनीहरूले मलाई चिन्दछन्। हे कामदेव ! मेरै कृपाबाट मेरो स्वरूपबोध गर्न पाएका छौ । किनकि म तिम्रो तपस्या र मन्त्रजपबाट प्रसन्न भएको छु । तिमीले मसँग आफ्ना कामनाहरू बताऊ । म तिमीलाई वर दिनेछु । त्यो स्वीकार गर ।

**ब्रह्माजीले भन्नुभयो** – भगवान् श्रीगणेशका वचन सुनेर कामदेवले फेरि शुरुबाट अन्त्यसम्मको घटनाचक्र बताए। भगवान् शिवजीसँग भएका कुरा पनि सुनाए । प्रसन्न भएर आफूलाई वरदान दिने भगवान् श्रीगणेशसँग उनले केही लुकाएनन् ।।४४-४७।। आफू खरानी भएको कुरा, आफ्नी पत्नी रतिले विलाप गरेको कुरा र भगवान् शिवजीबाट मन्त्र प्राप्त गरेको कुरा सबै बताएपछि प्रसन्न हुनुभएका श्रीगणेशसँग कामदेवले वरदान मागे ।

**कामदेवले भने** – हे भगवन् श्रीगणेश ! हजुर प्रसन्न हुनुहुन्छ भने मलाई उत्तम शरीर दिनुहोस् । सबै देवताहरूको बीचमा मलाई प्रतिष्ठा दिनुहोस् । पहिलेको जस्तै सौन्दर्य दिनुहोस्। हजुरको चरणमा स्थिर भक्ति दिनुहोस् र सम्पूर्ण संसारमाथि नै विजय गर्न सघाउने शक्ति प्रदान गर्नुहोस् ।।४८-५०।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे कामवरयाचनं नामाऽष्टाशीतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कामदेवद्वारा श्रीगणेशको आराधना एवं वरप्राप्ति' शीर्षकान्वित अठासीऔँ अध्याय पूर्ण भयो ।।८९।।

ॐ

## अथ ऊननवतितमोऽध्याय: { ८९ अध्याय }

### गणेश उवाच

यद् यन् ते प्रार्थितं काम ! तत् तत् ते भविताऽखिलम्।
स्मोदगज्जनिं प्राप्य साङ्गस्त्वं सर्वसुन्दर: ।।१।।

भविता सर्वमान्यश्च त्रैलोक्यविजयी तथा ।
पुष्पं फलं किसलयं कामिन्यवयवा मरुत् ।।२।।

उद्बोधकानि ते सन्तु ज्योत्स्ना चन्दननीरजे ।
मरालाण्डजशब्दश्च जेतास्यैतैर्हरादिकान् ।।३।।

दर्शनात् स्मरणादेषां मनस्यपि भविष्यसि ।
मनोभू: स्मृतिभूरेवं नामापि स्याज्जनेषु ते ।।४।।

अविस्मृतिर्मच्चरणे दृढा भक्तिश्च ते भवेत् ।
स्मृतोऽहं पुरत: स्यां ते महत्कार्य उपस्थिते ।।५।।

### ब्रह्मोवाच

एवं तस्मै वरान् दत्त्वा कामायाऽथ गजानन: ।
अन्तर्दधे महाभाग: पश्यत्सु च सुरर्षिषु ।।६।।

ततः कामो महामूर्तिं गणेशस्य तथाविधाम् ।
सम्यक् स्थापयामास पूजयामास तां तदा ।।७।।

रतिनिर्मितपक्वान्नैर्मोदकैर्लड्डुकादिभि: ।
महोत्कटेति नामास्य तेजस्वित्वात् तथाऽकरोत् ।।८।।

प्रासादं निर्ममे कान्तं रत्नस्तम्भविराजितम् ।
रुक्मिण्या उदराज्जातस्त्यक्तो दैत्येन वारिधौ ।।९।।

**श्रीगणेशले भन्नुभयो** - हे कामदेव ! तिमीले जुन जुन कामना गरेका छौ ती सबै कामना पूरा हुनेछन् । लक्ष्मीको गर्भबाट जन्म लिएर तिमी सर्वाङ्गसुन्दर पुरुषको रूपमा चिनिने छौ ।।१।। सबैका मान्य र स्वर्ग, मर्त्य एवं पातालमा विजयी हुनेछौ । फलफूल, पालुवा, युवतीका अङ्गहरू, मन्द पवन, चाँदनी, चन्दन, कमल, हंस र कोइलीको मधुर शब्द यी सबै तिम्रो उद्दीपनका लागि सहायक सामग्री हुनेछन् । उक्त सामग्रीहरूकै सहयोग लिएर तिमीले शिवजी आदि देवताहरूलाई वशमा पार्नेछौ । वसन्त ऋतु, फलफूल, कोपिला, पालुवा आदि उद्दीपक पदार्थको संझना गर्दा र दर्शन गर्दा संझने र दर्शन गर्ने मानिसको मनमा पैदा हुनेछौ । मानिसहरूले तिमीलाई मनोभू र स्मृतिभूका नामबाट पनि चिन्ने छन् । तिमीले मलाई कहिले पनि बिर्सने छैनौ । मेरा चरणमा तिम्रो सधैं भक्ति लागिरहने छ । ठूलो काम आइपर्दा तिमीले संझना गऱ्यौ भने म तिम्रो समीपमा उपस्थित हुनेछु ।।२-५।।

**ब्रह्माजीले भन्नुभयो**- भगवान् श्रीगणेश यसरी कामदेवलाई वरदान दिएर अन्तर्धान हुनुभयो । हे वेदव्यास! त्यस बेला देवता र ऋषिहरूले श्रीगणेश र कामदेवको संवादको दृश्य हेरिरहेका थिए । वरदान पाएका कामदेवले प्रसन्न भएर भगवान् श्रीगणेशको राम्रो र विशाल मूर्ति तयार गरी प्रतिष्ठापूर्वक त्यसमा पूजा पनि गरे ।।६-७।। मूर्तिको प्रतिष्ठासमेत गरेपछि आफ्नी पत्नी रतिले पकाएका मीठा पक्वान्न, मोहनभोग, लड्डू आदि चढाएर भगवान् श्रीगणेशको पूजा गरे । आफूले पूजा गरेका श्रीगणेश परम तेजस्वी भएकाले तिनले महोत्कट भनी नामकरण गरे।।८।। महोत्कट भगवान्का लागि तिनले रत्नका स्तम्भहरू भएको सुन्दर मन्दिर बनाए । त्यसपछि कामदेव द्वापरयुगमा भगवान् कृष्णकी पत्नी रुक्मिणीका गर्भबाट प्रद्युम्नको रूपमा पैदा भए । पैदा भएको ६ दिनमा नै शंवरनामक दैत्यले बालक प्रद्युम्नलाई सुत्केरी बस्ने कोठाबाट अपहरण गऱ्यो । अपहृत बालकलाई त्यसले समुद्रमा लगेर फ्याँकिदियो ।।९।। फ्याँकिएका बालकलाई

मत्स्येन गिलितस्तत्र स मत्स्यो धीवरैस्ततः ।
शम्बरायापि तेनापि मायावत्यै निवेदितः ।।१०।।

विभिन्नेऽस्मिंस्तदुदरान्निर्गतो वर्द्धितस्तया ।
नारदोऽकथयत् तस्यै कामोऽयं वर्द्धितस्त्वया ।।११।।

उपदिष्टाऽनेकमायः शम्बरं स ततोऽवधीत् ।
गणेशस्य प्रसादेन बहूनेको व्यजिग्यत ।।१२।।

मायावत्या शिक्षिताभिर्मायाभिर्बहुभिश्च सः ।
प्रद्युम्न इति विख्यातः सरस्वत्याः पुरं ययौ ।।१३।।

सर्वदेवेषु मान्यश्च त्रैलोक्यजयकारकः ।
गजाननप्रसादेन बभूवाऽऽनन्दनिर्वृतः ।।१४।।

रुक्मिणीप्रभृतिस्त्रीभिर्दृष्टः कृष्ण इवापरः ।
तत उत्थाय याताभिर्लज्जिताभिः समन्ततः ।।१५।।

बुद्ध्वा पुत्रं नारदस्य वाक्येन मुमुदुश्च ताः ।
आलिलिङ्गुस्तमभ्येत्य प्रणनाम रतिश्च ताः ।।१६।।

सर्वा पुरी हर्षयुता तस्मिन् ज्ञाते बभूव सा ।

क उवाच

एवं जनस्थानगतगणेशस्य महामुने ।।१७।।

महिमा कथितो यत्र रामेणाच्छेदि नासिका ।
शूर्पणख्यास्ततस्तत् तु नाम्ना ख्यातं तु नासिकम् ।।१८।।

तत्राद्यापि हि दृश्यन्त उपला मोदका इव ।
एवमाराधितस्तेन कामेनासौ गजाननः ।।१९।।

षडक्षरेण मन्त्रेण शेषेणाराधितो यथा ।
रतिश्च मदनश्चापि ननन्दतुरुभौ यथा ।।२०।।

कुनै माछाले निल्यो । माछा मार्ने माझीहरूले त्यो माछा समाते। तिनले घर लगेर माछा चिर्दा त्यसको पेटमा एउटा सुन्दर बालक देखे । त्यसपछि माझीहरूले त्यो बालकलाई लगेर शंबर नामक दैत्यलाई दिए । शंवरासुरले त्यो बच्चा मायावती नामक भान्छामा काम गर्ने महिलालाई दियो । मायावतीले प्रेमपूर्वक त्यस बालकको पालन-पोषण गरिन् ।।१०।। एक दिन नारद ऋषिले आई एकान्तमा मायावतीसँग भने – हे मायावती ! तिमीद्वारा पालन-पोषण गरिएका बालक कामदेव हुन् । मायावतीले बालक कामदेव हुन् भन्ने थाहा पाएर बढ्दै गएका बालकलाई सुरक्षाका लागि अनेक थरि तन्त्र, मन्त्र र बुद्धि पनि सिकाइन् । मायावतीबाट सबै कुरा सिकेर ती बालकले आफ्नो अपहरण गर्ने शंवरासुरलाई एक दिन मारिदिए । शंवरासुरको हत्या गर्ने ती बालक संसारमा प्रद्युम्नका नामबाट प्रसिद्ध भए । त्यसपछि ती द्वारका पुगेका थिए ।।११-१३।। द्वारकामा पुगेपछि प्रद्युम्न देवताहरूका पनि मान्य र त्रिलोकविजयी भए। भगवान् श्रीगणेशका कृपाले आनन्दप्राप्त गरे। तिनी शंवरासुरलाई मारी द्वारकामा पुग्दा द्वारकामा रहेका रुक्मिणी आदि माताहरूले उनलाई कृष्णकै रूपमा देखे र देख्नासाथ लाज पनि माने ।।१४-१५।। त्यसपछि नारदजीले आएर तपाईंहरू किन लाज मान्नुहुन्छ ? यी त तपाईंकै छोरा हुन् भनेर चिनाएपछि रुक्मिणी आदि सबै माताहरू प्रसन्न भए। रुक्मिणी आदिले आलिङ्गन गरे। मायावतीका रूपमा रहेकी रतिले पनि ती सबै रुक्मिणी आदि माताहरूलाई प्रणाम गरिन् । यो घटनापछि प्रद्युम्नलाई चिनेर सम्पूर्ण द्वारका नगरी नै हर्षित भयो ।

**ब्रह्माजीले भन्नुभयो** – हे वेदव्यास ! मैले तिमीलाई जनस्थानमा स्थापित भगवान् श्रीगणेशको महिमा सुनाउँछु ।।१६-१७।। त्यसै जनस्थानमा भगवान् रामले शूर्पणखाको नाक काट्नुभएको थियो। राक्षसीको नाक काटिएको ठाउँ भएकोले आज पनि त्यसलाई नासिक भनेर सबैले चिन्दछन् ।।१८।। आज पनि त्यहाँका ढुङ्गाहरू लड्डूका आकृतिका देखिन्छन् । नासिकमा कामदेवले भगवान् श्रीगणेशको आराधना गरेका थिए । त्यहीं शेषनागले ६ अक्षरको मन्त्र जपेर भगवान् श्रीगणेशको आराधना गरेका थिए। त्यसैगरी रति र कामदेवले पनि त्यही शेषनागकै विधिबाट श्रीगणेशको आराधना गरी प्रसन्न भएका थिए ।।१९-२०।।

व्यास उवाच

कथमाराधितो ब्रह्मन् ! शेषेणासौ गजाननः ।
किमर्थं किञ्च तेनाप्तं सुप्रसन्नाद् गजाननात् ।।२१।।

एतत् सविस्तरं ब्रूहि पृच्छतश्चतुरानन ! ।
प्रष्टुः श्रोतुश्च वक्तुश्च यतः पुण्यं विवर्धते ।।२२।।

ब्रह्मोवाच

सम्यक् पृष्टं त्वया ब्रह्मन् ! कथयामि कथामृतम् ।
शृणुष्वावहितो भूत्वा सर्वं सत्यवतीसुत ।।२३।।

कस्मिंश्चित् समये शम्भुः पार्वत्या सहितो मुने ! ।
सुखासीनो गिरिवरे रम्यसानुशिलोच्चये ।।२४।।

नानाद्रुमलताकीर्णे निर्झरारावशब्दिते ।
गुञ्जन्ति भ्रमरास्तत्र रुक्मपङ्कजवासिनः ।।२५।।

चम्पकाशोकवकुलमातलीकुसुमानिलः ।
आनन्दयति चित्तानि वसतां यस्य शेखरे ।।२६।।

आययुस्तत्र गन्धर्वा अप्सरोयक्षकिन्नराः ।
देवाश्च मुनयो नागास्तं द्रष्टुं गिरिजापतिम् ।।२७।।

केचित् तं प्रणिपातेन साष्टाङ्गेनाऽभ्यवादयन् ।
उच्चैर्जगुश्च गन्धर्वा ननृतुश्चाप्सरोगणाः ।।२८।।

तुष्टुवुस्तं दशभुजं व्याघ्राजिनधरं हरम् ।
नन्दिभृङ्गिगणाकीर्णं भालचन्द्रं त्रिशूलिनम् ।।२९।।

भस्माङ्गं शेषशिरसं शङ्करं वृषभध्वजम् ।
अपरेऽर्चितं देवमुपचारैर्मनोमयैः ।।३०।।

निमील्य नयने तस्थुः केचिद् ध्यानपरायणाः ।
वसिष्ठो वामदेवश्च जमदग्निस्त्रितो द्विजः ।।३१।।

अत्रिः कण्वो भरद्वाजो गौतमाद्या मुनीश्वराः ।
तुष्टुवुर्विविधैः स्तोत्रैस्तत्र तं पार्वतीपतिम् ।।३२।।

स्तुवत्सु मुनिवृन्देषु शेषो गर्वं परं ययौ ।
अहमेव श्रेष्ठतरो लोकेषु त्रिषु नापरः ।।३३।।

**व्यासले भन्नुभयो** - हे ब्रह्माजी ! शेषनागले कसरी भगवान् श्रीगणेशको आराधना गरेका थिए ? तिनको आराधनाको लक्ष्य के थियो ? तपस्याबाट प्रसन्न हुनुभएपछि भगवान् श्रीगणेशले शेषनागलाई कस्तो वरदान दिनुभयो ? यी सबै कुराको मलाई राम्ररी उत्तर दिनुहोस् । भगवान् श्रीगणेशका लीला एवं आराधनाका विषयमा प्रश्न गर्ने, श्रवण गर्ने र उपदेश गर्ने यी सबै मानिस पुण्यवान् मानिएका छन् ।।२१-२२।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! तपाईंले राम्रा कुरा सोध्नुभयो । अब मैले तपाईंलाई श्रीगणेशको कथारूपी अमृतपान गराउँछु । सावधान भएर सुन्नुहोस् ।।२३।। कुनै समयको कुरा हो भगवान् शिव पार्वतीका साथ सुन्दर पर्वतको शिलामाथि आनन्दपूर्वक बस्नुभएको थियो ।।२४।। त्यो पर्वत अनेक थरि रूख र लहराले जेलिएको थियो । झरनाको झङ्कारले निनादित थियो । सुनझैं सुन्दर कमलमा बस्ने भँमराहरू भुँ-भुँ गरी गुञ्जन गरिरहेका थिए ।।२५।। चम्पक, अशोक, बकुल र मालतीका पुष्पको गन्ध बोकेर मन्द-मन्द प्रवाहित हुने हावाले त्यस पर्वतको चुचुरोमा बस्ने सबै मानिसको चित्तलाई आनन्दित तुल्याइरहेको थियो ।।२६।। त्यहाँ गन्धर्व, अप्सरा, यक्ष, किन्नर, देवता, मुनि र सर्पहरू भगवान् शङ्करको दर्शन गर्न आएका थिए ।।२७।। तीमध्ये कसैले भगवान्का पाउमा साष्टाङ्ग प्रणाम गरे । गन्धर्वहरूले ठूलो स्वरले गीत गाए । अप्सराहरू अनेक भावभङ्गीका साथ नृत्य गर्न लागे ।।२८।। केही देवताहरूले दश भुजा धारण गर्नुहुने, बाघको छालामा विराजमान, नन्दी-भृङ्गी आदि गणहरूद्वारा सेवित, निधारमा चन्द्रमालाई धारण गर्नुहुने, त्रिशूलधारी, सारा शरीरभरि खरानीको लेपन गर्नुभएका, जटामा शेषनागको माला धारण गर्नुहुने र साँढेमाथि सवार हुनुभएका भगवान् शङ्करको पूजा गरे । केही देवताहरूले सदाशिव शङ्करको मानसिक उपचारबाट आराधना गरे ।।२९-३०।। केही देवताहरू आँखा चिम्लेर भगवान् शङ्करको ध्यान गर्न लागे । वसिष्ठ, वामदेव, जमदग्नि, त्रित, अत्रि, भरद्वाज, गौतम आदि मुनिहरूले अनेक किसिमका स्तोत्रहरूको पाठ गरेर पार्वतीपति भगवान् शिवजीको स्तुति गरे ।।३१-३२।। यसरी सबै देवताहरूले शिवाराधना गरिरहेको समयमा आएर शेषनागले आफ्नो अहङ्कार देखाए । तिनले भने - तीनै लोकमा मभन्दा ठूलो देवता अरू कुनै छैन, किनकि तीनलोकमा

यतः श्रेष्ठतरः शम्भुस्तस्याहं शिरसि स्थितः ।
धराधारणसामर्थ्यं मयि नान्यत्र कुत्रचित् ।।३४।।

वासुके ! रज्जुभूतान् मत्कुलीनादमृतं सुरैः ।
प्राप्तं ततोऽमरत्वञ्च तस्मान्नान्योऽस्ति मत्परः ।।३५।।

तद् हृदिस्थं तदा गर्वं ज्ञात्वा शम्भुस्त्रिलोककृत् ।
विज्ञायाखिलदृक् तूष्णीमुत्तस्थौ सहसा शिवः ।।३६।।

आस्फालयद् धरापृष्ठे शेषं तादृशगर्वितम् ।
एकैको मस्तकस्तस्य दशधा दशधाऽभवत् ।।३७।।

मूर्च्छितः प्रहरार्द्धं स गतप्राण इवाभवत् ।
ततः प्रभृत्यसौ जातः सहस्रफणमण्डितः ।।३८।।

जीवशेषः शुशोचाऽथ शेषोऽशेषाहिभूषणः ।
अलङ्करणभूतोऽहं त्रैलोक्येशहरस्य ह ।।३९।।

इमामवस्थां सम्प्राप्तो न जाने केन कर्मणा ।
चलितुं नैव शक्नोमि पक्षहीन इवाण्डजः ।।४०।।

किं करोमि क्व गच्छामि को मे त्राताऽधुना भवेत् ।
को मे निजपदप्राप्तावुपायं कथयेच्छुभम् ।।४१।।

को वा मेऽपनयेद् दुःखमिति चिन्तापरस्तु सः ।
ददर्श तेन मार्गेण गच्छन्तं नारदं मुनिम् ।।४२।।

जहर्ष किञ्चिन्नागेन्द्रः स्वप्नं प्राप्येव भिक्षुकः ।
अतिकष्टामवस्थां तां नारदोऽलोकयत् पुरः ।।४३।।

निश्चेष्टं निरनुश्वासं ध्याननिष्ठं यथा मुनिम् ।
अशेषविषयज्ञोऽपि शेषं पप्रच्छ नारदः ।।४४।।

सबैले ठूला मानेका देवता शिवजी नै हुन् ? म त उहाँको पनि शिरमा बसेको छु । विशाल पृथिवीलाई वहन गर्नसक्ने त्यो शक्ति अरू कुनै देवतामा छैन, जुन ममा मात्र छ।।३३-३४।। मेरो कुलमा जन्मेका वासुकिलाई नेती बनाएर देवताहरूले समुद्रको मन्थन गरी अमृत प्राप्त गरेका हुन् । वासुकिका कारण नै तो देवताहरू अमर भए । त्यस कारण मभन्दा ठूलो अरू कुनै छैन ।।३५।। सदाशिवजी पनि शेषनागको मनमा घमण्ड आएको देखेर उनका सबै कुरा ज्ञानदृष्टिबाट बुझी शेषनागका सामु आई मौन भएर उभिनुभयो ।।३६।। त्यसपछि उहाँले आफ्नो टाउकामा बेरिएका घमण्डी शेषनागलाई शिर फट्कारेर भुईमा पछार्नुभयो । त्यसो गर्दा शेषनागका प्रत्येक टाउकाका दश-दश टुक्रा भए । मूर्च्छा परेका शेषनाग आधा प्रहरसम्म मरेजस्तै देखिए । त्यसपछि मात्र सय वटा शिर भएका शेषनाग एक हजार शिरले सम्पन्न भए ।।३७-३८।। शिवजीबाट पछारिदा बल्ल बल्ल सास लिइरहेका शेषनागले चिन्ता गरे । मनमनै भने- म आजसम्म शिवजीको शिरको गहना भएर रहेको थिएँ, तर आज कुन कर्मले यो अवस्थामा आइपुगें। अहिले म प्वाँख नभएको चराजस्तै गतिहीन भएको छु ।।३९-४०।। के गरूँ ? कहाँ जाऊँ ? अहिले मेरो कसले रक्षा गर्ला ? कसले मलाई शिवजीका शिरमा फेरि गहना बनेर बस्ने उपाय बताउला? कसले मेरो दुःखलाई हरण गर्ला ? इत्यादि चिन्ता गरिरहेका शेषनागले आफ्ना सामु रहेको मार्गमा नारद मुनिलाई हिंडिरहेको देखे ।।४१-४२।। त्यसपछि मात्र शेषनाग मनमनै केही प्रसन्न भए । तिनलाई भिखारीले सपनामा भिक्षा पाएजस्तो भयो । नारदजीले पनि शेषनागलाई अति दयनीय अवस्थामा रहेको देख्नुभयो ।।४३।। चेष्टाहीन, श्वासप्रश्वास लिन पनि धौ धौ मानिरहेका शेषनागलाई ध्यानमा रहेका मुनिजस्तै निश्चल अवस्थामा देखेर नारदजीले आफू सर्वज्ञ भई सबै कुरा थाहा पाए पनि सोध्नी गर्नुभयो ।।४४।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे शेषोपाख्यानं नामैकोननवतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'कामदेवको पुनर्जन्मकथाका साथ शेषनागको उपाख्यान' शीर्षकान्वित उनान्नब्बेऔं अध्याय पूर्ण भयो ।।८९।।

ॐ

## अथ नवतितमोऽध्याय: { ९० अध्याय }

नारद उवाच

किमर्थमेवं जातोऽसि निस्तेजा दु:खितो भृशम् ।
कथं भग्नशिरा: कस्याचरोऽप्रियतरं मुने ।।१।।

किं वा क्षुब्धो गिरीशस्तेऽकारि गर्वस्त्वयाऽथ किम् ।
वद तत्कारणं शेष! प्रतीकारं पुरा वदे ।।२।।

त्वां विना धारयेत् को नु चराचरयुतां धराम् ।
अनुक्तवति तस्मिँस्तु स्वयमेवाब्रवीन्मुनि:।।३।।

उपायं नागराजस्य स्वस्थानप्रापकं शुभम् ।

नारद उवाच

अवधारय मे वाक्यं शेषाशेषकलानिधे ।।४।।

सुरा ब्रह्मादयो येन स्यु: किङ्करा इव ।
धारयिष्यसे धरां मूर्ध्नि पुष्पमालामिवार्भक: ।।५।।

शेष उवाच

किञ्चित् पुरातनं पुण्यमासीच्चेद् दर्शनं तव ।
अकस्मादग्रेऽपि सम्यङ् मे स्यान्न संशय: ।।६।।

अन्यथाऽकृतपुण्यानां दर्शनं तु कथं भवेत् ।
अतिविह्वलगात्रत्वादशक्तो भूमिधारणे ।।७।।

तं ब्रूयत्नं वद मुने येनाहं स्यां यथा पुरा ।

नारद उवाच

वदामि महामनुं तेऽद्य तस्य देवस्य नागराट् ।।८।।

यस्य प्रसादादिन्द्राद्यास्तत् तत् पदमवाप्नुवन् ।
येषां यदाज्ञयाऽशेषसृष्टिस्थित्यन्तकारिण: ।।९।।

तस्मिन् प्रसन्ने सर्वेशे पूर्वावस्थामवाप्स्यसि ।
कारुण्यं तव दृष्ट्वैव क्लिन्नं मे सर्वमानसम् ।।१०।।

अत: षडक्षरं मन्त्रं गणेशस्य ददामि ते ।
अस्यानुष्ठानमात्रेण प्रत्यक्षस्ते गजानन: ।।११।।

**नारदजीले भन्नुभयो** - हे शेषनाग ! तपाइँ आज किन मलिन, तेजोहीन र दु:खी देखिनुभएको छ ? तपाइँको शिरमा घाउ लागेको छ । कोसँग अप्रिय व्यवहार गर्नुभयो ? ।।१।। अथवा शिवजी क्रुद्ध हुनुभयो अथवा तपाइँमा नै घमण्डको उदय भयो? मलाई ती सबै कारण बताउनुहोस् । त्यसपछि मैले तपाइँको उद्धार गर्ने उपाय बताउनेछु ।।२।। तपाइँ विना चर-अचर सबैले भरिएको पृथिवीलाई कसले धारण गर्न सक्छ? नारदजीले यसरी प्रश्न गर्दा शेषनाग मौन रहे । यसपछि नारदजीले आफै शेषनागको उद्धारका लागि उपाय र आफ्नो पद फेरि पाउने उपायसमेत बताए ।

**नारदजीले भन्नुभयो** - सम्पूर्ण कलाका अधिपति हे शेषनाग! मेरो कुरा सुन्नुहोस् । जुन उपाय गर्नाले ब्रह्मा आदि देवताहरू पनि तपाइँका सेवक बराबर हुनेछन् र बालकले हातमा फूल खेलाएझैं तपाइँले पृथिवीलाई धारण गर्न सक्नु हुनेछ त्यो उपाय म बताउनेछु ।।३-५।।

**शेषनागले भने** - हे नारदजी ! मेरो पुरानो केही पुण्य बाँकी रहेछ त्यसैले आज मैले हजुरको दर्शन पाएँ । हजुरको अकस्मात् दर्शन पाउनु मेरो कल्याणको सूचक हो भन्ने कुरामा कुनै शङ्का रहँदैन ।।६।। पुण्यहीन मानिसले हजुरजस्ता तपस्वीको दर्शन पाउन सम्भव छैन । शरीर अत्यन्त गलेको छ, निर्बल छु र म पृथिवीधारण गर्न समेत असमर्थ भएको छु ।।७।। हे नारद मुनि ! मलाई त्यो उपाय बताउनुहोस्, जसबाट म पहिलेजस्तै बलवान हुन सकूँ ।

**नारदजीले भन्नुभयो** - शेषनाग! आज म ती देवताको महामन्त्र बताउँछु, जसको कृपाबाट इन्द्र आदि देवताहरूले आ-आफ्ना पद प्राप्त गरेका थिए। जसको आज्ञा पाएर ब्रह्मा, विष्णु र शिवजीले सम्पूर्ण संसारको सृष्टि, स्थिति र संहार गर्दछन् ।।८-९।। सबैका स्वामी जुन देवता प्रसन्न हुनुभएमा तपाइँले आफ्नो पुरानो स्वरूप प्राप्त गर्नुहुनेछ । हे शेषनाग ! तपाइँको दयनीय स्वरूप देखासाथ मेरो मन पग्लिएको छ।।१०।। त्यस कारण म तपाइँलाई भगवान् श्रीगणेशको ६ अक्षरको मन्त्र उपदेश गर्दछु । यस मन्त्रको जप गर्नाले भगवान् श्रीगणेश

सर्वान् विधास्यसे कामान् यान् याँस्त्वं वृणुषे ततः ।।१२।।

क उवाच

कृत्वोपदेशं शेषाय नारदोऽन्तर्हितोऽभवत् ।
शेषोऽपि तपसे कृत्वा निश्चयं परमं शुभम् ।
निरुद्धाऽशेषकरणो ध्यात्वा देवं गजाननम् ।।१३।।

जजाप परमं मन्त्रं सहस्त्रपरिवत्सरम् ।
तदन्ते पुरतोऽपश्यद् देवदेवं गजाननम् ।।१४।।

सिंहारूढं त्रिनेत्रं दशभुजमुरगं कुण्डले चाङ्गदे च
मुक्तामालां वहन्तं सुललितमुकुटं रत्नमुद्राक्षसूत्रम् ।
नानादेवर्षिवृन्दैरनुगतमनिशं वक्रतुण्डं गजास्यं
भक्तेच्छोपात्तदेहं सुरनरपरदं चिन्तयेदेकदन्तम् ।।१५।।

एवं गजाननस्तस्य दर्शनार्थं समाययौ ।
सिद्धिबुद्धियुतस्तादृग् यादृग् ध्यातोऽहिना पुरा ।।१६।।

सहस्त्रसूर्यसदृशो दीप्त्याक्रान्तदिगन्तरः ।
तेजसा तस्य शेषोऽपि धर्षितोऽन्ध इवाभवत् ।।१७।।

चकम्पे भयसंविग्नो व्यग्रचित्तोऽतिविह्वलः ।
स्वस्थो मुहूर्तमात्रेण चिन्तयामास चेतसि ।।१८।।

किमिदं तेज आयातं प्रलयानलसन्निभम् ।
तच्चेद् दहेत् सर्वलोकानिदं मामेव धक्ष्यति ।।१९।।

कल्याणे कर्मणि कथं क्रियमाणे शुभं भवेत् ।
अथवा नारदेनोक्तं द्रक्ष्यामि गणनायकम् ।।२०।।

एवं चिन्तातुरे तस्मिन्नुवाच द्विरदानन ! ।
मा भैः कुतर्ककुशल ! वरदोऽहं समागतः ।।२१।।

यं ध्यायसि दिवारात्रौ वृणु यत् ते हृदि स्थितम् ।
अहमेव जगत्कर्ता पाता हर्ताऽखिलेश्वरः ।।२२।।

तपाईंका सामु दर्शन दिन आउनुहुनेछ र तपाईंका मनमा रहेका इच्छा पूर्ण तुल्याउनुहुनेछ ।।११-१२।।

**ब्रह्माजीले भन्नुभयो** - हे वेदव्यास ! शेषनागलाई यसरी उपदेश र मन्त्रोपदेश दिएपछि नारदजी अन्तर्धान भए । शेषनाग पनि तपस्या गर्ने अठोट गरेर सबै इन्द्रियका वृत्तिहरू रोकी भगवान् श्रीगणेशको ध्यान गर्दै एक हजार वर्षसम्म उक्त महामन्त्रको जपमा लागिरहे र त्यसपछि तिनले आफ्ना सामु देवदेव भगवान् गजाननको दर्शन गरे ।।१३-१४।। सिंहमा सवार हुनुभएका, त्रिनयन, दश भुजा धारण गर्नुहुने, सर्पराज शेषनागलाई यज्ञोपवीतका रूपमा धारण गर्नुहुने, कुण्डल, केयूर, मोतीको हार धारण गरी शोभायमान, सुन्दर मुकुट धारण गर्नुहुने, रत्नको औंठी र रुद्राक्षको माला धारण गर्नुभएका, अनेक थरि देवता र ऋषिहरूद्वारा सेवा गरिनुभएका, बाङ्गो मुखले सुहाउनुभएका, हात्तीको जस्तो अनुहारले देदीप्यमान, भक्तको भलो गर्न बेला-बेलामा अवतार धारण गर्नुहुने र देवता एवं मानिसको कल्याण गर्नुहुने भगवान् एकदन्तको ध्यान गर्नुगर्दछु ।।१५।। यस्तो रूप लिनुभएका भगवान् गजानन शेषनागसमक्ष आउनुभयो । उहाँ आउनुहुँदा उहाँका वरिपरि चिरसेविका सिद्धि र बुद्धि पनि हुनुहुन्थ्यो । जुन रूपको कल्पना गरेर शेषनागले भगवान् श्रीगणेशको ध्यान गरेका थिए त्यसै रूपमा दर्शन पनि पाए ।।१६।। एक हजार सूर्यझैं सुहाउनुभएका, आफ्नो तेजबाट सम्पूर्ण दिशा र विदिशाहरूलाई ढाक्नुहुने भगवान् श्रीगणेशको तेजबाट शेषनाग पनि हतप्रभ र अन्धाजस्ता भए ।।१७।। उनी भयले व्याकुल भएर काँपे, चित्तमा व्यग्रता छायो, अत्यन्त आत्तिए । केही बेरपछि स्वस्थ भएर मनले विचार गरे- प्रलयकालको अग्निजस्तो कुन तेज यहाँ आइपुग्यो ? यो तेजले सबै संसार डढाउन सक्छ र मलाई पनि खरानी बनाउन सक्छ ।।१८-१९।। कल्याणकारी कार्य गरिरहेको समयमा यो अशुभ किन भइरहेको छ ? अथवा नारदजीले उपदेश गर्नुभए अनुसार मन्त्र जपेको हुनाले मैले भगवान् श्रीगणेशको दर्शन गरिरहेको छु? यसरी तेजको पुञ्ज देखेर चिन्तित भएका शेषनागलाई वर प्रदान गर्न आई भगवान् श्रीगणेशले भन्नुभयो- हे शेषनाग!

मनेजसा भाति चन्द्रो वह्निः सूर्यश्च भानि च ।
परब्रह्मस्वरूपोऽपि तपसा तव तोषितः ।।२३।।

आविर्भूतो वरं दातुं लोकोपकृतयेऽपि च ।
त्वं तु मत्तो वरान् ब्रूहि यान् यान् कामयसेऽखिलान् ।।२४।।

शेष उवाच

तेजसा धर्षितो देव ! द्रष्टुं वक्तुञ्च नोत्सहे ।
अनुग्रहश्च पूर्णस्ते मयि सौम्यो भवानघ ! ।।२५।।

क उवाच

एवं सम्प्रार्थितस्तेन करुणाब्धिर्गजाननः ।
अभवत् कोटिचन्द्राभः सौम्यतेजाः सुरेश्वरः ।।२६।।

ततो वव्रे वरान् शेषो नत्वा स्तुत्वाऽखिलेश्वरः ।
अनादिनिधनं देव ! वन्देऽहं गणनायकम् ।।२७।।

सर्वव्यापिनमीशानं जगत्कारणकारणम् ।
सर्वस्वरूपं विश्वेशं विश्ववन्द्यं नमाम्यहम् ।।२८।।

गजाननं गणाध्यक्षं गरुडेशस्तुतं विभुम् ।
गुणाधीशं गुणातीतं गणाधीशं नमाम्यहम् ।।२९।।

विद्यानामधिपं देव ! देवदेवं सुरप्रियम् ।
सिद्धिबुद्धिप्रियं सर्वसिद्धिदं भुक्तिमुक्तिदम् ।।३०।।

सर्वविघ्नहरं देवं नमामि गणनायकम् ।

क उवाच

एवं स्तुत्वा तु देवेशं वरदं द्विरदाननम् ।।३१।।

वरयामास यान् कामाँस्तां शृणुष्व महामुने ।

शेष उवाच

अद्य धन्यं तपो ज्ञानं पिता माता जनुर्मम ।।३२।।

देहो नेत्राणि भूरीणि मस्तकानि बहूनि च ।
त्वां स्तोतुं सम्प्रवृत्ता या धन्या सा रसना मम ।।३३।।

तिमी कुतर्क नगर र मसँग नडराऊ । म वरद श्रीगणेश हुँ र तिमीलाई वरदान दिन आएको छु। जुन देवताको तिमी अहोरात्र ध्यान गरिरहेका छौ, म त्यही देवता श्रीगणेश हुँ, तिमी के चाहन्छौ ? भन म त्यो दिन तयार छु। म नै संसारको रचयिता, पालक, संहार र स्वामी पनि हुँ । मेरै तेजबाट सूर्य, चन्द्रमा, अग्नि र ताराहरू तेजोमय बनेर शोभायमान छन्। म परब्रह्मस्वरूप भए तापनि तिम्रो तपस्याबाट प्रसन्न भएर तिमीलाई वरदान दिन र संसारको उपकार गर्न प्रकट भएको छु । तिमी आफूले चाहेका कुराहरू भन र मबाट वरदान लेऊ ।।२०-२४।।

**शेषनागले भने** - भगवन् श्रीगणेश ! हजुरको तेजबाट कान्तिहीन भएको म हजुरको स्वरूपलाई राम्ररी दर्शन गर्न र आफ्ना मनका कुरा खोल्नसमेत सकिरहेको छैन । हे निष्पाप देवता! यदि ममाथि हजुरको पूर्ण कृपा छ भने हजुर सौम्यरूपमा प्रकट हुनुहोस् ।।२५।।

**ब्रह्माजीले भन्नुभयो**- यसरी शेषनागले प्रार्थना गरेपछि करुणासागर भगवान् श्रीगणेश पनि करोडौं चन्द्रसमान कान्ति-धारण गरेर शान्त हुनुभयो । त्यसपछि मात्र शेषनागले संसारका स्वामी भगवान् श्रीगणेशको स्तुति गर्दै वरदान मागेका हुन्। शेषनागले भने- हे अनादि अनन्तस्वरूप भगवान् गणनायक! म हजुरलाई नमस्कार गर्दछु । सर्वव्यापी, सबैका स्वामी, जगत्का कारणका पनि कारण, सर्वस्वरूप, विश्वाधिपति र विश्वद्वारा वन्दनीय भगवान् श्रीगणेशलाई प्रणाम गर्दछु ।।२६-२८।। म गजानन गणाध्यक्ष नारायणद्वारा प्रार्थित, व्यापक, तीनै गुणका स्वामी र गुणातीत श्रीगणेश भगवान्लाई प्रणाम गर्दछु ।।२९।। विद्याका स्वामी, देवताका पनि देवता, देवताहरूका प्यारा र सिद्धि-बुद्धिका पनि प्यारा, सबैलाई सिद्धि प्रदान गर्ने, भुक्ति एवं मुक्ति दिने र सबै विघ्नहरूका नाशक गणनायक भगवान्लाई नमस्कार गर्दछु ।

**ब्रह्माजीले भन्नुभयो** - यसरी देवताका स्वामी वरदायक भगवान् गजाननको स्तुति गरेर शेषनागले जुन कामनाहरूको विषयमा याचना गरे ती कामनाहरू के थिए भन्ने कुरा म बताउँछु, तपाईं सुन्नुहोस् ।

**शेषनागले भने**- आज मेरो तपस्या, ज्ञान, माता-पिता, जन्म, शरीर, आँखा र मेरा हजारौं शिरहरू धन्य भएका छन् । हजुरको दर्शन पाएर मेरो स्तुति पनि धन्य भएको

कुलं शीलञ्च धन्यं मे त्वदङ्घ्रियुगदर्शनात् ।
अखण्डितं ते भजनं देहि मेऽखण्डविक्रम ।।३४।।

दुःखं किं किं नु वक्तव्यं सर्वज्ञे त्वयि विघ्नराट् ।
अखर्वगर्वकरणात् स्फुटिता मस्तका मम ।।३५।।

महारुषा महेशेनाऽऽस्फालितस्य महीतले ।
नारदस्य प्रसादेन दृष्टं ते चरणाम्बुजम् ।
इदानीं देव ! मे देहि श्रेष्ठतां भुवनत्रये ।।३६।।

पाटवं सर्वशिरसि सामर्थ्यं धारणे भुवः ।
अचलं देहि मे स्थानं दर्शनं ते निरन्तरम् ।।३७।।

सान्निध्यं शङ्करस्यापि कुलश्रैष्ठ्यं शिवे रतिम् ।

गणपतिरुवाच

यदि ते दशधा जातो मस्तको भुजगाधिप ।।३८।।

तदा सहस्त्रवदनः सहस्त्रफणिमण्डितः ।
भविष्यसि जने ख्यातो यावच्चन्द्रार्कतारकाः ।।३९।।

धराधरणसामर्थ्यं दृढं तव भविष्यति ।
पञ्चास्यपञ्चशिरसि मत्प्रसादात् स्थितिं स्थिराम् ।।४०।।

लप्स्यसे भुजगश्रेष्ठ! मत्सान्निध्यं निरन्तरम् ।
अन्यत् ते वाञ्छितं शेष! तदशेषं भविष्यति ।।४१।।

क उवाच

एवं वरान् ददौ तस्मै स्वोदरे तं बबन्ध ह ।
व्यालबद्धोदर इति नाम प्राप गजाननः।।४२।।

छ।।३०-३३।। हे प्रभु ! मेरो जिब्रो पनि धन्य भएको छ । हे भगवन् श्रीगणेश ! मेरा कुल र शील पनि धन्य भएका छन् । हजुरका चरणयुगलको दर्शनबाट मेरा सबै कुरा धन्य भएका छन् । हे अखण्ड पुरुषार्थका स्वामी ! मलाई अखण्डरूपमा हजुरको भजन गर्ने सौभाग्य प्रदान गर्नुहोस् । हे विघ्नहरूका स्वामी श्रीगणेश ! हजुर सर्वज्ञ हुनुहुन्छ, सबै कुरा जान्नुहुन्छ, मैले कति दुःख पाएँ ? कसरी भनूँ ? हजुर आफै जान्नुहुन्छ । मैले ठूलो घमण्ड गर्नाले मेरा मस्तक फुटे ।।३४-३५।। भगवान् शङ्करले रिसाएर मलाई भुईंमा पछार्नुभयो । नारदजीको कृपा हुन गयो र उहाँको उपदेशबाट आज हजुरका चरणकमलको दर्शन पाएँ । हे भगवन् श्रीगणेश! मलाई तीनै भुवनमा सर्वश्रेष्ठ हुने वरदान दिनुहोस् भनी आज म हजुरसँग प्रार्थना गरिरहेको छु ।।३६।। यसका साथै मेरा शिरहरूमा पहिलेको जस्तै पृथिवीधारण गर्ने शक्ति पनि प्रदान गर्नुहोस् र मलाई अचल स्थान दिनुहोस्। हे भगवन् श्रीगणेश! मलाई हजुरको निरन्तर दर्शन पाउने अवसर प्रदान गर्नुहोस् ।।३७।। भगवान् शङ्करको नजिकमा बस्न पाउने अधिकार पनि दिनुहोस् । म आफ्नो कुलमा श्रेष्ठ बनेर रहन पाऊँ । निरन्तर भगवान् शङ्करको भक्ति गर्न पाऊँ ।

**श्रीगणेशले भन्नुभयो** - हे सर्पराज शेषनाग ! पहिले तपाईं दशवटा शिरले शोभायमान हुनुहुन्थ्यो, अब हजार मुख र हजार फणाले सम्पन्न हुनुहुनेछ र महान् विख्यात पनि। जबसम्म सूर्य, चन्द्रमा र तारा रहन्छन्, तबसम्म तपाईं संसारमा नामी हुनुहुनेछ । तपाईंसँग पृथिवीधारण गर्ने अद्भुत शक्ति हुनेछ । भगवान् शङ्करका पाँचवटै शिरमा मेरो कृपाबाट बस्न पाउनुहुनेछ । सर्पहरूमा श्रेष्ठ सर्पराज भएर बस्नुहुनेछ । तपाईं सर्वदा मेरो नजिकमा मेरा प्यारा भक्त भएर बस्नुहुनेछ। अरू पनि तपाईंका मनमा जेजति कामना छन्, ती सबै परिपूर्ण हुनेछन् ।।३८-४१।।

**ब्रह्माजीले भन्नुभयो** - यसरी भगवान् श्रीगणेशले शेषनागलाई मागेजति सबै वर दिनुभयो । त्यसपछि श्रीगणेशले शेषनागलाई आफ्नो पेटमा बेर्नुभयो । यो घटनापछि भगवान् श्रीगणेशलाई व्यालबद्धोदर पनि भनियो । सर्वव्यापक भगवान् श्रीगणेशले शेषनागको मस्तकमा हात राखेर अभयदान

शेषस्य मस्तके हस्तमभयार्थं ददौ विभुः ।
स्वयं विराट्स्वरूपं स्वं शेषायादर्शयन् मुदा ।।४३।।

शब्देनापूरयद् व्योम भूतलं विदिशं दिशः ।
यस्य पादतले भूमिर्दिशः श्रोत्रेऽक्षिणी रविः ।।४४।।

ओषध्यो यस्य रोमाणि नखा यस्य धराधराः ।
मेघाः स्वेदोदकं यस्य प्रजनश्चतुराननः ।।४५।।

कुक्षौ यस्य जगत् सर्वं चत्वारश्चैव सागराः ।
अनन्तानन एको योऽप्यनन्तनयनः स्वराट् ।।४६।।

अनन्तरूपी चानन्तशक्तिरत्यन्तदीप्तिमान् ।
यद्रोमकूपे भान्ति स्म ब्रह्माण्डानि सहस्रशः ।।४७।।

दृष्ट्वा तं तादृशं शेषो भीत्या भ्रान्त इवाभवत् ।
प्रार्थयामास विघ्नेशं पुनः सौम्यो भवेति च ।।४८।।

ततो दशभुजो देवः सिंहारूढोऽभवच्च सः ।
उवाच वरदो देवो नेदृग् दुष्टः सुरैरपि ।।४९।।

मदनुग्रहतोऽदर्शि त्वया शेषाद्य भाग्यतः ।
अचलं मयि ते स्थानं पातालेऽपि शिवेऽपि च ।
मया दत्तं प्रसन्नेन धर पुष्पमिवाद्य गाम् ।।५०।।

शेष उवाच

धरे धरां स्वशिरसि धरणीधर इत्यपि ।
त्वमपि नेऽपि विख्यातं नाम लोकेऽतिविश्रुतम् ।।५१।।

अस्मिन् क्षेत्रे स्थिरो भूत्वा भक्तकामान् प्रपूरय ।

दिनुभयो। त्यसपछि शेषनागको भक्तिबाट प्रसन्न हुनुभएका भगवान् श्रीगणेशले उनलाई सहर्ष आफ्नो विराट् रूप पनि देखाउनुभयो ।।४२-४३।। त्यस बेला श्रीगणेशले घोर गर्जन गर्नुभयो । त्यस गर्जनबाट आकाश, पृथिवी, दिशा र विदिशा सबै थर्कमान भए । पृथिवी पनि विराट् रूप धारण गर्ने भगवान् श्रीगणेशको चरणका रूपमा रहेकी थिइन्, दिशाहरू कानका रूपमा रहेका थिए, सूर्य आँखा बनेका थिए, वृक्ष-वनस्पति रौंका रूपमा रहेका थिए, पर्वतहरू नङ बनेका थिए, बादलहरू पसिना बनेका थिए, सृष्टिकर्ता ब्रह्माजी इन्द्रियका रूपमा रहेका थिए र विराट् श्रीगणेशको काखीभित्र सम्पूर्ण संसार अटाएको थियो । त्यहाँ महासागर पनि गम्भीर मुद्रामा प्रवाहित भइरहेका थिए । वास्तवमा एकरूप भएर पनि भगवान् श्रीगणेश त्यतिबेला हजारौं मुखले शोभायमान हुनुहुन्थ्यो। हजारौं आँखाले हेरिरहनुभएको थियो र आफ्नै प्रकाशद्वारा प्रकाशित स्वप्रकाश हुनुहुन्थ्यो ।।४४-४६।। उहाँका अनन्तरूप देखिएका थिए, अनन्त शक्ति क्रियाशील थिए र उहाँका अनन्तरूप सुहाएका थिए । ती-ती रूपहरूमा अनन्त शक्ति भरिएका थिए। उहाँ अनन्त कान्तिले सुहाउनुभएको थियो । विराट्रूप भगवान् श्रीगणेशका रौं-रौंमा हजारौं ब्रह्माण्ड देखिएका थिए । शेषनागले भगवान् श्रीगणेशको त्यो विराट् रूप देखेर भयले भ्रान्तिको अनुभव गरे । फेरि उनले सौम्य हुनुहोस् भन्दै भगवान् श्रीगणेशको प्रार्थना गरे ।।४७-४८।। त्यसपछि भगवान् वरदायक श्रीगणेश सिंहमा सवार भई दश भुजाहरूद्वारा शोभायमान हुनुभयो र शेषनागलाई भन्नुभयो - हे शेषनाग ! मेरो यस्तो विराट्रूप देवताहरूले पनि दर्शन गर्न पाएका छैनन् । आज आफ्नै भाग्य र मेरो आशीर्वादका कारण तिमीले विराट्रूपको दर्शन पायौ । मैले तिमीलाई मेरो शरीरमा पाताल र शिवजीको शिरमा पनि अचल स्थान प्रदान गरें । अब मानिसले फूल धारण गरेझैं तिमीले पनि पृथिवी धारण गर ।।४९-५०।।

**शेषनागले भने** - हे भगवन् श्रीगणेश ! म पृथिवीलाई मेरो शिरमा धारण गर्दछु । हजुर र म दुवै धरणीधरका नामबाट प्रख्यात होऔं । हजुर यस क्षेत्रमा धरणीधर नामबाट स्थिर हुनुहोस् र भक्तका कामनाहरूलाई सफल तुल्याउनुहोस् ।

ब्रह्मोवाच

ओमिति तमथोक्त्वाऽसौ विघ्नेशोऽन्तर्दधे स्वयम् ।।५२।।

शेषोऽपि तादृशीं मूर्तिं कृत्वाऽस्थापयदादरात् ।
अकरोद् बहु रत्नाढ्यं प्रासादं काञ्चनं शुभम् ।।५३।।

धरणीधर इत्येतन्नामास्य पर्यकल्पयत् ।
हरेः शयनतां प्रायादवहत् पुष्पवद् धराम् ।।५४।।

स्थिरोऽभून्नाभिपद्मेऽपि विघ्नराजस्य भूषणम् ।
एवं ते कथितो व्यास ! विघ्नेशमहिमाऽद्भुतः ।।५५।।

प्रवालनगरे ख्यातो गणेशो धरणीधरः ।
एतदर्थं हि शेषेण कृतमाराधनं विभोः ।।५६।।

ब्रह्माजीले भन्नुभयो - शेषनागको निवेदन सुनेर भगवान् श्रीगणेश पनि हुन्छ भन्ने वचन दिनु भई त्यहीं अन्तर्धान हुनुभयो।।५१-५२।। त्यसपछि शेषनागले भगवान् श्रीगणेशको धरणीधरका नामबाट मूर्ति बनाई श्रद्धापूर्वक त्यसको प्रतिष्ठा गराए । तिनले रत्नजडित सुवर्णमय मन्दिर बनाए । त्यस मन्दिरमा मूर्तिको प्रतिष्ठा गरेपछि त्यसको नाम पनि धरणीधर राखे । यो घटनापछि मात्र शेषनाग क्षीरसागरमा गई भगवान् नारायणको शय्या बनेर पृथिवीको धारण गर्न समर्थ भए । शेषनाग श्रीगणेशको नाभिमा रहने अलङ्कार पनि बने । हे व्यास ! यसरी मैले तपाईंलाई श्रीगणेशको अद्भुत महिमा बताएँ । प्रवालनगरमा रहेका श्रीगणेश धरणीधरका नामबाट आज पनि प्रख्यात हुनुहुन्छ । उहाँको स्थापना गर्न शेषनागले भगवान् श्रीगणेशको आराधना गरेका थिए ।।५३-५६।।

ॐ

इति श्रीगणेशपुराणे उपासनाखण्डे शेषोपाख्यानं नवतितमोऽध्यायः

प्रा.डा. वेणीमाधव ढकालद्वारा नेपाली भाषामा अनूदित श्रीगणेशपुराण उपासनाखण्डको 'शेषोपाख्याननिरूपणका क्रममा शेषनागद्वारा श्रीगणेशको आराधना र वरप्राप्ति' शीर्षकान्वित नब्बेऔं अध्याय पूर्ण भयो ।।९०।।

ॐ

# अथ एकनवतितमोऽध्याय:	{ ९१ अध्याय }

व्यास उवाच

अन्यत् कथय मे देव गणेशस्य कथान्तरम् ।
शृण्वतो मे मनोऽत्यन्तमुत्सुकं भवति प्रभो ।।१।।

ब्रह्मोवाच

एकदा प्रलये वृत्तेऽज्ञापयन्मां गजाननः ।
सृष्टिं नानाविधां ब्रह्मन् ! कुरु त्वं हि ममाज्ञया ।।२।।

अहं प्रकल्पयामास पुत्रान् सप्त हृदा तदा ।
तेषां नामानि ते वच्मि कश्यपो गौतमोऽपि च ।।३।।

जमदग्निर्वसिष्ठश्च भरद्वाजोऽत्रिरेव च ।
विश्वामित्रश्च सप्तैते सर्वविद्याविशारदाः ।।४।।

सर्वे मामब्रुवन् ब्रह्मन्नाज्ञापय सुरेश्वर! ।
मया तु कश्यपोऽज्ञापि बुद्धिमाँस्तेषु चाधिकः ।।५।।

मत्कार्यं विविधां सृष्टिं कुर्वित्याज्ञापितस्तदा ।
असावोमिति मामुक्त्वा जगाम तपसे वनम् ।।६।।

जजापैकाक्षरं मन्त्रं दिव्यवर्षसहस्रकम् ।
ततः प्रसन्नो भगवान् द्विरदानन ईश्वरः ।।७।।

चतुर्भुजोऽरविन्दाक्षो महामुकुटमण्डितः ।
पाशाङ्कुशधरो मालादन्तहस्तः शुभाङ्गदः ।
सुवर्णमणिरत्नाढ्यो मुक्तामालालसद्गलः ।।८।।

सर्पोदरः कोटिसूर्यविलसद्दीप्तिमण्डलः ।
विकसन्नेत्रविभ्राजच्चारुशुण्डालसन्मुखः ।।९।।

आविरासीत् कश्यपस्य पुर एवं गजाननः ।
क्षुद्रघण्टानूपुराणां रवान् मुखरिताङ्घ्रियुक् ।।१०।।

दृष्ट्वा ननर्त तं देवं कश्यपो हर्षनिर्भरः ।
नत्वा सम्पूजयामास नानामङ्गलवस्तुभिः ।।११।।

बद्धाञ्जलिरुवाचेदं सुप्रसन्नो गजाननम् ।
धन्यो मे जनको माता तपो ज्ञानं वपुश्च दृक् ।।१२।।

**व्यासले भन्नुभयो-** हे कमलासन ! मलाई श्रीगणेशका अरू कथा पनि सुनाउनुहोस् । मेरो मन जहिले पनि भगवान् श्रीगणेशका कथा सुन्न उत्कण्ठित हुने गर्दछ ।।१।।

**ब्रह्माजीले भन्नुभयो -** एक पटक महाप्रलय भएपछि श्रीगणेशले मलाई भन्नुभयो- हे ब्रह्माजी ! तपाईंले मेरो आज्ञाअनुसार अनेक थरि सृष्टि गर्नुहोस् । त्यसपछि मैले मनबाट सात मानसपुत्र उत्पन्न गरें । तिनका नाम यस प्रकार छन् - कश्यप, गौतम, जमदग्नि, वसिष्ठ, भारद्वाज, अत्रि र विश्वामित्र । यी सबै छोराहरू सबै विद्याका विद्वान् थिए ।।२-४।। एक दिन सबै छोराहरूले मलाई भने - हे पिता ! हामीले के गरौं ? आज्ञा गर्नुहोस् । मैले ती छोरामध्ये सबैभन्दा बुद्धिमान् कश्यप छन् भन्ने कुरा बुझेर तिनलाई अनेक थरि सृष्टि गर भन्ने आज्ञा दिएँ । कश्यप पनि मेरो आज्ञा स्वीकार गरी तपस्या गर्न वनतर्फ लागे । दिव्य एक हजार वर्षसम्म तिनले श्रीगणेशको एक अक्षरको मन्त्र जप गरे । मन्त्र जपबाट प्रसन्न हुनुभएका भगवान् गजाननले तिनलाई दर्शन दिनुभयो ।।५-७।। त्यस बेला चतुर्बाहु, कमलनयन, उत्तम मुकुटले सुहाउनुभएका, पाशाङ्कुशधारी, माला र दाँत हातमा धारण गर्नुहुने, केयूरधारी, सुवर्ण, मणि र रत्नले बनेको मोतीको हार लगाएर आफ्नो कण्ठलाई सजाउनुभएका, पेटमा शेषनागलाई यज्ञोपवीतका रूपमा धारण गर्नुहुने, करोडौं सूर्यसमान कान्तिले सम्पन्न, कमलसमान विकसित नयनहरूले देदीप्यमान र मुखमा अत्यन्त राम्रो सूँढ धारण गर्नुहुने श्रीगणेश कश्यप ऋषिका सामु प्रकट हुनुभयो । भगवान् श्रीगणेशका पाउमा रहेको सानो घुँघुरुको माला र नुपूरको शब्दले वातावरण गुञ्जायमान भयो । कश्यप ऋषि श्रीगणेशलाई देखेर हर्षित भई नाचिरहेका थिए । त्यसपछि उनले भगवान्लाई प्रणाम गरी मङ्गलमय वस्तु अर्पण गरेर पूजा गरे ।।८-११।। हात जोडेर तिनले भगवान् श्रीगणेशसँग निवेदन गरे - हे भगवन् श्रीगणेश ! आज हजुरको दर्शन पाएर मेरा माता-पिता, तपस्या, शरीर, आँखा यी सबै कुराहरू धन्य भएका छन् । पृथिवी माता धन्य भएकी छन्, लता, वृक्ष र फलफूल पनि धन्य भएका छन् । जुन मन्त्रको